| | | |
|---|---|---|
| ग्रन्थको नाम | : | ब्रह्मसूत्रकारिका |
| लेखक | : | शरत्कुमार भट्टराई |



| | | |
|---|---|---|
| प्रकाशक | : | श्रीराजर्षिजनकस्मृतिकोष |
| प्रकाशन मिति | : | वि.सं. २०७८ वैशाख १३ गते |
| प्रकाशित सङ्ख्या | : | ३०० |
| मूल्य | : | रु. ५००।– |
| कम्प्युटर सेटिङ्ग | : | श्रीखड्गप्रसाद खनाल |
| मुद्रक | : | एलायन्स प्रिन्टर्स एण्ड मिडिया हाउस प्रा.लि. |
| ISBN | : | 978-9937-0-9315-6 |

# प्रकाशकको भनाइ

यस कोषले आफ्नो स्रोत र साधनले भ्याएसम्म ज्ञान र भक्ति सम्बन्धी आध्यात्मिक विषयमा र अझ त्यसमा पनि विशेषरूपले अद्वैत वेदान्तका गहन विषयमा लेखिएका ग्रन्थहरू प्रकाशन गर्दै आएको छ । तदनुसार नै यस २०७८ सालमा पनि शरत्कुमार भट्टराईज्यूले लेख्नुभएका ग्रन्थहरूमध्ये 'गुरुशिष्यसंवादात्मक ब्रह्मसूत्रकारिका' नामक अत्यन्त महत्त्वपूर्ण ग्रन्थ प्रकाशन गर्न पाएकोमा यस कोषलाई अपार खुशी लागेको छ ।

यस ग्रन्थमा अद्वैत वेदान्तका परमसिद्धान्तहरू सङ्क्षिप्तरूपमा उल्लेख गरिएका छन् । यसबाट जिज्ञासु मुमुक्षुहरूले सहजैसँग ज्ञान प्राप्त गर्न सक्नुहुने छ भन्ने विश्वास गर्न सकिन्छ । अतः यो ग्रन्थ सबै जिज्ञासु मुमुक्षुहरूका लागि अत्यन्त सङ्ग्रहणीय र पठनीयसमेत हुने छ भन्ने यस कोषले ठानेको छ । यस कोषका संस्थापक, सञ्चालक, व्यवस्थापक र परिचालक आदरणीय श्रीशरत्कुमार भट्टराईज्यू अद्वैतवेदान्तका अनवरत अध्येता, अन्वेषक, चिन्तक, अद्वैतवेदान्तसम्बन्धी महत्त्वपूर्ण तथा गहन विभिन्न विषयहरूका ग्रन्थहरूका प्रणेता एवं लेखक समेत हुनुहुन्छ । आफ्नी धर्मपत्नी श्रीमती इन्दिरा भट्टराईका साथै उहाँ २०७८ साल वैशाख १३ गते सहस्रचन्द्रदर्शनपूर्वक गौरवमय चौरासी वर्षमा प्रविष्ट हुनुभएको छ । यस महान् उपलक्ष्यमा आदर्शमय गृहस्थजीवन व्यतीत गरिरहनुभएका उहाँहरूको सुस्वास्थ्य, दीर्घजीवन र सुखमय भविष्यका लागि यो कोषपरिवार उहाँहरू युगल दम्पतीमा हार्दिक बधाई ज्ञापन गर्नुका साथै शुभकामना पनि अर्पण गर्दछ ।

उपर्युक्त अनुसारका व्यक्तित्वबाट प्रणीत यस ब्रह्मसूत्रकारिका नामक महत्त्वपूर्ण ग्रन्थको प्रकाशन गर्ने अभिभारा यस कोषले उहाँबाट पाएकोमा यो कोष लेखकप्रति हार्दिक कृतज्ञता र साधुवाद प्रकट गर्दछ । ॐ ब्रह्मार्पणमस्तु ।

२०७८ साल वैशाख १३ गते

श्रीराजर्षिजनकस्मृतिकोष

# शुभाशंसा

ज्ञानार्थक विद्धातुमा घञ् प्रत्यय लागेर बन्ने वेद शब्दले ज्ञानको प्रतिपादक शब्दराशि भन्ने अर्थ बुझाउँछ। प्रत्यक्ष, अनुमान आदि प्रमाणहरूबाट जान्न नसकिने धर्म र ब्रह्मको ज्ञान जसले गराउँछ त्यही वेद हो भनी परिभाषा गरिएको छ– धर्मब्रह्मप्रतिपादकमपौरुषेयं वाक्यं वेदः। धर्मको ज्ञान अरू बाहिरी प्रमाणहरूबाट हुन सक्दैन। त्यसैगरी ब्रह्मको ज्ञान पनि लौकिक प्रमाणहरूबाट हुन सक्दैन। प्राणीहरूको अभ्युदय र मोक्षका लागि यी दुवैको ज्ञान अत्यावश्यक छ। यही विशेष उद्देश्यपूर्तिका लागि ऋषिहरूको माध्यमले वैदिक वाङ्मय प्रकट भएको हो। विभिन्न शाखा र परम्परामा विभक्त भएको वैदिक वाङ्मयमा धर्मानुष्ठानका विभिन्न पद्धतिहरू बताइएका छन्,जसलाई एकसूत्र बनाई धर्मको निर्णय गर्न महर्षि जैमिनिले मीमांसासूत्रको रचना गर्नुभएको हो। त्यसैगरी वेदका ब्रह्मप्रतिपादक विभिन्न मन्त्रहरूका तात्पर्यहरूलाई एउटै निचोड र निष्कर्षमा पुऱ्याउन भगवान् वेदव्यासले ब्रह्मसूत्रको रचना गर्नुभएको हो। यी दुईथरी दर्शनहरूलाई पूर्वमीमांसा र उत्तरमीमांसा पनि भनिन्छ। वेदको उत्तर अर्थात् अन्तिम खण्डको निष्कर्षलाई विचार गर्ने भएकाले यसलाई उत्तरमीमांसा भनिएको हो।

ब्रह्मसूत्रलाई भिक्षुसूत्र, शारीरकमीमांसासूत्र आदि विभिन्न नामले चिनिन्छ। निवृत्तिपरायण संन्यासीहरूले विशेष अध्ययन गर्ने भएकाले यसलाई भिक्षुसूत्र भनिएको हो। शारीरक शब्दको अर्थ हुन्छ – शरीरभित्र निवास गर्ने जीवात्मा। त्यसको स्वरूपको विषयमा विचार गर्ने भएकाले शारीरकमीमांसासूत्र भनिएको हो। न्याय, वैशेषिक आदि सबै आस्तिक दर्शनहरू पदार्थहरूको स्वरूप निर्धारण गर्न र तिनको यथार्थ परिचय दिन प्रवृत्त भएका छन् भने वेदान्तदर्शन चाहिँ जीवात्माको वास्तविक स्वरूप निर्धारण गर्न प्रवृत्त भएको छ। संसारको रहस्यलाई खोतल्न अनेकौँ भौतिक र आध्यात्मिक दार्शनिकहरू लागिरहँदा वेदान्तदर्शनको यही दृष्टिकोण छ कि– खोज्नेवाला व्यक्ति को हो ? भन्ने यथार्थ निर्णय नहुञ्जेल त्यसबाट भएका खोजी र अनुसन्धान अप्रामाणिक नै ठहरिन्छन्। त्यसैले सबैभन्दा पहिले आफ्नै अस्तित्वको खोजी गर्नु आवश्यक छ। आत्माको त्यही वास्तविक स्वरूपलाई ब्रह्म भन्ने नाम दिइएको छ। वेदान्तदर्शन त्यसकै जिज्ञासाबाट आरम्भ हुन्छ – अथातो ब्रह्मजिज्ञासा (ब्र.सू. १।१।१)।

ब्रह्मसूत्रका जम्मा ५५५ सूत्रहरूलाई चारओटा अध्याय र हरेक अध्यायपिच्छे चार पाउको संरचनामा विभाजन गरिएको छ। पहिलो अध्यायलाई समन्वयाध्याय

भनिन्छ, जसमा सबै उपनिषद्का वाक्यहरूको अद्वितीय ब्रह्मतत्त्वको प्रतिपादनमा तात्पर्य रहेको देखाइएको छ। न्याय, वैशेषिक, सांख्य आदि दर्शनका सिद्धान्तहरूलाई बताएजस्ता लाग्ने वाक्यहरूले पनि वास्तवमा अद्वितीय ब्रह्मतत्त्वको प्रतिपादनरूपी मूल तात्पर्यमा कुनै विरोध नल्याउने कुरा दोस्रो अध्यायमा पुष्टि गरिएको छ। त्यसैले दोस्रो अध्यायलाई अविरोधाध्याय भनिन्छ। यस अध्यायमा कपिल, कणादजस्ता महर्षिहरूको सिद्धान्तलाई खण्डन गरेजस्तो देखिन्छ तर त्यहाँ मीमांसाशास्त्रको यही प्राचीन मर्यादालाई पालना गरिएको छ – 'नहि निन्दावाक्यं निन्दितुं प्रवर्तते अपितु विधेयं स्तोतुम्' अर्थात् कुनै पनि निन्दावाक्यको तात्पर्य निन्दामा नभई प्रासङ्गिक अर्थको प्रशंसा गर्नुमा रहेको हुन्छ। वास्तवमा सबै दिव्यदर्शी ऋषिहरू तत्त्वज्ञानी भएकाले उहाँहरूमा स्वतः नै अद्वितीय ब्रह्मतत्त्वको ज्ञान रहेको छ तर पनि संसारमा अनेक विचारधारा भएका अनेक अधिकारीहरूका लागि विभिन्न साधन र प्रक्रियाहरूको उपदेश गर्ने क्रममा विभिन्न सिद्धान्तहरूको जन्म भएको हो। स्वर्ग जाने उपायको खोजी गरिरहेको व्यक्तिलाई जैमिनि महर्षिले ब्रह्मतत्त्वको उपदेश गर्नु आवश्यक छैन। त्यसैगरी द्रव्य, गुण आदि सात पदार्थहरूको यथार्थ स्वरूप जान्न चाहने व्यक्तिलाई कणाद र गौतमले आत्मसाक्षात्कारको मार्ग बताउनु पनि उचित हुँदैन। ऋषिहरूले मानिसहरूको रुचि र आवश्यकताअनुसार नै विभिन्न दर्शनको प्रणयन गरेकाले तिनमा देखापर्ने विरोध र विभेद वास्तवमा ऋषिहरूभित्र नभई हाम्रै मनभित्र भएको बुझ्नुपर्दछ। वेदान्तदर्शनमा अनेकौँ ऋषिहरूका सिद्धान्तहरूको आलोचना गरिए पनि ती ऋषिहरू अज्ञानी र भ्रान्त थिएनन् भन्ने यही अभिप्राय अद्वैतसिद्धिकार मधुसूदन सरस्वतीको रहेको छ – 'न हि ते ऋषयो भ्रान्ताः' मधुसूदनी टीका, शिवमहिम्नःस्तोत्र, श्लोक ७)। ब्रह्मसूत्रको अविरोधाध्यायलाई अध्ययन गर्दा यो दृष्टिकोणलाई सधैँ ख्याल राख्नुपर्दछ। ब्रह्मसूत्रको तेस्रो अध्यायलाई साधनाध्याय भनिन्छ, जसमा तत्त्वसाक्षात्कारका बहिरङ्ग र अन्तरङ्ग गरी अनेक साधनहरूको वर्णन गरिएको छ। निष्काम कर्म, योगाभ्यास र उपासना यी सबै बहिरङ्ग साधनहरू हुन्। श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट वेदान्तशास्त्रको श्रवण, मनन र निदिध्यासन गर्नु तत्त्वज्ञानको अन्तरङ्ग साधन हो। चौथो अध्यायलाई फलाध्याय भनिन्छ, जसमा तत्त्वज्ञानको फल मोक्ष, त्यसको स्वरूप र भेदहरूको चर्चा गरिएको छ। प्रसङ्गतः उपासनाबाट हुने क्रममुक्ति र ज्ञानबाट हुने सद्योमुक्तिको पनि चर्चा गरिएको छ। यसरी वेदान्तदर्शनका सबै प्रमेय विषयहरूलाई समेटिएकाले ब्रह्मसूत्रलाई वेदान्तको आकरग्रन्थ भनिन्छ।

ब्रह्मसूत्रमा भगवत्पाद श्रीशङ्कराचार्यले भाष्य रचना गर्नुभएपछि त्यसमाथिका

विभिन्न टीका र व्याख्या ग्रन्थहरूको एउटा विशाल वाङ्मय खडा भएको छ । मूल सूत्रमाथि शङ्कराचार्यको भाष्य, भाष्यमाथि वाचस्पति मिश्रको भामती टीका, त्यसमाथि कल्पतरुटीका र कल्पतरुको पनि परिमल टीका गरी पाँचपुस्ते वाङ्मय ब्रह्मसूत्रमा उपलब्ध छ । अरू विभिन्न विद्वान्‌हरूले छिटपुटरूपमा गरेका टिप्पणी र व्याख्याहरू अनगिन्ती छन् । त्यतिमात्र नभई पछिल्लो समय विभिन्न लौकिक भाषाहरूमा पनि ब्रह्मसूत्रको व्याख्या र अनुवादहरू रचिन थालेका छन् । यही क्रममा ब्रह्मसूत्रमाथिको विशाल वाङ्मयको पङ्क्तिमा फेरि एउटा नयाँ ग्रन्थ थपिन थालेको छ– ब्रह्मसूत्रकारिका । यसका रचयिता श्रीशरत्कुमार भट्टराईले ब्रह्मसूत्रको शाङ्करभाष्य अनुकूल अर्थलाई नै नेपालीमा पस्किनुभएको छ । त्यो पनि गद्यको रूपमा नभई अनुष्टुप् छन्दका पद्यको रूपमा । यसमा चार अध्याय, चार पाउ र तीभित्रका अलगअलग अधिकरणहरूको उल्लेख गर्दै गुरुशिष्यको संवादात्मक शैलीमा अधिकरणभित्रका विवेच्य विषयवस्तुको वर्णन गरिएको छ । पादटिप्पणीका रूपमा त्यस अधिकरणसँग सम्बन्धित श्रुतिवाक्यहरूको पनि उद्धरण दिइएकाले ग्रन्थको प्रामाणिकता बढेको छ भने अनुसन्धाताहरूका लागि पनि उपयोगी बनेको छ । भौतिकवादको आँधिबेरीमा रुमलिएको यो समाजमा ब्रह्मसूत्रको अध्ययन गर्न खोज्ने सामान्य अध्येता पाउनु पनि दुर्लभ कुरा हो । धैर्यपूर्वक अध्ययन गरेपछि त्यसको मनन र विचारविमर्श गर्ने व्यक्ति झन् दुर्लभ हुन्छ भने आफ्नो विचारबाट अरू पनि लाभान्वित बनून् भनी मातृभाषामा अनुवाद गरी प्रकाशित गर्ने व्यक्तिहरू हातको औँलामा गन्नमिल्ने मात्र छन् । अद्वैत वेदान्तप्रतिको यो स्थिर निष्ठा र ग्रन्थप्रणयनको उत्साह एवम् परिश्रमका लागि शरत्कुमार भट्टराईजीको जति प्रशंसा गरे पनि कम नै हुन्छ । अन्तमा शरत्कुमारजीको दशकौँदेखि खारिएको वेदान्तविचारको रूपमा देखापरेको यस ग्रन्थबाट अधिकाधिक अध्येताहरू लाभान्वित बनून् र प्रस्तुत ग्रन्थका लेखक पाठक सबैलाई प्रत्यगात्मा विद्येश्वर शिवको कृपाबाट वेदान्तविद्याको वास्तविक फल प्राप्त होस् भन्ने प्रार्थना गर्दछु ।

स्वामी रमणानन्द गिरि
महेश–संन्यास–आश्रम

# सम्मति

सूत्रसाहित्यले समृद्ध छ संस्कृतवाङ्मय। ब्रह्मसूत्र, धर्मसूत्र, योगसूत्र, साङ्ख्यसूत्र, न्यायसूत्र, वैशेषिकसूत्र, बार्हस्पत्यसूत्र, शिक्षासूत्र, कल्पसूत्र, व्याकरणसूत्र, छन्दःसूत्र, ग्रहगणितीय सूत्र, जताततै सूत्रैसूत्र। सूत्रग्रन्थको त भण्डार नै हो संस्कृतवाङ्मय। आधुनिक विज्ञान र गणितले सम्पूर्ण सूत्रहरूलाई एकत्रित गरी एकै ठाउँमा समेट्दा पनि संस्कृतवाङ्मयको सूत्रभण्डारसँग बराबरी गर्न सक्दैन। आधुनिक संसारको कुनै पनि वाङ्मयमा त्यति सूत्र छैनन्, जति सूत्र संस्कृतवाङ्मयको भण्डारमा उपलब्ध छन्। सूत्रसाहित्य, शब्दभण्डार, पर्यायविज्ञान, दार्शनिक चिन्तन, काव्यप्रयोग, नीतिचेतना, धर्मचेतना आदि प्रत्येक दृष्टिले संस्कृतवाङ्मय सर्वोपरि छ।

फेरि संस्कृतवाङ्मयको भण्डारमा रहेका सूत्रग्रन्थहरू त्यसै चूप लागेर एक्लै बसेका पनि छैनन्। ती सूत्रग्रन्थहरूमाथि अनेकौँ आचार्यहरूले भाष्य, वार्तिक र टीका-व्याख्याहरू लेख्नुभएको छ। ब्रह्मसूत्रकै कुरा गरौँ, ब्रह्मसूत्रमाथि आचार्य शङ्कर, आचार्य रामानुज, आचार्य निम्बार्क, आचार्य वल्लभ, आचार्य मध्व, आचार्य बलदेव आदिले अलग अलग भाष्य लेख्नुभएको छ भने ती भाष्यमाथि रचित वार्तिक, विवरण र टीका-व्याख्याहरूको अर्को लामो लर्को देखिन्छ। कुनै व्यक्तिले ब्रह्मसूत्रकै मात्र सूत्रभाष्यादि समग्र पक्षको अध्ययन गरी तत् तत् कृतिगत वैविध्य र याथार्थ्यको निर्क्योल गर्छु भनेर आफ्नो पूरा जीवन अर्पण गरेछ भने पनि उसको अध्ययन पूरा हुन मुस्किलै छ।

परमकारुणिक महर्षि व्यासले जब सूत्रग्रन्थ ब्रह्मसूत्रको रचना गर्नुभयो, त्यसको चिरकालको अन्तरालपछि अद्वैतवेदान्तको जगत्मा आचार्य शङ्करको उदय भएको देखिन्छ। आचार्य शङ्करपूर्व पनि अद्वैतवेदान्तको ग्रन्थसंरचनागत उन्नयनमा केही आचार्यहरूको भूमिका उल्लेख्य देखिन्छ तापनि आचार्य शङ्करले ब्रह्मसूत्रमा भाष्यको प्रणयन गरेपछि चाहिँ विवरण, वार्तिक, टीका-व्याख्या र विविध ग्रन्थहरूको रचनाद्वारा अद्वैतवेदान्तको भण्डार तुलनात्मक रूपमा अधिकतर समृद्ध भएको आलोकित हुन्छ।

अद्वैतवेदान्तमा प्रस्थानत्रयी प्रसिद्ध छन्। जसमा श्रुतिप्रस्थानका रूपमा उपनिषद्, स्मृतिप्रस्थानका रूपमा भगवद्गीता र न्यायप्रस्थानका रूपमा ब्रह्मसूत्रलाई लिइन्छ। अद्वैतवेदान्तको सैद्धान्तिक धरातलमा तीन आचार्यहरूका तीनथरी वाद वा प्रस्थानहरूको समेत प्रसिद्धि रहेको छ, जसमा १८औँ शताब्दीका आचार्य सुरेश्वरको आभासवाद, ९औँ शताब्दीका आचार्य वाचस्पति मिश्रको अवच्छेदकवाद र नवौँ शताब्दीका आचार्य सर्वज्ञातमुनि एवं ११औँ शताब्दीका आचार्य प्रकाशात्मयतिको

बिम्बप्रतिबिम्बवादसमेत उल्लेखनीय छन् ।

अद्वैतवेदान्तको क्षेत्रमा प्राचीनदेखि अर्वाचीन कालसम्म थुप्रै थुप्रै आचार्यहरूले कलम चलाउनुभएको छ । ब्रह्मसूत्रको रचनापछि यस क्षेत्रले कृतिरचनाको पक्षमा ठूलो फड्को मारेको देखिन्छ । यसको मतलब यो हैन कि, ब्रह्मसूत्रको रचनापूर्व अद्वैतवैदान्तको परम्परै थिएन । पक्कै थियो । यसको प्रमाण ब्रह्मसूत्रभित्रै उपलब्ध छ । स्वयं ब्रह्मसूत्रकार महर्षि व्यासले प्राचीन अद्वैताचार्यहरूको नाम त्यहाँ उल्लेख गर्नुभएको पाइन्छ । तिनमा आचार्य जैमिनि[१], आचार्य बादरि[२], आचार्य आश्मरथ्य[३], आचार्य औडुलोमि[४], आचार्य काशकृत्स्न[५], आचार्य कार्ष्णाजिनि[६], आचार्य आत्रेय[७] आदि हुनुहुन्छ ।

सूत्रकार व्यासका समकालीन, व्यासपूर्व अनि महर्षि व्यास र आचार्य शङ्करको अन्तरालकालका पनि थुप्रै आचार्यहरूले अद्वैतवेदान्तको समुन्नयनमा विशिष्ट योगदान पुऱ्याएको देखिन्छ। ती आचार्यहरूमा ब्रह्मर्षि वसिष्ठ, आचार्य गौडपाद, गोविन्दभगवत्पाद, भर्तृहरि, भर्तृप्रपञ्च, भारुचि, ब्रह्मदत्त, उपवर्ष, बोधायन, द्रविडाचार्य आदिको नाम अग्रपङ्क्तिमा आउँछ । औपनिषद आख्यायिकाहरूमा प्राप्त तत्त्वोपदेष्टा आचार्यहरूको पनि नाम लिने हो भने योगीश्वर याज्ञवल्क्य, मुनि पिप्पलाद, धर्मराज यम, ब्रह्मा, अथर्वा, अङ्गिरा, भारद्वाज सत्यवह, आरुणि, रैक्व, सनत्कुमार, प्रजापति आदि थुप्रै थुप्रै स्मरणीय रहनुभएको छ ।

वस्तुतः अद्वैतवेदान्तको आचार्यपरम्परा भगवान् नारायणबाटै प्रारम्भ भएको पाइन्छ । यो परम्परा भगवान् नारायणबाट प्रारम्भ भई ब्रह्मदेव, ब्रह्मर्षि वसिष्ठ आदिद्वारा अघि बढेर आचार्य शङ्कर र शङ्करशिष्य हुँदै चलेको देखिन्छ ।[८] आचार्य शङ्करकै

---

१. साक्षादप्यविरोधं जैमिनिः । – ब्रह्मसूत्रम् १/२/२९

२. अनुस्मृतेर्बादरिः । – ब्रह्मसूत्रम् १/२/३१

३. अभिव्यक्तेरित्याश्मरथ्यः । – ब्रह्मसूत्रम् १/२/३२

४. उत्क्रमिष्यत एवं भावादित्यौडुलोमिः । – ब्रह्मसूत्रम् १/४/२१

५. अवस्थितेरिति काशकृत्स्नः । – ब्रह्मसूत्रम् १/४/२२

६. चरणादिति चेन्न तदुपलक्षणार्थेति कार्ष्णाजिनिः । – ब्रह्मसूत्रम् ३/१/९

७. स्वामिनः फलश्रुतेरित्यात्रेयः । – ब्रह्मसूत्रम् ३/४/४४

८. नारायणं पद्मभवं वसिष्ठं शक्तिञ्च तत्पुत्रपराशरञ्च ।
व्यासं शुकं गौडपदं महान्तं गोविन्दयोगीन्द्रमथास्य शिष्यम् ॥
श्रीशङ्कराचार्यमथास्य पद्मपादञ्च हस्तामलकञ्च शिष्यम् ।
तं त्रोटकं वार्तिककारमन्यानस्मद्गुरून् सन्ततमानतोऽस्मि ॥
– आचार्यवन्दनम्, श्रुतमात्रम्

यतिपरम्परामा दीक्षाको नैरन्तर्य, अद्वैतवेदान्तको अध्ययन-अध्यापन अनि ग्रन्थप्रणयन एवं श्रवणादिसाधनानुष्ठानको प्रक्रिया चलिरहनुले वर्तमानमा हामीसम्म आइपुग्दा पनि अद्वैतवेदान्तको परम्परा सतत प्रवाहित देखिन्छ । यो ब्रह्मसूत्रकारिका पनि अद्वैतवेदान्तविषयक नवीन ग्रन्थहरूको प्रणयनकै क्रममा आएको एक विशिष्ट ग्रन्थ हो ।

अन्य पौरस्त्य दर्शनहरूझैँ अद्वैतवेदान्तको बीज पनि वेदमै उपलब्ध छ । शास्त्रप्रमाणका आधारमा त अपौरुषेय वेदको रचनाकालको कुनै सन्दर्भै उठ्दैन तापनि आधुनिक विज्ञानले समेत सर्वप्राचीन घोषित गरेको ऋग्वेदको नासदीयसूक्तमा अद्वैतदर्शनको बीज फेला पर्छ । सृष्टिपूर्वको अवस्थावर्णन गर्दै सूक्तले सत् र असद्-रूपी द्वैतको निषेध गरेको पाइन्छ ।[९] उक्त सूक्तले त्यस समय आकाश र द्युलोक, मृत्यु र अमृतत्व, दिन र रात आदि कुनै पनि कुराको भेद नभएको कुरा गर्दै एकमात्र अद्वितीय तत्त्वको सत्ताको सङ्केत गरेको छ, जुन अद्वैतवेदान्तको मूल सिद्धान्त हो । त्यसैगरी ऋग्वेदकै वामदेवसूक्त आदिमा समेत अद्वैतसिद्धान्तको सङ्केत प्राप्त हुन्छ । सूत्रकार महर्षि व्यासले पनि ‘शास्त्रदृष्ट्या तूपदेशो वामदेववत्’[१०] भनेर यिनै तथ्यको सङ्केत गरेको बुझिन्छ । ‘आत्मा वा इदमेक एवाग्र आसीत्’[११] ‘सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम्’[१२] आदि औपनिषद वचनहरूले पनि त्यही नासदीयसूक्तनिर्दिष्ट तथ्यको समर्थन गरेका छन् ।

अध्यासको याथातथ्य बोधमा नआईकन ब्रह्मजिज्ञासाको कर्तव्यता नै समझमा आउँदैन । किनकि, अनर्थहेतु अध्यासकै प्रहाणको अनन्य उपायका रूपमा ब्रह्मजिज्ञासा हात लाग्ने हो ।[१३] अध्यास के हो ? ‘अतस्मिन् तद्बुद्धिः ।’[१४] जो त्यो हैन, त्यसमा तद् बुद्धि गर्नु नै अध्यास हो । असर्प रज्जुमा सर्पबुद्धि, अरजत शुक्तिमा रजतबुद्धि, अनील आकाशमा नीलबुद्धि सबै अध्यास हुन् । अविद्याका कारण मनुष्य पुत्रकलत्रादिको साकल्य र कैवल्यमा आफ्नै साकल्य र वैकल्यको अनुभूति गर्छ, यो अध्यास हो । त्यसैगरी स्थूलत्व, कृशत्व आदि देहधर्मलाई आफूमा आरोप गर्दै आफू मोटाएको,

९. नासदासीन्नो सदासीत्तदानीम्... । – ऋग्वेदः १०/१२९/१
१०. ब्रह्मसूत्रम् १/१/३१
११. ऐतरेयोपनिषद् १/१/१
१२. छान्दोग्योपनिषद् ६/२/१
१३. अस्यानर्थहेतोः प्रहाणाय आत्मैकत्वविद्याप्रतिपत्तये सर्वे वेदान्ता आरभ्यन्ते ।
– ब्रह्मसूत्रम्, अध्यासभाष्यम्
१४. अध्यासो नाम अतस्मिंस्तद्बुद्धिरित्यवोचाम । – ब्रह्मसूत्रम्, अध्यासभाष्यम्

दुब्लाएको कुरो गर्नु, अन्धत्व, बधिरत्व आदि इन्द्रियधर्मलाई आत्मसात् गरी म देख्दिनँ, सुन्दिनँ भन्नु, सङ्कल्प, विचिकित्सा आदि अन्तःकरणधर्मलाई स्वधर्म मान्दै आफैँले कल्पना गरेको, सन्देह गरेको भाव व्यक्त गर्नु, क्षुधा, तृषा आदि प्राणका धर्मलाई आफूमा आरोप गरेर आफैँ भोकाएको, तिर्खाएको महसूस गर्नु आदि इत्यादि सबै अध्यास हुन् ।

अन्तःकरणका कर्तृत्वादिधर्मको आफूमा आरोप गर्ने संसारी मनुष्य कर्त्र्यादिरूपेण आत्माको आरोप अन्तःकरणमा गर्न पुग्छ । आत्मा र अनात्मा परस्परमा अत्यन्त विविक्त हुँदाहुँदै पनि अविद्याका कारण अविविक्त भएर व्यवहृत भएको देखिन्छ । अविद्याकै कारण आत्मवस्तु र अनात्मपदार्थका बीच विविक्तताको बोध हुन नसक्नाले इतरेतरमा अध्यासको व्यवहार बनिरहन्छ । लौकिक व्यवहारको मात्र कुरो हैन, शास्त्रीय व्यवहारसमेत अध्यासमय छ ।[१५]

अध्यस्त र अधिष्ठानको विवेक नहुनु अध्यासव्यवहारको हेतु हो भने त्यो विवेकाग्रहको हेतु अविद्या हो । त्यसैले अध्यासव्यवहारको मूल हेतु भनेको अविद्या हो, अज्ञान नै हो । त्यसैले त अविद्यालाई नै समग्र द्वैतप्रपञ्च र तन्निहित उपद्रवको मूल हेतु मानिएको छ अनि त्यसकै हानोपायका रूपमा वेदान्तशास्त्रको विशाल भण्डार खडा छ ।[१६]

अध्यासव्यवहारको मूल अविद्या हो र अविद्याको आत्यन्तिक निवृत्तिद्वारा नै कर्तृत्वभोक्तृत्वादि अनर्थको निवृत्ति सम्भव छ ।[१७] त्यसैले त अविद्यालाई नै वेदान्तशास्त्रले जीवात्मैक्यको अप्रतिपत्ति एवं संसृतिचक्रको बीज बताएको छ ।[१८]

भेदसिद्धिका लागि शास्त्र चाहिँदैन । द्वैतको प्रतिपादनका निम्ति शास्त्र चाहिँदैन । भेद त व्यवहारबाटै सिद्ध छँदै छ । द्वैत संसारबाटै गतार्थ छ । मूर्खभन्दा मूर्ख व्यक्तिको व्यवहारले पनि भेद नै त सिद्ध गरिरहेको छ । त्यसको सिद्धिका निम्ति शास्त्र किन चाहियो ? शास्त्रले त अभेद सिद्ध गर्ने हो । अननुभूत अभेद या अद्वैतको सिद्धिमा शास्त्रको प्रयोजन छ ।

अहं सुखी, अहं दुःखी इत्यादि व्यवहारद्वारा आत्मा सदैव अहम्प्रत्ययको आलम्बन बनिरहेकाले आत्मविषयक सन्देह कसैलाई पनि छैन-जस्तो लाग्छ । यो कुरा

---

१५. तस्मादविद्यावद्विषयाण्येव प्रत्यक्षादीनि शास्त्राणि प्रमाणानि च ।
– ब्रह्मसूत्रम्, अध्यासभाष्यम्

१६. अज्ञानमेवास्य हि मूलकारणम् । तद्धानमेवात्र विधौ विधीयते ॥ – रामगीता ९

१७. कर्तृत्वाद्यनर्थहेतोरध्यासस्य समूलस्य आत्यन्तिकनाशो मोक्षः ।
– ब्रह्मसूत्रम्, अध्यासभाष्यम्, रत्नप्रभाटीका

१८. ऐकात्म्याप्रतिपत्तिर्या स्वात्मानुभवसंश्रया ।
साविद्या संसृतेर्बीजं तन्नाशो मुक्तिरात्मनः ॥ – नैष्कर्म्यसिद्धिः ७

साँचो हो तर त्यहाँ अहम्प्रत्ययको आलम्बन बनेर अनुभूत भइरहेको आत्मा कस्तो आत्मा हो ? त्यो त केवल सुख-दुःखादिको भोक्ताका रूपमा अनुभूत आत्मा हो । शास्त्रनिर्दिष्ट सकल इतरधर्मले वर्जित अनीदृक् र स्वयंज्योति आत्मा[१९] त्यो हैन । त्यो सुखदुःखादिको भोक्ताका रूपमा भोक्तृत्वादिधर्मविशिष्ट अविद्योपहित आत्मा हो । त्यस्तो अतद्धर्मविशिष्ट तत्त्वको अनुभूतिमा मुक्ति सम्भव छैन । त्यो अतद्धर्मविशिष्ट द्वैततादात्म्यापन्न आत्मा हो । त्यसैले अध्यासको अन्तःपाती आत्मा हो । अतद्को आवर्तनद्वारा हैन, व्यावर्तनद्वारा चाहिँ श्रुति आत्मोपदेश गर्छ ।[२०]

द्वैततादात्म्यापन्न परिच्छिन्न आत्माको ज्ञानले मुक्ति हुने भए सबै उहिल्यै मुक्त भइसक्थे । अहं न वृक्षः, अहं काष्ठपण्डपे निवसामि, अहं तदा नासम्, तस्माद् अहं भिन्नः इत्यादि वाग्व्यवहारमा हर व्यक्ति अहम्प्रत्ययको आलम्बन बनिरहेको हुन्छ तर कस्तो ऊ ? विविध परिच्छेद र भेदले युक्त ऊ । परिच्छिन्न या जो अविद्योपहितत्वेन जीवभावमा ओर्लिएको आत्मा हो, मनुष्यलाई त्यसको अनुभूति छ तर वस्तुकृत, देशकृत र कालकृत परिच्छेदले शून्य आत्माको अनुभूति छैन । सजातीय, विजातीय र स्वगतादिभेदले युक्त देहादिसंश्लिष्ट आत्माको अनुभूति त छ तर ती भेदले रहित आत्माको अनुभूति छैन । निर्धर्मक, निर्विकार, निराकार र निःसङ्ग आत्माको बोधद्वारा नै दुःखको आत्यन्तिक निवृत्ति हुने हो । त्यसैबाट परमानन्दको प्राप्ति हुने हो । त्यसैले त्यस्तो असङ्ग आत्माको उपदेश गर्ने भएकाले नै वेदान्तशास्त्रमा प्रयोजनवत्ता एवम् अनुशीलनीयता सिद्ध हुन्छ ।

वस्तुतः जीव र आत्माको अप्रतिपत्तिका निम्ति मूल हेतुका रूपमा रहेको जो आत्माश्रित अविद्या छ, त्यसकै निवृत्तिमा नैमित्तिक प्रपञ्च पनि निवृत्त हुन्छ । सत्यरूपेण भासमान प्रपञ्च मिथ्यारूपेण भासित हुन थाल्छ, प्रपञ्चको बाध हुन्छ ।[२१] अनात्म देहादिमा अहम्बुद्धिका कारण उत्पन्न भइरहने जुन दुःख हो, त्यो दुःखको हानोपायका रूपमा अद्वयानन्द आत्माको साक्षात्कारको उपदेश गर्ने भएकाले श्रुतिको प्रयोजनवत्ता सिद्ध हुन्छ । यसरी वेदान्तशास्त्र सप्रयोजन ठहर्छ ।[२२]

अध्यस्त प्रपञ्चको व्यावहारिक सत्तालाई नस्वीकार्दा भने वेदान्तशास्त्रको प्रयोजन

---

१९. कर्तापि वा कारयितापि नाहं भोक्तापि वा भोजयितापि नाहम् ।
द्राष्टापि वा दर्शयितापि नाहं सोऽहं स्वयंज्योतिरनीदृगात्मा ॥ – विवेकचूडामणिः ५०८

२०. अतद्व्यावृत्त्यायं चकितमभिधत्ते श्रुतिरपि । – श्रीशिवमहिम्नःस्तोत्रम् २

२१. जीवभावजगद्भावबाधे स्वात्मैव शिष्यते ॥ नाप्रतीतिस्तयोर्बाधः किन्तु मिथ्यात्वनिश्चयः ।
– पञ्चदशी ६/१२-१३

२२. अहम्प्रत्ययजं दुःखमपोह्यानन्दमद्वयम् । आत्मानं दर्शयन्ती च श्रुतिः स्यात् सप्रयोजना ॥
– ब्रह्मसूत्रम् १/१/१ अमलानन्दकृता शास्त्रदर्पणटीका

२३. छान्दोग्योपनिषद् ६/२/३

सिद्ध हुनेवाला छैन। त्यसैले त 'तदैक्षत बहु स्यां प्रजायेयेति'[२३], 'यतो वा इमानि भूतानि जायन्ते...'[२४], 'तस्माद्वा एतस्मादात्मन आकाशः सम्भूतः...'[२५] इत्यादि श्रुतिवाक्यहरू अध्यस्त प्रपञ्चको व्यावहारिक अस्तित्वको ख्यापनार्थ सृष्टिको प्रतिपादन गर्छन्। त्यही प्रपञ्चको बाधविषयत्वको निरूपणार्थ नै बृहदारण्यकश्रुति 'नेति नेति'[२६], 'नेह नानास्ति किञ्चन[२७] आदि वचनद्वारा प्रपञ्चको पारमार्थिक सत्ताभावको उपदेश गर्छ। श्रुतिकै केही वाक्यद्वारा आत्मामा प्रपञ्चको आरोप हुन्छ भने पुनः केही वाक्यान्तरद्वारा श्रुति त्यहाँ प्रपञ्चको अपवाद पनि प्रस्तुत गर्छ।

अनात्म प्रपञ्चको जुन अवभासन भइरहेको छ, त्यो जीवको अज्ञानको अवस्था हो र त्यही जीव ज्ञानको अवस्थामा पुग्दा पारमार्थिकत्वेन केवल आत्मसत्ताको अनुभूतिमा उक्लन्छ। यही प्रापञ्चिक सत्ताबोध एवं तत्सत्ताको आत्यन्तिक अभावबोधको दुई स्थिति नै वेदान्तशास्त्रमा अध्यारोप र अपवादका नामले चर्चित छन्।[२८] संसारीलाई निष्प्रपञ्चको स्थितिमा पुग्नका निम्ति तत्पूर्व प्रपञ्चसत्ताको प्रतीति हुनु जरुरी छ। यही नै अद्वैतवेदान्तको भाषामा अध्यारोप हो।

'प्राप्तौ सत्यां निषेधः', प्राप्तिपछि नै तन्निषेध सम्भव हुन्छ। आत्मामा द्वैतप्रपञ्चको प्राप्ति कदापि छैन भने श्रुतिले केको निषेध गर्ने ? अनि ज्ञानसाधकले आत्मानुभूतिद्वारा केको बाध गर्ने ? त्यसैले त अपवादकै लागि अध्यारोपको पनि कल्पना गर्नुपर्‍यो। वस्तुतः अपवाद या निषेधकै निम्ति श्रुति प्रपञ्चसृष्टिको अध्यारोप गर्छ। श्रुतिले प्रपञ्चसृष्टिको जुन अध्यारोप गर्छ, त्यो पनि लक्ष्यतः अद्वितीय आत्माकै निरूपणका निम्ति हुन्छ।[२९]

अद्वैतवेदान्तको सिद्धान्तचर्चाको विस्तारभूमि हो उपनिषद्। वस्तुतः वेदान्त भनेकै उपनिषद् हो।[३०]श्रुतिप्रस्थान उपनिषद्द्वारा साक्षात् उपदिष्ट सिद्धान्तलाई स्मृतिप्रस्थान भगवद्गीताले सरल शैलीमा अनुवाद गरेर सम्झाउँछ अनि पुनः न्यायप्रस्थान ब्रह्मसूत्रले

---

२४. तैत्तिरीयोपनिषद् ३/१
२५. तैत्तिरीयोपनिषद् २/१
२६. बृहदारण्यकोपनिषद् २/३/६
२७. बृहदारण्यकोपनिषद् ४/४/१९
२८. अध्यारोपापवादाभ्यां निष्प्रपञ्चं प्रपञ्च्यते। – भगवद्गीताव्याख्या, मधुसूदनसरस्वती
२९. नहि सृष्टिवाक्यानां सृष्टौ तात्पर्यम्, किन्त्वद्वये ब्रह्मण्येव।
– वेदान्तपरिभाषा, विषयपरिच्छेदः
३०. वेदान्तो नाम उपनिषत्प्रमाणं तदुपकारीणि शारीरकसूत्रादीनि च।
– वेदान्तसारः ३, योगीन्द्रः सदानन्दः

ऊहापोह गरी प्रमाणित गरिदिन्छ । युक्तिमूलक ग्रन्थ भएको हुँदा नै ब्रह्मसूत्रलाई न्यायप्रस्थान भनिएको हो । यस्तो युक्तिमूलक ब्रह्मसूत्रमा कलम चलाउने हिम्मत गर्नु, त्यो पनि कारिकाग्रन्थको निर्माणार्थ, यो कसैका लागि पनि चानचुने कुरो हैन ।

वेदान्तदर्शनको अनुपम सूत्रग्रन्थ हो ब्रह्मसूत्र । अन्य आचार्यहरूले झैँ अद्वैतवेदान्तका आचार्यहरूले पनि यस सूत्रग्रन्थका रहस्यहरूको उद्घाटनका निम्ति कलम चलाएर यसको दार्शनिक ज्ञानभण्डारलाई समुन्नत बनाएको देखिन्छ । भाष्य, भामती, पञ्चपादिका, सङ्क्षेपशारीरकम्, विवरण, विवरणप्रमेयसङ्ग्रह एवम् अन्यान्य विद्वत्तापूर्ण टीका-व्याख्याहरूले युक्त ब्रह्मसूत्रमा हालसम्म पनि कलम चलिरहेको देखिन्छ । कृष्णद्वैपायन महर्षि व्यासको यो ब्रह्मसूत्रमाथि कारिकाग्रन्थको निर्माण गरेर श्रद्धेय शरत्कुमार भट्टराईज्यूले ब्रह्मसूत्रको अध्ययनको क्षेत्रलाई थप समृद्ध बनाइदिनुभएको छ । ब्रह्मसूत्रजस्तो गूढ ग्रन्थलाई सुबोध्य बनाएर पाठक, साधक र मुमुक्षुहरूका सामु प्रस्तुत गर्नु उहाँको महनीय एवं श्लाघनीय कार्य हो ।

यस कारिकाग्रन्थका बारेमा समासतः चर्चा गर्नुपर्दा यसमा मूल सूत्रकारले गर्नुभएको अध्याय, पाद र अधिकरणहरूको खण्डविभाजन एवं खण्डनामहरूलाई जस्ताको तस्तै राखी चूर्णकशैलीको सम्मान गरिएको देखिन्छ । पञ्चपादिकाकार शङ्करशिष्य पद्मपादाचार्यको वर्णकीय खण्डीकरणको शैलीसमेत यस कारिकाग्रन्थमा तिरस्कृत देखिँदैन ।[३१] समग्र कारिकाग्रन्थ गुरुशिष्यबीचको रोचक संवादशैलीमा सरल अनुष्टुभ्-छन्दमा संरचित छ ।[३२] अध्यासको निरूपणविना आत्माको सन्दिग्धत्व अनि जिज्ञास्यत्व दुबै असिद्ध छन् । त्यसबाट वेदान्तको आरम्भणीयत्वसमेत अनुपपन्न हुनगई समग्र वेदान्तशास्त्र नै निष्प्रयोजन ठहर्ने हुँदा आचार्य शङ्करले अपनाउनुभएको उपोद्घातमै अध्यासनिरूपणको सरणि यस ग्रन्थमा पनि अपनाइएको छ ।

कारिकाग्रन्थभरि नै शिष्यको भनाइमा प्रायः पूर्वपक्षीय मतको उपस्थापनपूर्वक जिज्ञासा प्रकट भएको देखिन्छ भने गुरुको भनाइमार्फत् पूर्वपक्षीय मतको खण्डनपूर्वक शिष्यको जिज्ञासासमाधान समीक्षित हुन्छ । प्रश्नोत्तरका क्रममा शिष्य कतै स्वयं

---

३१. दुई वर्णक छन् जान्नू यसमा सूत्र आदिका ।
विभाजन गरी लेखे स्रष्टाले पञ्चपादिका ॥ – ब्रह्मसूत्रकारिका १/१/१५

३२. शिष्य– पूर्व संस्कारमा यद्वा स्मृतिमा बस्छ के कुन ?
सोही अगाडि देखिन्छ के हो त्यो ? भन्नुहोस् पुनः ॥
गुरु– अध्यास भ्रम यद्वा हो अवभास थरी थरी ।
अविद्याजन्य अध्यास भास्छ अज्ञानले गरी ॥
– ब्रह्मसूत्रकारिका, उपोद्घातभाष्य ४८-४९

पूर्वपक्षीका रूपमा प्रस्तुत भएको छ भने आफू मुखपात्र नबनी प्रायः पूर्वपक्षीकै विचारका रूपमा तृतीय पुरुषशैलीमा पूर्वपक्षको उपस्थापन गरेको देखिन्छ।[३३]कारिकाद्वारा सङ्केतित सकल उपनिषद्वचन एवं सूत्रादिसन्दर्भहरूलाई पादटिप्पणीका रूपमा अक्षरशः प्रस्तुत गरिएको छ। ग्रन्थको भूमिकाखण्ड पनि उत्तिकै महत्त्वपूर्ण रहेको छ भने ग्रन्थान्तका अनुसूचीहरूमा सूत्रकार महर्षि व्यासप्रणीत ५५५ वटै सूत्रलाई सार्थ प्रस्तुत गरिएको छ। त्यसपछि त्यहाँ ब्रह्मसूत्रको सारसमेत दिइएको छ। यसरी यस कारिकाग्रन्थको विषयवस्तु एवं शैलीगत वैशिष्ट्यलाई केलाउँदा यसको प्रणयनमा साधक भट्टराईज्यूले निकै मेहनत गरेको महसूस हुन्छ।

अद्वैतवेदान्तका अनवरत अनुशीलक शरत्कुमार भट्टराईज्यूको अथक परिश्रमको फलस्वरूप अद्वैतवेदान्तको भण्डारमा थप एउटा विशिष्ट ग्रन्थको भण्डारण हुन लागेकोमा मेरो दर्शनानुरागी हृदय पनि हर्षले गद्गद् भएको छ। मजस्ता अद्वैतवेदान्तका अध्येता एवं साधकहरूको समाजले यस ग्रन्थबाट प्रशस्त लाभ लिन सक्नेछ। यस्तो लोकोपकारक दार्शनिक कार्यका निम्ति श्रद्धेय ग्रन्थकार भट्टराईज्यूलाई धेरै धेरै साधुवाद एवं बधाई। जाग्रत्कालीन समग्र समय वेदान्तकै चिन्तन, कथन र लेखनमा व्यतीत गर्ने उहाँको शास्त्रनिर्दिष्ट[३४]प्रवृत्तिले नैरन्तर्य पाइ नै रहोस्। ईश्वरीय कृपाका साथमा उहाँलाई अद्वैतवेदान्तको चिन्तन एवं लेखन जीवनपर्यन्त प्राप्त भइरहोस्। ॐ तत्सत्।

रोहिणीराज तिमिल्सिना
स्नातक, महेश-संस्कृत-गुरुकुलम्



३३. गुरुजी ! पूर्वपक्षीले श्रुतिका सृष्टिवाक्यमा।
विरोधाभास देखाए विभिन्नता समग्रमा॥ – ब्रह्मसूत्रकारिका १/४/४५

३४. आसुप्तेरामृतेः कालं नयेद्वेदान्तचिन्तया।
दद्यान्नावसरं किञ्चित् कामादीनां मनागपि॥ – स्मृतिः

# भूमिका

ब्रह्मसूत्रकारिकाको भूमिका लेख्ने उपक्रम गर्दैगर्दा मैले भगवान् श्रीशङ्कराचार्यले ब्रह्मसूत्रको उपोद्घात अध्यासभाष्यको अन्ततिर लेख्नुभएको 'अस्यानर्थहेतोः प्रहाणाय, आत्मैकत्वविद्याप्रतिपत्तये सर्वे वेदान्ता आरभ्यन्ते ।' भनेर लेख्नुभएको वाक्यांश सम्झैँ । त्यसपछि मैले हालसम्म प्रख्यात विभिन्न सम्प्रदायका वेदान्तहरूका सम्बन्धमा सङ्क्षिप्त चर्चा गर्नुपर्ने आवश्यकता ठानेँ । किनभने सबै वेदान्तहरूको परमलक्ष्य अध्यासजन्य अनर्थलाई नाश गर्ने भन्ने देखिएको तर अब चर्चा गरिने विभिन्न वेदान्तनामधारी मत, वाद, सम्प्रदायहरूले तदनुरूप सिद्धान्त लिएका छन् ? अथवा छैनन् ? यस छोटो चर्चाबाट स्पष्ट सङ्केत प्राप्त हुने छ । त्यस सम्बन्धमा अरू बढी समीक्षा गरिने छैन ।

यसरी विचार गर्दा ब्रह्मसूत्रकारिकाको भूमिकालाई 'क' र 'ख' मा बाँडेर दुईभाग गरेर लेख्नु आवश्यक देखियो । त्यसो गर्दा 'क' मा वेदान्त र 'ख' मा ब्रह्मसूत्रकारिका हुने छ ।

## (क) वेदान्त

वेदान्तका नामबाट विभिन्न सम्प्रदायहरू प्रचलित छन् र विभिन्न आचार्यहरूले विभिन्न नामबाट प्रस्थानत्रयीमा संस्कृतभाषामा भाष्य लेखेर आफ्ना आफ्ना सम्प्रदायलाई र मतलाई पल्लवित तथा पुष्पित गराउनका साथै उहाँहरू जगद्गुरुका नामबाट विश्रुत हुनुभएको छ । वेदान्तशब्दको व्युत्पत्ति 'वेदस्य अन्तः वेदान्तः' भनेर गरिन्छ । औपनिषद सिद्धान्तलाई नै वेदान्त भनिन्छ । प्रायः वेदका अन्तिम भागमा नै यी रहन्छन् यिनैलाई नै उपनिषद् भनिन्छ ।

उपर्युक्त उपनिषद्हरूका वाक्यपुष्पहरूलाई सङ्गृहीत तथा ग्रथित गरेर भगवान् वेदव्यासले सुन्दर मालाका रूपमा ब्रह्मसूत्रको प्रणयन गर्नुभएको हो । 'ब्रह्मणः सूत्रम्' व्युत्पत्ति अनुसार ब्रह्मको ज्ञान गराउने सङ्क्षिप्त सिद्धान्तलाई ब्रह्मसूत्र भन्न सकिन्छ । गीताले उपनिषद्हरूलाई जिज्ञासुहरूलाई ब्रह्मज्ञानरूपी दूध प्रदान गर्ने गाईको संज्ञा दिएको छ । उपनिषद्, उपनिषद्वाक्य र औपनिषद सिद्धान्तलाई व्याख्या गर्ने श्रीमद्भगवद्गीता एवं ब्रह्मसूत्रलाई समेत वेदान्त भनिन्छ ।

सिद्धान्ततः वेदान्त भनेको उपनिषत्प्रमाण नै हो। किन्तु त्यसको व्याख्या र अर्थ गरेर प्रकाशमा ल्याउने शारीरकसूत्र र श्रीमद्भगवद्गीतालाई पनि उपनिषद् जस्तै वेदान्त नै भनिन्छ। औपनिषदप्रमाणजन्य अद्वैतसिद्धान्तको प्रतिपादन गर्ने शास्त्रलाई मात्रै वेदान्तशब्दले बुझाउने हो तापनि विशिष्टाद्वैत, शुद्धाद्वैत, द्वैताद्वैत, शक्तिविशिष्टाद्वैत, द्वैत र अद्वैतसमेतलाई वेदान्तकै नामबाट समलङ्कृत गरेको देखिन्छ।

उपर्युक्त यी सबै वाद वा वेदान्तहरूलाई आचार्यहरूका स्वकल्पनाप्रसूत मात्र भन्न मिल्ने देखिँदैन। किनभने यी सबै वेदरूपी उपजीव्य कल्पवृक्षबाट उद्भूत उपजीवक नै हुन्। यी सबै वादहरू प्रत्यक्ष वा परोक्षरूपमा वेदमा उपलब्ध छन् नै। यी सबैलाई शास्त्रचिन्तन, शास्त्रप्रणयन, शास्त्रार्थका क्रममा विद्वत्समाजमा आदरका साथ वादकथा, जल्पकथासमेतका रूपमा पूर्वपक्ष वा सिद्धान्तपक्षका रूपमा उत्थापन गरिन्छ। त्यतिमात्रै नभएर यी वेदान्तहरूको कुनै न कुनै रूपमा प्रवचन आफ्ना सम्प्रदायका मठमन्दिरहरूमा गर्नुका साथै विद्यालय र विश्वविद्यालयहरूका अतिरिक्त संस्कृत गुरुकुलहरूमा पनि अध्ययन तथा अध्यापन गराइन्छ र परीक्षा पनि लिइन्छ।

## १. विशिष्टाद्वैत वेदान्तदर्शन (रामानुजमत)

यस मतको आदि सङ्केत बादारायणकृत ब्रह्मसूत्रमा पनि पाइन्छ। यसलाई आस्मरथ्य [१]आचार्यको मत भनिन्छ। उहाँ नै यस मतका प्रथम आचार्य भएको प्रतीत हुन्छ। विशिष्टाद्वैतमतको उल्लेख श्रुतिमा पनि देखिन्छ। जसमा भोक्ता [२] जीव, भोग्या प्रकृति र प्रेरयिता यी तीनैथरी ब्रह्मका नै स्वरूप मानिन्छन्। अर्थात् ईश्वर, चित् र अचित् पदार्थ त्रितयस्वरूप हरि नै हुन् भनिन्छ। महर्षि जैमिनि र औडुलोमी आदि पनि द्वैतवादी नै थिए। यही मत [३]श्रुतिको मन्त्रमा पनि देखिन्छ। यही नै विशिष्टाद्वैतको सिद्धान्त हो। [४]उद्गीथ ॐकार यही नै ब्रह्मको

---

१. प्रतिज्ञासिद्धेर्लिङ्गमाश्मरथ्यः। – ब्रह्मसूत्र १।४।६।२०

२. यतज्ज्ञेयं नित्यमेवात्मसंस्थं, नातःपरं वेदितव्यं हि किञ्चित्।
भोक्ता भोग्यं प्रेरितारञ्च मत्वा, सर्वं प्रोक्तं त्रिविधं ब्रह्ममेतत्॥ – श्वेताश्वतरोपनिषद् १।१२

३. ऋतं पिबन्तौ सुकृतस्य लोके गुहां प्रविष्टौ परमे परार्द्धे।
छायातपौ ब्रह्मविदो वदन्ति पञ्चाग्नयो ये च त्रिणाचिकेताः॥ – कठोपनिषद् १।३।१

४. उद्गीथमेतत् परमन्तु ब्रह्म तस्मिन् त्रयं सुप्रतिष्ठाक्षरञ्च। – श्वेताश्वतरोपनिषद् १।७

स्वरूप हो र यसका तीन रूप छन् भन्दै यस श्रुतिवचनले पनि विशिष्टाद्वैतको नै प्रतिपादन गरेको छ भन्ने केही विद्वान्हरूको भनाई देखिन्छ।

उक्त प्राचीन मतका आधुनिक प्रचारक वि.सं. १०७४ तिर जन्मिनुभएका आचार्य श्रीरामानुज वैष्णवसम्प्रदायका आचार्य हुनुहुन्छ । ब्रह्मसूत्रमा उहाँको श्रीभाष्य प्रसिद्ध छ । वस्तुतः वैष्णवधर्मावलम्बी आचार्यका चारथरी सम्प्रदाय देखिन्छन् । ती हुन् – १. वैष्णवसम्प्रदाय, २. ब्रह्मसम्प्रदाय, ३. रुद्रसम्प्रदाय र ४. सनकसम्प्रदाय । उक्त सम्प्रदायका श्री, बिन्दी, लस्करी र चतुर्भुजी समेत गरेर चार शाखा छन् । अद्वैतसम्प्रदायमा जस्तै यस सम्प्रदायमा पनि मूल आधार भगवान् श्रीनारायणलाई नै मानिन्छ। त्यस वैष्णव सम्प्रदायले निर्विशेष र सविशेष ब्रह्म पनि मान्दछ। सधैँ आफूदेखि भिन्न [५]चेतन र अचेतन पदार्थहरू विशेषणबाट विशिष्ट भएर पनि परमात्मा अद्वैतरूपले रहनुहुन्छ भन्ने यस सम्प्रदायको सिद्धान्त वा मत भएकाले यसलाई विशिष्टाद्वैत भनिएको हो।

यस मतको मुक्तिको साधन भगवान्‌को शरणागतिरूप भक्ति हो भने मुक्त भएर जाने धाम [६]वैकुण्ठधाम हो।

## २. द्वैताद्वैतवेदान्तदर्शन (निम्बार्कमत)

यस मतका प्रथम आचार्य निम्बार्क हुनुहुन्छ। उहाँको समय वि.सं. १२१९ मानिन्छ। यो मत पनि भगवान् श्रीनारायणबाट सनकादि हुँदै नारदमुनिबाट आचार्य निम्बार्कले पाउनुभएको हो भनिन्छ । यस मतलाई सनकसम्प्रदायमत भनिन्छ । द्वैत पनि सत्य हो र अद्वैत पनि सत्य हो भन्ने यस मतको सिद्धान्त भएकाले यस सम्प्रदायलाई द्वैताद्वैत वा भेदाभेदवाद पनि भनिन्छ। यस मतमा खास गरेर ब्रह्म, जीव र जगत् तीनथरी पदार्थहरू मुख्यरूपमा मानिन्छन्।

यस मतमा राधा र कृष्णलाई नै आराध्य मानिन्छ। ब्रह्मलाई सगुण र निर्गुण दुवै मानिन्छ र जीवलाई चेतन, अणु तथा [७]नित्य मानिन्छ । जगत् जड हो र

---

५. ईश्वरश्चिदचिच्चेति पदार्थत्रितयं हरिः।
ईश्वरश्चिदिति प्रोक्तो जीवो दृश्यमचित् पुनः॥

६. श्रीवैकुण्ठमुपेत्य नित्यमजडं तस्मिन् परब्रह्मणः।
सायुज्यं समवाप्य नन्दति समं तेनैव धन्यः पुमान्॥

७. अशरीरो वायुरभ्रं विद्युत् स्तनयित्नुरशरीराण्येतानि तद्यथैतान्यमुष्मादाकाशात्समुत्थाय परं ज्योतिरुपसम्पद्य स्वेन रूपेणाभिनिष्पद्यन्ते। – छान्दोग्योपनिषद् ८।१२।२

यसलाई प्राकृत मानिन्छ। अप्राकृत विष्णुपद गोलोक, परमधाम आदिलाई मानिन्छ भने तेस्रो काललाई मानिन्छ। भगवान्‌को महिमाश्रवण, पूजा, अर्चना, रूपभक्ति, अनन्यशरणागति, प्रत्तिपत्ति आदिलाई यस मतमा मुक्तिका साधनहरू मानिन्छन् भने सालोक्य, सामीप्य, सारूप्य र सायुज्य समेत चारप्रकारको मुक्ति मानिन्छ। ब्रह्मविद्‌को मुक्ति जस्तै यस मतमा पनि देवयान अर्थात् अर्चिरामार्गबाट नै अन्तिम मुक्ति हुन्छ भनिन्छ। निम्बार्कले ब्रह्मसूत्रमा वेदान्तपारिजात भाष्य लेख्नुभएको छ।

यो द्वैताद्वैताख्य निम्बार्कमत पनि श्रुतिमूलक हो भनिन्छ र यसको [८]श्रुतिमन्त्र यसरी आएको छ। उनले तपस्या गरेर आनन्द ब्रह्मलाई जाने। आनन्दबाट नै यी भूतहरू उत्पन्न भए। आनन्दबाट नै उत्पन्न भएर बाँच्तछन् र अन्तमा मृत्युका पश्चात् फेरि आनन्दमा नै प्रवेश गर्दछन्। त्यसै गरेर अर्को मन्त्रले भन्छ – त्यो [९]रसस्वरूप हो, रसलाई नै पाएर मनुष्य आनन्दित हुन्छ। यदि यस विश्वमा अर्थात् हृदयाकाशमा रस हुँदैनथियो भने को बाँच्तथ्यो र कसले कर्म गर्थ्यो ? यही रसस्वरूप ब्रह्मले नै आनन्द दिन्छ।

## ३. शुद्धाद्वैतवेदान्तदर्शन (वल्लभमत)

वल्लभाचार्यको जन्म वि.सं. १५३५ तिर भएको मानिन्छ। उहाँले ब्रह्मसूत्रमा अणुभाष्यको प्रणयन गरेर शुद्धाद्वैतमत संस्थापित गर्नुभएको हो। भगवान् रुद्रबाट गुरुपरम्परा हुँदै वल्लभाचार्यले यो ज्ञान प्राप्त गर्नुभएको हुँदा यस शुद्धाद्वैतमतलाई रुद्रसम्प्रदाय भनिन्छ।

यस सम्प्रदायले मायातीत शुद्ध तथा अद्वितीय ब्रह्मतत्त्वलाई मान्दछ। त्यसै कारणले नै यस मतलाई शुद्धाद्वैत वेदान्त दर्शन भनिएको हो। अद्वैत वेदान्त जस्तो मायोपहित ब्रह्म र अज्ञानोपहित जीव यस मतले मान्दैन। शुद्ध ब्रह्मबाट शुद्ध जीव नै निस्कने भनेर यसले मान्दछ। यस मतमा जीवलाई अणु भनिन्छ र परमात्माको सेवक मानिन्छ। यसले प्रपञ्च जगत्‌लाई असत्य वा मिथ्या नमानेर सत्य नै मान्दछ। यसले जगत्‌को अभिन्ननिमित्तोपादनकारण ब्रह्मलाई मान्दछ र सुनबाट गहना बनेजस्तो अविकृत परिणामवाद यसले मान्दछ। सृष्टि भगवान्‌को

---

८. स तपस्तप्त्वा... आनन्दो ब्रह्मेति व्यजानात्। आनन्दाद्ध्येव खल्विमानि भूतानि जायन्ते। आनन्देन जातानि जीवन्ति। आनन्दम्प्रयन्त्यभिसंविशन्ति। – तैत्तिरीयोपनिषद् ३।६।१

९. रसो वै सः रसं ह्येवायं लब्ध्वानन्दी भवति। को ह्येवान्यत् कः प्राण्यात्। यदेष आकाश आनन्दो न स्यात्। एष ह्येवानन्दयति। – तैत्तिरीयोपनिषद् २।१

लीलाविलास मात्र हो भन्दछ।

शुद्धाद्वैतमतका दुइटा मर्यादामार्ग र पुष्टिमार्ग छन् । मर्यादामार्गमा वेद आदि शास्त्र अनुसार कर्म र ज्ञानबाट नै मोक्ष हुन्छ भने पुष्टिमार्गमा चाहिँ भक्ति र शरणागतिबाट नै मोक्ष प्राप्त हुन्छ भनिन्छ । गोलोकवासी सगुण श्रीकृष्णको सायुज्य प्राप्तिलाई यस मतमा मोक्ष मानिन्छ र ज्ञानमार्गबाट चाहिँ केवल अक्षर ब्रह्म प्राप्त हुन्छ भनिन्छ। वल्लभाचार्यले श्रीमद्भागवत महापुराणमा सुबोधिनी नामक प्रसिद्ध टीका लेख्नुभएको छ। प्रस्थानत्रयीको सारसर्वस्व नै श्रीमद्भागवत महापुराण हो भन्ने वल्लभाचार्यको मत देखिन्छ। यस मतको प्रतिपादन पनि श्रुतिबाटै भएको भनिन्छ।

ब्रह्मबाहेक कुनै कार्य र कारण पनि छैन। ब्रह्मसदृश र ऊभन्दा अधिक अर्को कुनै वस्तु पनि छैन। ब्रह्मका विविध प्रकारका सर्वश्रेष्ठ शक्तिहरू छन्। त्यसै गरेर स्वाभाविक ज्ञान, बल, क्रिया (जानाति, इच्छति, यतते), सर्वज्ञता, सर्वेच्छा आदि सबै ब्रह्ममा छन् । अर्थात् स्वयं ब्रह्म सम्पूर्ण चराचर जगत्रूपमा विवर्तित हुन्छ भन्ने [१०]श्वेताश्वतरोपनिषद्को मन्त्रमा व्यक्त गूढ सिद्धान्तलाई शुद्धाद्वैत वेदान्तले आफ्नू मत बनाएको छ।

यो [११]आत्मा प्रवचनादि पाण्डित्यबलबाट प्राप्त हुँदैन किन्तु जसमाथि अनुग्रह गरेर उसले आफ्नू स्वरूप प्रकट गरिदिन्छ, त्यसैद्वारा नै त्यो आत्मा प्राप्त गर्नसकिन्छ भन्ने इत्यादि अनेक श्रुतिवचनहरू पनि शुद्धाद्वैतमतको प्रतिपादनमा पाइन्छन्।

## ४. शक्तिविशिष्टाद्वैत सिद्धान्त

यस मतलाई वेदान्तसम्प्रदायका अन्तर्गत मानिएको छ। जगद्गुरुका पङ्क्तिमा नाम प्रचलित नभए तापनि यस मतका संस्थापक तथा प्रचारक श्रीरेणुकाचार्य हुनुहुन्छ। अनेकौँ निगमागम उपनिषदादि श्रुतिहरूको अनुशीलन गरेर श्रीरेणुकाचार्यले जीव र शिवको एकताको प्रतिपादन गरेका छन् । शक्तिविशिष्टाद्वैतवादी उक्त जीवशीवको ऐक्यलाई अर्थात् लिङ्गाङ्गसामरस्यलाई नै 'तत्त्वमसि' महावाक्यको

---

१०. न तस्य कार्यं करणञ्च विद्यते न तत्समश्चाभ्यधिकश्च दृश्यते।
परास्य शक्तिर्विविधैव श्रूयते स्वाभाविकी ज्ञानबलक्रिया च ॥ – श्वेताश्वतरोपनिषद् ६।८

११. नायमात्मा प्रवचनेन लभ्यो न मेधया न बहुना श्रुतेन।
यमेवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा विवृणुते तनुं स्वाम् ॥ – मुण्डकोपनिषद् ३।२३

अर्थ हो भनिन्छ। अर्थात् [१२]'लिङ्ग' लाई 'तत्' पदबाट लिइएको छ भने 'अङ्ग' शब्दद्वारा 'त्वम्' पदलाई लिइएको छ र दुवैको संयोगलाई 'असि' पदबाट लिइएको छ। श्रीरेणुकाचार्यको ब्रह्मसूत्रमा 'शक्तिविशिष्टाद्वैतभाष्य' देखिन्छ।

### ५. अचिन्त्यभेदाभेद सम्प्रदाय

यस सम्प्रदायका प्रथम आचार्य चैतन्यमहाप्रभु हुनुहुन्छ । यसलाई गौडीयसम्प्रदाय पनि भनिन्छ। यस सम्प्रदायको ब्रह्मसूत्रमा गोविन्दभाष्य पाइन्छ। यसका प्रणेता आचार्य बलदेव हुनुहुन्छ।

### ६. माध्वमत (द्वैतदर्शन)

यस द्वैतदर्शनका आचार्य माध्व वा आनन्द तीर्थ हुनुहुन्छ। उहाँको जन्म वि.सं. १२५४ मा भएको हो। यस सम्प्रदायमा भगवान् सर्वज्ञ, सर्वशक्तिमान्, स्वतन्त्र, सर्वेश्वर विष्णु नै सर्वोच्च तत्त्व र सेव्य हुनुहुन्छ भनिन्छ। यस मतमा यो सारा दृश्यमान् जगत्प्रपञ्चलाई मिथ्या होइन सत्य मानिन्छ। माध्वसिद्धान्त अत्यन्त द्वैतवादी सिद्धान्त हो। यो अद्वैत सिद्धान्तको सर्वांश प्रतिकूल सिद्धान्त हो। यस सम्बन्धमा अद्वैत वेदान्त दर्शको परिचर्चा गर्दा सङ्क्षिप्त तुलनात्मक समीक्षा गरिने छ।

यो दृश्यात्मक मिथ्या प्रपञ्चलाई सत्य मान्ने यस माध्व द्वैत सम्प्रदायले जीव र जडको भेद, ईश्वर र जडको भेद, जीवको परस्पर भेद, जडको परस्पर भेद र ईश्वर र जीवको भेद समेत गरेर पाँचथरी भेदलाई वास्तविक सत्य मान्दछ। यस मतमा जीवलाई अणु, चेतन, दास र मायामोहित मानिन्छ। जीवलाई ईश्वरका अधीनमा मान्नुका साथै अनादिकालदेखि नै बद्ध पनि मानिन्छ।

यस सम्प्रदायमा आफ्नो सुखको अनुभवलाई मुक्ति मानिन्छ। ईश्वरका अनन्त महिमा र गुणका आधारमा अल्पज्ञ जीव र ईश्वरमा भेद मानिएको छ। सालोक्य, सार्ष्टि आदि नै यसका मुक्ति हुन्। यस सम्प्रदायका मुक्तिका साधनहरूमा भगवान्लाई सेव्य र आफूलाई नित्य सेवक मान्नुका साथै यस ज्ञानबाट ईश्वरमा निर्मल भक्तिभाव प्रकट गर्नु नै भगवत्प्राप्तिको परम उपाय मानिन्छ। यसमा भगवान् प्रति अनन्या भक्तिका साथै अनुराग राख्नु र फलको इच्छा न राख्नु मुक्तिको परम

१२. लिङ्गं तत्पदमाख्यातमङ्गं त्वम्पदमीरितम्।
संयोगोऽसि पदं प्रोक्तमनयोरङ्गलिङ्गयोः॥

साधन मानिन्छ र परोपकार, दीन दुःखीको सेवा, भगवद्भजन कीर्तन आदिलाई धर्म मानिन्छ।

यस सम्प्रदायले प्रत्यक्ष, अनुमान र शब्द समेत गरेर तीनथरी प्रमाणहरू मान्दछ । यो माध्वसम्प्रदायपरम्परा नारायणबाट ब्रह्माजी हुँदै हनुमानद्वारा पूर्णप्रज्ञाख्य मध्वले प्राप्त गरेकाले नै यसलाई ब्रह्मसम्प्रदाय भनिन्छ। आचार्य मध्वले ब्रह्मसूत्रमा पूर्णप्रज्ञभाष्य लेख्नुभएको छ।

माध्वसम्प्रदायका सम्बन्धमा उपर्युक्त अनुसार सङ्क्षेपमा चर्चा गरियो । यसमतलाई अझै सङ्क्षिप्तरूपमा कविताद्वारा वर्णन गरिएको छ र [१३]पादटिप्पणीमा दिइन्छ।

यस माध्व द्वैतमतका समर्थक महर्षि जैमुनि एवं महर्षि औडुलोमी आदि भेदाभेदवादी अनेकौँ आचार्यहरूको उल्लेख आचार्य बादरायणले गर्नुभएको छ। त्यसैगरेर द्वैतमतको प्रतिपादन पनि श्रुतिहरूमा पाइन्छ। जस्तै – अर्जित [१४]कर्मफलको प्रकाशक देहमा उत्कृष्ट हृदयका बीच आकाशमा प्रविष्ट भएर कर्मफललाई भोग्ने भएका छाया र आतप समान विरुद्ध स्वभावका जीव र ईश्वर हुन् भनिन्छ।

त्यसैगरेर अर्को श्रुतिले पनि भन्छ – दुई [१५]सुन्दर पँखेटा भएका, साथसाथै बस्ने भएका मित्रहरू एउटै वृक्षमा बस्छन्। ती दुइटा मध्ये एउटाले कर्मको फल भोग्दछ भने अर्कोले नभोगीकन हेरिरहन्छ।

## ७. अद्वैत वेदान्त

उपर्युक्त द्वैताद्वैतपरक केही वेदान्तहरूका मत र सम्प्रदायहरूको सामान्य चर्चापछि अन्तमा अब अद्वैत वेदान्तको सङ्क्षिप्त चर्चा गर्नु सान्दर्भिक ठान्दछु। सबैभन्दा पछाडि अद्वैत वेदान्तको चर्चा गर्नुको तात्पर्य प्रथमतः भविष्यद्वृत्तिका दृष्टिले ती सबै वाद, मत र सम्प्रदायहरूको पर्यवसान अद्वैत वेदान्तमा गएर हुने

---

१३. श्रीमन्मध्वमते हरिः परतमः सत्यं जगत्तत्त्वतो भेदो जीवगणा हरेरनुचरा नीच्चोच्चभावं गताः।
मुक्तिर्नैजसुखानुभूतिरमला भक्तिश्च तत्साधनमक्षादित्रितयं प्रमाणमखिलाऽऽम्नायैकवेद्यो हरिः॥

१४. ऋतुं पिबन्तौ सुकृतस्य लोके गुहां प्रविष्टौ परमे परार्द्धे।
छायातपौ ब्रह्मविदो वदन्ति पञ्चाग्नयो ये च त्रिणाचिकेताः॥ – कठोपनिषद् १।३।१

१५. द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परिषस्वजाते।
तयोरेकः विप्पलं स्वाद्वत्यनश्नन्नन्योऽभिचाकशीति॥ – मुण्डकोपनिषद् ३।१।१

भन्ने देखाउनका लागि नै हो र द्वितीयतः अत्यन्त द्वैतवादी र शुरुदेखि अद्वैतवादका विरुद्धमा शतदूषणी आदि ग्रन्थका रचना गरेर अद्वैतवादलाई दूषित गर्ने दुष्प्रयास गर्दै आएका माध्ववाद वा सम्प्रदायका साथै त्यस सम्प्रदायका आचार्य व्यासराज तीर्थ र उहाँको न्यायामृत ग्रन्थका सम्बन्धमा पनि सङ्क्षिप्त चर्चा गर्नका लागि नै हो। यसको चर्चा अद्वैत वेदान्तको सङ्क्षिप्त चर्चा पश्चात् गरिने छ।

अद्वैत वेदान्तको मूल स्रोत खोज्दै जाँदा विश्वमा सबैभन्दा प्राचीन शास्त्र समष्टिरूपमा रहेको 'ऋग्वेद' मा पुग्नुपर्ने हुन्छ। त्यस अन्तर्गतको नासदीय सूक्तमा भनिएको छ – त्यस महाप्रलयमा न असत् थियो न ता [१६]सत् नै थियो। त्यस समयमा न रजससंज्ञक तलका लोकहरू नै थिए न व्योमसंज्ञक माथिका लोकहरू नै थिए। आवरक र आवर्य पनि थिएनन्। सुखदुःख पनि थिएनन्। त्यस समयमा अवान्तर प्रलयमा जस्तो जल पनि थिएन। त्यस महाप्रलयका समयमा सत् बाहेक स्थूल, सूक्ष्म, प्रधान र कार्य समेत थिएनन्।

त्यस समयमा [१७]मृत्यु पनि थिएन र अमृत पनि थिएन। रात, दिन, मास, ऋतु, संवत्सर आदि केही पनि थिएनन्। उसोभए के शून्य थियो ? होइन, प्राणनकर्ता अर्थात् सम्पूर्ण प्राणीसमूहलाई आत्मसात् गरेर विनावायु प्राणको पनि प्राण अद्वितीय परब्रह्म प्रतिष्ठित थियो। त्यस समयमा स्वधा अर्थात् मायाले युक्त ब्रह्म मात्रै थियो। भूत, भौतिक दुवैको महाप्रलयमा अभाव थियो। केवल ब्रह्माश्रिता माया ब्रह्ममा लीनावस्थामा थिई।

तात्पर्यतः महाप्रलयमा भूतभौतिक प्रपञ्च र आभूतसम्प्लव अमरणधर्मा प्राणसंयुक्त जीव र प्राणापहारक दिनरात, मृत्यु, काल र यिनको ज्ञान पनि थिएन। केवल जीवनसूचक प्राणविरहित स्वधासंज्ञक मायाअन्तर्गर्भित अद्वितीय एक ब्रह्ममात्रै थियो।

सृष्टिपूर्व महाप्रलयमा [१८]तमस् मात्रै थियो । जगत्कारण तमसूबाट नामरूपात्मकप्रपञ्च ढाकिएको थियो। त्यो स्रष्टव्य संसार त्यस अज्ञानान्धकारद्वारा

---

१६. नासदासीन्नो सदासीत्तदानीं नासीद्रजो नो व्योमा परो यत्।
किमावरीवः कुह कस्य शर्मन्नम्भः किमासीद् गहनं गभीरम्॥ – नासदीयसूक्तम् १

१७. न मृत्युरासीदमृतन्न तर्हि न रात्र्या अह्न आसीत्प्रकेतः।
आनीदवातं स्वधया तदेकं तस्माद्धान्यन्न परः किञ्चनास॥ – नासदीयसूक्तम् २

१८. तम आसीत्तमसा गूळ्हमग्रेऽप्रकेतं सलिलं सर्वमा इदम्।
तुच्छ्येनाभ्वपिहितं यदासीत्तपसस्तन्महिनाजायतैकम्॥ – नासदीयसूक्तम् ३

समाच्छादित थियो । त्यो दृश्यमान सम्पूर्ण जगत् सलिल अर्थात् कारणसँग मिलेको किं वा अविभागापन्न अज्ञायमान थियो । क्षीरमा एकीभूत नीरका समान ब्रह्माधिष्ठाता प्रकृतिद्वारा एकीभूत कार्यात्मक प्रपञ्च दुर्विज्ञेय थियो । तमोरूप असत्कल्पद्वारा समावृत थियो । त्यसै तमस्‌द्वारा सर्वथा एकीभूत कार्यात्मक प्रपञ्च थियो । त्यो स्रष्टव्यपर्यालोचनरूप परमेश्वरको तपोरूप अद्‌भूत महात्म्यद्वारा अभिव्यक्त भयो ।

अन्ततः क्षीरबाट एकीभूत र समाच्छादित नीरतुल्य तमस्संज्ञक अनिर्वचनीया मायाद्वारा एकीभूत र समाच्छादित नामरूपात्मक जगत् परब्रह्मको स्रष्टव्यपर्यालोचनरूप तपको अमोघ प्रभावले अभिव्यक्त भयो ।

अतीत सृष्टिमा [१९]अकृतार्थ जीवहरूको सृष्टिका लागि परमात्माले सृष्टि गर्ने इच्छा गरेर त्यसका निम्ति परमात्माले पर्यालोचनरूप तप गरे । त्यो कामना अर्थात् इच्छा परमात्माका मायारूप मनमा उत्पन्न भयो । मायामा विलीन अन्तःकरणनिष्ठ जीवहरूको पूर्वकर्मवासनाका योगद्वारा परमात्मामा सृष्टिको इच्छा भयो । अर्थात् जीवका पूर्वानुष्ठित कर्महरू नै जब सर्गका आरम्भमा परिपक्व भएर फलोन्मुख भए तब कर्माध्यक्षपरमेश्वरका मनमा [२०]सिसृक्षा भयो । क्रान्तदर्शी त्रिकालज्ञ दिव्यदर्शी मनीषिहरूले जीवका पूर्वानुष्ठित कर्मसमूह नै सर्गमा हेतु भएको निश्चय गरे । वस्तुतः जीवका कर्महरू मायामा सन्निहित हुन्छन् । ईश्वरेच्छा पनि मायामा सन्निहित हुन्छ । ब्रह्म चाहिँ त्यस मायाको असङ्ग आश्रय मात्रै हुन्छ । मायाका योगबाट ब्रह्मको अव्याकृत संज्ञा हुन्छ । सङ्क्षिप्ततः ईश्वरकर्तृक पर्यालोचनरूप तपको सर्जनेच्छारूप कामना तथा सर्जनेच्छाको मनीषिमनोगोचर मायोपाधिक महेश्वरभावापन्न अकृतार्थ जीवहरूको मनोनिष्ठ फलोन्मुख अभुक्त अवस्था त्यो हो ।

जगत्‌का [२१]मूलतत्त्व अविद्या, काम र कर्महरू हुन् । जसरी सूर्यका किरणहरू एकै साथ निमेषभित्रै उदय हुनेवित्तिकै सर्वत्र व्याप्त हुन्छन्, त्यसै गरेर अविद्या,

---

१९. कामस्तदग्रे समवर्तताधि मनसो रेतः प्रथमं यदासीत् ।
सतो बन्धुमसति निरविन्दन् हृदि प्रतीष्या कवयो मनीषा ॥ – नासदीयसूक्तम् ४

२०. सोऽकामयत बहु स्यां प्रजायेयेति । स तपोऽतप्यत स तपस्तप्त्वेदं सर्वमसृजत यदिदं किञ्च ॥
– तैत्तिरीयोपनिषद् ८।६

२१. तिरश्चीनो विततो रश्मिरेषामधः स्विदासीदुपरि स्विदासीत् ।
रेतोधा आसन्महिमा आसन्त्स्वधा अवस्तात् प्रयतिः परस्तात् ॥ – नासदीयसूक्तम् ५

काम र कर्मका रश्मिहरूले एकै साथ सम्पूर्ण कार्यवर्गहरूको सिर्जना गरिदिन्छन् । यो सृष्टि पहिले कहीँ कसैका मध्यमा बाङ्गोटिङ्गो भएर रहेको या कसैको तल रहेको अथवा कसैका माथि रहेको नभएर एकैपटक सर्वत्र व्याप्त भएको हो । सृष्टिको क्रमनिर्धारण चाहिँ विद्युत्प्रकाशको क्रमनिर्धारणसरह दुर्लक्ष्य हो । अर्थात् यो दृश्यमान् सृष्टि एकैसाथ निष्पन्न भएको हो ।

सृष्टिकार्यमा कुनै भाव रेतोधा अर्थात् बीजभूत कर्मका कर्ता, भोक्ता जीव थिए भने अरू केही आकाशादि महान् भाव भोग्य थिए । यथार्थतः मायासहित परमेश्वर सम्पूर्ण जगत्को सृष्टि गरेर त्यसै सृष्टिभित्र पसेर भोक्ता र भोग्यको विभाग गर्दछ । भोक्ता जीव हो भने भोग्य स्वधा अर्थात् अन्न हो । भोक्ता उत्कृष्ट हो र भोग्य अपकृष्ट हो । भोक्ता जीवका लागि आकाशादि भोग्य प्रपञ्चको रचना भयो । यसका सर्जक मायासहित परमेश्वर हुन् र उनैबाट यस सृष्टिको व्यवहार चल्ने गर्दछ ।

सारतः उपर्युक्त 'नासदासीत्' (१) 'कामस्तदग्रे' (४) र 'मनसो रेतः' (४) मन्त्रसिद्ध क्रमशः अविद्या, काम र कर्म हेतुक अर्थात् अविद्योपादानक तथा कामकर्मनिमित्तक सृष्टि 'शतपत्रबेधनवत्' आकाशादिक्रमसापेक्ष भएर पनि सूर्योदयानन्तर युगपत् रश्मिविततन्यायद्वारा विद्युत् प्रकाशवत् क्रमको दुर्लक्ष्यता देखिन्छ । अविद्याकामकर्मबद्ध कर्ताभोक्तारूप जीव भोग्यरूप जगत्भन्दा उत्कृष्ट हो भने कर्मफल दाता परमात्माभन्दा निकृष्ट हो ।

यो दृष्टिगोचर हुने विसृष्टि अर्थात् क्रियाकारकफलात्मिका नामरूप-कर्मात्मिका, अग्निसोमसूर्यात्मिका, वाङ्मनःप्राणात्मिका, अन्नअन्नादात्मिका, भूतभौतात्मिका, प्रकृतिप्राकृतरूपा, सुखदुःखमोहात्मिका र सत्त्वरजस्तमोगु-णात्मिका विविधरूपा हो । यो विसृष्टि कुन उपादानकारण र कुन निमित्तकारणबाट समुदभूत भयो ? यस तथ्यलाई परमार्थतः [२२]कसले जान्दछ ? यसका बारेमा कसले प्रष्ट भन्न सक्तछ ? यस सम्बन्धमा विचार गर्दा भूतभौतिक प्रपञ्चको सिर्जनपछि मात्रै देवता, मन र इन्द्रियादिको उत्पत्ति भयो भने त्यस अवस्थामा त्यस मूलकारणलाई तिनीहरूले जान्न सक्ने कुरै भएन । अतः सृष्टिको मूलतत्त्व दुर्विज्ञेय हो भन्ने प्रमाणित हुन्छ । किनभने जुन वस्तु जानिन्छ त्यो दृश्य हुन्छ, जड हुन्छ र

२२. को अद्धा वेद क इह प्र वोचत्कुत आजाता कुत इयं विसृष्टिः ।
अर्वाग्देवा अस्य विसर्जनेनाथा को वेद यत आबभूव ॥ – नासदीयसूक्तम् ६

विकारी हुन्छ । जसलाई हामी कारणका रूपमा अनुमान गर्दछौँ अथवा जसलाई कारणरूपमा जान्दछौँ त्यो पनि मिथ्या होला ! यसरी विचार गर्दा त्यस्तो स्थितिमा कार्यकारणकल्पनाको प्रकाशक सर्वाधिष्ठान स्वयंप्रकाश प्रत्यग्ब्रह्मलाई ज्ञानको विषय कसरी बनाउन सकिन्छ ? अपितु बनाउन सकिँदैन ।

सारांशतः बुझ्नुपर्दा मनवाणीबाट अगोचर परब्रह्मलाई अनर्वचनीया मायाको योगद्वारा जगत्को अभिन्न निमित्तोपादनकारण स्वीकार गरिएको छ । त्यसरी स्वीकार गरिए तापनि त्यसलाई 'इदमित्थम्' अर्थात् यो यस्तै हो भन्नलाई कार्योपाधिक ब्रह्मादिदेवशिरोमणिहरूका लागि पनि दुष्कर नै देखिन्छ ।

जगत्सर्जनको दुर्विज्ञेयता सरह नै सृष्ट जगत्को दुर्धरता र दुर्विज्ञेयता भएको तथ्य यस नासदीयसूक्तको अन्तिम मन्त्रबाट पनि ध्वनित हुन्छ । गिरिनदीसमुद्रादिरूपले विविध र विचित्र [२३]सृष्टि जुन उपादानात्मक परमात्माबाट उत्पन्न भयो त्यसलाई के परमात्माले धारणा गर्छ ? वा गर्दैन ? भनेर विचार गर्नु आवश्यकै छैन, किनभने परमात्मा बाहेक अरूले धारणा गर्न नै सक्तैन । यस सृष्टिका अध्यक्ष परमात्मा हुन् र उनी परमव्योममा रहन्छन् । यो पनि परमात्मा बाहेक अरू कसैले पनि जान्न सक्तैन । अथवा परमात्माले पनि जान्न सक्तैन ? यहाँ परमको अर्थ उत्कृष्ट एवं सत्य भन्ने हुन्छ । व्योमको अर्थ आकाश, आकाशवत् निर्मल स्वयं प्रकाश भन्ने हुन्छ । व्योमशब्द, विपूर्वक तर्पणार्थक अव्धातुबाट पनि बन्दछ । यस्तो अवस्थामा व्योमको अर्थ हुन्छ विशेष तृप्त निरतिशय ज्ञानस्वरूप । यदि गत्यर्थक अव्धातुबाट व्योमशब्द निष्पन्न मानेमा त्यसको अर्थ विशेषरूपले व्याप्त देश, काल, वस्तुबाट अपरिच्छिन्न हुन्छ । यदि ज्ञान अर्थमा व्युत्पत्ति मानेमा त्यसको अर्थ विशिष्ट ज्ञानरूप हुन्छ । जो आफ्नै आत्मामा नै ऊ [२४]प्रतिष्ठित हो । अथवा आफ्नै स्वरूपमा पनि होइन । स्वयंमा [२५]प्रतिष्ठा तथा प्रतिष्ठेयभाव अथवा आधाराधेयभाव होइन ।

उपर्युक्त अनुसार जगत्का अध्यक्षको परमव्योममा रहने भाव यही हो । यसरी देशकालादि त्रिविधपरिच्छेदशून्य परमात्मा सृष्टिको मूलकारण भएको आफैँलाई

---

२३. इयं विसृष्टिर्यत आबभूव यदि वा दधे यदि वा न ।
यो अस्याध्यक्षः परमे व्योमन्त्सो अङ्ग वेद यदि वा न वेद ॥ – नासदीयसूक्तम् ७

२४. स भगवः कास्मिन्प्रतिष्ठित इति स्वे महिम्नि । – छान्दोग्योपनिषद् ७।२४।१

२५. यदि वा न महिनीति । – छान्दोग्योपनिषद् ७।२४।१

जान्दछ ? वा जान्दैन ? अथवा आफैँमा अज्ञानकल्पित प्रपञ्चलाई परमात्माले जान्दछ ? वा जान्दैन पनि भन्ने नै उपर्युक्त सूक्तमा आएको 'यदि वा न वेद' भन्ने वाक्यांशको अभिप्राय हो। जब स्वदृष्टिमा सृष्टि छँदैछैन भनेपछि केलाई जान्ने ? यस सृष्टिलाई जान्ने परब्रह्मबाहेक अरू कोही छैन।

उपर्युक्त अनुसार श्रुतिले सृष्टिपूर्वको वर्णन गरेर सम्पूर्ण सृष्टिको अभिन्न-निमित्तोपादनकारण ब्रह्म नै भएको र त्यसै अचिन्त्य तथा अकल्पनीय परमात्माको विश्वातीत महिमा र रहस्यलाई औपनिषदज्ञानगर्भित अद्वैत वेदान्तले मात्र उज्जृम्भित तथा उद्घाटित गर्न सक्तछ, किन्तु अन्य वेदप्रमाणशून्य स्वज्ञानकल्पित दर्शन र वेदान्तहरूले गर्न सक्तैनन्।

परब्रह्म परमात्मा नै निमित्तकारण र उपादानकारण पनि भएको [२६]ब्रह्मसूत्रले पनि भनेको छ। किनभने यदि ब्रह्मलाई निमित्त र उपादानकारण नमानेमा [२७]प्रतिज्ञावाक्य र [२८]श्रुतिवाक्य विरुद्ध हुने शाङ्करभाष्यमा र भामतीमा पनि आएको छ।

सृष्टिको कर्ता प्रधान, परमाणु वा अन्य कुनै अल्पशक्तिक वस्तु हुन सक्तै नन्। किनभने [२९]श्रुतिले ईक्षण तथा [३०]कामनापूर्वक सृष्टिको वर्णन गरेको छ, जुन सर्वनियन्ता, सर्वात्मक विभु र परम शक्तिसम्पन्न चिदात्मक परम ब्रह्मबाट मात्रै सम्भव छ। निम्न लिखित श्रुतिहरूमा आधारित देखिन्छ। जस्तै –

अद्वैत वेदान्तको उद्भव निम्न लिखित श्रुतिहरूमा आधारित देखिन्छ। जस्तै– नासदीयसूक्त, पुरुषसूक्त, 'सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम्' (छा.उ.६।२।१) 'सर्वनिमेषा जज्ञिरे विद्युतः पुरुषादधिकला मूहूर्तः काष्ठाश्च' (तै.आ.१०।१।२) 'सूर्याचन्द्रमसौ' (ऋग्वेद) 'दिव्यो ह्यमूर्तः ... विश्वस्य धारिणी' (मुण्डकोपनिषद् २।१।२,३) 'असद्वा इदमग्र आसीत्, ततो वै सदजायत' (तै.उ.२।७) 'सत्यं

---

२६. जन्माद्यस्य यतः। – ब्रह्मसूत्र १।१।१।२

२७. प्रकृतिश्च प्रतिज्ञादृष्टान्तानुपरोधात्। – ब्रह्मसूत्र १।४।७।२३
न मुख्ये सम्भवत्यर्थे जघन्या वृत्तिरिष्यते।
न चानुमानिकं युक्तमागमेनापबाधितम्॥
सर्वे हि तावद्वेदान्ता पौर्वापर्येण वीक्षिताः।
ऐकान्तिकाद्वैतपरता द्वैतमात्रनिषेधतः॥ – भामती

२८. यतो वा इमानि भूतानि जायन्ते येन जातानि जीवन्ति यत्प्रयन्त्यभिसंविशन्ति।
– तैत्तिरीयोपनिषद् ३।१

२९. तदैक्षत बहुस्यां प्रजाययेति। – छान्दोग्योपनिषद् ६।२,४

३०. स ईक्षाञ्चक्रे, स प्राणमसृत। – प्रश्नोपनिषद् ६।३,४

ज्ञानमनन्तं ब्रह्म' (तै.उ.२।१) 'तस्माद्वा एतस्मादात्मन आकाशसम्भूतः' (तै.उ.२।१) 'तदात्मानं स्वयमकुरुत' (तै.उ.२।७) इत्यादि ।

महाप्रलयमा न [३१]सत् नै थियो, न असत् नै थियो, किन्तु मायासंज्ञक अनिर्वचनीय तमस् मात्रै थियो । त्यो तमस् स्वतः सत् थिएन, तर सत्संज्ञक परमात्माका संसर्गले नै मायाको सत्त्व मान्य भएको हो । परन्तु नासदीयसूक्तले भने प्रकारान्तरले त्यसको सत्त्वको निषेध गरेको छ ।

महाप्रलयमा यो सारा सृष्टि तमोभूत अर्थात् [३२]तमस्मा लीन थियो । तमःशब्दले गुणवृत्तिद्वारा प्रकृतिलाई लिइन्छ । जसरी अँध्यारोमा कुनै पनि वस्तु देखिँदैन त्यसैगरेर महाप्रलयमा प्रपञ्च सूक्ष्मरूपमा मायामा लीन थिई र माया पनि ब्रह्मात्मरूपले अव्याकृत थिई । त्यो प्रत्यक्षादि कुनै प्रमाणले पनि ज्ञातव्य थिइन । श्रुति [३३]अनुसार महाप्रलयमा जगत्लाई अव्याकृतसंज्ञक सद्रूप मानिन्छ । सत्शब्द ब्रह्मवाचक हो । त्यस समयमा जगत् ब्रह्मात्मरूपले स्थित थियो र अव्यक्त थियो ।

यो दृश्यमान् सृष्टि कसरी सिर्जियो भन्ने सम्बन्धमा अद्वैत वेदान्तको दृष्टिले विवेचना गर्ने सन्दर्भमा सूतसंहिताबाट केही सान्दर्भिक सामग्री यहाँ उल्लेख गर्नु ज्ञानवर्धक ठान्दछु, जुन यसप्रकार छ –

श्रुतिप्रमाणका आधारमा र श्रुतिसिद्ध मायाशक्तिका आधारमा अद्वितीय ब्रह्मबाटै सृष्टिको उत्पत्ति सम्भव छ । जुन यो [३४]जगत्स्रष्टा अद्वितीय ब्रह्म हो, ऊ यो सृष्टिरचनाका पूर्व महाप्रलयमा सत्त्वरजस्तमोगुणात्मिका आफ्नी मायासँग एकीभूत भएर रहन्छ । साङ्ख्याभिमत प्रकृति वा प्रधानजस्तो वेदान्तसम्मत माया स्वतन्त्र छैन । वेदान्तकी माया परमेश्वराश्रित शक्ति हो । महाप्रलयमा मायाकार्य आकाशादि भूतभौतिकादि प्रपञ्च मायामा नै प्रविलीन रहेका हुन्छन् । त्यस समयमा महेश्वर पूर्वकल्पीय मायामय वासनाद्वारा अन्वित भएर शेष रहन्छन् ।

त्रिगुणमयी [३५]माया वा प्रकृति प्रलीनावस्थामा क्षोभहेतुको अभाव जस्तो

---

३१. नासदासीन्नो सदासीत्तदानीं किन्त्वभूत्तमः ।
सद्योगात्तमसः सत्त्वं न स्वतस्तन्निषेधनात् । – पञ्चदशी २।५०

३२. आसीदिदं तमोभूतमप्रज्ञातमलक्षणम् ।
अप्रतर्क्यमनिर्देश्यं प्रसुप्तमिव सर्वतः ॥ – मनुस्मृतिः १।५

३३. क. तद्धेदं तर्ह्यव्याकृतमासीत् । – बृहदारण्यकोपनिषद् १।४।७
ख. सदेव सोम्येदमग्र आसीत् । – छान्दोग्योपनिषद् ६।२।१

३४. ईश्वरो जगतः कर्ता मायया स्वीयया पुरा ।
अभेदेन स्थितः पूर्वकल्पवासनयाऽन्वितः । – सूतसंहिता ४ यज्ञ. सूतगीता ४–१

भएकाले अक्षुब्ध रहेर असत्प्रायः हुन्छे। मायाश्रय महेश्वर प्राणीहरूको परिपक्व पुण्यपापात्मक कर्महरूको फलात्मक सुखदुःखका उपभोगका लागि सृष्टिरचनामा प्रवृत्त हुन्छ। पूर्वकल्पमा प्राणीहरूका अभुक्त शुभाशुभकर्म जब कालवशात् परिपक्व हुन्छ, तब ती कर्महरूका अनुरूप स्वरूपले अभिन्न स्वसम्बन्धिनी मायाद्वारा स्वयं एकीभूत भए तापनि परमेश्वर त्यस मायाद्वारा आफ्नू भेदको कल्पना गर्दछ। यो भेद कल्पना पनि त्यसै [३६]मायाद्वारा आध्यासिक सम्बन्ध प्राप्त सोपाधिक परमेश्वर कृत हो। अन्यथा असङ्ग, उदासीन, कूटस्थ, चिन्मात्र, निरुपाधिक परमेश्वरद्वारा भेदकल्पनादि पनि कहाँ सम्भव छ ? सर्वथा सम्भव छैन।

उपर्युक्त अनुसार आफ्नै भेदको परिकल्पना गर्ने परमेश्वर नै हुन्। [३७]पराशक्तिरूपा मायासम्बन्धी सत्त्वादिगुणजनित पूर्वकल्पीय वासनासमन्वित मायोपहित परमेश्वर पूर्वकल्पका जस्तै नै [३८]ईक्षणकर्ता भएर स्रष्टव्यजगत्पर्यालोचनरूप ईक्षण गर्दछ भनेर श्रुति भन्दछ। परमेश्वरले मायाका योगले धेरै हुनका लागि ईक्षण गर्दछ।

यसरी [३९]ईक्षणावस्थामा प्राप्त आफ्ना शक्ति सहित परमात्माले प्राणीहरूको पूर्वानुष्ठित अभुक्त शुभाशुभ कर्महरूको भोग गराउन सृष्टि शुरु गर्नुभयो। त्यो सञ्चालनार्थ त्यस मायाका प्रविभक्त सत्त्वादि गुणहरूका उपाधिले विष्णु, ब्रह्मा र रुद्रको सिर्जना परमात्माले गर्नुभयो। उनै तीन ब्रह्मा, विष्णु र रुद्रबाट सृष्टि, स्थिति र प्रलयको अनन्त शृङ्खला चल्दछ। ती तीन देवहरूका साथै सम्पूर्ण सृष्टिमा परमात्मा आफैँ अन्तर्यामीरूपले पस्ने कुरा [४०]श्रुतिहरूमा आएको छ।

किन्तु सृष्टि हुनुपूर्व लयका समयमा असत् नै थियो कि ! भन्ने सन्देह उत्पन्न

---

३५. कालकर्मानुगुण्येन स्वाभिन्नस्वीयमायया।
अभिन्नोऽपि तथा स्वस्य भेदं कल्पयति प्रभुः॥ – सूतसंहिता ४ यज्ञ. सूतगीता ४–२

३६. इन्द्रोमायाभिः पुरुरूप इयते युक्ता ह्यस्यः हरयः शता दशेति। – बृहदारण्यकोपनिषद् ४।५।१९

३७. पुनः पूर्वेक्षणोत्पन्नवासनाबलतोऽनघाः।
ईक्षिता पूर्ववद्भूता स्वशक्त्या परयायुतः। – सूतसंहिता ४ यज्ञ. सूतगीता ४–४

३८. तदैक्षत बहु स्यां प्रजायेय। – छान्दोग्योपनिषद् ६।२।४

३९. मायाया गुणभेदेन रुद्रं विष्णुं पितामहम्।
सृष्ट्वाऽनुप्राविशत्तेषामन्तर्यामितया हरः॥ – सूतसंहिता ४ यज्ञ. सूतगीता ४,५

४०. क. तत्सृष्ट्वा तदेवानुप्राविशत्। – तैत्तिरीयोपनिषद् २।६।१
ख. यः पृथिव्यां तिष्ठन् पृथिव्या अन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयत्येष त अन्तर्याम्यमृतः। – बृहदारण्यकोपनिषद् ३।७।३

हुन्छ। किनभने श्रुतिले, प्रकारान्तरले असत्‌बाट नै सत्‌को उत्पत्ति भयो भनेको छ। त्यो सत् नै आत्मा भएको भनेर उत्तर वचनले श्रुति भन्दछ। [४१]असत्‌बाट कसरी उत्पन्न हुन सक्तछ ? भन्ने यस आक्षेपवचनबाट पनि अव्याकृतसंज्ञक असत्‌लाई नै जगत्कारण मान्नुपर्दछ, न कि बन्धयापुत्रजस्तो अलीक असत्‌लाई। यसलाई अझ सुदृढ पार्दै अर्को श्रुतिले 'सृष्टि हुनुपूर्व असत् संज्ञक जस्तै अप्रकट सत् थियो त्यसै सत्‌बाट सृष्टि भयो' भन्दछ।

उपर्युक्त केही श्रुतिहरूले लाक्षणिकरूपमा असत् नामक अव्याकृतबाट नाम-रूपात्मक प्रपञ्चको अभिव्यक्ति भएको कुरा भनेका छन् भने यसैमा केही अरू [४२]श्रुतिहरूले भने कसरी असत्‌बाट सत्‌को उत्पत्ति हुन्छ ? भनेर प्रश्न गरेका छन्। यसरी माथिका पङ्क्तिहरूमा नासदीयसूक्त लगायतका श्रुतिहरू र सूतसंहितासमेतले भनेको सृष्टिक्रमको सङ्केतसम्म गरियो र अरू केही उल्लेख गरिने छ।

महाप्रलयको अन्त र महासृष्टिको प्रथम [४३]प्रभातमा स्वतः सिद्ध स्वयंप्रकाश आत्माका अतिरिक्त सत्, असत् र सदसत्‌भन्दा विलक्षण कुनै अनिर्वचनीय वस्तु पनि थिएन। उक्त सत् र असत्‌भन्दा विलक्षण तत्त्व नै जगत्कारणमा सहकारीका रूपमा अद्वैत वेदान्तमा अभीष्ट छ। त्यो तत्त्व नै अद्वैत वेदान्तमा प्रसिद्ध वक्ष्यमाण तमस्, माया, अविद्या वा अज्ञान हो। त्यो तत्त्व ब्रह्मतुल्य निर्वाच्य सत्य पनि होइन र शशशृङ्गतुल्य निरुपाख्य असत् पनि होइन। त्यो इन्द्रियगोचर कार्यकोटिको सत् पनि होइन र इन्द्रिय अगोचरकोटिको असत् पनि होइन।

उक्त तत्त्व यद्यपि सत् अर्थात् अबाध्य र असत् अर्थात् बाध्य बन्ध्यापुत्रादि परस्परविलक्षण पदार्थमा बन्ध्या र बन्ध्यापुत्र सरह सहस्थिति सम्भव देखिँदैन। तथापि प्रतीतिगोचर अर्थक्रियाकारी बाधयोग्य घटपटादि पदार्थहरूलाई पनि प्रातिभासिक वा असत् मानेमा रज्जु र रज्जुसर्पतुल्य सहावस्थान पनि सम्भव छ। यस्तो भए तापनि दुवैमा तादात्म्य सिद्ध हुन सक्तैन। तादात्म्य सिद्ध हुनका लागि जगत्कारणरूपले सदाश्रित हुने भएकी अनिर्वचनीया मायाशक्ति मान्य छ।

जसरी घटोत्पादिनीशक्तिका विना केवल मृत्तिकाले घटोत्पत्ति सम्भव

---

४१. कथमसतः सज्जायेत ? – छान्दोग्योपनिषद् ६।२।२

४२. तद्धेदं तर्ह्यव्याकृतमासीत्तन्नामरूपाभ्यामेव व्याकृतासौ नामायमिदं रूप इति।
– बृहदारण्यकोपनिषद् १।४।७

४३. असद्वा इदमग्र आसीत्, ततो वै सदजायत। तदात्मानं स्वयमकुरुत। – तैत्तिरीयोपनिषद् २।७

छैन । दाहिकाशक्तिका विना केवल अङ्गारले डढाउन सम्भव छैन । त्यसै गरेर अज्ञानका विना केवल रज्जुबाट मात्रै सर्पादिको उत्पत्ति सम्भव हुँदैन । त्यसरी नै मायाशक्तिका विना केवल असङ्ग चिदात्माबाट मात्रै प्रपञ्चोत्पत्ति सम्भव छैन । रज्जु र रज्जुसर्पको मध्यवर्ती रज्जुमा समाश्रित अज्ञानतुल्य ब्रह्माश्रिता प्रपञ्चोपादिनी शक्ति मान्य छ भन्ने अद्वैत वेदान्तको सिद्धान्त हो ।

वस्तुतः सत् असत् होइन र असत् पनि सत् होइन । यी दुवै परस्पर विलक्षण हुन् । प्रपञ्चोपादिनीशक्ति उभय विलक्षण हो । त्यो तमोगुणविशिष्टा माया प्रपञ्चोपादानमा परब्रह्मकी भावरूपा उपादानकारणकी सहायिका शक्ति हो भने सत्त्वगुणविशिष्टा माया ब्रह्मकी निमित्तकारणकी सहायिका शक्ति हो । यसरी त्यो माया परमात्माकी भावरूपाशक्ति भएको हुँदा असत् होइन र ब्रह्मज्ञानपछि बाध हुने हुँदा परमभावरूप सत् पनि होइन । उपर्युक्त माया परमभावरूप सत् भन्दा विलक्षण आद्यन्तयुक्ता हो र ज्ञानद्वारा बाध हुने भएकाले असत् हो । [४४]श्रुतिस्मृति आदिले पनि माया र मायाका कार्यलाई असत् मानेका छन् ।

यसरी ब्रह्मकी प्रपञ्चात्मिका शक्ति माया र कार्यात्मक प्रपञ्च दुवै नै सदसत् या भावाभावरूप अनिर्वचनीय हुन् । यी दुवैको तादात्म्य हुन्छ । शास्त्रहरूले मायालाई सत् र असत्भन्दा विलक्षण अनिर्वाच्या मानेको छ । जसरी अस्निग्धमृत्तिकामा घटोत्पादिनीशक्ति नहुने हुनाले घटोत्पत्ति असम्भव हुन्छ । त्यसरी नै मायाविरहित असङ्ग ब्रह्मबाट प्रपञ्चोपत्ति हुन सम्भव छैन । जस्तै रज्जुको अज्ञान नै सर्पोपादनको हेतु हो तर केवल रज्जु होइन । किनभने रज्जुरूप विदित रज्जुबाट रज्जुसर्पोत्पत्ति सम्भव छैन र शुद्ध सत्बाट प्रपञ्चोपत्ति पनि सम्भव छैन ।

श्रुतिमा मायालाई कतै सत्, असत् र सदसत् भनेर तीन कोटिबाट, कहीँ सत् असत्, सदसत् भिन्न, अभिन्न, उभय, सभाग, निर्भाग, उभयरूप नवकोटिदेखि मायालाई विलक्षण मानिन्छ । मायालाई कहीँ अनादि अविद्या सत् र असत् विलक्षणा अनिर्वाच्या मानिन्छ ।

[४५]वेदान्तमा माया र जगत्लाई न सत्, न असत्, न सदसत्, न भिन्न, न

४४. क. नासतो विद्यते भावो नाभावो विद्यते सतः । – गीता २।१६
ख. असतो मा सद्गमयः । – बृहदारण्यकोपनिषद् १।३।२८

अभिन्न, न भिन्नाभिन्न, न सभाग, न निर्भाग र न सभागनिर्भागोभय भनिएको छ। सारांशतः अद्वैत वेदान्तमा मायालाई अठार प्रकारले भनिएको छ – १. सत्, २. असत्, ३. सदसत्, ४. न सत्, ५. न असत्, ६. न सदसत्, ७. सादि, ८. अनादि, ९. साद्यनादि, १०. न सादि, ११. न अनादि, १२. न साद्यनादि, १३. सावयव, १४. निरवयव, १५. सावयवनिरयव, १६. न सावयव, १७. न निरवयव र १८. न सावयवनिरवयव। यसरी मायालाई अठार परस्पर विरुद्धरूपले निरूपण गरिन्छ। यसैकारण मायालाई अनिर्वचनीया सिद्धा भनिएको हो।

जसरी [४६]जगत्‌को सर्जन दुर्विज्ञेय हो, त्यसरी नै जगत् दुर्धर पनि हो। जुन उपादानस्वरूप परमात्माबाट यो जगत् उत्पन्न हुन्छ, उनै परमात्माले यसलाई धारणा गर्नुहुन्छ, अरू कसैले पनि यसलाई धारणा गर्न सक्तैन। यस प्रकार जगत्‌का अभिन्न उपादानकारण र निमित्तकारण परमात्मा हुनुहुन्छ र यसका धारक पनि परमात्मा नै हुनुहुन्छ। परमात्मा परब्रह्म नै जगत्‌का उपादानकारण र निमित्तकारण भएको कुरा [४७]ब्रह्मसूत्रले पनि भनेको छ।

सृष्टिका सम्बन्धमा केही दर्शनहरू, सम्प्रदायहरू र अद्वैत वेदान्त बाहेकका अन्य वेदान्तहरूको भ्रान्त धारणा देखिन्छ, जुन सनातन वैदिक सिद्धान्त प्रतिकूल देखिन्छ। वैदिक सिद्धान्त अनुसार [४८]परमात्माबाटै सारा सृष्टि हुन्छ, परमात्मामा नै रहन्छ र अन्तमा परमात्मामा नै लीन हुन्छ। भ्रान्तदर्शनहरूमा पूर्वमीमांसालाई सर्वप्रथम लिन सकिन्छ किनभने उत्तरमीमांसाजस्तै पूर्वमीमांसा पनि श्रौतप्रमाणलाई सर्वोपरि मान्ने दर्शन हो तर उसले महाप्रलय मान्दैन। 'न कदाचिदनीदृशं जगत्' अर्थात् कहिल्यै पनि यो जगत् नभएको अवस्था थिएन भन्छ र ऊ खण्डप्रलय मान्दछ। पूर्वमीमांसाले जगत्स्रष्टाका रूपमा ईश्वर वा ब्रह्मलाई मान्नु र 'यतो वा इमानि' श्रुतिप्रमाणलाई मान्नु आवश्यक नै ठान्दैन।

साङ्ख्य र योगदर्शनले त्रिगुणात्मक प्रधानलाई नै कार्यप्रपञ्चको

---

४५. क. अव्यक्तनाम्नी परमेशशक्तिरनाद्यविद्यात्रिगुणात्मिकापरा।
कार्यानुमेया सुधियैव माया यया जगत्सर्वमिदम्प्रसूयते॥ – विवेकचूडामणि ११०
ख. सन्नाप्यसन्नाप्युभायात्मिका नो भिन्नाप्यभिन्नाप्युभयात्मिका नो।
साङ्गाप्यनङ्गाप्युभयात्मिकानो महाद्भूतानिर्वचनीयरूपा॥ – विवेकचूडामणि १११

४६. ऋग्वेदसायणभाष्यम्।

४७. प्रकृतिश्च प्रतिज्ञादृष्टान्तानुपरोधात्। – ब्रह्मसूत्र १।४।२३

४८. यतो वा इमानि भूतानि जायन्ते येन जातानि जीवन्ति ...। – तैत्तिरीयोपनिषद् ३।१।१

उपादानकारण मान्दछन् । सुखदुःख तथा मोहात्मक प्रपञ्चमा अनुगत सत्त्व, रजस् र तमस्बाट यो सिद्ध हुन्छ, किनभने त्रिगुणकी साम्यावस्थारूपा प्रकृति नै महाप्रलयमा विद्यमान हुन्छे । यस फलबलकल्प्य तथ्यका अनुसार तिनीहरू आनुमानिक त्रिगुणात्मक प्रधानलाई प्रपञ्चको उपादानकारण मान्दछन् । साङ्ख्यका मतमा जगत्को अभिन्ननिमित्तोपादनकारण प्रधानलाई नै लिइन्छ ।

पूर्वविद्यमान कारणव्यापारद्वारा अभिव्यञ्जित हुने परिणामवादी साङ्ख्यको मत ठीक होइन भन्दै पृथिवी, जल, तेज र वायुका परमाणु नै ईश्वरेच्छा, काल र जीवहरूको परिपक्व फलोन्मुख कर्महरूका योगद्वारा नै भूतचतुष्टयात्मक प्रपञ्चको आरम्भ हुन्छ भन्ने वैशेषिक र नैयायिकको मत देखिन्छ । यिनीहरू उत्पतिका पूर्व कारणमा कार्यको स्वत्त्व मान्दैनन् । आकाश, दिक्, काल, मन र परमाणु अनात्मपदार्थ भएर पनि महाप्रलयमा स्वरूपले विद्यमान रहन्छन् भनेर वैशेषिक र नैयायिहरू मान्दछन् । यसरी मान्ने भएका उनीहरू एकातर्फ आंशिक प्रलयलाई स्वीकार गर्दछन् भने अर्कातर्फ अनेकोपादनकारणवादी सिद्ध हुन्छन् ।

केही विचारकहरू अतीन्द्रिय परमाणुहरूको पुञ्जीभूत यो प्रपञ्च हो भन्दछन् । यस्तै नै संयोगवादीहरूका मतमा भने सूक्ष्मपदार्थहरू पनि सहावस्थानका प्रभावले इन्द्रियगोचर हुन सक्तछन् भन्ने देखिन्छ । उदाहरणका लागि सूक्ष्म केश टाढाबाट दृष्टिगोचर नभए पनि ती केशहरूको समूह चाहिँ दृष्टिगोचर हुन्छ । यसरी आरम्भ परिणाम र संयोगवादी दार्शनिकहरू वैदिक प्रमाण ग्रहण नगर्नाले जगत्कारणका सम्बन्धमा विभ्रान्त देखिन्छन् ।

उपर्युक्त स्थितिमा 'तदैक्षत' (छा.उ.६।२।३) 'स ईक्षाञ्चक्रे' (प्र.उ.६।३) 'सोऽकामयत' (तै.उ.२।६) आदि श्रुतिहरूले चेतन परमात्मालाई नै जगत्को निमित्तकारण र 'बहुः स्याम्' (तै.उ.२।६ र छा.उ. ६।२।३) आदि श्रुतिहरूले परमात्मालाई नै उपादानकारण मानेको देखिन्छ । किन्तु त्यस परमात्मालाई अभिन्ननिमित्तोपादनकारण स्वीकार गरेर प्रपञ्चको अभिव्यक्ति स्वीकार गर्नु उपयुक्त हो ? अथवा होइन ? भन्ने प्रश्न उठ्न सक्तछ, यसमा केही दार्शनिकहरू आफ्नू विचार यसरी व्यक्त गर्दछन् । यदि कार्य जड हो र कारण चेतन हो भने ती दुईमा तादात्म्याध्यास हुन सक्तैन । किन्तु जड र जडका बीच तादात्म्याध्यास हुन्छ । जस्तै – मृत्तिका र घट, तन्तु र पट, सुन र सुनका गहना जस्ता कार्य र कारणका बीचमा तादात्म्य हुन्छ । यद्यपि चेतनाशून्य नङ र रौँ आदि चेतनासम्पन्न

शरीरबाट उत्पन्न हुन्छन् र जड रेतस्‌बाट चेतनासम्पन्न देह उत्पन्न हुन्छ। यो चाहिँ अपवाद मात्रै हो सिद्धान्त भने होइन।

उपर्युक्त विश्लेषणबाट सामान्यरूपमा चेतनकारणबाट नै चेतन वस्तु र अचेतन कारणबाट अचेतन वस्तु पैदा हुन्छ भन्ने स्थूल सिद्धान्त देखिन्छ। प्रकृत प्रसङ्गमा चार्वाकका सरह जड भूतचतुष्टयबाट चेतन प्राणी जीवको उत्पत्ति हुन्छ भनेर मान्न सर्वथा सकिँदैन। किन्तु श्रौतसिद्धान्त अनुसार चेतनतत्त्व नै जगत्‌को कारण मान्नु नै उपयुक्त हुन्छ।

उपर्युक्त परिप्रेक्ष्यमा माथि उल्लेख गरिएका वेदान्त सम्प्रदायहरूमध्ये शुद्धद्वैतवादी माध्वसाम्प्रदायको मत र शुद्ध श्रौतसिद्धान्त मान्ने अद्वैत वेदान्तका बीचमा सङ्क्षिप्त तुलनात्मक चर्चा गर्नु सान्दर्भिक ठान्दछु। यसबाट सबै द्वैतवादी वेदान्त मत, अन्य आस्तिक दर्शनहरू र नास्तिक दर्शनहरूको श्रौतसिद्धान्तप्रतिकूलको मत समेत प्रत्याख्यान भएको सम्झनु पर्दछ।

स्वामी श्रीमधुसूदन सरस्वतीले लेख्नुभएका थुप्रै महत्त्वपूर्ण ग्रन्थहरू छन्। तिनमा अद्वैतवेदान्तपरक अद्वैतसिद्धिग्रन्थ पनि एक हो। यो ग्रन्थ नव्यन्यायको शैलीमा लेखिएको आजसम्मको सबैभन्दा प्रौढ र दुरूह ग्रन्थ हो। केही विद्वान्‌हरूको भनाइ अनुसार अद्वैतसिद्धि कुनै खास मौलिक ग्रन्थ नभएर अद्वैतवेदान्तका विरुद्धमा व्यासराज तीर्थद्वारा लेखिएको न्यायामृतग्रन्थको आमूलचूल आनुपूर्वी खण्डन ग्रन्थ हो। अद्वैतसिद्धिग्रन्थको प्रतिपादनशैली अत्यन्त सुदृढ, परिष्कृत, वैदूष्यपूर्ण र प्राञ्जलसमेत भएको हुँदा सामान्य व्यक्तिले यस ग्रन्थलाई व्यासराज तीर्थको ग्रन्थ न्यायामृतको खण्डन गर्न लेखिएको ग्रन्थ हो भनेर पत्तो लगाउन सक्तैन। श्रीगौडब्रह्मानन्द स्वामीले अद्वैतसिद्धिको टीका लघुचन्द्रिकामा कहीँ कहीँ व्यासराजको न्यायामृतग्रन्थको उल्लेख गर्नुभएको छ किन्तु अद्वैतसिद्धिग्रन्थको मूलमा भने कहीँ पनि न्यायामृतग्रन्थको उल्लेख श्रीमधुसूदन सरस्वतीले गर्नुभएको छैन। अद्वैतदर्शनको विशाल परिवारमा यस प्रकारको प्रमेयबहुल, परिष्कृत तथा सुदृढ प्रक्रियायुक्त अरू ग्रन्थ देखिँदैनन्। अद्वैतवेदान्तको संसारमा यो अद्वैतसिद्धिग्रन्थ वास्तवमा महासागर नै हो भन्दा कुनै अत्युक्ति हुँदैन।

अद्वैतसिद्धिग्रन्थको प्रतिपादन शैली नितान्त प्राञ्जल र परिष्कृतसमेत छ। भाषामा कहीँ कतै पनि सभ्यता र वादको मर्यादालाई उल्लङ्घन गरेको पाईदैन।

न्यायामृतग्रन्थमा जस्तो कटु भाषा यसमा श्रीमधुसूदन सरस्वतीले प्रयोग गर्नुभएको छैन । यस सम्बन्धमा अगाडि अद्वैतसिद्धिग्रन्थका रचनाकार स्वामी श्रीमधुसूदन सरस्वती र न्यायामृतग्रन्थका रचयिता श्रीव्यासराज तीर्थले प्रयोग गर्नुभएको भाषा, तर्क र शैलीसमेतका बारेमा सङ्क्षिप्त तुलनात्मक समीक्षा प्रस्तुत गरिने छ।

वास्तवमा माध्वसम्प्रदायका प्रखर विद्वान् श्रीव्यासराज तीर्थले आफ्नू न्यायामृतम् भन्ने दार्शनिकग्रन्थमा अद्वैत वेदान्तमा प्रतिपादित कैयौँ मूल सिद्धान्तहरूलाई खण्डन गर्दै द्वैतसिद्धान्तको सुदृढताका साथ स्थापना गर्नुभएको छ। माध्वसम्प्रदायका विद्वत्परम्परामा श्रीव्यासराज तीर्थको ठूलो स्थान छ। जब द्वैतको विशाल आकाशमा द्वैतको एकक्षत्र आधिपत्यलाई चिर्दै अद्वैतसिद्धान्त उद्भासित भएको थियो, त्यसैबेलादेखि नै अद्वैत र द्वैतसम्प्रदायका आचार्यहरूमा एक अर्काका सिद्धान्तको खण्डन र मण्डन गर्दै विभिन्न ग्रन्थहरूको रचना गर्नु एक किसिमको परम्परा नै चल्यो।

आद्यजगद्गुरु श्रीशङ्कराचार्यभन्दा पूर्ववर्ती विद्वान् भर्तृप्रपञ्च लगायत अन्य दर्शनका विभिन्न विद्वान्हरूका अद्वैतविरोधी तर्कहरूलाई सप्रमाण सशक्तरूपमा खण्डन गर्दै आफ्नू अद्वैतपरक सिद्धान्तलाई स्थापना गर्न प्रस्थानत्रयीमा आफ्नो अत्यन्त ओजस्वी भाष्य श्रीशङ्कराचार्यले लेख्नुभएपछि सारा अद्वैतविरोधी दर्शनहरू चक्रव्यूह निर्माण गरेर अद्वैतवेदान्तमाथि आइलागे । अझ यसमा खास गरेर द्वैतमत निराकरणका लागि श्रीशङ्कराचार्यले ब्रह्मसूत्र भाष्यमा उल्लेख गर्नुभएको "यद्यपीदं वेदान्तवाक्यानामैदम्पर्यं निरूपयितुं शास्त्रं प्रवृतं न तर्कशास्त्रवत्केवलाभिर्युक्तिभिः कञ्चित्सिद्धान्तं साधयितुं दूषयितुं वा प्रवृत्तम्, तथापि वेदान्तवाक्यानि सम्यग्दर्शनप्रतिपक्षभूतानि साङ्ख्यादिदर्शनानि निराकरणीयानि (ब्रह्मसूत्रशाङ्करभाष्यम् २।२।१।१)" भन्ने भनाई प्रतिपक्षका लागि गम्भीर चुनौती भयो। यसबाट द्वैतवादको साम्राज्य खडा गर्न खोज्ने आचार्यहरूमा खलबली पैदा भयो। वाग्युद्ध र शास्त्रार्थको परम्परा शुरु भयो। यसको खण्डन र मण्डनमा कैयौँ ग्रन्थहरूको सिर्जना गरियो। यसै सन्दर्भमा विशिष्टाद्वैतसम्प्रदायका विशिष्ट विद्वान् श्रीवेङ्कटनाथ वेदान्तदेशिक (सन् १२६९–१३६९) ले आफ्नू कलम चलाउनुभयो । त्यसपछि श्रीअनन्तकृष्ण शास्त्रीले "शतदूषणी"लाई आनुपूर्वी समीक्षा गर्दै "शतभूषणी" ग्रन्थ प्रकाशन गर्नुभयो । यसै क्रममा पक्षविपक्षमा धेरै विद्वान्हरूले आफूलाई अघि सार्नुभएको देखिन्छ । श्रीचित्सुखाचार्यले

शाङ्कर परम्परालाई अगाडि बढाउँदै ब्रह्मसूत्रका समन्वय, अविरोध, साधन र फलका क्रमले नै चार अध्याय भएको चित्सुखीग्रन्थ (तत्त्वप्रदीपिका) प्रणयन गर्नुभयो ।

यसरी अद्वैत र द्वैतका सम्बन्धमा आफ्नाआफ्ना सम्प्रदायका आचार्यहरूले विद्वत्तापूर्ण ग्रन्थहरूको निर्माण गरे। चित्सुखीको प्रणयनपछि चित्सुखीकै शैली टिपेर माध्वसम्प्रदायका विद्वान् श्रीव्यासराज तीर्थले अद्वैतवेदान्तको प्रतिपक्षता प्रदर्शन गर्दै अत्यन्त प्रौढ नव्यन्यायका भाषामा अद्वैत वेदान्तका प्रमुख सिद्धान्तहरूलाई खण्डन गर्नुभयो । तिनै खण्डन गरिएका सिद्धान्तहरूलाई न्यायामृतकै शैलीमा उस्तै भाषामा तर विनालाञ्छना, विनाकटुता र अत्यन्त शिष्ट भाषामा श्रीमधुसूदन सरस्वतीले त्यसलाई खण्डन गरेर अद्वैतवेदान्तको सिद्धान्तलाई सौम्यरूपमा स्थापना गर्नुभयो छ। सर्वप्रथम न्यायामृताकारले उत्थापन गरेका केही उदाहरण यहाँ दिइन्छ। जस्तै –

१. **प्रपञ्चमिथ्यात्ववाद :–** न्यायामृतकारले मिथ्यात्त्वका पाँच लक्षणहरूमाथि विचार गर्नुभएको छ। ती पाँच लक्षणहरूमध्ये प्रथम लक्षण श्रीपद्मपादाचार्य, द्वितीय र तृतीय श्रीप्रकाशात्ममुनि, चतुर्थ श्रीचित्सुखाचार्य तथा पाँचौँ श्रीआन्दबोधबाट लिएका छन्। यस सम्बन्धमा श्रीगौडब्रह्मानन्दले लेख्नुभएको छ। जस्तै –

आद्यं स्यात्पञ्चपाद्युक्तं ततो विवरणोदिते।
चित्सुखीयं चतुर्थं स्यादन्त्यमानन्दबोधजम् ॥

**(क) सत्त्वासत्त्वानधिकरणत्त्वम् :–** यस लक्षणमा न्यायामृतकारले ३ विकल्पहरू उठाउनुभएको छ :– (१) सत्त्वविशिष्टासत्त्वाभाव (२) सत्त्वात्यन्ताभाव र असत्त्वात्यन्ताभावरूप दुईथरी धर्मको आधारता। (३) सत्त्वात्यन्ताभावविशिष्ट असत्वात्यन्ताभावरूप एक धर्मको आधारता।

यी तीनै पक्षमा तीर्थले दोष देखाउनु भएको छ। जस्तै, (क) माध्वमतानुसार यिनमा सिद्धसाधनता देखिन्छ। किनभने माध्वसिद्धान्तमा प्रपञ्च केवल सद्रूप मानिन्छ। यसकारण प्रपञ्चमा सत्त्वविशिष्ट असत्त्वको अभाव सहजसिद्ध छ। (ख) सत्त्वात्यन्ताभाव र असत्त्वात्यन्ताभाव, यी दुई एकै ठाउँमा रहन सक्तैनन्। किनभने सत्त्वात्यन्ताभावको अर्थ असत्त्व हुन्छ र असत्त्वात्यन्ताभावको अर्थ सत्त्व हुन्छ।

यसकारण यी दुवै एकै ठाउँमा रहन अत्यन्त असम्भव छ। (ग) तेस्रो विकल्पमा पनि व्याघातदोष देखिन्छ। किनभने एउटै आधारमा रहने दुई पदार्थहरूमा एक पदार्थभन्दा दोस्रो पदार्थलाई विशिष्ट मानिन्छ। तर यहाँ सत्वाभाव र असत्त्वाभाव जब एकै आधारमा रहन सक्तैनन् त्यस अवस्थामा सत्त्वाभावविशिष्ट असत्त्वाभाव कसरी सम्भव छ ?

व्यासराजतीर्थको उक्त भनाईलाई खण्डन गर्दै अद्वैतसिद्धिकार स्वामी श्रीमधुसूदन सरस्वतीले दोस्रो र तेस्रो विकल्पको निर्दोषता स्थापित गर्नुभएको प्रसङ्ग यहाँ दर्शाइन्छ। स्वामी श्रीमधुसूदन सरस्वतीले "सत्त्वात्यन्ताभावासत्त्वा-त्यन्ताभावरूपधर्मद्वय विवक्षायां दोषाभावात्"। अर्थात् सत्त्व र असत्त्व दुवै धर्म एक अर्काका अभाव नभएर दुवै नै स्वतन्त्र भावरूप धर्म हुन् भनेर उल्लेख गर्नुभएको छ। उहाँको भनाई अनुसार सत्त्वको लक्षण हो, त्रिकालाबाध्यत्व र असत्त्वको लक्षण हो "क्वचिदपि उपाधौ सत्त्वेन प्रतीयमानत्वानिधिकरणत्व"। अर्थात् खपुष्पादिमा असत्त्व रहन्छ र ब्रह्ममा सत्त्व रहन्छ। प्रपञ्चमा भने सत्त्व असत्त्व दुवैको अभाव छ। माध्वमतानुसार पनि त्रिकालाबाध्यत्वरूप सत्त्व प्रपञ्चमा सिद्ध हुन सक्तैन। त्यसकारण प्रपञ्चमा सत्त्वाभाव रहनुमा मध्वमतावलम्बीलाई आपत्ति नहुनु पर्ने हो। असत्त्वाभावता माध्वहरूले स्वीकार गरेकै सिद्धान्त हुँदै हो। त्यस कारण सत्त्व र असत्त्वका दुईथरी अभाव अथवा ती दुईमा एउटाको अभावले विशिष्ट अपर अभाव रहनु व्याहत अथवा विरूद्ध हुन सक्तैन।

२. **त्रैकालिकनिषेधप्रतियोगित्वम्** :– यस लक्षणका सम्बन्धमा त्रैकालिकनिषेधलाई लिएर न्यायामृतकारले ३ विकल्प उठाएर तिनमा दोष पनि देखाएका छन् "त्रैकालिकस्य निषेधस्य तात्त्विकत्वे अद्वैत हानिः, प्रातिभासिकत्वे सिद्धसाधनाद् व्यावहारिकत्वेऽपि तस्य बाध्यत्वेन तात्त्विकसत्त्वाविरोधित्वेनार्थन्तरात्"। अर्थात् ब्रह्ममा प्रपञ्चको त्रैकालिक अभाव यदि ब्रह्मकै सरह तात्त्विक मान्ने हो भने तब अद्वैतको हानि होला। प्रपञ्चको वास्तविक अभाव नमानेर प्रातिभासिक अभाव मानेको खण्डमा त माध्वमतावलम्बीहरूलाई पनि अभीष्ट नै हुन्छ। त्यसै प्रकारले प्रपञ्चको व्यावहारिक अभाव पनि वस्तुतः बाधित नै हुन्छ। त्यसकारण बाधित अभावको प्रतियोगिता प्रपञ्चमा मानेको खण्डमा वास्तविक सत्ताको अपहार हुँदैन। अतः

सिद्धसाधनता र अर्थान्तरता दोष हुन्छ।

अद्वैतसिद्धिकार स्वामी मधुसूदन सरस्वतीले उक्त निषेधलाई सही माने तापनि उहाँले अद्वैतको हानि नहुनुको साथै ब्रह्मरूप नै रहने कुरामा जोड दिनुभएको छ।

३. **ज्ञाननिवर्त्यत्वम्** :– यस सम्बन्धमा न्यायामृतकार व्यासराजको भनाई यस प्रकार छ ?– अतीत घटादिमा यो लक्षण अव्याप्त छ। किनभने यो ज्ञानद्वारा निवृत्त नभएर मुद्गरपातादिकाद्वारा ध्वस्त हुन्छ। अर्को कुरा, ज्ञानगत "निवर्तकता ज्ञानत्वेन विवक्षित" हुन्छ कि ? ज्ञानत्वव्याप्य धर्मले विवक्षित हुन्छ ? प्रथम पक्ष मानेमा शुक्तिरजतादिमा अव्याप्ति हुन्छ। किनभने त्यसको शुक्तिज्ञानमा निवर्तकता अधिष्ठान साक्षात्कारत्वेन हुन्छ तर ज्ञानत्वेन हुँदैन । दोस्रो पक्षलाई लिने हो भने, संस्कारमा अतिव्याप्ति हुन्छ। किनभने त्यसको निवर्तकता स्मृतिरूप ज्ञानमा ज्ञानत्वव्याप्य स्मृतित्वेन हुन्छ।

अद्वैतसिद्धिकार स्वामी मधुसूदन सरस्वतीले यी सबै विकल्पहरूबाट पर हटेर नयाँ मार्ग खोज्नुभएको छ । जस्तै "ज्ञानप्रयुक्तावस्थितिसामान्यविरहप्रतियोगित्वं हि ज्ञाननिवर्त्यत्वम्" मायादि अनादि पदार्थहरूको निवृत्ति पनि आत्मज्ञानबाट नै हुन्छ। अतीत घटादिको निवृत्ति पनि ईश्वरीय ज्ञानबाट नै हुन्छ। किनभने ईश्वरको ज्ञान कार्यमात्रमा साधारण कारणका रूपमा मानिन्छ । अधिष्ठानसाक्षात्कारादि पनि ज्ञानकै समकक्षमा आउँछन् । उत्तर ज्ञानद्वारा पूर्व ज्ञानको जुन निवृत्ति हुन्छ, त्यो निवृत्ति सामान्य या अत्यन्त निवृत्तिका रूपमा हुँदैन । किनभने त्यो ज्ञान संस्कारादिका रूपले रही नै रहन्छ। त्यसकारणले अतिव्याप्ति पनि हुँदैन।

४. **स्वाश्रयनिष्ठात्यन्ताभावप्रतियोगित्वम्** :– यस लक्षणमा पनि न्यायामृतकारले अत्यन्ताभावको तात्त्विकतादिको पहिलेको जस्तै विकल्प उठाएर दोष देखाएका छन् । यसको उत्तर पनि अद्वैतसिद्धिकारले पहिलेजस्तै ब्रह्मनिष्ठ प्रपञ्चको अत्यन्ताभाव तात्त्विक भएर पनि ब्रह्मभन्दा भिन्न भएको मानिदैन, त्यसकारण द्वैतापत्ति हुँदैन भनेर भनेका छन् ।

५. **सदविविक्तत्वम्** :- न्यायामृतकारले यस पाँचौँ लक्षणमा सत्ताका लागि ३ विकल्पहरू उठाएर दोष देखाएका छन् । जस्तै- सत्ता जातिका आधारलाई सत् मानिने हो कि ? अथवा अबाध्य वस्तुलाई सत् मानिने हो ? अथवा ब्रह्मलाई सत्

मानिने हो ? पहिलो कल्प मान्ने हो भने प्रपञ्चमा अव्याप्ति हुन्छ । किनभने सत्ता जाति त्यसमा मानिएको छ । त्यसकारण त्यो सत् हो, सद्विविक्त होइन । दोस्रो कल्प मान्ने हो भने मिथ्यात्वको स्वरूप पर्यवसित हुन्छ बाध्यत्व, त्यो प्रपञ्चमा सम्भव छैन । तेस्रो कल्पमा पनि ब्रह्मरूप सत् वस्तुको भेद प्रपञ्चमा सम्मत भएको कारण सिद्धसाधनता दोष रहन्छ ।

यहाँ पनि अद्वैतसिद्धिकारले सत्त्वको आफ्नै परिभाषा बनाएर न्यायामृतकारले उठाएका सबै दोषहरूलाई निराधार सिद्ध गरेको देखिन्छ । प्रपञ्च सत्त्ववाद :– 'सन् घटः, सन् पटः' इत्यादि प्रत्यक्ष प्रतीतिकाद्वारा प्रपञ्चमा सत्त्व सिद्ध हुन्छ । त्यसकारण प्रपञ्चमा सत्त्वाभावरूप मिथ्यात्वको अनुमान हुन सक्तैन भनेर यस प्रकारको आरोप न्यायामृतकारले लगाए । सत्त्वलक्षणको जटिलताको जालमा परेर न्यायामृतकार हारे । अद्वैतीहरूको 'कीदृक् सत्त्वं तवाभिमतम् ?' भन्ने प्रश्न उनीबाट उत्तरविहीन नै भएर रहेको छ । अन्तमा माध्ववादीले हार खाएर निम्नअनुसारको उत्तर दिएका थिए । जस्तै-

यादृशं ब्रह्मणः सत्त्वं तादृशं स्याज्जगत्यपि ।
तत्र स्यात्तदनिर्वाच्यं चेदिहापि तथास्तु नः ॥

अर्थात् अद्वैतवेदान्तीहरू ब्रह्ममा जस्तो सत्त्व मान्दछन्, त्यस्तै नै हामी माध्वमतावलम्बीहरू पनि सत्त्व मान्दछौँ । अद्वैतसिद्धिकार त्यस प्रकारको उत्तरप्रति उपहास गर्दै भन्नुहुन्छ- "नूनं विवाहसमये कन्यायाः पित्रा निजगोत्रं पृष्टस्य 'यदेव भवतां गोत्रम्, तदेव ममापि गोत्रम्' इति वदतो वरस्य भ्राता भवान् ।" अर्थात्, विवाहका समयमा कन्याका पिताले दुलाहासँग तपाईंको गोत्र के हो ? भनेर सोधेकोमा दुलाहाले 'जुन तपाईंको गोत्र हो, त्यही मेरो पनि गोत्र हो' भनेर उत्तर दिनु केवल मूर्खताको परिचायकमात्रै हुन आउँछ । किनभने समान गोत्रमा विवाह सम्बन्ध वैध मानिँदैन । त्यसप्रकार माध्वगणका 'यादृशं ब्रह्मणः सत्त्वं तादृशं स्याज्जगत्यपि' भनेर भन्नु सर्वथा अनुचित देखिन्छ । अत्यन्ताबाधितत्वरूप सत्त्व जगत्मा कहिल्यै सम्भव हुँदैन ।

असत् प्रपञ्चमा अर्थक्रियाकारित्वः- जस्तै असत् रजतबाट सत्य गहनाहरूको निर्माण कहिल्यै पनि हुन सक्तैन । त्यसै गरेर दृश्यत्वादि असत्य हेतुबाट मिथ्यात्वको सिद्धि पनि हुन सक्तैन भनेर न्यायामृतकारले अद्वैतसिद्धिकारलाई

आक्षेप लगाएका छन् । त्यसको उत्तरमा अद्वैतसिद्धिकारले वाचस्पति मिश्रको 'उत्पादकाप्रतिद्वन्द्वित्वात्' भन्ने शब्द नै दोहोऱ्याएर दृश्यत्वादि हेतुलाई आफूमा केवल व्यवहार कालाबाध्यत्व अपेक्षित छ र त्रिकालाबाध्यत्व छैन; अतः दृश्यत्वादिकाद्वारा प्रपञ्चगत त्रिकालाबाध्यत्वाभाव सिद्ध गर्नलाई कुनै प्रकारको पनि विरोध उपस्थित हुन सक्तैन । अर्थक्रियाकारिताका लागि वस्तुको पारमार्थिक सत् हुनु आवश्यक छैन । किनभने स्वप्नकालमा सधवा स्त्रीलाई देख्नु असत् भए पनि भावी सत्य शुभको सूचक मानिन्छ ।

**अविद्याको लक्षण**

अविद्याका दुईथरी लक्षणहरू प्रसिद्ध छन् । (१) 'अनादिभावरूपत्वे सति ज्ञाननिवर्त्यत्वम्' र (२) 'भ्रमोपादानम्' । यी दुवैथरी लक्षणहरूलाई न्यायामृतकारले दूषित गरिदिनु भएको छ 'आद्यलक्षणे अव्याप्तिः सादिशुक्त्याद्यवच्छिन्न-चैतन्यावरकाज्ञानानामनादित्वायोगस्योक्तत्वात् । द्वितीयलक्षणेऽपि यावन्ति ज्ञानानि तावन्त्यज्ञानानीति मते अभ्रमपूर्वकप्रमानिवर्त्याज्ञाने अभावारोपनिवर्तकप्रमानिव-र्तकप्रमानिवर्त्याज्ञाने चाव्याप्तिः । यी दोषहरूलाई निराकरण गर्दै अद्वैतसिद्धिकार लेख्नु हुन्छ :- "रूप्योपादानाज्ञानमप्यनादि चैतन्याश्रितत्वादनाद्यैव" अर्थात्, शुक्त्यादि सादि पदार्थहरूले अवच्छिन्न चैतन्यको आवरकीभूत अज्ञान पनि अनादि चैतन्यकै आश्रयमा रहने हुँदा त्यो पनि अनादि नै हो, सादि होइन । त्यसै गरी आकाशादि अनादि पदार्थ घटादिले अवच्छिन्न भएर पनि अनादि नै रहन्छन्, सादि हुँदैनन् । दोस्रो लक्षणको पनि व्यवस्था गर्दै सिद्धिकार लेख्नुहुन्छ- "इदं च लक्षणं विश्वभ्रमोपादानं मायाधिष्ठानं ब्रह्मेति पक्ष, न तु ब्रह्ममात्रोपादानत्वपक्ष ब्रह्मसहिताविद्योपादानत्वपक्षे वा, अतो ब्रह्मणि नातिव्याप्ति" । अर्थात्, विश्वविभ्रमको कारण अज्ञान या माया हो । मायाको विषयीभूत ब्रह्म विश्वको अधिष्ठान हो । यस सिद्धान्त अनुसार मायाको यो दोस्रो लक्षण गरिएको हो । त्यस कारणले पनि ब्रह्ममा उक्त लक्षण अतिव्याप्त हुँदैन ।

**अविद्याभासकवाद**

**न्यायामृतकारले प्रश्न गरे** :- के अविद्या शुद्धचैतन्यवेद्य हो ? अथवा वृत्तिप्रतिबिम्बित चैतन्य वेद्य हो ? यदि प्रथम पक्ष मान्ने हो भने निर्दोष चैतन्यबाट

प्रकाशित भएको कारण अविद्या पारमार्थिक हुनजान्छ। दोस्रो पक्ष मान्ने हो भने अविद्याको कहिले कहीँ अप्रतीतिको प्रसक्ति पनि आउन सक्तछ। यसको समाधान अद्वैतसिद्धिकारले यसरी गर्नुभएको छ- अविद्या साक्षिवेद्य हो, शुद्ध चैतन्यवेद्य होइन। किनभने शुद्ध चैतन्यलाई साक्षी नभनेर अविद्यावृत्तिमा प्रतिबिम्बित चैतन्यलाई साक्षी भनिन्छ। अविद्या शुद्ध चैतन्यद्वारा साक्षात् भासित नहुने हुँदा अविद्यामा पारमार्थिकत्वापत्ति आउन सक्तैन।

**अविद्याविषयक विचार**

न्यायामृतकार स्वामी श्रीव्यासराज तीर्थले 'अविद्या विषयोऽपि दुर्वचः' (अविद्याको विषय भन्न नसकिने हो।) भनेका छन्। अज्ञान आवरणका आठ थरीका प्रयोजन छन्। जस्तै- (१) सिद्ध प्रकाशको लोप (२) असिद्ध प्रकाशको अनुत्पत्ति (३) विद्यमान प्रकाशको विषयका साथ असम्बन्ध (४) प्राकाट्य संज्ञक कार्यको प्रतिबन्ध (५) नास्ति न प्रकाशते भन्ने दोहोरो व्यवहार (६) अस्ति प्रकाशते भन्ने व्यवहारको अभाव (७) नास्ति न प्रकाशते भन्ने व्यवहारको अयोग्यता (८) अस्ति प्रकाशते भन्ने व्यवहारको योग्यता। घटादि परप्रकाश पदार्थहरूमा अपेक्षित प्रकाशको अभाव हुनु अथवा प्रकाशको अनुत्पत्ति हुनु। स्वयंप्रकाश चैतन्यमा यस प्रकारको अभाव रहँदैन। अतः आत्मामा प्रथम, द्वितीय र तृतीय कल्पको सम्भावना रहँदैन। प्राकाट्यरूप विषयगत धर्म भाट्टाभिमत भए पनि अद्वैतसम्मत होइन। यसकारण चारौँ विकल्प पनि निराधार हो। पाँचौँ कल्प स्वीकार गर्ने हो भने सुषुप्ति अवस्थामा 'न किञ्चिदवेदिषम्' भन्ने अनुभूति हुन नसक्ने हुन्छ। अज्ञानावस्थामा पनि आत्मस्वरूप अभिज्ञात्मक व्यवहार अद्वैत वेदान्तमा स्वीकार्य छ। अतः त्यसको अभाव आवरणको प्रयोजन हुन सक्तै न। ब्रह्म निर्धर्मक भएको हुँदा ब्रह्ममा छैटौँ, सातौँ र आठौँ विकल्पहरू पनि लागू हुन सक्तैनन् भनेर पूर्वपक्षी न्यायामृतकार स्वामी श्रीव्यासराज तीर्थले अद्वैतवेदान्तको अविद्याविषयक सिद्धान्तमाथि आक्षेप गर्नु भएको छ।

उक्त विषयमा अद्वैतसिद्धिकार स्वामी श्रीमधुसूदन सरस्वतीले उहाँको आक्षेपको प्रतिवाद गर्दै निम्न अनुसारको सङ्क्षिप्त विचार राख्नु भएको छ। 'अविद्या विषयोऽपि सुवचः' अर्थात् अविद्याको विषय भन्न सकिने छ। किनभने, अविद्याको विषय चिन्मात्र नै हो। आवरणका सम्बन्धमा माथि भनिएका

विकल्पहरूको प्रयोजन जबसम्म ब्रह्मज्ञान हुँदैन तबसम्म रही नै रहन्छ । यस सम्बन्धमा विवरणकारले पनि 'अज्ञानस्य चिन्मात्रमेव विषयः' अर्थात् अज्ञानको विषय चित्मात्रै हो भनेका छन् ।

यसरी द्वैतवादीहरूले उठाएको अवैदिक तर्क र कुप्रचारलाई स्वामी मधुसूदन सरस्वतीबाट प्रणीत अद्वैतसिद्धिले धराशायी बनाइदिएको छ । अन्ततः सम्पूर्ण सम्प्रदाय, मत र पन्थहरू अद्वैत वेदान्तरूपी महासागरमा पुगेर पर्यवसित हुन्छन्, योभन्दा अर्को अन्तिम आश्रय र अधिष्ठान छैन भन्ने प्रमाणित हुन्छ ।



# (ख) ब्रह्मसूत्रकारिका

अद्वैत वेदान्तका परम्परामा प्रस्थानत्रयीका नामले प्रसिद्ध तीनथरी शास्त्रहरूलाई लिइएको छ। स्मृतिप्रस्थान श्रीमद्‌भगवद्‌गीता हो र यसमा वक्ताको प्रधानता देखिन्छ। श्रुतिप्रस्थान उपनिषद् हो र यसमा वचनको प्रधानता मानिन्छ भने न्यायप्रस्थान ब्रह्मसूत्रमा विचारको प्रधानता मानिन्छ। यस प्रकृत ब्रह्मसूत्रकारिकाको भूमिकाको सन्दर्भ भएकोले केवल ब्रह्मसूत्रको मात्रै चर्चा गरिने छ।

भगवान् वेदव्यासद्वारा प्रणीत ब्रह्मसूत्रलाई ब्रह्ममीमांसासूत्र, वेदान्तसूत्र, भिक्षुसूत्र आदि भनिन्छ । सर्वप्रथम भगवत्पाद आद्यजगद्‌गुरु श्रीशङ्कराचार्यले ब्रह्मसूत्रभाष्य लेख्नुभएको र त्यसपछिमात्रै अरू विभिन्न आचार्यहरूले आफ्ना आफ्ना सम्प्रदाय र सिद्धान्त अनुरूप ब्रह्मसूत्रमा भाष्य लेखेका हुन् ।

अरू सम्प्रदाय र दर्शनको स्थापित लेखन र परम्पराभन्दा भिन्नै विशिष्ट शैली र दार्शनिक गहन श्रौतसिद्धान्तप्रसूत अद्वैत वेदान्तको नव उन्मेष र परम्परा संस्थापना गर्ने उद्देश्यले ब्रह्मसूत्रमा भाष्य लेख्नुभन्दा पूर्व उपोद्‌घात भाष्यका रूपमा भगवान् श्रीशङ्कराचार्यले अध्यासभाष्य लेख्नुभएको छ । सर्वप्रथम आध्यासिक सिद्धान्त नै नबुझीकन जीव र ब्रह्मको ऐक्यप्रतिपादन गर्ने उद्देश्यले बादरायणमुनिद्वारा लिखित ब्रह्मसूत्रमा भाष्य लेख्नु उपयुक्त नठानेर नै आचार्य शङ्करले पूर्वपक्षको उत्थापन 'युष्मदस्मत्प्रत्ययगोचरयो'बाट गर्दै अध्यास भाष्यको अन्तमा अर्थात् ' अथातो ब्रह्मजिज्ञासा' सूत्रसमेतको भाष्य लेख्नुपूर्व 'अस्यानर्थहेतोः प्रहाणाय आत्मैकत्वविद्याप्रतिपत्तये सर्वे वेदान्ता आरभ्यन्ते यथा चायमर्थः सर्वेषां वेदान्तानां तथा वयमस्यां शारीरकमीमांसायां प्रदर्शयिष्यामः । वेदान्तमीमांसाशास्त्रस्य व्याचिख्यासितस्येदमादिमं सूत्रम्' भनेर लेख्नुभएको छ।

अनर्थको हेतु भएको अध्यासलाई समूल नाश गर्नका लागि, ब्रह्म र जीवात्माको ऐक्य ज्ञान गराउनका निमित्त सम्पूर्ण वेदान्तहरूको आरम्भ गरिन्छ। सबै वेदान्तहरूको उद्देश्य र प्रतिपाद्य विषय ब्रह्मात्मैकत्व नै हो भन्ने गूढ अर्थ यस शारीरकमीमांसामा वर्णन गरिने छ भन्दै भगवान् श्रीशङ्कराचार्यले ब्रह्मसूत्रको प्रथमसूत्र 'अथातो ब्रह्मजिज्ञासा' को भाष्य लेख्नुभन्दा पहिले सबै वेदान्तहरूको विषय ब्रह्मात्मैकत्व भएको तथ्य हामी यस शारीरकमीमांसामा भन्ने छौँ भनेर लेख्नुभएको छ । प्रथमवर्णक अर्थात् उपोद्‌घात अध्यास भाष्यका अन्तमा उल्लेख भएको

‘शारीरकमीमांसा’ वाक्यांशको र द्वितीयवर्णकमा उल्लेख भएको ‘वेदान्तमीमांसाशास्त्र’ वाक्यांशसमेतको सारांशमा यहाँ उल्लेख गर्नु सान्दर्भिक हुने छ । ‘शरीरमेव शरीरकं, कुत्सितत्वात्, तन्निवासी शारीरको जीवस्तस्य ब्रह्मत्वविचारो मीमांसा तस्यामित्यर्थः’ भनेर रत्नप्रभाटीकाले लेखेको छ ।

तदनुसार कुत्सितं (पा.५।३।७४) सूत्रका अनुसार ‘शरीर’ शब्दका अगाडि निन्दाका अर्थमा कप्रत्यय लागेपछि शरीरक शब्द निष्पन्न हुन्छ । यसको अर्थ जसको निवास भन्ने हुन्छ । त्यही नै शारीरक अर्थात् जीव हो । शारीरक शब्द ‘सोऽस्य निवासः’ (पा.४।३।८६) सूत्र अनुसार जसको त्यो निवास हो भन्ने अर्थमा शरीरक शब्दका अगाडि ‘अण्’ प्रत्यय लगाएर आदि वृद्धि भएर शारीरकशब्द निष्पन्न हुन्छ । अतः शारीरकमीमांसाको तात्पर्य जीव नै ब्रह्म हो भन्ने हो र यो त्यस्तो पूजनीय विचारको नाम नै शारीरकमीमांसा हो भन्ने तात्पर्य देखिन्छ ।

त्यसै गरेर ‘शारीरकमीमांसा’ शब्दको व्युत्पत्ति न्यायनिर्णयकारले यसरी गर्नुभएको छ – ‘शरीरमेव शारीरकं कुत्सितत्वात्, तन्निवासी शारीरको जीवः । तस्य ब्रह्मतावेदिका विचारात्मिका मीमांसा तस्यामिति यावत् । प्रथम वर्णके विचारविधेर्ज्ञानव्यवधानेन विषयो ब्रह्मात्मैक्यं, बन्धध्वस्तिश्च फलं, इत्यध्यासोक्त्या साधितम् ।’

‘शारीरकमीमांसा’ शब्दको सम्बन्धमा भामतीकारको विचार यसप्रकार छ– ‘शरीरमेव शरीरकं तत्र निवासी शारीरको जीवात्मा । तस्य त्वम्पदाभिधेयस्य तत्पदाभिधेयपरमात्मरूपतामीमांसा या सा तथोक्ता ।’

उपर्युक्त ‘शारीरक’ शब्दको अर्थ केही विद्वानूहरूले ‘शरीरे भवः शरीरो जीवः, तं शारीरं कायति ब्रह्मरूपं गायति’ यस व्युत्पत्तिका माध्यमबाट ‘अहं ब्रह्मास्मि’ इत्यादि वेदान्त वाक्यहरूलाई शारीरक र यस वेदान्त दर्शनलाई शारीरकमीमांसा अथवा वेदान्तविचार भनेका छन् ।

आद्य जगद्‌गुरु श्रीशङ्कराचार्यले ब्रह्मसूत्रमा भाष्य लेख्नुभन्दा पूर्व उपोद्‌घातका रूपमा अध्यासभाष्य लेख्नुको उद्देश्य ब्रह्मको जिज्ञासा गर्न आध्यासिक जीवभाव वा जीवात्मा खडा गर्नु नै देखिन्छ । अन्यथा ब्रह्मसूत्रको प्रथम सूत्र ‘अथातो ब्रह्मजिज्ञासा’ मा प्रयुक्त अथशब्दद्वारा अभीप्सित उत्तम अधिकारी जिज्ञासु मुमुक्षु उपलब्ध हुन मुस्किल हुने देखिन्छ । त्वम्पदवाच्य मलिन सत्त्वविशिष्ट जीवात्मा नै तत्पदवाच्य शुद्ध सत्त्वविशिष्ट परमात्मासँग एक हुन चाहने जिज्ञासु नै योग्य मुमुक्षु

हो। बद्ध जीवात्माले नै मुक्त हुन खोज्ने हो। आध्यासिक प्रक्रियाको ज्ञान भएपछि मात्रै बन्धनबाट जीवात्माले मुक्त हुन ब्रह्मजिज्ञासा गर्दछ।

अध्यास नजानिकन 'अथातो ब्रह्मजिज्ञासा' गर्न ब्रह्मजिज्ञासुले नसक्ने देखेर नै भाष्यकारले सर्वप्रथम अध्यासमा कलम चलाउनुभएको स्पष्ट नै देखिन्छ। अतः अद्वैतवेदान्तका योग्य अध्येता व्यक्तिहरूले यसतर्फ दृष्टि दिनु अनिवार्य छ। अन्यथा ब्रह्मजिज्ञासा गर्न योग्य पात्र तयार हुन सम्भव हुँदैन। यस अध्यासलाई पञ्चपादिकाकार आचार्य पद्मपादले प्रथम वर्णकमा राख्नुभएको छ। वर्णकको चर्चा यसै ब्रह्मसूत्रकारिकाको प्रथम अधिकरण जिज्ञासा अधिकरणको पादटिप्पणीमा सूचनार्थ उल्लेख गरिएको छ र यसै भूमिकामा पनि प्रसङ्ग अनुसार उल्लेख गरिने छ।

भगवत्पाद श्रीशङ्कराचार्यले अध्यासपछि 'अथातो ब्रह्मजिज्ञासा' मा प्रवेश गर्नुपूर्व त्यस सूत्रको भूमिकाका रूपमा लेख्नुभएको 'वेदान्तमीमांसाशास्त्रस्य व्याचिख्यासितस्येदमादिमं सूत्रम्' भन्ने वाक्यको सङ्क्षिप्त चर्चा गर्नु सान्दर्भिक हुने छ। यसमा भाष्यारत्नप्रभाको व्याख्या यस्तो देखिन्छ – वेदान्तविषयपूजितविचारात्मकशास्त्रस्य व्याख्यातुमिष्टस्य सूत्रसन्दर्भस्येदं प्रथमसूत्रमित्यर्थः। यदि विधिरेव वेदार्थः स्यात्तदा सर्वज्ञो बादरायणो ब्रह्मजिज्ञासां न ब्रूयात्, ब्रह्मणि मानाभावात्। अतो ब्रह्मणो जिज्ञास्यत्वोक्त्या केनापि तन्त्रेणानवगतब्रह्मपरवेदान्तविचार आरम्भणीय इति सूत्रकृद्दर्शयति। तच्च 'व्याचिख्यासितस्य' इति पदेन भाष्यकारो बभाषे। इति द्वितीय वर्णकम्।

उक्त सन्दर्भमा भामतीकारको विचार यसप्रकार देखिन्छ– 'वेदान्त-मीमांसाशास्त्रस्य व्याचिख्यासितस्य (अस्माभिः) इदमादिमं सूत्रम्।' पूजित विचारवचनो मीमांसाशब्दः। परमुपुरुषार्थहेतुभूतसूक्ष्मतमार्थनिर्णयफलता विचारस्य पूजिता। तस्या मीमांसाया शास्त्रम् सा ह्यनेन शिष्यते शिष्येभ्यो यथावत्प्रतिपाद्यत इति।

ब्रह्मसूत्रकारिकाको यस सङ्क्षिप्त भूमिकामा सर्वप्रथम शाङ्करभाष्यका पछि त्यसै परम्परामा आएका विवरणग्रन्थ र प्रकरण ग्रन्थका रूपमा लेखिएका दुइटा ग्रन्थहरू र तिनका ग्रन्थकारका विषयमा केही चर्चा गरिने छ।

भगवत्पाद श्रीशङ्कराचार्यका प्रमुख शिष्यहरूमध्ये एक शिष्य श्रीपद्मपादाचार्यले गुरुको आज्ञानुसार ब्रह्मसूत्रको शाङ्करभाष्यमा पञ्चपादिका नामक अत्यन्त प्रौढ

ग्रन्थ लेख्नुभएको देखिन्छ । यस पञ्चपादिकालाई श्रीशङ्कराचार्यले तीन पटक आद्योपान्त पढ्नुभएको थियो भनिन्छ । त्यसैकारण नै यसको मुख्य गुरुप्रति हराएपछि पनि यसलाई अक्षरशः सम्झेर आचार्य शङ्करले पुनः लेखाउनुभएको हो भन्ने प्रवाद पनि छ । जे होस्, यस पञ्चपादिकानामक टीकाका अध्यास, जिज्ञासा, लक्षण, प्रमाण र समन्वयसमेत पाँच पादहरूमात्रै नै प्रचलित हुन् भन्ने कुरा श्रीशङ्कराचार्यले यस ग्रन्थका ग्रन्थकार प्रमुख शिष्य श्रीपद्मपादाचार्यलाई भन्नुभएको थियो भनेर माधवाचार्यले आफ्नू 'शङ्करदिग्विजय' नामक ग्रन्थमा लेखेको भन्ने देखिन्छ। जो यसप्रकार छ 'अस्याः किल पञ्चैव पादाः प्रचरेयुस्तत्रापि आद्या चतुःसूत्र्येव प्रसिध्येदिति भगवता शङ्करभगवत्पादेन रचयिताऽभिधत्ते, इति वर्णयन्तिस्म शङ्करदिग्विजये माधवाचार्याः ।

उपर्युक्त अनुसार आएको विवरणको विश्लेषण गर्दा पद्मपादाचार्यले ब्रह्मसूत्रको शाङ्करभाष्यग्रन्थमा पूरा नै टीका लेख्नुभएको र तत्काल गुरुको आदेश अनुसार त्यसबेला पाँच पादको मात्रै पञ्चपादिकाका नामबाट प्रचलित गराएको र शेष टीका अझै अन्वेषणीय भएको धारणा विद्वानूहरूको देखिन्छ।

उहाँको समय ई. आठौँ शताब्दीतिर नै मानिन्छ । उहाँको अर्को नाम सनन्दन थियो । उहाँले पञ्चपादिकामा अध्यासभाष्यलाई प्रथम पाद र 'अथातो ब्रह्मजिज्ञासा सूत्र'लाई द्वितीय पाद, 'जन्माद्यस्य यतः' सूत्रलाई तृतीयपाद, 'शास्त्रयोनित्वात्' सूत्रलाई चतुर्थपाद र 'तत्तुसमन्वयात्' सूत्रलाई पञ्चमपाद मानेर पञ्चपादिका ग्रन्थको रचना गर्नुभएको देखिन्छ । पञ्चपादिका भन्नाले १. अध्यास, २. ब्रह्मविचार, ३. लक्षण, ४. प्रमाण र ५. समन्वयसमेत गरेर मुख्य पाँच पाद यिनै हुन् ।

यस ग्रन्थलाई नौओटा वर्णकमा विभाजन गरिएको छ । जस्तै– अध्यास (प्रथम वर्णक), वेदान्तमीमांशास्त्रस्य व्याचिख्यासितस्य (द्वितीय वर्णक), अथातः (तृतीय वर्णक) ब्रह्मजिज्ञासा (चतुर्थ वर्णक), जन्माद्यस्य यतः (पञ्चम वर्णक), शास्त्रयोनित्वात् (षष्ठ तथा सप्तम वर्णक) र तत्तु समन्वयात् (अष्टम तथा नवम वर्णक ।)

उपर्युक्त अनुसार नौओटा वर्णकमा विभाजित पञ्चपादिका ग्रन्थलाई अद्वैत वेदान्तका शाङ्कर परम्परामा महत्त्वपूर्ण विवरणग्रन्थहरू मध्येमा एक मानिन्छ । यसमा आचार्य प्रकाशात्मयतिले विवरणनामक

प्रसिद्ध टीका लेख्नुभएको छ । यसलाई अद्वैत वेदान्तका प्रस्थानहरूमा विवरण प्रस्थान मानिन्छ । पञ्चमिथ्यात्वहरूमा पञ्चपादिकाको 'मिथ्या शब्दोऽनिर्वचनीयतावचनः' पहिलो लक्षण हो भने त्यसकै विवरणटीकामा आएको दोस्रो लक्षण 'प्रतिपन्नोपाधावभावप्रतियोगित्वमेव मिथ्यात्वम्' हो भने तेस्रो लक्षण 'अज्ञानस्य स्वकार्येण वर्तमानेन प्रविलीनेन वा सह ज्ञानेन निवृत्तिर्बाद्यः' हो । अतः यस दृष्टिले पनि पञ्चपादिका ग्रन्थको विशिष्ट महत्त्व प्रमाणित हुन्छ ।

आद्यजगद्गुरु श्रीशङ्कराचार्यले व्यासप्रणीत ब्रह्मसूत्रमा लेख्नुभएको अत्यन्त दुरूह न्यायप्रस्थाननामक भाष्यलाई शाङ्करभाष्य भनिन्छ । यस भाष्यमा सर्वप्रथम श्रीपद्मपादाचार्यले पञ्चपादिका नामक प्रौढ विवरण ग्रन्थ लेख्नुभएको कुरा माथिका पङ्क्तिहरूमा उल्लेख गरिसकियो । त्यसै गरेर उक्त शाङ्करभाष्यमा टीका, वार्तिक, निबन्ध, टिप्पणी आदि धेरै थरी व्याख्या आचार्यहरूले प्रणयन गर्नुभएको छ । ती सबैको चर्चा यस छोटो भूमिकामा गर्न सम्भव नभएकोले केवल स्मरणमात्र गरिन्छ ।

यसपछि आचार्य सर्वज्ञात्ममुनिले ब्रह्मसूत्रशाङ्करभाष्यमा 'सङ्क्षेपशारीरकम्' नामबाट लेख्नुभएको श्लोकबद्ध महत्त्वपूर्ण ग्रन्थको चर्चा गर्नु सान्दर्भिक ठान्दछु । यस ग्रन्थका लेखक भगवत्पाद श्रीशङ्कराचार्यका प्रशिष्य तथा श्रीसुरेश्वराचार्यका शिष्य भएको तथ्य उहाँले नै गुरुवन्दना गर्दै 'जयन्ति देवेश्वरपादरेणवः' भनेर आफ्नू सङ्क्षेपशारीरकम् ग्रन्थमा उल्लेख गर्नुभएकोबाट थाहा हुन्छ । उहाँले यो ग्रन्थलाई विभिन्न वार्णिक छन्दहरूमा १२४८ श्लोकहरूद्वारा समलङ्कृत गर्नुभएको छ । यो ग्रन्थ पनि ब्रह्मसूत्र शाङ्करभाष्यजस्तै चार अध्यायमा नै विभक्त छ ।

सङ्क्षेपशारीरकार श्रीसर्वज्ञात्ममुनिको समय ई.९०० शताब्दी मानिन्छ । भगवान् श्रीशङ्कराचार्यले अध्यासभाष्यको अन्तमा लेख्नुभएको "वयमस्यां शारीरकमीमांसायां प्रदर्शयिष्यामः" भन्ने वाक्यावलीभित्रको वाक्यांश 'शारीरक' शब्दलाई ग्रन्थको नाम दिएर 'सङ्क्षेपशारीरकम्' नामलाई सार्थक पार्दै अद्वैत वेदान्तपरक अत्यन्त गहन ग्रन्थ मुनिले रचना गर्नुभएको छ । साहित्यिक शब्दावलीमा सरस पदहरूको प्रयोग गरेर अत्यन्त राम्रा छन्दहरूका माध्यमबाट ललित पदावलीमा प्रणीत यो ग्रन्थ कुनै सिद्धहस्त रसिक महाकविले मधुर रसद्वारा आप्लावित गरेर आकर्षक शैलीमा रचना गरेको महाकाव्यजस्तो लाग्दछ । यस ग्रन्थको जति प्रशंसा गरे पनि कमै हुने म सम्झन्छु । किनभने यसबाट म अत्यन्त

अनुगृहीत भएको छु ।

आचार्य शङ्करद्वारा ब्रह्मसूत्रको भाष्यमा व्यक्त समग्र विषयलाई नलिईकन अत्यन्त गूढ तथा अद्वैतवेदान्तपरक श्रौतसिद्धान्तका महत्त्वपूर्ण पक्षहरूलाई लिएर आचार्य मुनिले 'सङ्क्षेपशारीरकम्' ग्रन्थको रचना गर्नुभएको देखिन्छ । उहाँले यसको नाम प्रकरणग्रन्थ भनेर लेख्नुभएको छ । शास्त्रहरूले प्रकरणग्रन्थको लक्षण पनि दिएका छन् । अर्थात् जुन [१]ग्रन्थमा शास्त्रीय परिभाषाका साथै अल्प अल्प युक्तिहरू र प्रमाणहरू दिएर तत् तत् शास्त्रको सङ्क्षेपमा व्याख्या गरिन्छ, त्यस्ता ग्रन्थलाई प्रकरण ग्रन्थ भनिन्छ । अथवा जुन ग्रन्थ कुनै शास्त्रको एक भागसँग सम्बद्ध हुन्छ र त्यस शास्त्रको नै काम अंशतः गर्दछ भने त्यस्ता ग्रन्थलाई विद्वानूहरू प्रकरण भन्दछन् ।

उक्त प्रकरणग्रन्थ मुमुक्षु अध्येताका लागि अत्यन्त पठनीय देखिन्छ । शाङ्करभाष्यमा प्रयुक्त अद्वैत वेदान्तपरक कैयौँ पारिभाषिक शब्दहरूलाई पनि मुनिले सरल पारेर यस ग्रन्थमा प्रस्तुत गर्नुभएको छ । गुरुशिष्यका बीचको संवादात्मक शैलीमा लेखिएको यस ग्रन्थमा सरल तथा सरस शब्दावलीद्वारा ब्रह्मज्ञान गराउने प्रयास गरेको देखिन्छ ।

अद्वैत वेदान्तका [२]प्रस्थानत्रयीहरू मध्येको ब्रह्मसूत्र शाङ्करभाष्यलाई न्यायप्रस्थान भनिन्छ । यस भाष्यमा न्यायदर्शनद्वारा उत्थापित वादकथामा आधारित भएर विषय, संशय, पूर्वपक्ष, उत्तरपक्ष, प्रयोजन र सङ्गति समेत संस्थापित गरेर ऊहापोहपूर्वक तात्पर्यको निर्णय गरिने भएकाले यसलाई न्यायप्रस्थान भनिन्छ । त्यसै कारण नै ब्रह्मसूत्रको यस शाङ्करभाष्यलाई न्यायप्रस्थान भनिएको हो ।

उपर्युक्त अनुसारको दुरूह शास्त्रलाई पनि अति सरलतापूर्वक काव्यात्मक शैलीमा अद्वैत वेदान्त प्रस्तुत गर्दै आफ्ना जिज्ञासु शिष्यहरूलाई ब्रह्मज्ञान गराउने प्रयत्न गर्नु यस प्रकरणग्रन्थको विशेषता हो । उदाहरणका लागि ब्रह्मज्ञानको दुरूहता र सहजता दर्शाउने [३]एउटा श्लोक र ब्रह्मसाक्षात्कार कसरी गर्न सकिन्छ भन्ने सम्बन्धी

---

१. शास्त्रैकदेशसम्बन्धं शास्त्रकार्यान्तरे स्थितम् ।
आहुः प्रकरणं नाम ग्रन्थभेद विपश्चितः ॥

२. विषयो विशयश्चैव पूर्वपक्षस्तथोत्तरः ।
प्रयोजनं सङ्गतिश्च शास्त्रेऽधिकरणं विदुः ॥

३. बहु निगद्य विकमत्र वदाम्यहं, शृणुत सङ्ग्रहमद्वयशासने ।
सकलवाङ्मनसातिगता चितिः, सकलवाङ्मनसव्यवहारभाक् ॥ – सङ्क्षेपशारीरकम् १।३३१

[4]दोस्रो श्लोक तल पादटिप्पणीमा दिइएको छ। यीबाट थालिपुलाका न्यायले यस 'सङ्क्षेपशारीरकं' ग्रन्थको महत्ता र विशेषता बुझ्न जिज्ञासु पाठकहरूलाई सहज हुने छ।

अज्ञानजन्य आध्यासिक तथा भ्रमात्मक बन्धनमा परेर जन्मजन्मान्तरदेखि यस दुःखद संसारमा आएर विभिन्न योनिहरूमा परिभ्रमण गरिरहेको जीवले नै यस संसारबाट मुक्त हुन ब्रह्मजिज्ञासा गर्दछ। त्यसैकारण अध्यास भाष्यको रचना पश्चात् आचार्य शङ्करले ब्रह्मसूत्रमा शारीरकमीमांसा भाष्यका रूपमा प्रथम सूत्र 'अथातो ब्रह्मजिज्ञासा'बाट लेख्तै अन्तिम ५५५ औँ 'अनावृत्ति शब्दात्' सूत्रसम्म भाष्य लेख्नुभएको छ। सूत्रग्रन्थहरूमा भगवान् श्रीवेदव्यासद्वारा रचित यो ब्रह्मसूत्रग्रन्थ अरू सूत्रग्रन्थहरूभन्दा विशिष्ट खालको देखिन्छ। किनभने यो ग्रन्थ प्रथम सूत्रदेखि अन्तिमसूत्रसम्मका सबै ५५५ सूत्रहरू उपनिषद्का अद्वैत ब्रह्मपरक मन्त्रहरूद्वारा उनिएका सुन्दर माला जस्ता पूर्वापर सङ्ग्रथित छन्।

यसरी विचार गर्दा हाम्रा प्राच्य जगत्का आस्तिक षट्दर्शनहरूमध्ये यो ब्रह्मसूत्रमात्रै एउटा विशिष्ट सूत्रग्रन्थ हो जसमा सुरुदेखि अन्तसम्म वेदमन्त्रहरूले ओतप्रोत छ। यस सम्बन्धमा ब्रह्मसूत्रका सबै सूत्रहरूको विश्लेषण गर्न सम्भव नहुने भएकाले केवल त्यसमा आएको प्रथम 'ब्रह्मजिज्ञासा' सूत्र र अन्तिम सूत्र 'अनावृत्तिः शब्दात्' को मात्र उदाहरणका रूपमा यहाँ सङ्क्षिप्त विश्लेषण गरिन्छ। उक्त प्रथम सूत्रमा आएको 'अथ' शब्दको अर्थ यस प्रसङ्गमा मङ्गल, आरम्भ, प्रश्न र कात्स्न्र्य सबै नै ग्राह्य भए तापनि ती सबैलाई यहाँ नलिएर केवल अनन्तर अर्थात् आनन्तर्य अर्थमा लिनुपर्छ भन्ने आचार्यहरूको राय देखिन्छ। उक्त अथशब्दलाई आनन्तर्य अर्थमा ग्रहण गर्दा [5]वेदाध्ययन र [6]साधनचतुष्टयसम्पनानन्तरका साथै विषय, अधिकारी, सम्बन्ध र प्रयोजनसमेत निर्धारण हुन्छ।

---

४. स्वाध्यायधर्मपठितं निजवेदशाख्यावेदान्तभूमिगतमादरणालितञ्च।
सन्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥ – सङ्क्षेपशारीरकम् ३।२९५

५. क. स्वाध्यायोऽध्येतव्य। – शतपथब्राह्मण ११।५।७।२
ख. स्वाध्यायमधीयित। – तैत्तिरीय आरण्यक १७९
ग. ब्राह्मणेन निष्कारणो धर्मः षडङ्गो वेदोऽध्येयो ज्ञेयश्च। – श्रुतिः
घ. स्वाध्यायधर्मपठितं निजवेदशाखा। – सङ्क्षेपशारीरकम् ३।२९५

६. साधनचतुष्टयम् – १. नित्यानित्यवस्तुविवेकः। २. इहामुत्रार्थभोगविरागः।
३. शमदमादिसाधनसम्पत्। ४. मुमुक्षुत्वञ्च। – ब्रह्मसूत्र १।१।१।१ शाङ्करभाष्य

उपर्युक्त साधनचतुष्टयमा ब्रह्मज्ञानको पहिलो साधन नित्य र अनित्य वस्तुको विवेक हो। त्यसरी विवेक गर्दा [७]नित्यवस्तु भनेको ब्रह्म हो भने अनित्यवस्तु भनेको ब्रह्मातिरिक्त सम्पूर्ण मायिक वस्तु हुन् भन्ने ज्ञान हुन्छ। यो ज्ञान पनि श्रुतिबाट नै हुन्छ। ब्रह्मज्ञानको दोस्रो साधन यस लोक र स्वर्गादिलोकको भोगमा पनि आसक्ति नहुनु हो। [८]जसरी यस लोकमा कर्मद्वारा आर्जित ऐहिक भोग्यपदार्थको क्षय हुन्छ भने त्यसै गरेर पुण्यकर्मद्वारा आर्जित पारलौकिक भोग्यपदार्थको पनि क्षय हुन्छ भन्ने बुझेपछि स्वर्ग आदि परलोकको भोगमा पनि विरक्ति वा वैराग्य हुन्छ भन्ने श्रुतिवचनहरू पाइन्छन्।

ब्रह्मज्ञानको तेस्रो साधनमा [९]शमादि ६ ओटा साधनहरू पर्दछन्। जसमा १. शम भनेको मनो निग्रह वा अन्तरिन्द्रियलाई वशमा राख्नु हो। २. दम भनेको चक्षुरादि बाह्य इन्द्रियहरूको निग्रह गर्नु हो। ३. उपरम भनेको स्वधर्मानुष्ठान हो। ४. तितिक्षा भनेको चिसो, तातो, सुख, दुःखादिलाई सहनु हो। ५. श्रद्धा भनेको गुरु र वेदान्तवाक्यादिमा विश्वास हुनु हो र ६. समाधान भनेको चित्तको एकाग्रता हो।

'अथातो ब्रह्मजिज्ञासा' सूत्रमा आएको 'अथशब्द'को सङ्क्षेपमा श्रुति अनुरूप चर्चा गरियो भने अब 'अतः' शब्दको चर्चा गरिन्छ। अतः हेतुत्वको अनुवादकशब्द हो। 'अथ' शब्दको विवेचनामा प्रस्तुत उपनिषद्वाक्यहरू 'तद्यथेह' र 'परीक्ष्य लोकान्' मा व्यक्त 'कर्मफल' 'यत्कृतकं तदनित्यम्' भन्ने निश्चय गरेर वा जानेर अकृतक ब्रह्मज्ञानका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष जाओस् भन्ने अतः शब्दको अर्थ हुन आउँछ।

अब सूत्रमा आएको 'ब्रह्मजिज्ञासा' शब्दको चर्चा गरिन्छ। यसको व्युत्पत्ति गर्दै श्रीशङ्कराचार्यले ब्रह्मणः जिज्ञासामा आएको ब्रह्मण इति कर्मणि षष्ठीमा हो

---

७. नित्यो नित्यानां चेतश्चेतनानाम्। – श्वेताश्वतरोपनिषद् ६।१२

८. क. तद्यथेह कर्मचितो लोकः क्षीयते, एवमेवामुत्र पुण्यचितो लोकः क्षीयते। – छान्दोग्योपनिषद् ८।१।६
ख. परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायान्नास्त्यकृतःकृतेन।
तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्॥
– मुण्डकोपनिषद् १।२।१२

९. क. शमोदम उपरमस्तितिक्षा श्रद्धासमाधानञ्च मनोनिग्रहः। दमश्चक्षुरादि बाह्येन्द्रियनिग्रहः। उपरमः स्वधर्मानुष्ठानमेव तितिक्षा शीतोष्ण सुखदुःखादिसहिष्णुत्वम्। गुरुवेदान्तवाक्यादिषु विश्वासः श्रद्धा। चित्तैकाग्रता समाधानम्।
ख. शान्तो दान्त उपरतस्तितिक्षुः समाहितश्श्रद्धावित्तो भूत्वाऽऽत्मन्येवात्मानं पश्येत्।
– बृहदारण्यकोपनिषद् ४।४।२३

र शेषेमा होइन भनेर भाष्यमा लेख्नुभएको छ। किनभने कर्मवाचक षष्ठी मानेमा ब्रह्मस्वरूपको जिज्ञासा हुन्छ तर शेषषष्ठी मानेमा ब्रह्मसम्बन्धिनी जिज्ञासा भन्ने हुन्छ। अतः यसमा कर्मणि षष्ठी नै हुन्छ। धर्मजिज्ञासामा पनि शबरस्वामीले ब्रह्मजिज्ञासामा जस्तै जिज्ञासा पदको मुख्य अर्थ इच्छालाई मानेर षष्ठीसमास नै गर्नुभएको छ।

उपर्युक्त अनुसार ब्रह्मजिज्ञासा भनेको ब्रह्मको जिज्ञासा वा ब्रह्मलाई जान्ने इच्छा भनेर बुझेपछि स्वभावतः ब्रह्म के हो ? त्यसको [१०]लक्षण र प्रमाण के होला ? भनेर जिज्ञासुमा जिज्ञासा उत्पन्न हुनु स्वाभाविकै हुन्छ। किनभने गुरुले शिष्यलाई कुनै वस्तुको उपदेश गर्दछु भनेर प्रतिज्ञा गरेर मात्र पुग्दैन अपितु त्यस वस्तुको लक्षण र प्रमाण पनि गुरुले बताउनुपर्ने दार्शनिक सिद्धान्त भएको हुँदा ब्रह्मसूत्रको प्रथम 'अथातो ब्रह्मजिज्ञासा' सूत्रमा आएको ब्रह्मको लक्षण र प्रमाणको जिज्ञासाको उत्तर दोस्रो 'जन्माद्यस्य यतः' सूत्रले ब्रह्मका दुईथरी [११]तटस्थलक्षण र स्वरूपलक्षणबाट दिँदै तेस्रो 'शास्त्रयोनित्वात्' सूत्रले प्रमाण पनि दिएको छ। यस सम्बन्धमा प्रस्तुत ब्रह्मसूत्रकारिकामा पनि उल्लेख भइसकेकाले यस भूमिकामा केवल सङ्केतसम्म गरिएको हो।

उपर्युक्त अनुसार साधनसम्पन्न मुमुक्षुले [१३]ब्रह्मज्ञानका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष गएर विधिपूर्वक गुरूपसत्ति गर्नुपर्दछ र गुरुसँग ब्रह्मोपदेशका लागि अनुरोध गर्नुपर्दछ। गुरुले ती उत्तम अधिकारीलाई [१४]स्वशाखाको वेद र तदन्तर्गतको उपनिषद्का साथै महावाक्यको पनि उपदेश गर्दछन्। [१५]श्रवणपछि तिनले दीर्घकालसम्म [१६]मनन र [१७]निदिध्यासन गर्नुपर्दछ। तत्पश्चात् ब्रह्मसाक्षात्कार हुन सक्तछ।

१०. न हि लक्षणप्रमाणाभ्यां विना वस्तुसिद्धिः। – वेदान्तपरिभाषा

११. यतो वा इमानि भूतानि जायन्ते, येन जातानि जीवन्ति।
यत्प्रयन्त्यभिसंविशन्ति, तद्विजिज्ञासस्व तद्ब्रह्म। – तैत्तिरीयोपनिषद् ३।१।१

१२. सत्यं ज्ञानमनन्तं ब्रह्म। – तैत्तिरीयोपनिषद् २।१।१

१३. तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्। – मुण्डकोपनिषद् १।२।१२

१४. स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥ – सङ्क्षेपशारीरकम् ३।२९५

१५. श्रवणं नाम वेदान्तवाक्यानामद्वितीये ब्रह्मणि तात्पर्यावधारणानुकूलामनसी क्रिया।
– वेदान्तपरिभाषा, विषयपरिच्छेद

१६. मननं नाम शब्दावधारितेऽर्थे मानान्तरविरोधशङ्कायां तन्निराकरणानुकूलतर्कात्मज्ञानजनको मानसो व्यापारः। – वेदान्तपरिभाषा, विषयपरिच्छेद

१७. निदिध्यासनं नाम अनादिदुर्वासनया विषयेष्वाकृष्यमाणचित्तस्य विषयेभ्योऽपाकृष्यात्मविषयक-स्थैर्यानुकूलो मानसो व्यापारः। – वेदान्तपरिभाषा, विषयपरिच्छेद

यस सम्बन्धमा बृहदारण्यकोपनिषद्मा श्रोत्रिय ब्रह्मनिष्ठ गुरु याज्ञवल्क्यसँग शास्त्रार्थका क्रममा विद्वान् उषस्त चाक्रायणले [१८]'जुन साक्षात् अपरोक्ष ब्रह्म नै सर्वान्तर आत्मा हो' त्यसको मलाई उपदेश गर्नुहोस् भनेका थिए। यसबाट सर्वान्तर आत्मा नै ब्रह्म रहेछ र त्यसैको नै प्राप्तिका लागि 'अथातो ब्रह्मजिज्ञासा' समेतका सूत्रहरूमा शाङ्करभाष्यको प्रणयन भएको देखिन्छ।

ब्रह्मसूत्रको प्रथमसूत्र 'अथातो ब्रह्मजिज्ञासा'मा तैत्तिरीयोउपनिषद्मा आएको 'तद्विजिज्ञासस्व तद्ब्रह्म' मन्त्र लिएर त्यसबाट जिज्ञासा सुरु भएर ब्रह्मसाक्षात्कारपछि अन्तिम सूत्रमा बृहदारण्यकोपनिषद्मा आएको 'तेषां न पुनरावृत्ति' र छान्दोग्योपनिषद्मा आएको 'न च पुनरावर्तते' मन्त्रहरूलाई आत्मसात् गरेर 'अनावृत्तिः शब्दात्' सूत्र प्रणयन भएको देखिन्छ। मुमुक्षु ब्रह्मज्ञानीले आफ्नू महावाक्य र पञ्चाग्निविद्या विधिपूर्वक श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट सुनेपछि उनले कैवल्य वा अर्चिरादि मार्ग हुँदै निरतिशय मोक्ष प्राप्त गर्दछन्। पहिले पनि [१९]ब्रह्मै थिए, ब्रह्मसाक्षात्कारपछि पनि फेरि ब्रह्म नै भइहाल्दछन् र फेरि फर्केर यस [२०]मानव आवर्त अर्थात् जन्ममृत्युरूपी दुश्चक्रमा आउनुपर्दैन भन्ने नै उपर्युक्त मन्त्रात्मक सूत्रको तात्पर्य देखिन्छ।

ब्रह्मसूत्रको प्रथम 'अथातो ब्रह्मजिज्ञासा' सूत्रले ब्रह्मजिज्ञासाको उपक्रम गरेर ब्रह्मसाक्षात्काररूपी अपूर्वताका लागि विभिन्न मन्त्रमय सूत्रहरूद्वारा अभ्यास गर्दै अर्थवाद र उपपत्तिपूर्वक अन्तमा 'अनावृत्तिः शब्दात्' सूत्रद्वारा उपसंहार गरेर [२१]षड्विधलिङ्गतात्पर्यनिर्णयको पूर्णपालना यस न्यायप्रस्थानात्मक ब्रह्मसूत्रमा भएको देखिन्छ। उपर्युक्त अनुसार अभ्यासका रूपमा उपक्रमात्मक प्रथम सूत्र र उपसंहारात्मक अन्तिम सूत्रका बीचमा अध्याय, पाद र अधिकरणहरूमा आएका केही सूत्रहरू यहाँ उल्लेख गर्नु सान्दर्भिक ठान्दछु। जुन यसप्रकार छन् –

१८. यत्साक्षादपरोक्षाद्ब्रह्म य आत्मा सर्वान्तरस्तन्मे व्याचक्ष्व। – बृहदारण्यकोपनिषद् ३।४।१

१९. क. ब्रह्मैव सन् ब्रह्माप्येति। – बृहदारण्यकोपनिषद् ४।४।६

ख. न तस्य प्राणा उत्क्रामन्त्यत्रैव समवलीयन्ते ब्रह्मैव सन् ब्रह्माप्येति।
– नृसिंहोत्तरतापनीयोपनिषद् ५

ग. ब्रह्मवेद ब्रह्मैव भवति। – मुण्डकोपनिषद् ३।२।९

घ. ब्रह्मविदाप्नोति परम्। – तैत्तिरीयोपनिषद् २।१।१

२०. एतेन प्रतिपद्यमाना इमं मानवमावर्तं नावर्तन्ते। – छान्दोग्योपनिषद् ४।१५।१

२१. उपक्रमोपसंहारावभ्यसोऽपूर्वता फलम्।
अर्थवादोपत्ती च लिङ्गं तात्पर्यनिर्णये॥ – बृहत्संहिता

ईक्षतेर्नाशब्दम्, आनन्दमयोऽभ्यासात्, ज्योतिश्चरणाभिधानात्, शास्त्रदृष्ट्या तूपदेशो वामदेववत्, अत्ता चराचरग्रहणात्, गुहां प्रविष्टावात्मानौ हि तद्दर्शनात्, भूमा सम्प्रसादध्युपदेशात्, अक्षरमम्बरान्तधृतेः, ज्योतिर्दर्शनात्, सुषुप्त्युत्क्रान्त्योर्भेदेन, तर्काप्रतिष्ठानादप्यन्याथानुमेयमितिचेदेवमप्यविमोक्षिप्रसङ्गः, भोक्त्रापत्तेरविभागश्चेत् स्याल्लोकवत्, श्रुतेस्तु शब्दमूलत्वात्, लोकवत्तु लीलाकैवल्यम्, नासतोऽदृष्टत्वात्, उत्पत्त्यसम्भवात्, स्याच्चैकस्य ब्रह्मशब्दात्, अतः प्रबोधोऽस्मात्, फलमत उपपत्तेः, आत्मशब्दाच्च, यावदधिकारमवस्थितिराधिकारिकाणाम्, आवृत्तिरसकृदुपदेशात्, आत्मेति तूपगच्छन्ति ग्राहयन्ति च तदधिगम उत्तरपूर्वाघयोरश्लेषविनाशौ तद्व्यपदेशात्, रश्म्यनुसारी, मुक्तः प्रतिज्ञानात्, सङ्कल्पादेव तु तच्छ्रुतेः, जगद्व्यापारवर्जं प्रकरणादसन्निहितत्वाच्च ।

यसरी ब्रह्मसूत्रमा उपक्रमादिष ड्विधलिङ्गहरूको तात्पर्यनिर्णयार्थ पूर्वापर विचार भएको हुँदा यो शास्त्र ब्रह्मसाक्षात्कारका लागि निर्विवाद एउटा साधन हो भन्न सकिन्छ । ब्रह्मसूत्रका बारेमा श्रीमद्भगवद्गीतामा [२२]'ब्रह्मसूत्रपदैश्चैव' इत्यादि उल्लेख भएको छ । यसको व्याख्या आचार्य श्रीशङ्करका साथै अरू आचार्यहरूले पनि गर्नुभएको छ ।

ब्रह्मसूत्रशाङ्करभाष्य प्रस्थानत्रयीमध्येको न्यायप्रस्थान हो । भगवान् वेदव्यासद्वारा प्रणीत वेदान्तसूत्रलाई ब्रह्मसूत्र भनिन्छ । वेदव्यासलाई भगवान्का अवतारका रूपमा लिइएको छ । अर्थवादका रूपमा उनलाई [२३]ब्रह्मा, विष्णु र शिवका रूपमा पनि लिएको देखिन्छ ।

प्रस्थानत्रयीमा गणना गरिने यस ब्रह्मसूत्रलाई तर्कप्रस्थान भनिन्छ। ब्रह्मसूत्रलाई ब्रह्ममीमांसासूत्र, वेदान्तसूत्र, भिक्षुसूत्र, उत्तरमीमांसा पनि भनिन्छ। सूत्रको परिभाषा शास्त्रहरूमा दिइएको पाइन्छ । [२४]अत्यन्त सारगर्भित, गम्भीर र थोरै अक्षरमा अर्थको प्रकाशन गर्ने, व्यर्थका अक्षर नभएको दोषरहित सङ्क्षिप्त शब्दसमूहलाई नै सूत्र भनेर विद्वान्हरूले भनेका छन् ।

---

२२. ब्रह्मसूत्रपदैश्चैव हेतुमद्भिर्विनिश्चितैः । – गीता १३।४

२३. अचतुर्वदनो ब्रह्मा द्विबाहुरपरो हरिः ।
अभाललोचनः शम्भुर्भगवान् बादारायणः ॥

२४. स्वल्पाक्षरमसन्दिग्धं सारवद्विश्वतोमुखम् ।
अस्तोभमनवद्यञ्च सूत्रं सूत्रविदो विदुः ॥

त्यही दर्शनीयतम दर्शनको मूल सूत्र ब्रह्मसूत्रमा धेरै थरी विद्वान्हरूले आआफ्ना सम्प्रदाय अनुसार धेरैथरी भाष्य र वृत्तिहरू लेखेका छन् । यहाँ तिनको सामान्य परिचयमात्र दिइने छ । ती भाष्यहरूमा भेदाभेद सम्प्रदायका आचार्य भास्करको भास्करभाष्य, विशिष्टाद्वैत सम्प्रदायका आचार्य रामानुजको श्रीभाष्य, द्वैतसम्प्रदायका आचार्यको पूर्णप्रज्ञाभाष्य, द्वैताद्वैतसम्प्रदायका आचार्य निम्बार्कद्वारा प्रणीत वेदान्तपारिजात, शैवविशिष्टाद्वैतका आचार्य श्रीकण्ठले लेखेको शैवभाष्य, वीरशैवविशिष्टाद्वैत सम्प्रदायका आचार्य श्रीपतिको श्रीकरभाष्य, शुद्धाद्वैत सम्प्रदायका आचार्य वल्लभको अणुभाष्य, अविभागाद्वैतका आचार्य विज्ञान मिश्रको विज्ञानामृतभाष्य, अचिन्त्य भेदाभेदका आचार्य बलदेवको गोविन्दभाष्य, रेणुकाचार्यको शक्तिविशिष्टाद्वैतभाष्यसमेत विभिन्न भाष्यहरू छन् ।

सूत्र अत्यन्त सूक्ष्म हुने हुँदा सूत्रमा भाष्य लेखियो । भाष्यका स्वरूपका सम्बन्धमा पनि विद्वान्हरूले [२५]परिभाषा दिएका छन् । सूत्रानुसार पदहरूद्वारा सूत्रको व्याख्या गर्दै शास्त्रको सिद्धान्तको प्रतिपादन शङ्कासमाधानपूर्वक जहाँ गरिन्छ, त्यसैलाई विद्वान्हरूले भाष्य भनेका छन् ।

भाष्यको रचनापछि भाष्यमा रहेका दुरूहता र अस्पष्टतालाई पनि स्पष्ट पार्नका लागि परवर्ती आचार्यहरूले विभिन्न वृत्ति, टीका, विवरण, निबन्ध, व्याख्यान, काव्य आदि लेखेका छन् । यसरी लेखिएका विभिन्न ग्रन्थहरूलाई विद्वान्हरूले विभिन्न नाम दिएका छन् । ती हुन् – १) प्रकरणग्रन्थ २) वादग्रन्थ र ३) आकरग्रन्थ ।

१. प्रकरणग्रन्थ – जुन ग्रन्थमा शास्त्रीय परिभाषाका साथै अल्प अल्प युक्तिहरू र तर्कहरू दिएर तत्तत्शास्त्रहरूको सङ्क्षेपमा व्याख्या गरिन्छ, त्यस्ता ग्रन्थहरूलाई प्रकरणग्रन्थ भनिन्छ । अथवा जुन ग्रन्थ कुनै शास्त्रको एक भागसँग सम्बद्ध हुन्छ र त्यस शास्त्रको नै काम अंशतः गर्दछ, त्यस ग्रन्थलाई विद्वान्हरू [२६]प्रकरण भन्दछन् ।

२. वादग्रन्थ – अनेक थरी युक्ति, प्रयुक्ति, तर्क र प्रमाणहरूद्वारा पूर्वपक्ष र उत्तरपक्ष प्रदर्शित गर्दै सूत्र र भाष्यका सिद्धान्तहरूसमेतलाई पूर्णतया समर्थन गरेर

२५. सूत्रार्थो वर्ण्यते यत्र पदैः सूत्रानुसारिभिः ।
स्वपदानि च वर्ण्यन्ते भाष्यं भाष्यविदो विदुः ॥

२६. शास्त्रैकदेशसम्बद्धं शास्त्रकार्यान्तरे स्थितम् ।
आहुः प्रकरणं नाम ग्रन्थभेदं विपश्चितः ॥

लेखिएका ग्रन्थहरूलाई वादग्रन्थ भनिन्छ।

३. आकरग्रन्थ – वेद, उपनिषद्, रामायण, महाभारत, पुराणहरू, सूत्रहरू, सूत्रमा लेखिएका भाष्यहरू, वृत्तिहरू, वार्तिकहरू, टीका र टिप्पणीहरूसमेतलाई आकरग्रन्थ भनिन्छ।

आचार्य श्रीशङ्कराचार्यद्वारा लेखिएको ब्रह्मसूत्रको भाष्यलाई शाङ्करभाष्य भनिन्छ। यस भाष्यलाई शारीरकभाष्य पनि भनिएको छ। शारीर अर्थात् मलमूत्रादिको थैलो शरीर त्यसै कुत्सित शरीरमा रहेको परमात्माको विचार गरिने भएको हुँदा शारीरकभाष्य भनिएको हो। शङ्कराचार्यको यो सर्वोत्कृष्ट र प्रसिद्ध अद्वैतपरक भाष्य हो। यो भाष्य प्रसन्न, सरल, तर्कयुक्त, प्रमाणहरूयुक्त, श्रुतिसम्मत र गम्भीर पदावलीयुक्त पनि छ। यो सर्वमान्य अद्वैत वेदान्तको अमूल्य ग्रन्थ हो। यसलाई 'दर्शनीयतमं दर्शनम्' पनि भनिन्छ।

ब्रह्मसूत्रमा भएका अध्याय, पाद र अधिकरणहरूका बारेमा एक मत भए तापनि सूत्रहरूका सङ्ख्याका बारेमा भने विभिन्नता देखिन्छ। जस्तै – शङ्कराचार्यका अनुसार १९१ अधिकरण र ५५५ सूत्रहरू छन्। रामानुज र श्रीकण्ठका अनुसार ५४५ सूत्र छन् भने भास्करका मतमा ५४७ सूत्रहरू छन्। निम्बार्कका मतमा ५४९ र मध्वका मतमा ५६२ सूत्रहरू देखिन्छन्। बलदेव र विज्ञान भिक्षुका मतमा ५५६ सूत्रहरू छन् र बल्लभले भने शङ्कराचार्यले जस्तै ५५५ सूत्रहरू भएको मानेका छन्।

शाङ्करभाष्य अनुसार ५५५ सूत्रहरू र १९१ अधिकरणहरू भएको [२७]ब्रह्मसूत्रमा समन्वय, अविरोध, साधन र फल गरेर ४ अध्यायहरू छन्। यसलाई मुनिले श्लोकबद्ध गर्नुभएको छ। यसका प्रत्येक अध्यायमा ४,४ पादहरू छन्। यो शाङ्करभाष्यग्रन्थ आकारप्रकारको दृष्टिले र विषयको दृष्टिले पनि गहन छ। यस ग्रन्थमा सामान्य जिज्ञासुले प्रवेश र पार पाउनसमेत अत्यन्त कठिन छ। अतः त्यस्ता जिज्ञासु र सामान्य पाठकलाई पनि सुगम हुने दृष्टिले यस दुरूह ग्रन्थलाई शाङ्करभाष्य अनुसार नै भर्सक सङ्क्षिप्त र सरल बनाउने प्रयास गरिएको छ। यसमा अधिकरणका आधारमा अधिकरणको सारमात्रै दिइएको छ। सम्बन्धित अधिकरणअन्तर्गत रहेका सूत्रहरू तत्तत् अधिकरणहरूका अन्तमा दिइएको छ।

२७. शास्त्रं ब्रह्मविचाराख्यमध्यायाः स्युश्चतुर्विधाः।
समन्वयाविरोधौ द्वौ साधनञ्च फलं तथा॥

जिज्ञासु पाठकहरूका सुगमताका लागि ग्रन्थका अन्तिम भागमा सम्पूर्ण सूत्रहरूको अर्थ पनि दिइएको छ।

ब्रह्मसूत्रशाङ्करभाष्यमा महत्त्वपूर्ण विषयहरूलाई अध्याय, पाद र [२८]अधिकरणहरूमा विभाजन गरेर विश्लेषणपूर्वक व्याख्या गरिएको छ । यसमा प्रत्येक अधिकरणमा विषय, संशय, पूर्वपक्ष, उत्तरपक्ष र सङ्गति यी पाँच अवयवहरूद्वारा तत्त्वको निर्णय गरिएको छ । यसमा अत्यन्त ऊहापोहपूर्वक श्रुति, स्मृति र प्रत्यक्षादि षट्प्रमाणहरूका आधारमा अद्वैत ब्रह्मको प्रतिपादन गरिएको छ । यहाँ मैले तिनै कुराहरूलाई सङ्क्षिप्त रूपमा उल्लेख गर्ने प्रयास गरेको छु । यसमा आनन्द आश्रमले प्रकाशन गरेको स्वामीभारतीतीर्थमुनिको वैयासिकन्यायमालानामक ब्रह्मसूत्रकारिकालाई प्रत्येक अधिकरणका शुरुमा नै दिएको छु।

ब्रह्मसूत्रशाङ्करभाष्यको पहिलो समन्वय अध्यायमा चार पादहरू छन् । पहिलो पादमा ११ अधिकरण र ३१ सूत्रहरू छन् । दोस्रो पादमा ७ अधिकरण र ३२ सूत्रहरू छन् । तेस्रो पादमा १३ अधिकरणहरू र ४३ सूत्रहरू छन् । चौथो पादमा ८ अधिकरणहरू र २८ सूत्रहरू छन् । दोस्रो अध्यायको पहिलो पादमा १३ अधिकरणहरू र ३७ सूत्रहरू छन् । दोस्रो पादमा ८ अधिकरणहरू र ४५ सूत्रहरू छन् । तेस्रो पादमा १७ अधिकरणहरू र ५३ सूत्रहरू छन् । चौथो पादमा ९ अधिकरण र २२ सूत्रहरू छन् । तेस्रो अध्यायको पहिलो पादमा ६ अधिकरणहरू र २७ सूत्रहरू छन् । दोस्रो पादमा ८ अधिकरणहरू र ४१ सूत्रहरू छन् । तेस्रो पादमा ३६ अधिकरणहरू र ६६ सूत्रहरू छन् । चौथो पादमा १७ अधिकरणहरू र ५२ सूत्रहरू छन् । चौथो अध्यायको पहिलो पादमा १४ अधिकरणहरू र १९ सूत्रहरू छन् । दोस्रो पादमा ११ अधिकरणहरू र २१ सूत्रहरू छन् । तेस्रो पादमा ६ अधिकरणहरू र १६ सूत्रहरू छन् । चौथो पादमा ७ अधिकरणहरू र २२ सूत्रहरू छन् । पहिलो अध्यायको पहिलो पादको पहिलो अधिकरण शुरु हुनुभन्दा पहिले ब्रह्मसूत्रशाङ्करभाष्यको उपोद्घातका रूपमा आचार्य शङ्करले अत्यन्त महत्त्वपूर्ण अध्यासभाष्य लेख्नुभएको छ।

प्रस्थानत्रयीमध्येको यो ब्रह्मसूत्रशाङ्करभाष्य तर्क अर्थात् न्यायप्रस्थान हो । महर्षि वेदव्यासप्रणीत ब्रह्मसूत्रका सूत्रहरू आफैँमा दुरूह छन् भने त्यसमा

---

२८. विषयो विशयश्चैव पूर्वपक्षस्तथोत्तरः ।
प्रयोजनं सङ्गतिश्च शास्त्रेऽधिकरणं विदुः ॥ – भामतीटीका, ब्रह्मसूत्रशाङ्करभाष्य ।

आचार्य शङ्करले अत्यन्त प्रौढ संस्कृत भाषामा न्यायको शैलीमा रचना गर्नुभएको ब्रह्मज्ञानपरकभाष्य झन् दुरूह छ । यसमा दुरूहताको त्रिवेणी मैले पाएको छु । पहिलो ब्रह्मज्ञान दुरूह, दोस्रो ब्रह्मसूत्रका सूत्रहरू दुरूह र तेस्रो शाङ्करभाष्य पनि दुरूह छ। यसप्रकारको दुरूह ब्रह्मसूत्र बुझ्न अत्यन्न छ। मैले धेरै वर्षको अभ्यास, चिन्तन र मनन पछि ब्रह्मसूत्रसार लेख्ने धृष्टता गरेको थिएँ । अहिलेभन्दा १० वर्ष अघि अर्थात् मिति २०६७ सालमा ब्रह्मजिज्ञासु मुमुक्षुहरूको ब्रह्माभ्यासका लागि ब्रह्मसूत्रसार नामक ग्रन्थ अधिकरणका आधारमा लेखेर अन्तमा प्रत्येक सूत्रको अर्थसमेत दिएर गद्यमा लेखेर प्रकाशन गरिएको थियो। किन्तु त्यसले मात्र चित्त नबुझेको हुँदा उपनिषत्कारिकाका साथै मैले ब्रह्मसूत्रमा पनि ब्रह्मसूत्रकारिका लेखेको हुँ।

यो ब्रह्मसूत्र विना गुरु आफैँले पढेर बुझ्न अत्यन्त कठिन छ। प्रायः सामान्य सूत्रग्रन्थहरू ता कुशल तथा तत्तत् विषयका विद्वान् गुरुहरूबाट नियमपूर्वक श्रवण गरेपछि बुद्धिवृत्तिमा लामु अभ्यासपछि मात्रै चढ्न सक्तछ। ती सूत्र ग्रन्थहरूमध्ये यस ब्रह्मसूत्रग्रन्थलाई वेदान्तसूत्र, ब्रह्ममीमांसासूत्र, भिक्षुसूत्र, उत्तरमीमांसा पनि भनिन्छ र शारीरकमीमांसा वा वेदान्तमीमांसाशास्त्र पनि भनिन्छ।

यस ब्रह्मसूत्रग्रन्थलाई प्रस्थानत्रयी मध्येको एक प्रस्थान न्यायप्रस्थान भनिन्छ। अरू प्रस्थानहरूमा श्रीमद्भगवद्गीतालाई स्मृतिप्रस्थान र उपनिषद्लाई श्रुतिप्रस्थान भनिन्छ।

यी तीनै थरी प्रस्थानहरू सबैथरी वेदान्तका सम्प्रदायहरूका लागि आधारभूत ग्रन्थ मानिन्छन् । अद्वैतवेदान्त बाहेकका अन्य सम्प्रदायका आचार्यहरूले आफ्नो सिद्धान्त अनुरूप यिनको अर्थ अद्वैतपरक नगरेर प्रायः द्वैतपरक नै गरेका छन् ।

यस प्रकृत प्रसङ्गमा अरू प्रस्थानहरूको चर्चातर्फ नलागेर केवल ब्रह्मसूत्र र ब्रह्मसूत्रकारिकाको मात्र सङ्क्षिप्त चर्चा गरिने छ । आद्यजगद्गुरु भगवत्पाद श्रीशङ्कराचार्यले ब्रह्मसूत्रमा श्रुतिसम्मत अद्वैतपरक गहन भाष्य लेख्नुभएको छ, जसलाई शाङ्करभाष्य भनिन्छ। अन्य आचार्यहरूलाई प्रस्थानत्रयीमा भाष्य लेख्ने प्रेरणा यसै शाङ्करभाष्यबाट नै प्राप्त भएको देखिन्छ । किन्तु शाङ्करभाष्य अरू भाष्यहरूका तुलनामा विशिष्ट देखिन्छ । किनभने यसमा प्राञ्जल तथा उदात्त संस्कृत भाषाको प्रयोग भएको छ । श्रुतिसम्मत अद्वैत सिद्धान्तको प्रतिपादनमा अकाट्य श्रौतप्रमाणहरू त प्रस्तुत भएका छन् । प्रमाण प्रस्तुतिका सन्दर्भमा

वादकथामा आधारित भएर विभिन्न पूर्वपक्षको उत्थापन गर्दै पूर्वपक्षका वेदविरुद्धका मतहरूलाई श्रौतप्रमाण र तदनुकूल युक्तियुक्त तर्कद्वारा समूल उच्छेदन र खण्डन गर्दै आफ्नू श्रुतिसम्मत अद्वैत सिद्धान्तको प्रतिष्ठापन र मण्डन समेतको दृष्टिले पनि यो शाङ्करभाष्य विशिष्ट देखिन्छ।

जसरी प्रत्येक विषयलाई अधिकरणमा विभाजन गरेर भगवान् वेदव्यासले ब्रह्मसूत्रको रचना गर्नुभएको छ, तदनुसार नै जगद्गुरु श्रीशङ्कराचार्यले आफ्नू भाष्य लेख्नुभएको छ। मैले पनि मिति वि.सं. २०६७ साल अक्षतृतीयाका दिन ब्रह्मसूत्रसारग्रन्थको प्रकाशन गर्दा आचार्यहरूकै अनुसरण गर्दै अधिकरणमा आधारित भएर लेखेर प्रकाशन गरेको थिएँ। भामतीपति आचार्य वाचस्पतिमिश्रको कारिका अनुसार ब्रह्मसूत्रसारमा जस्तै यो ब्रह्मसूत्रकारिका पनि विषय, संशय, पूर्वपक्ष, उत्तरपक्ष, प्रयोजन र सङ्गतिसमेत दिएर सङ्क्षिप्तमा लेखिएको छ।

उपर्युक्त अनुसार विवेचना गर्दा अद्वैत वेदान्तमा ब्रह्मसूत्रका साथै प्रस्थानत्रयी मध्येका श्रीमद्भगवद्गीता र उपनिषद्को कति ठूलो महत्त्व छ भन्ने थाहा हुन्छ। भगवान् श्रीशङ्कराचार्यले यी तीनै ओटा ग्रन्थहरूमा गहन भाष्य लेखनुभएको छ। ती अद्वैत वेदान्तको परम्परामा शाङ्करवेदान्तका प्रस्थानत्रयीका नामबाट प्रसिद्ध छन्। त्यसपछि विभिन्न भक्ति र द्वैतपरम्पराका आचार्यहरूले उपर्युक्त ग्रन्थहरूमा संस्कृतमा भाष्य आ-आफ्ना सम्प्रदाय र सिद्धान्त अनुसार लेखेर आद्यजगद्गुरु श्रीशङ्करपछि केही आचार्यहरू जगद्गुरुको उपाधिबाट समलङ्कृत भएका छन्। वर्तमान समयमा प्रज्ञाचक्षु आचार्य रामभद्राले प्राचीन शास्त्रीय मान्यता र मानदण्ड अनुसार प्रस्थानत्रयीमा आफनू सम्प्रदायको सिद्धान्तअनुसार प्रौढ संस्कृतभाषामा भाष्य रचना गरेर जगद् गुरुको उपाधि प्राप्त गर्नुभएको छ। यी बाहेकका अन्य स्वनामधन्य जगद्गुरुहरूका बारेमा अनभिज्ञता प्रकट गर्नु नै उपयुक्त ठान्दछु।

विवेक, वैराग्य, षट्सम्पत्तिले सम्पन्न मुमुक्षु नै ब्रह्मजिज्ञासाको अधिकारी हो। वैराग्यका विलास नै षट्सम्पत्ति हुन् र अन्तमा मुमुक्षा आउँछ। यी साधनहरू अन्तःकरणका जागृति हुन्। ईश्वरको अनुग्रह नभईकन [२९]मनुष्यत्व, मुमुक्षुत्व र ब्रह्मज्ञानी गुरुको संश्रय पाउन मुस्किल पर्छ। दुःखको अनुभव नहोउञ्जेल सुखको

---

२९. दुर्लभं त्रयमेवैतद्देवानुग्रहहेतुकम्।
मनुष्यत्वं मुमुक्षुत्वं महापुरुषसंश्रयः॥ – विवेकचूडामणि ६

वा आनन्दको कामना कसैले गर्दैन, जब मान्छेले दुःखको अनुभव गर्छ र शाश्वत सुखको इच्छा गर्छ तब मात्रै आनन्दको खोजीमा मान्छे लाग्दछ। त्यतिमात्र होइन अनादि सांसारिक अज्ञानात्मक, आध्यासिक अन्तःकरणात्मक बुद्धि, मन, चित्त र [३०]अहङ्कारदेखि लिएर देहसम्मका यी सबै वस्तु अज्ञानकल्पित हुन् । अज्ञानद्वारा सिर्जित तिनै सुदृढ शृङ्खलाद्वारा टनटन कसिएको अनुभव नभएसम्म त्यसबाट छुट्न मनुष्यले मोक्षको कामना गर्दैन, जब अनुभव गर्दछ अनिमात्रै उसमा ब्रह्मजीज्ञासा पैदा हुन्छ । स्वस्वरूपज्ञान अर्थात् आत्मज्ञान वा ब्रह्मसाक्षात्कार हुनेबित्तिकै यी सबै तत्क्षण नाश भइहाल्दछन् ।

[३१]मोक्ष खोजेर पाइँदैन, त्यसको कहीँ कुनै एक गाउँमा वा ग्रामान्तरमा वास हुँदैन । त्यो ता अज्ञानात्मक हृदयग्रन्थिको भेदन वा विमोचन भएपछि आफ्नै हृदयभित्र साक्षात्कार हुने नित्य स्वप्रकाश आफ्नै आत्मस्वरूप नित्य ब्रह्मात्मक अवस्था हो ।

प्रतिबन्धात्मक अज्ञानजन्य भ्रमको निवारण ज्ञानबाट मात्र हुन्छ। ज्ञानका लागि विचारात्मक अद्वैत वेदान्तजन्य ब्रह्मज्ञान जिज्ञासु मुमुक्षुले गर्नुपर्दछ। कुनै पनि मायिक साधन अन्तःकरण र बहिष्करण आदिबाट ब्रह्मज्ञान हुनसक्तैन भनेर श्रुतिले भनेको छ। किनभने ब्रह्मसम्म [३२]वाणी पुग्न नसकेर मन सहित फर्किन्छ। उपर्युक्त अनुसार ब्रह्मलाई वाणी र मनले समेत प्राप्त गर्न नसकेर फर्के पनि तर मौन अवस्थामा रहेका ज्ञानीहरूले ब्रह्मसाक्षात्कार गर्दछन् भनेर आचार्य [३३]श्रीशङ्करले लेख्नुभएको छ।

केही श्रुतिहरूले आत्मा आकारवान् हुन्छ भनेर 'आदित्यवर्णम्' 'भारूपः' 'स्वयंज्योतिः' भने तापनि अन्य श्रुतिहरूले 'अरूपम्' 'न सदृशे तिष्ठति रूपमस्य न चक्षुषा पश्यति कश्चनैनम्' (श्वे.उ.४।२०) 'अशब्दमस्पर्शम्' (क.उ.१।३।१५) भनेका हुँदा साधनद्वारा ब्रह्मसाक्षात्कार हुन असम्भव देखिन्छ।

---

३०. अहङ्कारादि देहान्तान् बन्धानज्ञानकल्पितान् ।
स्वस्वरूपावबोधेन नश्यन्ति तत्क्षणाद्धि तान् ॥

३१. मोक्षस्य नहि वासोऽस्ति ग्रामे ग्रामान्तरेऽपि वा ।
अज्ञानहृदयग्रन्थि मोक्षो मोक्षरितिस्मृतः ॥

३२. यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह । – तैत्तिरीयोपनिषद् २।४।१

३३. यस्माद्वाचो निवर्तन्ते अप्राप्य मनसा सह ।
यन्मौनं योगिभिर्गम्यं तद्भवेत्सर्वदा बुधः ॥ – अपरोक्षाऽनुभूतिः १०७

भगवत्पाद श्रीशङ्कराचार्यका अनन्तर अद्वैत वेदान्तका परम्परामा प्रबल दुईथरी प्रस्थानहरू मानिन्छन् । ती हुन् – प्रकाशात्मयतिको विवरणप्रस्थान र वाचस्पति मिश्रको भामतीप्रस्थान । विवरणप्रस्थानले जीवलाई ब्रह्मको प्रतिबिम्ब मान्दछ भने भामतीप्रस्थानमा चाहिँ मायिक गन्ध, स्पर्श, रस आदिको प्रतिबिम्ब हुँदैन भने नीरूप ब्रह्मको [३४]प्रतिबिम्ब कसरी हुन्छ ? भन्दै बिम्ब प्रतिबिम्बवादको खण्डन गर्दै भामतीकार घटाकाशादिको दृष्टान्तद्वारा अवच्छेदवादको आफ्नू सिद्धान्त अघि सार्नुहुन्छ । हामीभित्रै रहेका पाँच मायिक ज्ञानेन्द्रिय आदिले ग्रहण गर्ने पाँचोडा विषय शब्दादिको ता आकार हुँदैन भने माया र मायाका कार्यदेखि टाढा रहेको निष्कल, निरवद्य, निरञ्जन, निरवयव तथा निरतिशय शुद्ध ब्रह्मको आकार हुने सम्भावना नै हुँदैन । आचार्य गौडब्रह्मानन्दले आकारकको परिभाषा दिँदै [३५]आकार भनेको घटपटादि वस्तुहरूको एक अर्कामा देखिने विलक्षणता हो भन्नुभएको छ ।

उपर्युक्त अनुसार मायिक वस्तुको आकार भए तापनि ब्रह्मज्ञानीको मोक्षावस्थामा विशुद्ध ज्ञानका प्रकाशद्वारा प्रकाशित ब्रह्माकारा चरमवृत्ति हुने र त्यसैद्वारा नै चरमवृत्त्यात्मक मायिक आवरणलाई भङ्ग गरेर जीव र ब्रह्मको ऐक्यात्मक मोक्ष हुने हो । त्यसै चरम वृत्तिलाई [३६]विद्या भनिन्छ ।

ब्रह्मसाक्षात्कारका सम्बन्धमा माथि लघुचन्द्रिकामा आएको लोकप्रसिद्ध मायिक आकारलाई नलिएर वेदान्तगत पारिभाषिक आकारलाई लिनुपर्दछ । त्यो हो आत्माको [३७]अत्यन्त निर्मलत्व, अत्यन्त स्वच्छत्व र अत्यन्त सूक्ष्मत्व । त्यसै गरेर बुद्धि पनि आत्माकै सरह अत्यन्त निर्मल, अत्यन्त स्वच्छ र अत्यन्त सूक्ष्म भएमा त्यस्तो बुद्धि आत्मचैतन्य अर्थात् ब्रह्मचैतन्यका आकारद्वारा आभासित हुन सक्तछ । यसै अवस्थालाई आत्मसाक्षात्कार भन्न सकिन्छ ।

आत्मज्ञान स्वप्रकाश हो र ब्रह्मको स्वरूप नै हो । जसरी आफ्नू स्थूल शरीर जान्नका लागि अन्य कुनै लौकिक तथा वैदिक प्रमाणको आवश्यकता पर्दैन ।

---

३४. गन्धस्पर्शरसादीनां कीदृशी प्रतिबिम्बता । – श्लोकवार्तिक

३५. आकारो नाम ज्ञानानां परस्परभेदसाधको वृत्तिनिष्ठो धर्मविशेषः ।
आकारो हि ज्ञानानां मिथो वैलक्षण्यम् । – लघुचन्द्रिका, अद्वैतसिद्धिः

३६. विशुद्धविज्ञानविरोचनाञ्चिता विद्यात्मवृत्तिश्चरमेति भण्यते ।
उदेति कर्माखिलकारकादिभिर्निहन्ति विद्याऽखिलकारकादिकम् । – रामगीता १५

३७. अत्यन्तनिर्मलत्वस्वच्छत्वसूक्ष्मत्वोपपत्तेः, आत्मनो बुद्धेश्चात्मसमनैर्मल्याद्युपपत्तेः, आत्मचैतन्याकाराभासत्वोपपत्तिः । – श्रीमद्भगवद्गीता शाङ्करभाष्य १८।५०

त्यसै गरेर आफैँभित्रको द्रष्टा, साक्षी, सर्वान्तर, अप्रमेय आत्मालाई जान्नका लागि विवेकीहरूका लागि प्रमाणान्तरको आवश्यकता पर्दैन।

जसरी बलिरहेको बत्तीलाई हेर्न अर्को बत्तीको आवश्यकता पर्दैन, त्यस्तै स्वप्रकाश ज्ञानलाई जान्न अर्को ज्ञानान्तरको आवश्यकता पर्दैन। अतः ज्ञान अत्यन्त प्रत्यक्ष भएकाले [३८]ज्ञानका लागि प्रयत्न गर्नुपर्दैन, परन्तु केवल अनात्मबुद्धिको निवृत्तिका लागि मात्रै प्रयत्न गर्नुपर्दछ भनेर आचार्य श्रीशङ्करले लेख्नुभएको छ।

अनात्मबुद्धि भनेको अवभास हो, अज्ञान हो, भ्रम हो र जुन [३९]अधिष्ठानमा त्यो वस्तु छैन त्यसैमा त्यो वस्तु भएको बुद्धि हुनु अर्थात् बुद्धिवृत्तिमा चढ्नु हो। अथवा एउटा वस्तु अर्को वस्तुमा प्रकाशित भएर देखा पर्नु हो र सर्प नभएको रज्जुमा सर्पको दर्शन हुनु अर्थात् अतस्मिन् तद्बुद्धिरूप अध्यास हुनु हो। हुँदै नभएको सर्प डोरीमा देखिनु वा सर्पको बुद्धि हुनु नै भ्रम हो र अध्यास हो। रज्जुमा सर्पको अध्यास वा [४०]भ्रम हुँदा अधिष्ठानरूप रज्जुको सामान्य अंशको ग्रहण र विशेष अंशको अग्रहणबाट सर्पको भ्रम हुन्छ। किनभने अधिष्ठानको सर्वथा ज्ञान हुँदा पनि अध्यास वा भ्रम हुँदैन र सर्वथा अज्ञान हुँदा पनि अध्यास वा भ्रम हुँदैन। निस्पट्ट अन्धकारमा पनि डोरीमा सर्पको भ्रम हुँदैन र झलमल प्रकाशमा पनि डोरीमा सर्पको भ्रम हुँदैन। [४१]परिमलकारले अधिष्ठानदेखि भिन्न सत्ता भएको वस्तुको प्रतीति नै अध्यास हो भनेका छन्।

अध्यासका बारेमा सुरुमा नै केही चर्चा भइसकेको हुँदा यहाँ सङ्क्षिप्तमा चर्चा गरेर देहाध्यास र संसाराध्यासको उल्लेख गरिने छ। जुन जुन अध्यस्त हुन्छ त्यो त्यो मिथ्या हुन्छ भन्ने अद्वैत [४२]वेदान्त सिद्धान्त हो।

सम्पूर्ण प्राणीहरूका पाञ्चभौतिक शरीरहरू अधिष्ठानात्मक रज्जुमा सर्प अध्यस्त भए जस्तै गरेर चिदात्मामा अध्यस्त भएका हुन्। पारमार्थिक सत्ता भएको आत्मामा व्यावहारिक सत्ता भएको अखिल विश्वब्रह्माण्ड, प्राणीका देह र प्रातिभासिक सत्ता भएको स्वप्न पनि अध्यासद्वारा नै प्रतिभासित हुन्छ।

---

३८. तस्माद् ज्ञाने यत्नो न कर्तव्यः किन्तु अनात्मबुद्धिनिवृत्तावेत।
– श्रीमद्भगवद्गीता १८।५० शाङ्करभाष्य

३९. अतस्मिन्वस्तुनि तद्बुद्धिरेवाध्यासः।

४०. सामान्यतो ज्ञाते विशेषतोऽज्ञाते वस्तुनि भ्रमो भवति।

४१. अधिष्ठानासमसत्ताकस्यावभासोऽध्यासः। – परिमलकारः

४२. यद्यद् अध्यस्तं तत्तन्मिथ्या।

यसरी अनात्माको र आत्माको परस्पर अध्यास हुँदा स्वरूपाध्यास र संसर्गाध्यास हुने गर्दछ। जस्तै अनात्माको आत्मामा अध्यास स्वरूपाध्यास हो भने आत्माको अनात्मामा अध्यास संसर्गाध्यास हो। त्यसपछि अन्योऽन्याध्यास, परस्पराध्यास, तादात्म्याध्यास, ज्ञानाध्यास, अर्थाध्यास, धर्म्यध्यास, धर्माध्यास आदि धेरैथरीका अध्यासहरू हुन्छन्।

अध्यस्त जुन वस्तुमा जसको अध्यास हुन्छ त्यस वस्तुको गुण अथवा दोषले अधिष्ठानलाई किञ्चित् पनि छुनसक्तैन। जस्तै – रज्जुरूपी अधिष्ठानमा देखा परेको सर्पको मलमूत्रविष आदि कुनै पनि दोषले अणुमात्र पनि अधिष्ठान रज्जुलाई दूषित गरेको देखिँदैन। त्यसै गरेर शुक्तिमा देखापरेको चाँदीको रञ्चमात्र पनि गुण शुक्तिमा टाँसिदैन भने मरुभूमिमा भासमान [४३]मृगमरीचिकारूपी जले त्यस भूमिको वालुवालाई थोरै पनि भिजाएको हुँदैन।

उक्त उदाहरणलाई उदाहार्यमा घटाएर विचार गर्दा व्यष्टिमा आत्मचैतन्यरूपी अधिष्ठानमा अध्यस्त अज्ञानजन्य बुद्धिका कर्तृत्व, भोक्तृत्व आदि दोषले निर्लेप आत्मालाई दूषित गर्न सक्तैन भने समष्टिमा मायिक सांसारिक दोष वा गुणले जगत्प्रपञ्चको अभिन्ननिमित्तोपादान कारण भएको स्रष्टा परमात्मालाई छुन सक्तैन।

उक्त अविद्यात्मक अध्यास जतिसुकै हेय र त्याज्य भए पनि आत्मा र अनात्माको अध्यासबाट नै विश्वब्रह्माण्ड चलेको छ भने यसैलाई निमित्त मानेर सबै लौकिक र वैदिक प्रमाणप्रमेयव्यवहार प्रवृत्त भएका छन्। त्यतिमात्र नभएर सारा विधिनिषेधबोधक र मोक्षपरक शास्त्रहरू पनि प्रवृत्त भएका छन्।

उपर्युक्त अत्यन्त सुदृढ अध्यासलाई अध्यारोप पनि भनिन्छ। [४४]अध्यारोप भनेको वेदान्तको भाषामा सत्य वस्तुमा मिथ्या वस्तुको आरोप गर्नु हो। उदाहरणका लागि सर्प नभएको रज्जुमा सर्पत्व धर्मको आरोप गर्नु हो भनेर आचार्य श्रीशङ्करले लेख्नु भएको छ। अध्यारोप भनेको मिथ्या वा भ्रान्तिपूर्ण ज्ञान हो। उपर्युक्त उदाहरण हो भने समष्टि उदाहर्यमा चाहिँ शुद्ध निष्कल ब्रह्ममा अविद्याद्वारा अध्यारोपित वा विवर्तित मिथ्या प्रपञ्चलाई शास्त्रहरूले लिएका छन्। व्यष्टिमा

---

४३. आरोपितो नाश्रय दूषितं भवेत्, कदापि मूढैर्मीत दोषदूषितैः।
नाद्रीकरोत्युषरभूमिभागं, मरीचिकावारिमहाप्रवाहः॥ – वेदान्तसन्दर्भ

४४. वस्तुन्यवस्त्वारोपो यः सोऽध्यारोप इतीर्यते।
असर्पभूते रज्ज्वादौ सर्पत्वारोपणं यथा॥ – सर्ववेदान्तसिद्धान्तसारसङ्ग्रह २९७

जीवात्माका अन्तःकरणमा अज्ञानद्वारा अध्यारोपित प्रमातृत्व, कर्तृत्व र भोक्तृत्व आदि मिथ्या मायिक त्रिपुटीयुक्त प्रपञ्चलाई लिएका छन् ।

[४५]परमात्मामा आरोपित मिथ्या प्रपञ्चको अपवाद प्रलयका समयमा परब्रह्म परमात्मा आफैँले गरेर केवल शुद्ध, स्वप्रकाश, सत्, चित् र आनन्दका रूपमा रहनुहुन्छ । जीवात्मा चाहिँ आफैँले नाना थरीका कर्म, अकर्म र विकर्मका द्वारा अध्यारोपित संस्कार र वासनाद्वारा आफ्ना अन्तःकरणमा जम्मा गरेको बन्धनरूप अध्यारोपलाई ब्रह्मज्ञानद्वारा अपवाद अर्थात् भस्म गरेर निष्कलङ्क भएर बस्तछ । तदनन्तर जीवात्मा पहिले पनि ब्रह्म नै थियो र फेरि ब्रह्म नै भइहाल्दछ ।

अध्यारोप भनेको सत्मा असत् वस्तुको कल्पना गर्नु हो । व्यावहारिक दशामा सत् जस्तो रज्जुमा अज्ञानजन्य सर्पत्व बुद्धि हुनु अध्यारोप हो तर आत्मामा भने मिथ्या देहको अध्यास वा अध्यारोप हुनु हो । रज्जुमा भएको सर्पत्वबुद्धिको अपवाद वा निषेध वा निवृत्ति भएर सर्प मात्र रहनु हो । जसरी सर्पबुद्धि आप्तवाक्य वा उज्यालोबाट अपवादित वा निवृत्त हुन्छ । त्यसरी नै आत्मामा भएको मिथ्या देहात्मबुद्धि ब्रह्मज्ञानबाट अपवादित हुन्छ र आत्मामात्र बाँकी रहन्छ । त्यसै गरेर ब्रह्ममा अध्यारोपित मिथ्या जगत् चाहिँ प्रलयका अवस्थामा अपवादित वा निषेधित हुन्छ र ब्रह्ममात्र बाँकी रहन्छ । यसै [४६]अध्यारोप र अपवादबाट निष्प्रपञ्च ब्रह्ममा प्रपञ्च देखापर्दछ र अन्तमा प्रपञ्चको अपवाद वा निवृत्ति वा निषेध भएर शुद्ध ब्रह्ममात्रै रहन्छ । यसै कुरालाई विभिन्न शास्त्र र शास्त्रकारहरूले विभिन्न शैलीले वर्णन गरेका छन् ।

अज्ञानग्रस्त जीवले नै अध्यारोपद्वारा कल्पना गरेको जगत्, परमेश्वरत्व र जीवत्वका भेदद्वारा ब्रह्मभाव कलुषित भएर जीव संसृतिको दुश्चक्रमा फसेको छ । किन्तु त्यो ब्रह्म भने निर्लेपरूपमा आफ्नै स्वरूपमा अवस्थित छ । जीव पनि आफैँबाट सिर्जित र निष्कल स्वस्वरूपमा अज्ञानद्वारा अध्यारोपित भेददृष्टिको अपवाद वा निषेध गरेपछि ब्रह्मात्मभावमा जीवित अवस्थामा नै पुगिहाल्दछ ।

४५. अध्यारोपापवादाभ्यां निष्प्रपञ्चं प्रपञ्च्यते । असर्पभूतायां रज्जौ सर्पारोपवद्वस्तुन्यवस्त्वारोपो अध्यारोपः । वस्तु सच्चिदानन्दानन्ताद्वयं ब्रह्म । अज्ञानादिसकलजडसमूहोऽवस्तु । अपवादो नाम रज्जुविवर्तस्य सर्पस्य रज्जुमात्रत्ववद्वस्तुविवर्तस्यावस्तुनोऽज्ञानादेः प्रपञ्चस्य वस्तुमात्रत्वम् । तदुक्तम्– 'सतत्त्वतोऽन्यथाप्रथा विकार इत्युदीरितः । अतत्त्वोऽन्यथाप्रथा विवर्त इत्युदाहृतः ॥ – वेदान्तसारः

४६. अध्यारोपापवादाभ्यां निष्प्रपञ्चं प्रपञ्च्यते ।
नान्यत्र कारणात्कार्यं न चेत् तत्र न तद्भवेत् ॥
मुमुक्षुणां बोधसिद्ध्यै श्रुतिभिः कल्पितं क्रमः ॥

जीवले आफ्नै अज्ञानद्वारा आरोपित वा सिर्जित द्वैतावस्था व्यवस्थितरूपमा त्यसको अपाकरण गर्नुपर्दछ । त्यसका लागि ब्रह्मज्ञानरूपी प्रकाशबाट मात्रै अज्ञानरूप अन्धकार हट्ने गुरूपदेश प्राप्त गरेपछि त्यसका लागि उनै गुरुबाट नै मुमुक्षु पुरुषले आफ्नो वेदको महावाक्यको श्रवण गर्नुपर्दछ । त्यसपछि निष्ठापूर्वक अनवरतरूपमा मनन र निदिध्यासन गरेपछि अज्ञानजन्य द्वैत बुद्धि र त्यसको कारण अज्ञानको पनि समूल नाश हुन्छ । त्यसपछि अध्यारोपद्वारा सिर्जित द्वैत प्रपञ्च र त्यसको कारण समेत निषिद्ध हुन्छ र मुमुक्षु मुक्त हुन्छ ।

नैसर्गिक यो दुस्तर तथा भ्रममूलक अध्यासले मनुष्यलाई मात्रै होइन पशु आदिलाई पनि छोडेको छैन । सारा वर्ण र आश्रमादि व्यवस्था पनि अध्यासमूलक नै हुन् । जसमा त्यो छैन, त्यसमा नै त्यो रहन्छ भन्ने बुद्धि नै अध्यास हो भनेर माथि उल्लेख भइसकेको छ । तिनको प्रकार यस्तो छ – १. पुत्र, भार्या आदि गौण आत्माको पूर्णता र अपूर्णता आदि बाह्य धर्महरूलाई आफ्नू आत्मामा अध्यस्त गर्नु । २. त्यसै गरेर म मोटो, म दुब्लो आदि मिथ्या देहका धर्महरूलाई आफ्नू आत्मामा अध्यस्त गर्नु । ३. काम, सङ्कल्प, संशय, निश्चय आदि अन्तःकरणका धर्महरूलाई आत्मामा अध्यस्त गर्नु ।

यसप्रकार देहस्त्रीपुत्रादिमा अहं र ममबुद्धिद्वारा खडा भएको बाह्य संसार र कर्तृत्वभोक्तृत्वप्रमातृत्वरूप आन्तर संसार अनर्थ हो र यस अनर्थको हेतु अध्यास हो । यस अध्यासले नै आत्माको वास्तविक स्वरूपको बोध हुन दिएको छैन । त्यसैले सारा अनर्थको हेतु भएको अध्यासको निराकरण गर्दै सर्वाधिष्ठान, सर्वव्यापक, चैतन्यस्वरूप आत्माको साक्षात्कार गरेर मोक्ष प्राप्त गराउनका लागि सम्पूर्ण वेदान्त, दर्शन र शास्त्रहरू अर्थात् गीता, ब्रह्मसूत्र, उपनिषद् आदि प्रवृत्त भएका हुन् । अर्थात् वेदान्तशास्त्रको श्रवणमनननिदिध्यासनबाट उत्पन्न ब्रह्मतत्त्वसाक्षात्काररूप ज्ञानले अज्ञानको नाश गर्दछ र अज्ञानको नाश भएपछि अज्ञानको कार्य भएको अध्यास स्वतः बाध हुन्छ । त्यसपछि सम्पूर्ण विधि र व्यवहारहरू समाप्त हुन्छन् र सच्चिदानन्दस्वरूप आत्मा मात्रै बाँकी रहन्छ । त्यस अद्वैतस्थितिमा पुगेपछि भयको अन्त हुन्छ । त्यसै भयबाट उन्मुक्ति दिलाउनु नै वेदान्तदर्शनको सार्थक प्रयोजन हो । त्यसैले दुःखको आत्यन्तिक निवृत्ति र परमानन्दको प्राप्तिरूप मुक्तिका लागि एवं जीव र ब्रह्मको ऐक्यसाक्षात्कारका निमित्त आत्माका विषयमा चर्चा गरिएको वेदान्तशास्त्रको श्रवण, मनन र निदिध्यासन गर्नुपर्दछ । यसैलाई श्रुतिप्रमाणले सङ्केत गरेको छ – 'आत्मा वाऽरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यः ।'

वेदान्तदर्शनको चिन्तनमनन गर्नु नै जीवनको सार हो ।

यसरी मुख्य आत्मा, मिथ्या आत्मा र गौण आत्मामा समेत अध्यस्त भएर रहेको अज्ञानलाई हटाउन जन्मजन्मान्तर, कल्पकल्पान्तर र युगयुगान्तरसम्म अथक प्रयास गर्नुपर्दछ । अध्यास लरतरो होइन भन्ने देखाउन नै ब्रह्मसूत्रको उपोद्घात अध्यासभाष्यमा भगवत्पाद [४६]आचार्य शङ्करले यसका विशेषताहरू यसरी उल्लेख गर्नुभएको छ – अध्यास भनेको अनादि, अनन्त, नैसर्गिक, मिथ्याप्रत्ययरूप, कर्तृत्वभोक्तृत्वप्रवर्तक र सर्वलोकप्रत्यक्षसमेत हो ।

अन्तमा उपर्युक्त अनर्थको मूलहेतु भएको अधिष्ठानमा अध्यारोपित अज्ञानजन्य भ्रमात्मक यस अध्यासरूपी बन्धनको समूल नाशका लागि नै सबै अद्वैतपरक उपनिषत् अर्थात् वेदान्तवाक्यहरू प्रवृत्त भएका छन् । यसै कुरालाई विशिष्ठीकृत गर्दै अध्यास भाष्यको अन्तमा 'सबै [४७]वेदान्तहरूको जसरी ब्रह्मात्मैकत्व नै विषय हो, त्यसैप्रकारले नै हामी यस शारीरकमीमांसामा (ब्रह्मसूत्रमा) बताउँछौँ' भनेर भगवान् श्रीशङ्कराचार्यले भन्नुभएको छ ।

सर्वप्रथम मेरा अग्रज तथा यो कारिका लेखनका प्रेरक ब्रह्मज्ञानी तथा दर्शनशिरोमणि ब्रह्मलीन पं.मीनप्रसाद नेपालज्यूमा हार्दिक श्रद्धाञ्जलि समर्पण गर्दछु । सारगर्भित शुभाशंसाका लागि महेश सन्न्यास आश्रमका पीठाधीश आदरणीय श्री १००८ स्वामी रमणानन्द गिरिज्यूमा हार्दिक कृतज्ञता ज्ञापन गर्दछु । गहन तथा विद्वत्तापूर्ण सम्मतिका लागि र यस ग्रन्थको गहन सम्पादनका लागिसमेत उपप्रा. रोहिणीराज तिमिल्सिनाज्यूमा हार्दिक आभार व्यक्त गर्दछु । यस ग्रन्थको सम्पादनमा सहयोग गर्नुहुने उपप्राध्यापक नेत्रप्रसाद अधिकारीज्यू, विभुप्रसाद अर्यालज्यूका साथै कम्प्युटर उट्टङ्कन गरी यस ग्रन्थलाई प्रकाशनयोग्य बनाइदिनुहुने खड्गप्रसाद खनालज्यूलाई पनि हार्दिक धन्यवाद दिन्छु । ॐ ब्रह्मार्पणमस्तु ।

२०७८ साल वैशाख १३ गते
(सहस्रचन्द्रदर्शन पूर्ण भएको शुभदिन)

विनीत
शरत्कुमार भट्टराई

---

४६. एवमयमनादिरनन्तो नैसर्गिकोऽध्यासो मिथ्याप्रत्ययरूपः कर्तृत्वभोक्तृत्वप्रवर्तकः सर्वलोकप्रत्यक्षः । – अध्यासभाष्य

४७. अस्यानर्थहेतोः प्रहाणाय आत्मैकत्वविद्याप्रतिपत्तये सर्वे वेदान्ता आरभ्यन्ते । यथा चायमर्थः सर्वेषां वेदान्तानां तथा वयमस्यां शारीरकमीमांसायां प्रदर्शयिष्यामः । – उपोद्घातभाष्य, ब्रह्मसूत्र

# विषयसूची

## पहिलो समन्वय-अध्याय

### तृतीय पाद



## पहिलो समन्वय अध्याय

### चतुर्थ पाद

## द्वितीय अविरोध-अध्याय

### प्रथम पाद



## दोस्रो अविरोध-अध्याय

### द्वितीय पाद

## दोस्रो अविरोध-अध्याय

## तृतीय पाद



## दोस्रो अविरोध-अध्याय

## चतुर्थ पाद

**तेस्रो साधनाध्याय**

**प्रथम पाद**



**तेस्रो साधनाध्याय**

**द्वितीय पाद**

## तेस्रो अध्याय

### तृतीय पाद

**तेस्रो अध्याय**

**चतुर्थ पाद**

## चौथो फलाध्याय

### प्रथम पाद



## चौथो अध्याय

### द्वितीय पाद

## चौथो अध्याय

## तृतीय पाद



## चौथो अध्याय

## चतुर्थ पाद

## अनुसूची (क)



## अनुसूची (ख)

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

## ब्रह्मसूत्र

## उपोद्घातभाष्य

गुरुशिष्यसंवादात्मक

# ब्रह्मसूत्रकारिका

सच्चिदानन्द सद्ब्रह्म मायातीत परात्पर ।
अचिन्त्य चितिमा मेरो प्रणाम छ निरन्तर ॥१॥

गणनायकमा गर्छु श्रद्धाभक्ति समर्पण ।
देऊ हे भगवन् ! नित्य सद्बुद्धि ब्रह्मचिन्तन ॥२॥

माता सरस्वती मेरा वाणी र बुद्धिमा बस ।
ब्रह्मचिन्तनमा लाग्ने देऊ शक्ति अहर्निश ॥३॥

आद्य शङ्करकै पाई प्रेरणा यो अकिञ्चन –
घिस्रिँदैछ, उनैमा यो कारिका छ समर्पण ॥४॥

आबालदेखिका मेरा अहिलेसम्मका पनि –
गुरुमा नति अर्पन्छु श्रद्धान्वित सदा बनी ॥५॥

## अध्यास

शिष्य –

आज्ञा होस् गुरुजी ! प्राच्य श्रौत अद्वैतदर्शन ।
सावधान भई सुन्छु गरी एकाग्र यो मन ॥६॥

आयो उपनिषत्सार लेख्नुभो कारिका पनि ।
धेरै सारहरू आए निबन्धग्रन्थ नै अनि ॥७॥

हो ब्रह्मसूत्र दुर्बोध्य त्यसको सार लेख्नुभो ।
अनुवाद गुरो ! फेरि अद्वैतसिद्धि गर्नुभो ॥८॥

अनुवादहरू थुप्रै भक्तिज्ञानादिको गरी ।
भर्नुभो शास्त्रभण्डार लेखी ग्रन्थ थरी थरी ॥९॥

गीताको सार हे ब्रह्मन् ! लेख्नुभो साररूपमा ।
आयो सङ्क्षेपशारीर संस्कृत साररूपमा ॥१०॥

कष्टसाध्य सबै ती हुन् तथापि सजिलैसित ।
लेख्नुभो ती तिनैद्वारा अभ्यास भो सुनिश्चित ॥११॥

पढें उपनिषद् मैले कारिका साररूपमा ।
बुझें सुगमतासाथ अझै पढ्नै छ मूलमा ॥१२॥

तीनप्रस्थानमध्येमा श्रुतिस्मृति पढें दुवै ।
न्यायप्रस्थान पढ्ने छ जिज्ञासा मनमा खुबै ॥१३॥

गुरु –
जिज्ञासा अति नै राम्रो राख्यौ उत्प्रेरणा दिई ।
यसमा सोच्नु नै पर्ला मनमा गहिरो लिई ॥१४॥

तीनै प्रस्थान छन् सारै बुझ्न दुर्गम दुस्तर ।
तीनमा न्यायप्रस्थान ब्रह्मसूत्र सुदुस्तर ॥१५॥

तिम्रो सत्प्रेरणा पाई कारिका ब्रह्मसूत्रको ।
लेख्न उत्सुक भो मेरो लेखनी बिचरो निको ॥१६॥

प्रत्यक्स्वरूप सद्ब्रह्म मायाविकारले पर ।
सच्चिदानन्द अन्तस्थ प्रतिबिम्ब चितीश्वर ॥१७॥

असत्य जडसंरोधी सत्य प्रकाशचिन्मय ।
परब्रह्म चिदात्माको गर्छु स्तवन निर्भय ॥१८॥

आफ्नै अज्ञानसङ्कल्प्य जगत् जीव र ईश्वर ।
यल्ले आहत भो मेरो भूमभाव निरन्तर ॥१९॥

ब्रह्मज्ञानप्रदातामा नम गर्छु नती बनी ।
व्यासशङ्कर सर्वज्ञ पद्मगोपालमा पनि ॥२०॥

पाई गुरुकृपा मेरा चर्मचक्षु खुले स्वतः ।
ब्रह्मज्ञानार्थ चल्दैछ लेखनी फेरि वस्तुतः ॥२१॥

शुश्रूषा गुरुकै गर्दै अन्तेवासी बनीकन ।
गरेँ श्रवण वेदान्त गुरुबाटै दिई मन ॥२२॥

गुरुशास्त्रकृपा पाई जानेँ वेदान्त किञ्चन ।
त्यही नै सोम्य ! जानेको म भन्ने छु तिमीकन ॥२३॥

विचारशास्त्र वेदान्त गुरुबाटै सुनेपछि ।
भित्री साधन बन्ने छ अपरोक्ष हुने पछि ॥२४॥

आनन्दमय आत्माको प्रत्यक्ष छ असम्भव ।
सुषुप्त्यनुभवैद्वारा अनुमानैकसम्भव ॥२५॥

वेदान्त बुझ्न गाह्रो छ अध्यास नबुझीकन ।
जो ब्रह्मसूत्रमा आयो उपोद्घात बनीकन ॥२६॥

सर्वप्रथम यो जानी गर्नलाई सुचिन्तन ।
लेखे शङ्करले भाष्य उपोद्घात भनीकन ॥२७॥

त्यसैकारणले सोम्य ! अध्यासको विवेचन-
बाटै म शुरु गर्दैछु शारीरकारिकाकन ॥२८॥

अति सङ्क्षेपमा लेख्छु अध्यास क्रमले अनि ।
'अथातो ब्रह्मजिज्ञासा' तर्फ बढ्ने छ लेखनी ॥२९॥

जडमायिक धी मिल्छ चितिमा जब एक भै ।
हृदयग्रन्थि जन्मन्छ अहं त्यो जीवतत्त्व भै ॥३०॥

अध्यासजन्य हो जीव ब्रह्मको प्रतिबिम्ब हो ।
मायाधीश त हो साक्षी ब्रह्मको चितिबिम्ब हो ॥३१॥

शुद्ध चेतन सद्ब्रह्म अवाङ्मनसगोचर ।
माया अनादि हो यौटी अनिर्वाच्यात्मिका तर ॥३२॥

इदं जड अयम् आत्मा अन्योऽन्याध्यास भैकन ।
रज्जुमा सर्पजस्तो भै सिर्जिन्छ विश्वसिर्जन ॥३३॥

शिष्य –

अध्यास कति छन् ब्रह्मन् ! परिभाषा स्वरूप के ? ॥३४॥
के हो संसर्ग तादात्म्य अन्योऽन्य धर्मी धर्म के ?

अनि लक्षण के के हुन् ? यसको उपयोगिता ?
आज्ञा होस् गुरुजी ! सूक्ष्म योगिता प्रतियोगिता ॥३५॥

गुरु –

जडचेतनको ऐक्य जहाँ हुन्छ भ्रमात्मक ।
डोरीमा सर्पको भ्रान्ति त्यो हो कार्य तमात्मक ॥३६॥

आत्माऽहङ्कार हुन् धर्मी जड चैतन्य धर्म हुन् ।
यी परस्पर सङ्क्लृप्त सत्यानृतस्वरूप हुन् ॥३७॥

अँध्यारो र उज्यालोको अध्यास सन्धिरूप हो ।
जुन वस्तु जहाँ छैन त्यहीँ देखिनु रूप हो ॥३८॥

डोरीमा सर्प जो छैन डोरीमै सर्प देखिनु ।
शुक्तिमा देखिनु चाँदी अध्यास भ्रम सम्झनू ॥३९॥

एउटा वस्तुमा अर्को देखिने अवभास हो ।
अवभासन अध्यास त्यही नै प्रतिभास हो ॥४०॥

सामान्यरूपमा ज्ञात जो अज्ञात विशेषमा ।
त्यहीँ नै हुन्छ अध्यास शुक्तिमा रौप्यरूपमा ॥४१॥

दुई छन् सिपिका भाग आधार र त्यसैगरी ।
अधिष्ठान त्यहीँ हुन्छ यो ज्ञातव्य सधैँभरि ॥४२॥

सितत्व भास्वरत्वादि चम्चमाहटले युत ।
आधारभागमा पर्छन् सामान्यरूप वस्तुतः ॥४३॥

अधिष्ठानांशमा पर्छन् नीलपृष्ठ त्रिकोणक ।
रजताभास देखिन्छ सिपि अध्यासभासक ॥४४॥

हुँदैन सिपिमा चाँदी चाँदी हुन्छ बजारमा ।
स्मृतिमा बस्छ चाँदी त्यो सोही भास्तछ शुक्तिमा ॥४५॥

त्यस्तै नै रज्जुमा सर्प हुँदैन हुन्छ बिलमा ।
पूर्वसंस्कारले गर्दा देखिन्छ सर्प रज्जुमा ॥४६॥

शिष्य –

पूर्वसंस्कारमा यद्वा स्मृतिमा बस्छ के कुन ?
सोही अगाडि देखिन्छ के हो त्यो ? भन्नुहोस् पुनः ॥४७॥

गुरु –

अध्यास भ्रम यद्वा हो अवभास थरी थरी ।
अविद्याजन्य अध्यास भास्छ अज्ञानले गरी ॥४८॥

शिष्य –

अध्यास कसरी हुन्छ प्रातिभासिक हो कुन ?
बुझ्नै मुस्किल भो ब्रह्मन् ! भन्नोस् स्पष्ट गरीकन ॥४९॥

गुरु –

स्मृतिरूप भई बस्छ पूर्व संस्कार वासना ।
अगाडि झ्वास्स देखिन्छ अवभास भईकन ॥५०॥

अध्यास हुनका लागि प्रकाशतममिश्रण ।
हुनुपर्दछ अस्पष्ट मन्द चक्षु भईकन ॥५१॥

अधिष्ठान छ जे जस्तो त्यसैमा स्मृति भास्तछ ।
सर्प भास्तछ डोरीमा सिपिमा रौप्य भास्तछ ॥५२॥

शिष्य –

कसरी रज्जुमा सर्प चाँदी भास्तछ शुक्तिमा ।
कुन कारणले हुन्छ ? आज्ञा होस् गुरुजी ममा ॥५३॥

गुरु –

हुन् आवरण विक्षेप अविद्याशक्तिसाधन ।
त्यो आवरणले छोप्छ विक्षेप गर्छ सिर्जन ॥५४॥

छोपिई रज्जु सोमाथि तत्कालै सर्प देखिने ।
रज्जुज्ञान जसै हुन्छ सर्प हुन्छ नदेखिने ॥५५॥

रज्जुअज्ञानले गर्दा रज्जुमा सर्प भास्तछ ।
रज्जुज्ञान जसै हुन्छ रज्जुको सर्प भाग्दछ ॥५६॥

यही हो भ्रम अध्यास अवभास अनेकन ।
प्रातिभासिक अध्यास अज्ञानजन्य किञ्चन ॥५७॥

अध्यस्त वस्तु हो मिथ्या प्रातिभासिक मायिक ।
नाशिन्छ ज्ञानका द्वारा त्यो हो तुच्छ अतात्त्विक ॥५८॥

दुई प्रकार अध्यास अर्थाध्यास सँगै अनि ।
ज्ञानाध्यास हुने गर्छ प्रातिभासिक नै बनी ॥५९॥

विषयान्तर अध्यास विषयैमा गई परी ।
अर्थाध्यास हुने गर्छ शुक्तिमा रजतैसरी ॥६०॥

जो ज्ञानान्तर अध्यास ज्ञानमा जब बन्दछ ।
त्यो ज्ञानाध्यास हो सोम्य ! शास्त्रले स्पष्ट भन्दछ ॥६१॥

शुक्तिको ज्ञानमा पर्दा आरोप रौप्यज्ञानको ।
ज्ञानाध्यास त्यहाँ हुन्छ आरोपमात्र ज्ञानको ॥६२॥

छन् अर्थाध्यासका भेद धर्मी र धर्मले दुई ।
धर्मी दुई मिले हुन्छ धर्म्यध्यास दुवै भई ॥६३॥

अहंवाचक चैतन्य इदंवाचक हो जड ।
शरीर म हुँ भन्नाले धर्म्यध्यास भयो पढ ॥६४॥

स्वरूपाध्यास नै हुन्छ चितिमा जड मिल्न गै ॥
संसर्गाध्यास नै हुन्छ जडमा चिति सर्न गै ॥६५॥

अध्यासहरू धेरै छन् स्वरूपाध्यास नै अनि ।
सम्बन्धाध्यास वा भन्छन् संसर्गाध्यास नै पनि ॥६६॥

धर्मीमा धर्म अर्कैको प्रतीति नै भएपछि ।
धर्माध्यास हुने गर्छ धर्म्यध्यास भएपछि ॥६७॥

शरीर म हुँ का पश्चात् शरीरं मम आउँछ ।
धर्मी अध्यासका पश्चात् धर्माध्यास उदाउँछ ॥६८॥

यो हो अध्यास वैतथ्य प्रातिभासिक हो असत् ।
मिली चेतनका साथ असत्य बन्छ तुल्य सत् ॥६९॥

व्यवहार जहाँ हुन्छ हुन्छ अध्यास नै त्यहाँ ।
त्यो अध्यास जहाँ हुन्छ हुन्छ भेदाग्रहै त्यहाँ ॥७०॥

भेदाग्रह जहाँ हुन्छ अज्ञानजन्य हुन् सब ।
अज्ञानबाट नै हुन्छ यो दृश्य सृष्टि सम्भव ॥७१॥

शुद्ध चेतन आत्माले गर्न सक्तैन सर्जन ।
जड भौतिक देहादिबाट हुँदैन सर्जन ॥७२॥

जडचेतनको ग्रन्थि अध्यास जब बन्दछ ।
विशाल दृश्यसंसृष्टि तब सम्भव बन्दछ ॥७३॥

बुद्धिको चितिका साथ तादात्म्याध्यास बन्दछ ।
संसर्गाध्यास नै चित्को बुद्धिका साथ बन्दछ ॥७४॥

जड त्यो बुद्धिका साथ चित्को अध्यास भैकन ।
अन्योऽन्याऽध्यासले हुन्छ अहंको ग्रन्थि सिर्जन ॥७५॥

अध्यासजन्य जीवात्मा भोगी प्रारब्धको फल ।
संसारमा घुमिरन्छ कहीँ माथि कहीँ तल ॥७६॥

स्थूलत्व र कृशत्वादि देहका धर्म हुन् सब ।
अध्यास चितिका साथ जडको हुन्छ नै जब ॥७७॥

शरीरेन्द्रियका साथ चित्को अध्यास भैकन ।
प्रमातृत्वादि आत्मामा हुन्छन् उत्पन्न तत्क्षण ॥७८॥

शिष्य –
अध्यास कहिलेदेखि अस्तित्व यसको रह्यो ।
कसको शक्ति पाएर अध्यास बलियो भयो ? ॥७९॥

गुरु –
अविद्याजन्य अध्यास चित्कै आश्रय लीकनै ।
भूतभौतिक संसृष्टि गर्छ प्रलयसम्म नै ॥८०॥

अनादि र अनन्तै हो नैसर्गिक विरूपक ।
मिथ्याप्रत्यय हो फेरि कर्तृत्वादि प्रवर्तक ॥८१॥

अध्यास सबको लागि प्रत्यक्ष छ सधैँभरि ।
यो मिथ्याज्ञान हो भाग्छ यथार्थ ज्ञानमा परी ॥८२॥

अध्यासै नबुझी बुझ्न ब्रह्मसूत्र असम्भव ।
बुझे शारीरमीमांसासूत्र बुझ्न छ सम्भव ॥८३॥

अध्यास पछि हे सोम्य ! ब्रह्मसूत्र म भन्दछु ।
जिज्ञासा ब्रह्मको गर्नु मोक्षार्थ योग्य ठान्दछु ॥८४॥

ब्रह्मसूत्रको अध्यासविचारको कारिका पूरा भयो ।



ॐ तत्सद्ब्रह्मणे नमः

## ब्रह्मसूत्र

## प्रथम समन्वयाध्याय

समन्वये स्पष्टलिङ्गमस्पष्टत्वेऽप्युपास्यगम् ।
ज्ञेयगं पदमात्रञ्च चिन्त्यं पादेष्वनुक्रमात् ॥

### प्रथम पाद

(यस पादमा ब्रह्मजिज्ञासादेखि प्रतर्दनसहित ११ अधिकरणहरू छन्)

# ब्रह्मसूत्रकारिका

## ब्रह्मविचार

### १. जिज्ञासाधिकरण (ब्रह्मसूत्र १।१।१।१)

शिष्य –

ब्रह्मजिज्ञास्य यो शास्त्र आरम्भ गर्नु सम्प्रति ?
छ योग्य ? अथवा छैन ? सन्देह हुन गो अति ॥१॥

वादीले योग्य यो छैन भन्छन् गरेर निश्चय ।
परस्पर विरुद्धै हुन् आत्मा, देह र इन्द्रिय ॥२॥

यिनको हुन सक्तैन अध्यास जो परस्पर ।
स्वयं नै जीव हो ब्रह्मविचारै गर्नु के छ र ?॥३॥

अध्यास अनि सन्देह आफैँमा हुन्न वस्तुतः ।
आफूलाई स्वयं जानी हुँदैन मुक्ति निश्चित ॥४॥

कागका दाँत गन्ने त्यो अभ्यास व्यर्थ हो जुन ।
त्यस्तै नै ब्रह्मजिज्ञासा गर्नु हो व्यर्थ चिन्तन ॥५॥

यसरी पूर्वपक्षीको मत आएपछि तब ।
हे गुरो ! ब्रह्मजिज्ञासा गर्नु बेकार हो अब ॥६॥

भन्नुहोस् गुरुजी ! यस्मा श्रुतिको सार लीकन ।
जिज्ञासा ब्रह्मको गर्नु योग्य हो ? वा कि ! होइन ? ॥७॥

गुरु –
असङ्ग[१] ब्रह्म नै आत्मा श्रुतिले स्पष्ट भन्दछ ।
यै [२]आत्मा ब्रह्म जो बुझ्छ स्वयं ऊ [३]ब्रह्म बन्दछ ॥८॥

प्रायः संसारका मान्छे देहै आत्मा भनीकन ।
अज्ञानवश भै गर्छन् देहमै आत्मचिन्तन ॥९॥

असङ्ग ब्रह्म हो आत्मा ? अथवा देह हो ? भनी ।
हुन सक्तछ सन्देह अति भ्रमित नै बनी ॥१०॥

यसमा [४]श्रुतिका साथै [५]विद्वद्वचन लीकन ।
ब्रह्मज्ञानार्थ वेदान्त गर्नुपर्दछ चिन्तन ॥११॥

---

१. असङ्गो ह्ययं पुरुषः । – बृहदारण्यकोपनिषद् ४।३।१५
२. अयमात्मा ब्रह्म । – माण्डूक्योपनिषद् २
३. अहं ब्रह्मास्मि । – बृहदारण्यकोपनिषद् १।४।१०
४. क. सत्यं ज्ञानमनन्तं ब्रह्म । – तैत्तिरीयोपनिषद् २।१।१
ख. तद्विजिज्ञासस्व तद्ब्रह्म । – तैत्तिरीयोपनिषद् २।६।१
ग. भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ।
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे ॥ – मुण्डकोपनिषद् २।२।८
५. अहं मनुरभवं सूर्यश्च । – बृहदारण्यकोपनिषद् १।४।१०

[6]ब्रह्मापरोक्षबोधार्थ वेदान्तवाक्यनिर्णित ।
तात्पर्यज्ञानका लागि यो शास्त्र श्रव्य निश्चित ॥१२॥

[7]मुमुक्षुकन साक्षात् नै स्वयं ब्रह्म बनाउने ।
आत्मा र परमात्माको एकता नै गराउने ॥१३॥

ज्ञानी मुमुक्षु यैद्वारा संसार पार तर्दछ ।
त्यसैकारण यो शास्त्र आरम्भ गर्नु योग्य छ ॥१४॥

दुई वर्णक छन् जान्नू यसमा सूत्र आदिका ।
विभाजन गरी लेखे पद्मले [8]पञ्चपादिका ॥१५॥

यसमा [9]सूत्र यौटा छ जिज्ञास्य ब्रह्म भन्दछ ।
[10]ब्रह्मज्ञान गरी ज्ञानी ब्रह्मै हो ब्रह्म बन्दछ ॥१६॥



---

६. यत्साक्षादपरोक्षाद् ब्रह्म य आत्मा सर्वान्तरः । – बृहदारण्यकोपनिषद् ३।४।१

७. ब्रह्म वेद ब्रह्मैव भवति । – मुण्डकोपनिषद् ३।२।९

८. क. चार सूत्र र अध्यास पाँचोटा पाद लीकन ।
छन् पञ्चपादिका भित्र नौ वर्णक विभाजन ॥
शङ्कराचार्यका शिष्य विद्वान् शास्त्रज्ञ चिन्तक ।
हुन् पद्मपाद नै पैला भाष्यका वृत्तिलेखक ॥

ख. अध्यास (प्रथम वर्णक), २. वेदान्तमीमांसाशास्त्रस्य व्याचिख्यासितस्य (द्वितीय वर्णक), ३. अथातः (तृतीयवर्णक) र ४. ब्रह्मजिज्ञासा (चतुर्थ वर्णक)

९. अथातो ब्रह्मजिज्ञासा । – ब्रह्मसूत्र १।१।१।१

क. ॐकारश्चाथशब्दश्च द्वावेतौ ब्रह्मणः पुरा ।
कण्ठं भीत्वा विनिर्यातौ तस्मान्माङ्गलिकावुभौ ॥

१०. ब्रह्मैव सन् ब्रह्माप्येति । – बृहदारण्यकोपनिषद् ४।४।६

## २. जन्माद्यधिकरण (ब्रह्मसूत्र १।१।२।२)

यहाँ वर्णक यौटै छ यो हो पञ्चम वर्णक ।
यसले सजिलो हुन्छ ब्रह्म जान्न विनाधक ।।१७।।

शिष्य –
कसरी ब्रह्म जानिन्छ ? विना प्रमाण लक्षण ।
सन्देह गुरुजी ! आयो के हुन् प्रमाण लक्षण ? ।।१८।।

निर्गुणी ब्रह्मको हुन्छ कहाँ लक्षण सम्भव ?
प्रतिज्ञामात्रले हुन्छ कसरी ज्ञान सम्भव ? ।।१९।।

यस सन्देहमा वादी भन्छन् प्रमाण दीकन ।
शास्त्रतः हुन सक्तैनन् ब्रह्मका स्पष्ट लक्षण ।।२०।।

[११]जन्म प्रलय इत्यादि जगत्का धर्म हुन् सब ।
ब्रह्मका साथ मिथ्याको सम्बन्ध छ असम्भव ।।२१।।

लोकप्रसिद्ध [१२]सत्यादि हुन् अन्यार्थकवाचक ।
ब्रह्मका हुन सक्तैनन् दुवै लक्षण सार्थक ।।२२।।

अतः [१३]स्वरूपका साथै [१४]तटस्थादिक लक्षण ।
ब्रह्मका हुन सक्तैनन् स्पष्टतासाथ [१५]लक्षण ।।२३।।

---

११. यतो वा इमानि भूतानि जायन्ते । – तैत्तिरीयोपनिषद् २।६।१
१२. सत्यं ज्ञानमनन्तं ब्रह्म । – तैत्तिरीयोपनिषद् २।१।१
१३. स्वरूपं सद् व्यावर्तकं, यथा पृथिव्याः पृथिवीत्वम् । – न्यायः
१४. तद्भिन्नत्वे सति तद्बोधकत्वम् । यावल्लक्ष्यकालमनवस्थितत्वे सति व्यावर्तकत्वम् । – न्यायः
१५. सजातीयविजातीयेभ्यो हि व्यावर्तकं लक्षणम् । – न्यायः

यसरी पूर्वपक्षीको मत आयो भने अब ।
विना लक्षण हे ब्रह्मन् ! ब्रह्मज्ञान असम्भव ॥२४॥

प्रतिज्ञामात्रले हुन्न ब्रह्मको ज्ञान तत्त्वतः ।
प्रमाण पनि चाहिन्छ साथै [१६]लक्षण शास्त्रतः ॥२५॥

यसमा भन्नुहोस् ब्रह्मन् ! ब्रह्मको स्पष्ट लक्षण ।
जुन लक्षणले जान्न सकियोस् ब्रह्म तत्क्षण ॥२६॥

गुरु –
हुन ता जन्म इत्यादि जगत्का धर्म हुन् सब ।
तथापि ती सबै हुन्छन् ब्रह्मबाटै समुद्भव ॥२७॥

हुने [१७]बाधसमानाधिकरणैबाट सिर्जन ।
ब्रह्मको हुन्छ संसिद्धि त्यै हो तटस्थलक्षण ॥२८॥

सत्यज्ञानअनन्तादि भिन्नार्थक भए पनि ।
अन्तमा ब्रह्ममै मिल्छन् ब्रह्मस्वरूप नै बनी ॥२९॥

जगत्को हुन्छ जोबाट [१८]सृष्टि स्थिति र सङ्क्षय ।
तटस्थ ब्रह्मको त्यै हो श्रौतलक्षण निश्चय ॥३०॥

---

१६. न हि लक्षणप्रमाणाभ्यां विना वस्तुसिद्धिः । – वेदान्तपरिभाषाविवरणटीका

१७. क. मुख्यसमानाधिकरण, – यथा घटाकाशस्तथा महाकाशः, तत्त्वमसि आदि ।
ख. बाधसमानाधिकरणः – स्थाणुरयं नायं पुरुषः, यो भुजङ्गः सा स्रक्, यद् जगत्कारणं तद् ब्रह्म आदि

१८. भृगुर्वैवारुणि वरुणं पितरमुपससार, अधीहि भगवो ब्रह्मेति इत्युपक्रम्याऽऽह – यतो वा इमानि भूतानि जायन्ते येन जातानि जीवन्ति । यत्प्रयन्त्यभिसंविसन्ति तद्विजिज्ञासस्व । तद्ब्रह्मेति । – तैत्तिरीयोपनिषद् ३।१।१

सत्यज्ञानअनन्तादि ब्रह्मस्वरूपलक्षण ।
ब्रह्मका रूपजस्ता हुन् श्रौतस्वरूपलक्षण ॥३१॥

यसमा [19]सूत्र यौटै छ श्रुतिको सार लीकन ।
जन्माद्यस्य भनी दिन्छ तटस्थ ब्रह्मलक्षण ॥३२॥



## ३. शास्त्रयोनित्वाधिकरण (ब्रह्मसूत्र १।१।३।३)

दुई वर्णक छन् यस्मा छैटौँ सातौँ गरीकन ।
दुवैले क्रमले गर्छन् कर्ता र ज्ञानवर्णन ॥३३॥

वर्णक –१

शिष्य –

के पौरुषेय हो वेद ? अपौरुषेय वा कुन ?
सन्देह हुन गो पैदा कर्ता को हो ? भनीकन ॥३४॥

यसमा भन्दछन् वादी [20]श्रुतिस्मृति दिईकन ।
वेद हो नित्य, कर्ता त्यो ब्रह्म हैन भनीकन ॥३५॥

यसमा भन्नुहोस् विद्वन् ! कर्ता हो वेदको कुन ?
वेद कर्तृक हो ? यद्वा अकर्तृक सनातन ? ॥३६॥

---

१९. जन्माद्यस्य यतः । – ब्रह्मसूत्र १।१।२।२
२०. क. हे विरूप नित्यया स्तुतिं प्रेरय । – श्रुतिः
ख. अनादिनिधना नित्या वागुत्सृष्टा स्वयम्भुवा ।
आदौ वेदमयो दिव्या यतः सर्वाः प्रवृत्तयः ॥ – स्मृतिः

गुरु –

सङ्क्षेपमा भनेँ मैले ब्रह्मका दुई लक्षण ।
प्रमाण अब भन्ने छु एकचित्त भई सुन ॥३७॥

जगत्कारण हो ब्रह्म भन्ने वर्णन भैकन ।
त्यसकै दृढतानिम्ति शास्त्रयोनि छ शंसन ॥३८॥

निःश्वास [२१]ब्रह्मको वेद भन्ने छ श्रुतिको मत ।
कर्ता हो वेदको ब्रह्म निःश्वासरूपमा स्वतः ॥३९॥

पूर्वकल्पसमानै त्यो वेद प्रकट बन्दछ ।
त्यसै कारणले वेद नित्य हो वेद भन्दछ ॥४०॥

सम्पूर्ण शास्त्रको योनि सारा सृष्टि विवर्तक ।
सर्वज्ञैश्वर्यसम्पन्न ब्रह्म हो वेदकारक ॥४१॥

स्वप्रकाश र सर्वज्ञ ब्रह्मबाटै प्रकाशन –
हुन्छन् शास्त्र र ब्रह्मै हो त्यो उपादानकारण ॥४२॥

कुनै पुरुष सक्तैन वेदकर्ता कबै हुन ।
त्यसै कारण हो वेद अकर्तृक सनातन ॥४३॥

निस्कन्छन् ब्रह्मबाटै नै वेद निःश्वासरूपमा ।
ब्रह्मको ज्ञान वेदैले गराउँदछ अन्तमा ॥४४॥

---

२१. क. अस्य महतो भूतस्य निःश्वसितमेतद्यदृग्वेदो यजुर्वेदः सामवेदोऽथर्वाङ्गिरसः ।
– बृहदारण्यकोपनिषद् २।४।१०

ख. यस्य निःश्वसितं वेदाः । – सायणाचार्यः

शास्त्रको हेतु हो ब्रह्म कार्य हो वेद ब्रह्मको ।
वेदबाटै हुने गर्छ ज्ञान तत्त्वतः ब्रह्मको ॥४५॥

वर्णक –२

शिष्य –

वेदको हेतु हो ब्रह्म कार्य हो वेद हेतुको ।
कार्यबाट कहाँ होला ? तत्त्वतः ज्ञान हेतुको ॥४६॥

यसै कारणले अन्य प्रमाणादिकले पनि ।
ब्रह्म जानिन्छ ? जानिन्न ? वेदबाहेकले पनि ॥४७॥

सन्देह यसमा आयो सारै सन्दिग्ध भैकन ।
पूर्वपक्षी भने राख्छन् मत निम्न लिईकन ॥४८॥

सिद्ध वस्तु भएकाले ब्रह्म यो घट नै सरी ।
अरू प्रमाणले जान्न सकिन्छ सजिलै गरी ॥४९॥

यसमा गुरुजी ! भन्नोस् जानिन्छ ब्रह्म के गरी ?
वेदप्रमाणले यद्वा अरू प्रमाणले गरी ? ॥५०॥

गुरु –

रूपलिङ्गादिले हीन ब्रह्म दुर्गेय वस्तुतः ।
अरू प्रमाणले सोझै जानिन्न ब्रह्म तत्त्वतः ॥५१॥

[२२]वेदले वेद्य हो ब्रह्म वेद नै नपढीकन ।
कसरी ब्रह्म जानिन्छ ? वेदज्ञान नभैकन ॥५२॥

---

२२. नावेदविन्मनुते तं बृहन्तम् । – तैत्तिरीयब्राह्मण ३।१२।९

जसले वेद जान्दैन ब्रह्म जान्न असम्भव ।
वेद जान्दछ जो मान्छे ब्रह्म जान्न छ सम्भव ।।५३।।

नपढीकन वेदान्त जल्ले ब्रह्मज्ञ ठान्दछ ।
त्यस्ताको पतनै हुन्छ [२३]शाकल्यतुल्य बन्दछ ।। ५४।।

[२४]सम्प्रदायविना कोही विना गुरु कुनै पनि ।
वेदान्ततत्त्व सक्तैन जान्न कोही भए पनि ।।५५।।

नपढी वेद मान्छेले ब्रह्म जान्न छ दुस्तर ।
वेदको हेतु हो ब्रह्म त्यैबाट ज्ञेय हो तर ।।५६।।

[२५]ब्रह्म हो वेदको हेतु वेद हो कार्य हेतुको ।
वेद जान्दछ जो मान्छे ज्ञान गर्दछ हेतुको ।।५७।।

यसमा [२६]सूत्र यौटै छ दुवै वर्णक लीकन ।
यल्ले सङ्क्षिप्त संयुक्त गर्छ अर्थप्रकाशन ।।५८।।



## ४. समन्वयाधिकरण (ब्रह्मसूत्र १।१।४।४)

दुई वर्णक छन् यस्मा आठौँ नवौँ गरीकन ।
निम्नानुसारले गर्छन् श्रौतप्रमाण वर्णन ।।५९।।

---

२३. तं त्वौपनिषदं पुरुषं पृच्छामि तं (त्वा त्वां विद्याभिमानिनं पुरुषम्) चेन्मे न विवक्ष्यसि मूर्धा ते विपतिष्यतीति । – बृहदारण्यकोपनिषद् ३।९।२६

२४. तस्माद् असम्प्रदायवित् सर्वशास्त्रविद् अपि मूर्खवद् एव उपेक्षणीयः ।
– शाङ्करभाष्य, श्रीमद्भगवद्गीता १३।२

२५. वेदहेतुरपि ब्रह्म तद्वेदादेव मीयते । – लघुवार्तिक १।१।३

२६. शास्त्रयोनित्वात् । – ब्रह्मसूत्र १।१।३।३

वर्णक १ –

शिष्य –

वेदान्त देवता कर्ता गरेर प्रतिपादन ।
कर्माङ्गरूपमा गर्छ ब्रह्मको प्रतिपादन ? ॥६०॥

स्वतन्त्ररूपमा गर्छ वेदान्त प्रतिपादन ?
सन्देह हुनगो वादी भन्छन् प्रमाण दीकन ॥६१॥

साक्षात् वेदान्त गर्दैन ब्रह्मको प्रतिपादन ।
पाइन्न [२७]फल क्यै ब्रह्म गरेर प्रतिपादन ॥६२॥

पारम्पर्य लिई स्वर्ग इत्यादि कर्मको फल ।
लिएर देवता आदि अदृष्ट सबको बल ॥६३॥

अतः कर्माङ्ग कर्ता र देवता आदि लीकन ।
वेदले अन्तमा गर्छ ब्रह्मको प्रतिपादन ॥६४॥

यसमा भन्नुहोस् विद्वन् ! वादीको मत युक्त हो ।
यदि हैन भने ब्रह्मन् ! कुन सिद्धान्त युक्त हो ? ॥६५॥

गुरु –

वेदान्त कर्मको शेष हुन सक्तैन सर्वथा ।
तात्पर्यरूपमा हुन्छ वेदान्तज्ञान सर्वदा ॥६६॥

[२८]उपक्रमादि षड्लिङ्गद्वारा तात्पर्य लीकन ।
गर्छ वेदान्तले सच्चिद् ब्रह्मको प्रतिपादन ॥६७॥

---

२७. क. आम्नायस्य क्रियार्थत्वादानर्थक्यमतदर्थानां तस्मादनित्यमुच्यते ।
ख. तथा फलाभावात् । – पूर्वमीमांसासूत्रम् १।२।१ तथा १।२।३

२८. उपक्रमोपसंहारावभ्यासोऽपूर्वताफलम् ।
अर्थवादोपपत्ती च लिङ्गं तात्पर्यनिर्णये ॥ – बृहत्संहिता

स्वतन्त्ररूपले हुन्छ ब्रह्मज्ञान सुनिश्चित ।
कर्ता र देवता कर्मद्वारा होइन तत्त्वतः ॥६८॥

हो सिद्धवस्तु सद् ब्रह्म श्रवणादिक साधन ।
पूरा भएपछि ब्रह्म भित्र झल्किन्छ तत्क्षण ॥६९॥

सिद्धवस्तु भएकाले साध्य स्वर्गादिका सरी ।
विधिको शेष यो हैन यो प्राप्त छ सधैँभरि ॥७०॥

ज्ञानकाण्ड छ भिन्नै नै भिन्नै त्यो कर्मकाण्ड हो ।
प्रमेयाधीन हो ज्ञान पुरुषाधीन कर्म हो ॥७१॥

त्यसै कारणले ब्रह्म तात्पर्यबाट जानिने ।
विधिको शेष यो हैन, स्वतः स्फुरण यो हुने ॥७२॥

वर्णक –२

शिष्य –

[२९]'सत्यं ज्ञानमनन्तादि' वाक्यको अर्थ हो जुन ।
त्यो [३०]'आत्मा वा अरे' आदि वेदको विधि लीकन ॥७३॥

आत्मस्वरूपको ज्ञान कर्मको अङ्ग भैकन ।
गर्छ वेदान्तले ? यद्‌वा गर्छ स्वतन्त्र भैकन ? ॥७४॥

सन्देह हुन गो ब्रह्मन् ! वादीले यसमा तर ।
दिई प्रमाण सुस्पष्ट राख्तछन् मत सुन्दर ॥७५॥

---

२९. सत्यं ज्ञानमनन्तं ब्रह्म । – तैत्तिरीयोपनिषद् २।१।१

३०. आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्य निदिध्यासितव्यः ।
– बृहदारण्यकोपनिषद् २।४।५

वेदान्तशास्त्र हो तस्मात् यसमा अनुशासन ।
अवश्य हुनु नै पर्छ अन्यथा नगरीकन ॥७६॥

स्वतन्त्ररूपले होस् वा श्रवणैमात्रले पनि ।
ब्रह्मज्ञान भए हुन्छन् मननादि वृथा अनि ॥७७॥

अतः उपासनाको नै विधिको अङ्ग भैकन ।
'सत्यं ज्ञानमनन्तम्' यी वाक्य गर्छन् प्रबोधन ॥७८॥

यसमा भन्नुहोस् ब्रह्मन् ! वादीको मत युक्त हो ?
अयुक्त हो भने भन्नोस् सिद्धान्त कुन युक्त हो ? ॥७९॥

गुरु –
याग–होम–विधानादि हुन्छन् पुरुषका वश ।
सज्ज्ञान-अपरोक्षादि हुन्नन् पुरुषका वश ॥८०॥

प्रमेयाधीनमा हुन्छ ब्रह्मज्ञान परात्पर ।
विधेय हुन सक्तैन जति तर्क तिमी गर ॥८१॥

मननादिकले गर्छन् असम्भाव्य निवारण ।
वेदान्तसिद्ध सद्ब्रह्म हुन सक्तछ चिन्तन ॥८२॥

आत्मा गौण र मिथ्या ती हट्छन् ब्रह्म बुझेपछि ।
अध्यासजन्य संसार हट्छ ज्ञान भएपछि ॥८३॥

दुई वर्णकको यौटै [३१]सूत्र गर्छ समन्वय ।
सद्ब्रह्म विधिको शेष हैन भन्दछ निश्चय ॥८४॥



३१. तत्तु समन्वयात् । – ब्रह्मसूत्र १।१।४।४

## ५. ईक्षत्यधिकरण (ब्रह्मसूत्र १।१।५।५–११)

शिष्य –

'तदैक्षत' भनी आयो श्रुतिमा जुन शंसन ।
यसले सृष्टिको कर्ता स्पष्ट गर्दैन सूचन ॥८५॥

प्रधान अथवा ब्रह्म जगत्कारण हो कुन ?
सन्देह हुन गो ब्रह्मन् ! अति सन्दिग्ध भो मन ॥८६॥

यसमा भन्दछन् वादी प्रधान भनी कारण ।
ज्ञानशक्ति क्रियाशक्ति उसका सृष्टिसाधन ॥८७॥

कार्यमा आउँछन् सारा सधैँ कारणका गुण ।
हुन सक्तैन सद्ब्रह्म जगत्कारण निर्गुण ॥८८॥

जगत्कारण हो स्पष्टै प्रधान त्रिगुणात्मक ।
सद्ब्रह्म बन्न सक्तैन हेतु त्यो निर्गुणात्मक ॥८९॥

प्रधान हो जगत्कर्ता वादीले भन्दछन् जब ।
प्रधान हो कि ! हो ब्रह्म ! भन्नुहोस् गुरुजी ! अब ॥९०॥

गुरु –

शब्दतः श्रुति भन्दैन त्यसै कारणले पनि ।
प्रधान भन्न मिल्दैन जगत्कारण हो भनी ॥९१॥

श्रुतिले स्पष्ट नै भन्छ जसले गर्छ ईक्षण ।
जगत्कारण हो सोही सच्चिद् ब्रह्म सनातन ॥९२॥

[32]'सदेव' श्रुतिले पैले उपक्रम गरीकन ।
[33]'तदैक्षत' भनी गर्छ जगत्कारणशंसन ॥९३॥

[34]सर्वविद् जो छ सर्वज्ञ त्यै हो कारण ईश्वर ।
जड प्रधान बन्दैन जगद्-हेतु कसै तर ॥९४॥

शब्द ईक्षति हो [35]गौण भन्न मिल्दैन तत्त्वतः ।
जगत्कारण हो ब्रह्म श्रुतिले भन्छ शब्दतः ॥९५॥

जड प्रधान सर्वांश [36]आत्मा बन्न असम्भव ।
जड प्रधान जानेर मोक्षप्राप्ति असम्भव ॥९६॥

[37]गुरुबाट सुनी वाक्य मननादि गरीकन ।
सद्ब्रह्मको गरे ज्ञान ज्ञानी जाला तरीकन ॥९७॥

[38]सुषुप्तिकालमा जीव आत्मामा लीन बन्दछ ।
जड प्रधानमा जीव कसरी लीन बन्दछ ? ॥९८॥

---

३२. सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् । – छान्दोग्योपनिषद् ६।६।१
३३. तदैक्षत बहु स्यां प्रजायेयेति तत्तेजोऽसृजत । – छान्दोग्योपनिषद् ६।३।३
३४. यः सर्वज्ञः सर्वविद् यस्य ज्ञानमयं तपः तस्मादेतद् ब्रह्म नामरूपमन्नञ्च जायते । – मुण्डकोपनिषद् १।१९
३५. सेयं देवतैक्षत हन्ताहमिमास्तिस्रो देवता अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरवाणि । – छान्दोग्योपनिषद् ६।३।२
३६. स आत्मा, तत्त्वमसि श्वेतकेतो इति । – छान्दोग्योपनिषद् ६।१४।३
३७. आचार्यवान् पुरुषो वेद, तस्य तावदेव चिरं यावन्न विमोक्ष्येऽथ सम्पत्स्ये । – छान्दोग्योपनिषद् ६।१४।२
३८. यत्रैतत्पुरुषः स्वपिति नाम सता सोम्य तदा सम्पन्नो भवति स्वमपीतो भवति तस्मादेनं स्वपितीत्याचक्षते स्वं ह्यपीतो भवति । – छान्दोग्योपनिषद् ६।८१

सम्पूर्ण [३९]श्रुतिको उक्ति समानै छ सबैतिर ।
जगत्कारण हो ब्रह्म सच्चिद् आत्मा परात्पर ॥९९॥

जड प्रधान मानेमा जगत्‌को सृष्टिकारक ।
'सदात्मा हेतु' 'तादात्म्य' शब्द बन्लान् निरर्थक ॥१००॥

[४०]प्राज्ञात्मासाथमा एक भएको जीवले अनि ।
भित्र बाहिर जान्दैन अन्य वस्तु कुनै पनि ॥१०१॥

[४१]'स कारणम्' भनी आयो सदात्मा श्रुतिमा जब ।
जड प्रधान तस्मात् नै सृष्टिहेतु असम्भव ॥१०२॥

श्रुतिले भन्छ सर्वज्ञ ब्रह्म हो सृष्टिकारण ।
जडप्रधान अन्यान्य हेतु हुन्छन् निवारण ॥१०३॥

यसमा [४२]सूत्र छन् सात ऊहापोह गरीकन ।
ब्रह्म नै हो जगत्कर्ता भन्छन् श्रुति दिईकन ॥१०४॥



३९. क. यथाग्नेर्ज्वलतः सर्वादिशो विस्फुलिङ्गा विप्रतिष्ठेरन्नेवमेवैतस्मादात्मनः सर्वे प्राणा यथायतनं विप्रतिष्ठन्ते प्राणेभ्यो देवा देवेभ्यो लोकाः ।
– कौषीतकिब्राह्मणोपनिषद् ३॥३
ख. तस्माद्वा एतस्मादात्मन आकाशः सम्भूत । – तैत्तिरीयोपनिषद् २।१
ग. आत्मत एवेदं सर्वम् । – छान्दोग्योपनिषद् ७।२६।१
घ. आत्मन एष प्राणो जायते । – प्रश्नोपनिषद् ३।३
४०. प्राज्ञेनात्मना सम्परिष्वक्तो न बाह्यं किञ्चन वेद नान्तरम् । – बृहदारण्यकोपनिषद् ४।३।२१
४१. स कारणं कारणाधिपाधिपो न चास्य कश्चिज्जनिता न चाधिपः ।
– श्वेताश्वतरोपनिषद् ६।९
४२. ईक्षतेर्नाशब्दम् । – ब्रह्मसूत्र १।१।५।५–११
क. सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् ।
ख. तदैक्षत बहुस्यां प्रजायेयेति तत्तेजोऽसृजत ।
ग. अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरवाणि ।
– छान्दोग्योपनिषद् ६।२।१, ६।२।३, ६।३।२

## ६. आनन्दमयाधिकरण (ब्रह्मसूत्र १।१।६।१२–१९)

आनन्दमयले मुख्य दुई वर्णक लीकन ।
अन्तमा यसले गर्छ सद्ब्रह्मप्रतिपादन ॥१०५॥

वर्णक – १

शिष्य –

आनन्दमय हो जीव ? अथवा ब्रह्म हो भनी ?
सन्देह हुन गो वादी भन्दछन् जीव हो भनी ॥१०६॥

मयट् प्रत्ययका साथै प्रियादि अङ्ग नै लिई ।
आनन्दमय हो जीव भन्छन् प्रमाण नै दिई ॥१०७॥

मयट् विकार हो मिथ्या कसरी ब्रह्म बन्दछ ?
आनन्दमय हो जीव यही सङ्गति मिल्दछ ॥१०८॥

वादीको यसरी आयो गुरुजी ! मत निश्चित ।
आनन्दमय हो ब्रह्म ? भन्नोस् या जीव ? तत्त्वतः ॥१०९॥

गुरु –

उपक्रमोपसंहार आदि लीकन शास्त्रतः ।
आनन्द ब्रह्म हो शुद्ध श्रुतिवाक्यानुसारतः ॥११०॥

मयट् प्रत्यय हो खास प्राचुर्य्यरूप अर्थमा ।
विज्ञानमयका अङ्ग प्रियादि हुन् उपाधिमा ॥१११॥

दुई छन् ब्रह्मका रूप शुद्ध औपाधिकै गरी ।
उपाधिहीन हो शुद्ध [४३]अद्वैतानन्द निर्भरी ॥११२॥

---

४३. यत्र हि द्वैतमिव भवति तदितर इतरं पश्यति, यत्र त्वस्य सर्वमात्मैवाभूत्तत्केन कम्पश्येत् । – बृहदारण्यकोपनिषद् ४।५।१५

नामरूपादिले युक्त भेदोपाधिविशेषण–
भएको ब्रह्म हो गौण, मुख्य [४४]ब्रह्म निरञ्जन ॥११३॥

[४५]आनन्दमय हो ब्रह्म श्रुतिद्वारा छ वर्णित ।
जीव होइन आनन्द, आनन्द ब्रह्म शब्दतः ॥११४॥

[४६]रसस्वरूप हो ब्रह्म त्यही प्राप्त गरीकन ।
आनन्दयुक्त भै ज्ञानी बन्छ ब्रह्म सनातन ॥११५॥

[४७]आनन्द ब्रह्म जानेर मान्छे निर्भय बन्दछ ।
[४८]आनन्द ब्रह्म हो सत् चित् यही नै श्रुति भन्दछ ॥११६॥

आनन्द जीव यद्वा त्यो प्रधान पनि होइन ।
[४९]आनन्दमय हो ब्रह्म सच्चित् आनन्द चिद्घन ॥११७॥

वर्णक २

शिष्य –

[५०]'ब्रह्मपुच्छं प्रतिष्ठा' यो ब्रह्मान्य अङ्गरूपले ?
प्रतिपादित हो ? यद्वा हो वा प्राधान्यरूपले ? ॥११८॥

---

४४. निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम् ।
अमृतस्य परं सेतुं दग्धेन्धनमिवानलम् ॥ – श्वेताश्वतरोपनिषद् ६।१९

४५. तस्माद् वा एतस्माद् विज्ञानमयाद् अन्योऽन्तर आत्माऽऽनन्दमयः ।
– तैत्तिरीयोपनिषद् २।५

४६. रसो वै सः, रसं ह्येवायं लब्ध्वाऽऽनन्दी भवति । – तैत्तिरीयोपनिषद् २।७

४७. आनन्दं ब्रह्मणो विद्वान् न बिभेति कुतश्चन । – तैत्तिरीयोपनिषद् २।८।९

४८. आनन्दो ब्रह्मेति व्यजानात् । – तैत्तिरीयोपनिषद् ३।६

४९. सोऽकामयत बहु स्यां प्रजायेय । – तैत्तिरीयोपनिषद् २।६

५०. तस्य प्रियमेव शिरः, मोदो दक्षिणः पक्षः, प्रमोद उत्तरः पक्षः, आनन्द आत्मा, ब्रह्मपुच्छं प्रतिष्ठा । – तैत्तिरीयोपनिषद् २।५

यसमा हुन गो शङ्का वादीले मत राख्तछन् ।
आनन्दमयको अङ्ग ब्रह्म हो स्पष्ट भन्दछन् ॥११९॥

श्रुतिमा पुच्छ यो शब्द आएको छ जहाँ जब ।
देहकै हुन्छ लाङ्गूल लोकप्रसिद्ध हो सब ॥१२०॥

यसमा भन्नुहोस् ब्रह्मन् ! प्रधान हो ? कि ! गौण हो ?
गुरु –
आनन्दमयको अङ्ग ब्रह्म होइन गौण हो ॥१२१॥

लक्षणारूपमा आयो पुच्छशब्द भनी जुन ।
पुच्छको अर्थ आधार ब्रह्म नै हो सनातन ॥१२२॥

आनन्दमय हो ब्रह्म वादीले भन्दछन् जुन ।
अन्नादिबाट उठ्तै गै आनन्दमय अन्तिम ॥१२३॥

ब्रह्मज्ञानार्थ पाँचोटा कोशको परिकल्पना–
गरी, आनन्दको गर्छ अन्तमा श्रुति सूचन ॥१२४॥

उपक्रमोपसंहार आदि लिङ्ग लिईकन ।
[५१]'ब्रह्मपुच्छम्' भनी हुन्छ तत्त्वतः ब्रह्मकीर्तन ॥१२५॥

[५२]आनन्दकै लिई अंश आनन्दी जीव बन्दछ ।
[५३]वाक्यशेष लिई भाष्य निर्गुणी ब्रह्म भन्दछ ॥१२६॥

---

५१. 'ब्रह्म पुच्छं प्रतिष्ठा' इत्यत्र ब्रह्मण एव स्वप्रधानत्वमिति ।
– शाङ्करभाष्य, ब्रह्मसूत्र १।१।६।१९

५२. एतस्यैवाऽऽनन्दस्याऽन्यानि भूतानि मात्रामुपजीवन्ति । – बृहदारण्यकोपनिषद् ४।३।३२

५३. यतो वाचो निवर्तन्ते, अप्राप्य मनसा सह, आनदं ब्रह्मणो विद्वान् न बिभेति कुतश्चनेति । – तैत्तिरीयोपनिषद् २।९

[54]'तस्माद् वा' श्रुतिमा आत्मा पुंलिङ्गबाट शंसित –
हुँदा, प्रकृत हो ब्रह्म भृगुमा उपदेशित ॥१२७॥

शिरदेखि लिई पुच्छपर्यन्त अङ्ग लीकन ।
प्रतिष्ठा ब्रह्मको गर्छ श्रुतिले प्रतिपादन ॥१२८॥

सूत्रशंसित [55]'तद्धेतु व्यपदेशात्' छ यो जुन ।
आनन्दमय साराको [56]हेतु हो ब्रह्म चिद्घन ॥१२९॥

ब्रह्म कारणको तस्मात् ली मुख्यवृत्ति निश्चित ।
आनन्दमय हो ब्रह्मविकार ब्रह्मसिर्जित ॥१३०॥

आफ्नै विकारको अङ्ग कसरी ब्रह्म बन्दछ ?
'निष्कलं निष्क्रियं शान्तम्' ब्रह्म हो श्रुति भन्दछ ॥१३१॥

आनन्द ब्रह्म हो साक्षात् यही नै श्रुति भन्दछ ।
आनन्द ब्रह्म जानेर विद्वान् निर्भय बन्दछ ॥१३२॥

आठ छन् यसमा [57]सूत्र दुवै वर्णकमा सब ।
[58]आनन्द ब्रह्म हो पुच्छ प्रतिष्ठा भन्दछन् तब ॥१३३॥



---

५४. तस्माद्वा एतस्मादात्मन आकाशः सम्भूतः । – तैत्तिरियोपनिषद् २।१।१
५५. तद्धेतुव्यपदेशाच्च । – ब्रह्मसूत्र १।१।६।१४
५६. इदं सर्वमसृजत यदिदं किञ्च । – तैत्तिरीयोपनिषद् २।६
५७.आनन्दमयोऽभ्यासात् । – ब्रह्मसूत्र १।१।६।१२–१९
५८.क. रसो वै सः, रसं ह्येवायं लब्ध्वाऽऽनन्दी भवति ।
ख. आनन्दो ब्रह्मेति व्यजानात् । – तैत्तिरीयोपनिषद् २।७।१, ३।६।१

## ७. अन्तरधिकरण (ब्रह्मसूत्र १।१।७।२०–२१)

शिष्य –

[५९]आदित्यमण्डलैभित्र बस्ने पुरुष हो कुन ?
हिरण्यमय हो ? त्यो वा सूर्य वा देवता कुन ? ।।१३४।।

[६०]श्रुतिका मन्त्रमा व्यक्त पुरुष श्रौत शब्द छ ।
हिरण्मय भनेको त्यो देवतै हुनुपर्दछ ।।१३५।।

गुरु –

सर्वात्मकादि ऐश्वर्य जीव या सूर्यमा पनि ।
रहन्नन् तर ती हुन्छन् परमेश्वरमा अनि ।।१३६।।

त्यो अर्को [६१]सूत्रले भन्छ दुईमा भेद निश्चय ।
[६२]श्रुतिले पनि सोको नै उद्घोष गर्छ निर्भय ।।१३७।।

नियम्य सूर्य हो सानो ब्रह्म ठूलो नियामक ।
अन्तर्यामी भई भित्र बस्छ त्यो मोक्षदायक ।।१३८।।

सबैका भित्र नै बस्छ जान्दैन कसले पनि ।
त्यसैकारण हो ब्रह्म हैन सूर्य अवश्य नि ।।१३९।।

---

५९. अन्तस्तद्धर्मोपदेशात् । – ब्रह्मसूत्र १।१।७।२०

६०. अथ य एषोऽन्तरादित्ये हिरण्मयः पुरुषो दृश्यते ... । – छान्दोग्योपनिषद् १।६।६

६१. भेदव्यपदेशाच्चान्यः । – ब्रह्मसूत्र १।१।७।२१

६२. य आदित्ये तिष्ठन्नादित्यादन्तरो यमादित्यो न वेद यस्याऽऽदित्यः शरीरं य आदित्यमन्तरो यमयत्येष त आत्मान्तर्याम्यमृतः । – बृहदारण्यकोपनिषद् ३।७।९

यसका दुइटा [६३]सूत्र गर्दछन् स्पष्ट शंसन ।
ब्रह्मकै यिनले गर्छन् अन्तर्यामित्ववर्णन ।।१४०।।



## ८. आकाशाधिकरण (ब्रह्मसूत्र १।१।८।२२)

शिष्य –

श्रुतिमा शब्द आकाश[६४] आएको छ गुरो ! जुन ।
त्यो भूताकाश हो यद्वा ब्रह्म हो ? सत्य हो कुन ? ।।१४१।।

त्यो भूताकाश नै भन्छन् पूर्वपक्षीहरू सब ।
हो भूताकाश वा ब्रह्म ? आज्ञा होस् गुरुजी ! अब ।।१४२।।

गुरु –

श्रुतिमा[६५] जुन आकाश अभिधान छ वस्तुतः ।
भूताकाश नभै सौम्य ! ब्रह्म हो बुझ तत्त्वतः ।।१४३।।

आकाशैबाट नै हुन्छ सृष्टि प्रपञ्च यो सब ।
जड आकाशले गर्न सृष्ट्यादि छ असम्भव ।।१४४।।

त्यसैकारणले सौम्य ! आकाशवाच्य ब्रह्म हो ।
सृष्टि स्थिति र संहार सबै नै ब्रह्मकार्य हो ।।१४५।।

जडले गर्न सक्तैन गर्छ चेतनले सब ।
सृष्ट्यादि चितिको कार्य जडबाट असम्भव ।।१४६।।

---

६३. अन्तस्तद्धर्मोपदेशात् । – ब्रह्मसूत्र १।१।७।२०–२१

६४. आकाशस्तल्लिङ्गात् । – ब्रह्मसूत्र १।१।८।२२

६५. आकाश इति होवाच सर्वाणि ह वा इमानि भूतान्याकाशादेव समुत्पद्यन्ते आकाशं प्रत्यस्तं यन्त्याकाशो ह्येवैभ्यो ज्यायानाकाशः परायणम् । – छान्दोग्योपनिषद् १।९।१

अतः आकाश हो ब्रह्म हो उपादानकारण ।
शब्दतः [६६]श्रुतिले गर्छ भूताकाशनिवारण ॥१४७॥

यसभित्र परेको छ एउटै [६७]सूत्र निश्चय ।
यसले ब्रह्मकै गर्छ प्रतिपादन निर्भय ॥१४८॥



## ९. प्राणाधिकरण (ब्रह्मसूत्र १।१।९।२३)

शिष्य –
श्रुतिमा प्राणको चर्चा आएको छ गुरो ! जुन ।
विकार हो कि ! हो ब्रह्म ? भन्नुहोस् गुरुजी कुन ? ॥१४९॥

भन्दछन् पूर्वपक्षीले विकार प्राणको भनी ।
सुषुप्तिमा सबै मिल्छन् विकार प्राणमै अनि ॥१५०॥

गुरु –
सुषुप्तिमा गई मिल्छन् प्राणमा इन्द्रियादि ती ।
पञ्चभूतादि मिल्दैनन् मिल्दछन् ब्रह्ममा त ती ॥१५१॥

त्यसैकारणले प्राण अन्तमा ब्रह्ममै गई ।
लीन बन्दछ हे सौम्य ! त्यो जान्छ ब्रह्म नै भई ॥१५२॥

---

६६. क. आकाशो वै नामरूपयोर्निर्वहिता ते यदन्तरा तद्ब्रह्म ।
– छान्दोग्योपनिषद् ८।१४।१
ख. तस्माद् वा एतस्मादात्मन आकाशः सम्भूतः, आकाशाद् वायुः, वायोरग्निः ।
– तैत्तिरीयोपनिषद् २।१।१
६७. आकाशस्तल्लिङ्गात् । – ब्रह्मसूत्र १।१।८।२२

योो 'प्राण इति होवाच' भन्ने विकार होइन ।
विधान ब्रह्मकै गर्छ शब्द सङ्कोच लीकन ॥१५३॥

'प्राणमेव' भनी फेरि एवकार छ शब्द जो ।
यसले ब्रह्मकै गर्छ निर्धारण अवश्य जो ॥१५४॥

यसमा [६८]सूत्र यौटा छ प्राण हो ब्रह्म भन्दछ ।
प्राणोपासक निर्द्वन्द्व ब्रह्मै हो ब्रह्म बन्दछ ॥१५५॥



## १०. ज्योतिश्चरणाधिकरण (ब्रह्मसूत्र १।१।१०।२४–२७)

शिष्य –

श्रुतिमा जो [६९]'दिवो ज्योतिः' आएको त्यो छ वस्तुतः ।
त्यो कार्यज्योति हो ? यद्वा हो ब्रह्मज्योति तत्त्वतः ? ॥१५६॥

पूर्वपक्षीहरू भन्छन् त्यो ज्योति [७०]जठराग्नि हो ।
भन्नुहोस् गुरुजी ! त्यो के ब्रह्म या जठराग्नि हो ? ॥१५७॥

गुरु –

चतुष्पात्[७१] ब्रह्मको गर्छ विधान श्रुतिले जुन ।
कार्यज्योति न भै त्यो हो ब्रह्मज्योति सनातन ॥१५८॥

६८. अत एव प्राणः । ब्रह्मसूत्र – १।१।९।२३
६९. अथ यदतः परो दिवो ज्योतिर्दीप्यते विश्वः पृष्ठेषु सर्वतः पृष्ठेष्वनुत्तमेषूत्तमेषु लोकेष्विदं वाव तद्यदिदमस्मिन्नन्तः पुरुषे ज्योतिः ।
– छान्दोग्योपनिषद् ३।१३।७
७०. इदं वाव तद्यदिदमस्मिन्नन्तः पुरुषे ज्योतिः । – छान्दोग्योपनिषद् ३।१३।७
७१. पादोऽस्य सर्वा भूतानि त्रिपादस्यामृतं दिवि । – छान्दोग्योपनिषद् ३।१२।६

'यत्'[७२] शब्द श्रुतिमा आयो अनुवृत्ति भईकन ।
भन्छ भासक ब्रह्मै हो अन्य गर्छ निवर्तन ।।१५९।।

यसमा [७३]सूत्र चारोटा आएका छन् र अन्तमा ।
हो ब्रह्मज्योति नै भन्छन् चारै सूत्र यथार्थमा ।।१६०।।



## ११. प्रतर्दनाधिकरण (ब्रह्मसूत्र १।१।११।२८–३१)

शिष्य –
'प्राणोऽस्मि'[७४] श्रुतिमा आयो वायु, इन्द्र कि जीव हो ?
ब्रह्मवाचक यद्वा हो सुन्न पाऊँ म के त हो ? ।।१६१।।

पूर्वपक्षीहरू छैनन् तयार भन्न यो भनी ।
दुविधामा परे वादी सकेनन् भन्न यो भनी ।।१६२।।

त्यसैकारण हे ब्रह्मन् ! के हो त्यो प्राण वस्तुतः ?
श्रुतिमा के छ आएको ? सुन्न पाऊँ म तत्त्वतः ।।१६३।।

गुरु –
'प्रज्ञात्मा[७५] प्राण' हो भन्छ श्रुतिले स्पष्ट नै भने ।
स्पष्टै छ ब्रह्म हो प्राण इन्द्रादि कसरी हुने ? ।।१६४।।

---

७२. अथ यदतः परो ज्योतिर्दीप्यते । – छान्दोग्योपनिषद् ३।१३।७
७३. ज्योतिश्चरणाभिधानात् । – ब्रह्मसूत्र १।१।१०।२४–२७
७४. स होवाच प्राणोऽस्मि प्रज्ञात्मा । – कौषीतकिब्राह्मण ३।२
७५. प्राणोऽस्मि प्रज्ञात्मा तं मामायुरमृतमित्युपास्व । – कौषीतकिब्राह्मण ३।२

ब्रह्मवाचक धेरै छन् लिङ्ग ती सिद्धसाधक ।
अन्यथा सिद्ध ती हैनन् बन्दैनन् ब्रह्मबाधक ॥१६५॥

ब्रह्मवाचक ती लिङ्ग इन्द्रादिमा समन्वय ।
सक्तैनन् हुन, ती हुन्छन् ब्रह्मैमा नै समन्वय ॥१६६॥

त्यसैकारण हे सोम्य ! प्राण हो ब्रह्मवाचक ।
वायु, इन्द्र र जीवात्मा होइनन् प्राणवाचक ॥१६७॥

यसमा सूत्र[७६] चारोटा आएका छन् र ती सब ।
विभिन्न दृष्टिले भन्छन् ब्रह्मै हो प्राणवैभव ॥१६८॥

ब्रह्मसूत्रको प्रथम अध्यायको प्रथम पादको कारिका पूरा भयो ।



---

७६. प्राणस्तथानुगमात् । – ब्रह्मसूत्र १।१।११।२८–३१

## ।। ॐ तत्सद्ब्रह्मणे नमः ।।

## ब्रह्मसूत्र

## प्रथम समन्वयाध्याय

## द्वितीयपाद

(यस पादमा सर्वत्र प्रसिद्धदेखि वैश्वानरसहित ७ अधिकरणहरू छन् । यसमा अस्पष्ट ब्रह्मलिङ्गयुक्त वाक्यहरूको उपास्य ब्रह्मविषयमा विचार गरिएको छ)

### १ सर्वत्र प्रसिद्ध्यधिकरण (ब्रह्मसूत्र १।२।१।१–८)

शिष्य –

'मनोमयादि'[१] जो वाक्य देखिन्छ श्रुतिवर्णित ।
परमेश्वर हो यद्वा ब्रह्मन् ! हो जीव वस्तुतः ।।१।।

विकार मनको नै हो मनोमय त जीव हो ।
मयट् प्रत्यय निष्पन्न त्यो ब्रह्म हैन जीव हो ।।२।।

'अप्राणो[२] ह्यमना' आदि श्रुतिका वाक्यले पनि ।
व्यावर्तन गरी ब्रह्म भन्दछन् जीव नै भनी ।।३।।

पूर्वोक्त पूर्वपक्षीका प्रमाण तर्कले गरी ।
ब्रह्म होइन जीवै हो भन्ने देखिन्छ सर्सरी ।।४।।

के हो ? निश्चित हे ब्रह्मन् ! मलाई भन्नुहोस् अब ।
श्रुतिप्रमाणका साथ चाहन्छु सुन्न नै सब ।।५।।

---

१. मनोमयः प्राणशरीरो भारूपः । – छान्दोग्योपनिषद् ३।१४।२
२. अप्राणो ह्यमनाः शुभ्रः । – मुण्डकोपनिषद् २।१।२

गुरु –

पहिलो पाउमा आयो 'जन्माद्यस्य' भनीकन ।
त्यसमा स्पष्ट नै आयो ब्रह्मलिङ्गाख्य वर्णन ।।६।।

दोस्रो र अनि तेस्रोमा ब्रह्मको प्रतिपादन ।
देखिन्न स्पष्ट तस्मात् यी गर्दछन् पादमन्थन ।।७।।

[३]'सर्वं खलु इदं ब्रह्म' श्रुतिमा शमपूर्वक ।
ब्रह्मको हुन गो चर्चा त्यसैको विधिपूर्वक ।।८।।

हो [४]'मनोमय' हे सोम्य ! प्रत्ययै तद्धितात्मक ।
'प्राणशरीरः' हो जान्नू बहुब्रीहिसमासक ।।९।।

शमको अर्थ हो सारा ब्रह्माण्ड ब्रह्मसिर्जित ।
अन्तमा ब्रह्ममै लीन हुन्छ त्यो भै विसर्जित ।।१०।।

त्यसैकारणले गर्दा श्रुत्युक्त त्यो मनोमय ।
जीव होइन हो ब्रह्म उपासनार्थ निश्चय ।।११।।

उपास्यरूपले आयो 'मनोमयः' भनीकन ।
प्रसिद्ध ब्रह्म नै यो हो मनोमयाख्य शंसन ।।१२।।

यसमा आठ[५] छन् सूत्र सर्वत्रादि गरीकन ।
सबैले ब्रह्मकै गर्छन् प्रतिपादन चिन्तन ।।१३।।



---

३. सर्वं खल्विदं ब्रह्म तज्जलानिति शान्त उपासीत । – छान्दोग्योपनिषद् ३।१४।१

४. मनोमयः प्राणशरीरो भारूपः । – छान्दोग्योपनिषद् ३।१४।२

५. सर्वत्र प्रसिद्धोपदेशात् । – ब्रह्मसूत्र १।२।१।१–८

## २. अत्त्रधिकरण (ब्रह्मसूत्र १।२।२।९–१०)

शिष्य –

अत्ताविषयमा ब्रह्मन् ! विप्रपत्ति अनेकन ।
आएका छन् त्यसैमाथि भन्न गर्छु निवेदन ॥१४॥

अत्ताविषयमा [६]'यस्य' मन्त्रद्वारा स्वयं श्रुति ।
भोक्ता सम्बन्धमा गर्छ प्रशंसा अनि संस्तुति ॥१५॥

त्यो अग्नि जीव हो ? यद्वा ब्रह्म हो सर्वभक्षक ?
पूर्वपक्षीहरू भन्छन् जीव या अग्नि भक्षक ॥१६॥

किन्तु अत्ता हुँदैहुन्न त्यो ब्रह्म कहिल्यै पनि ।
जीव भोक्ता भनेको छ [७]अन्याऽन्य श्रुतिले पनि ॥१७॥

कर्मको फल भोगेर जीव भोक्ता बनीकन ।
झोक्रिएर सधैँ बस्छ पश्चात्ताप गरीकन ॥१८॥

[८]परमेश्वर खाँदैन हेरेर मात्र बस्तछ ।
श्रुतिले घोषणा गर्छ साक्षी हो नित्य भास्तछ ॥१९॥

अथवा जीव अत्ता हो नभए अग्नि हो तर ।
श्रुतिले [९]'अग्निरन्नादः' भनेको छ निरन्तर ॥२०॥

---

६. यस्य ब्रह्म च क्षत्रञ्चोभे भवत ओदनः ।
मृत्युर्यस्योपसेचनं क इत्था वेद यत्र सः ॥ – कठोपनिषद् १।२।२४

७. तयोरन्यः पिप्पलं स्वाद्वत्ति । – मुण्डकोपनिषद् ३।१।१

८. अनश्नन्नन्यो अभिचाकशीति । – मुण्डकोपनिषद् ३।१।१

९. अग्निरन्नादः । – बृहदारण्यकोपनिषद् १।४।६

गुरु –

पूर्वपक्षीहरू भन्छन् अत्ता जीव कि अग्नि हो ?
अत्ता ती दुइटै हैनन् अत्ता केवल ब्रह्म हो ॥२१॥

यहाँ ब्रह्म तथा क्षत्र पद हुन् उपलक्षक ।
परमेश्वर हो अत्ता होइनन् अन्य भक्षक ॥२२॥

ब्रह्मवाचक हो शब्द यसमा जीवलक्षक ।
क्षत्रवाचक हो शब्द यसमा जडलक्षक ॥२३॥

श्रुतिले [१०]स्पष्ट नै भन्छ अत्ताले सब भक्षण ।
स्थिरजङ्गम साराको गर्ने गर्छ प्रतिक्षण ॥२४॥

अत्ताले ब्रह्मका साथै क्षत्रको भात नै सरि ।
बनाई मृत्यु तर्कारी खाने गर्छ सधैँभरि ॥२५॥

त्यसैकारण अत्ता हो ब्रह्म नै अन्तमा गई ।
ब्रह्म क्षत्र दुवै लीन हुन्छन् ती ब्रह्ममैँ गई ॥२६॥

यो हो प्रकरणै खास [११]ब्रह्मको त्यसकारण ।
अत्ता हो यसमा ब्रह्म अरू हुन्छन् निवारण ॥२७॥

दुई छन् यसमा [१२]सूत्र अत्ता ब्रह्म भनीकन ।
प्रतिपादनका साथ अरू गर्छन् निवारण ॥२८॥



१०. मृत्युर्यस्योपसेचनं क इत्था वेद । – कठोपनिषद् १।२।२४
११. न जायते म्रियते वा विपश्चित् । – कठोपनिषद् १।२।१८
१२. अत्ता चराचरग्रहणात् । – ब्रह्मसूत्र १।२।२।९–१०

## ३. गुहाप्रविष्टाधिकरण (ब्रह्मसूत्र १।२।३।११–१२)

शिष्य –

गुहा प्रवेश गर्नेमा हुन् बुद्धि जीव या अरू ।
पूर्वपक्षीहरू भन्छन् यिनै हुन् होइनन् अरू ॥२९॥

ब्रह्मन् ! स्पष्ट गरी भन्नोस् गुहामा कुन पस्तछ ?
गुहा के हो ? र को त्यस्मा पसेर किन बस्तछ ? ॥३०॥

गुरु –

कर्मको फल भोगेर [१३]गुहाका भित्रमा गई ।
छाया आतपकै तुल्य जीवेश बस्तछन् दुई ॥३१॥

कर्मको फल भोग्दैन जड बुद्धि अवश्य नै ।
त्यसैकारणले बुद्धि लिँदैनन् श्रुतिले कुनै ॥३२॥

गुहा हो दहराकाश छाया आतपझैँ भई ।
साथमा बस्तछन् साक्षी अनि जीवसँगै गई ॥३३॥

छाया समान हो जीव साक्षी आतपझैँ अनि ।
साक्षी हो बिम्ब त्यस्कै नै जीव हो प्रतिबिम्ब नै ॥३४॥

यसमा दुइटा [१४]सूत्र 'गुहाप्रविष्ट' आदि छन् ।
साक्षी र जीव नै हुन् ती छाया आतप भन्दछन् ॥३५॥



१३. ऋतं पिबन्तौ सुकृतस्य लोके गुहां प्रविष्टौ परमे परार्धे छायातपौ ब्रह्मविदो वदन्ति । – कठोपनिषद् १।३।१

१४. गुहां प्रविष्टावात्मानौ हि तद्दर्शनात् । – ब्रह्मसूत्र १।२।३।११–१२

## ४. अन्तराधिकरण (ब्रह्मसूत्र १।२।४।१३–१७)

शिष्य –

[15]'आँखामा जुन देखिन्छ छायात्मा हो कि ! जीव हो ?
देवता परमात्मा वा देखिने कुन चाहिँ हो ? ॥३६॥

पूर्वपक्षीहरू भन्छन् ब्रह्मबाहेक एक हो ।
तीनमा गुरुजी ! भन्नोस् छायात्मा कुन एक हो ? ॥३७॥

गुरु –

'य एषोऽक्षिणि'[16] भन्ने जो श्रुतिले गर्छ शंसन ।
आँखामा देखिने पुं हो परमात्मा सनातन ॥३८॥

छायात्मा देवता यद्वा जीव आदि कुनै पनि ।
होइनन् परमात्मा हो भन्दछ श्रुतिले पनि ॥३९॥

'कं ब्रह्म' आदिको चर्चा श्रुतिले पहिले गरी ।
'वामनित्वादि'को चर्चा पछि गर्छ त्यसैगरी ॥४०॥

श्रुतिमा व्यक्त आत्मत्व अमृतत्वादि धर्म ती ।
छायात्मा आदिमा हुन्नन् आत्माकै धर्म छन् त्यति ॥४१॥

आँखामा देखिने सौम्य ! जो त्यो पुरुष मुख्य हो ।
त्यै हो उपास्य जीवादि होइनन् ब्रह्म मात्र हो ॥४२॥

---

१५. ए एषोऽक्षिणि पुरुषो दृश्यते । – छान्दोग्योपनिषद् ४।१५।१

१६. य एषोऽक्षिणि पुरुषो दृश्यत आत्मेति होवाचैतदमृतमभयमेतद् ब्रह्मेति ।
– छान्दोग्योपनिषद् ४।१५।१

यसमा [17]सूत्र छन् पाँच ती सबै एक नै भई ।
छायापुरुष आँखाको आत्मा हो भन्दछन् गई ॥४३॥



## ५. अन्तर्याम्यधिकरण (ब्रह्मसूत्र १।२।५।१८–२०)

[18]'अन्तर्यामी' भनी आयो श्रुतिमा शब्द यो जुन ।
प्रधान जीव हो यद्वा परमेश्वर हो कुन ? ॥४४॥

केही वादीहरू भन्छन् अन्तर्यामी प्रधान हो ।
परमेश्वर छोडेर अन्तर्यामी कि ! जीव हो ? ॥४५॥

गुरु –
श्रुतिमा स्पष्ट नै आयो [19]अन्तर्यामी भनीकन ।
पृथिवी आदिका भित्र बसी गर्छ नियन्त्रण ॥४६॥

प्रधान जड हो त्यल्ले गर्न सक्तैन शासन ।
द्रष्टा अदृष्टका साथै श्रोता अश्रुत होइन ॥४७॥

प्रधान हुन सक्तैन अन्तर्यामी जडात्मक ।
जीव नियम्य हो बन्न सक्तैन त्यो नियामक ॥४८॥

जीव दुर्बल हो अज्ञ अति सीमित मायिक ।
कसरी हुन नै सक्छ ? अन्तर्यामी नियामक ॥४९॥

---

१७. अन्तर उपपत्तेः । – ब्रह्मसूत्र १।२।४।१३–१७

१८. य इमञ्च लोकं परञ्च लोकं सर्वाणि च भूतानि योऽन्तरो यमयति, यः पृथिव्यां तिष्ठन् पृथिव्या अन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयत्येष त आत्मान्तर्याम्यमृतः । – बृहदारण्यकोपनिषद् ७।१,२

१९. यः पृथिवीमन्तरो यमयत्येष त आत्मान्तर्याम्यमृतः । – बृहदारण्यकोपनिषद् ३।७।२

अन्तर्यामी त सर्वात्मा सर्वव्यापक हो अनि ।
सबैका भित्रमा बस्छ नियामक सधैँ बनी ।।५०।।

त्यसैकारण सर्वज्ञ अन्तर्यामी सदैव नै ।
परमेश्वर हो, हैनन् प्रधान जीव ती कुनै ।।५१।।

तीनोटा यसमा [२०]सूत्र आएका छन् र तत्त्वतः ।
अन्तर्यामी त हो ब्रह्म भन्दछन् श्रुति शब्दतः ।।५२।।



## ६. अदृश्यत्वाधिकरण (ब्रह्मसूत्र १।२।६।२१–२३)

शिष्य –
भूतयोनि भनी आयो [२१]श्रुतिमा हे गुरो ! जब ।
प्रधान हो कि ? हो जीव ? परमेश्वर हो तब ? ।।५३।।

विकल्प तीनमा खास भूतयोनि प्रधान हो ।
भूतसंसृष्टिको हेतु उही नै एकमात्र हो ।।५४।।

अधर्म धर्मका द्वारा जीव नै भूतयोनि हो ।
परमेश्वर बन्दैन भूतयोनि अयोनि हो ।।५५।।

यसरी पूर्वपक्षीले भूतयोनि भनीकन ।
प्रधान अथवा जीव भन्दछन् योनि हो कुन ? ।।५६।।

---

२०. अन्तर्याम्यधिदैवादिषु तद्धर्मव्यपदेशात् । – ब्रह्मसूत्र १।२।५।१८-२०
२१. यत्तदद्रेश्यमग्राह्यं ... तदव्ययं यद् भूतयोनिं परिपश्यन्ति धीराः ।
– मुण्डकोपनिषद् १।१।६

स्पष्ट पारेर आज्ञा होस् कुन हो भूतकारण ?
जसबाट बनोस् मेरो यो सन्देहनिवारण ।।५७।।

गुरु –

[22]श्रुतिमा स्पष्ट नै आयो 'तदव्ययं' भनी जब ।
अव्यय ब्रह्ममात्रै हो अरू हुन् व्यय नै सब ।।५८।।

[23]'सर्वज्ञः सर्ववित्' ब्रह्म बन्दछ भूतकारण ।
प्रधान जड हो जीव अल्पज्ञ हुन्न कारण ।।५९।।

सारांशमा उपादान निमित्त आदि कारण ।
परमेश्वर नै हुन्छ बन्दैनन् अन्य कारण ।।६०।।

[24]श्रुतिले कण्ठतः भन्छ नाना [25]प्रमाण नै दिई ।
ब्रह्मै हो भूतको योनि होइनन् अन्य ती दुई ।।६१।।

यसमा तीन छन् [26]सूत्र भूतयोनि भनीकन ।
तात्पर्यरूपले गर्छन् ब्रह्मकै प्रतिपादन ।।६२।।



## ७. वैश्वानराधिकरण (ब्रह्मसूत्र १।२।७।२४–३२)

शिष्य –

यो [27]वैश्वानर आएको श्रुतिमा कुन वस्तु हो ?
परमेश्वर, भूताग्नि, जीव या जठराग्नि हो ? ।।६३।।

२२. तदव्ययं यद् भूतयोनिं परिपश्यन्ति धीराः । – मुण्डकोपनिषद् १।१।६
२३. यः सर्वज्ञः सर्ववित् । – मुण्डकोपनिषद् १।१।६
२४. अप्राणो ह्यमना शुभ्रो ह्यक्षरात्परतः परः । – मुण्डकोपनिषद् २।१।२
२५. अग्निर्मूर्धा ... ह्येष सर्वभूतान्तरात्मा । – मुण्डकोपनिषद् २।१।४
२६. अदृश्यत्वादिगुणको धर्मोक्तेः । – ब्रह्मसूत्र १।२।६।२१–२३
२७. आत्मानं वैश्वानरमुपास्ते । – छान्दोग्योपनिषद् ५।१८।२

यहाँ विकल्प चारै छन् यसलाई लिईकन ।
पूर्वपक्षीहरू भन्छन् जठराग्नि भनीकन ॥६४॥

अथवा रूढ देखिन्छ भूताग्निमा गईकन ।
अथवा जीव नै हो त्यो वैश्वानर भनीकन ॥६५॥

किन्तु ईश्वर पर्दैन भूताग्निमा गईकन ।
अथवा जीव नै हो त्यो वैश्वानर भनीकन ॥६६॥

यसरी गुरुजी ! आफैँ पूर्वपक्षीहरू पनि ।
वैश्वानर भनी यै हो सक्तैनन् तोक्न नै पनि ॥६७॥

के हो निश्चित हे ब्रह्मन् ! त्यो वैश्वानर हो कुन ?
श्रुतिमा के छ ? के भन्छ ? भन्नुहोस् सुन्न भो मन ॥६८॥

गुरु –
पूर्वपक्षीहरूबाट जति तर्क भए पनि ।
ती वैश्वानर मानिन्नन् तीनोटै जे भने पनि ॥६९॥

हो वैश्वानर नै ब्रह्म तर्क बेकार बन्दछ ।
हो वैश्वानरको मूर्धा द्युलोक [२८]श्रुति भन्दछ ॥७०॥

[२९]'किं ब्रह्म' प्रश्न यो गर्दै 'को न आत्मा' भनीकन ।
श्रुतिले ब्रह्म हो भन्छ उपक्रमादि लीकन ॥७१॥

त्यो वैश्वानर हो ब्रह्म जगत् रक्षक भक्षक ।
भूताग्नि पेटको अग्नि जीवको ब्रह्म रक्षक ॥७२॥

---

२८. तस्य ह वा एतस्याऽऽत्मनो वैश्वानरस्य मूर्धा सुतेजाः ।– छान्दोग्योपनिषद् ५।१८।२

२९. 'को न आत्मा किं ब्रह्म' इति, 'आत्मानमेवेमं वैश्वानरं सम्प्रत्यध्येषि तमेव नो ब्रूहि ।
– छान्दोग्योपनिषद् ५।११।१,६

छोडी तर्कहरू सारा वैश्वानर तिमी अब ।
[30]आत्मा हो परमात्मा हो ब्रह्मै हो जान यो सब ॥७३॥

[31]नौवटा यसमा सूत्र आएका छन् क्रमैसँग ।
हो वैश्वानर नै ब्रह्म भन्छन् प्रमाणका सँग ॥७४॥

ब्रह्मसूत्रको प्रथम अध्यायको द्वितीय पादको कारिका पूरा भयो ।



---

३०. यस्याग्निरास्यं द्यौमूर्धा खं नाभिश्चरणौ क्षितिः ।
सूर्यश्चक्षुर्दिशः श्रोत्रं तस्मै लोकात्मने नमः ॥– महाभारत शान्तिपर्व ४७।६८

३१. वैश्वानरः साधारणशब्दविशेषात् । – ब्रह्मसूत्र १।२।७।२४–३२

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

## प्रथम समन्वयाध्याय

## तृतीय पाद

(यस पादमा द्युभ्वादिदेखि सुषुप्त्युत्क्रान्तिसहित १३ अधिकरणहरू छन् यसमा प्रायः ज्ञेय ब्रह्मका विषयमा विचार गरिएको छ।)

### १. द्युभ्वाद्यधिकरण (ब्रह्मसूत्र १।३।१।१–७)

शिष्य –

द्युभू आदि लिई ब्रह्मन् ! जिज्ञासा मनमा भयो।
यिनको कुन ? आधार सूत्रात्मा वा प्रधान हो ? ॥१॥

अथवा जीव हो ? यद्वा ब्रह्म हो ? यिनमा कुन ?
आज्ञा होस् स्पष्ट आधार द्युभूको हुन्छ नै जुन ॥२॥

यस्तो सन्देहमा भन्छन् पूर्वपक्षी विकल्पमा।
सूत्रात्मा हुन्छ आधार जीव, प्रधान एकमा ॥३॥

अथवा ब्रह्म हो ? यस्मा ब्रह्मन् ! स्पष्ट गरीकन।
भन्नुहोस् मत वादीको प्रत्याख्यान गरीकन ॥४॥

गुरु –

द्यू भू आदि सबैको नै आधार ब्रह्ममात्र हो।
अरू हुन् सब आधेय अधिष्ठानात्म एक हो ॥५॥

सूत्रात्मा जीव यद्वा ती प्रधानादि कुनै पनि।
आधार हुन सक्तैनन् द्युभ्वादिका कुनै पनि ॥६॥

[1]श्रुतिले भन्छ स्पष्टै नै मुक्तात्माहरूको पनि ।
ज्ञातव्य अनि प्राप्तव्य आधार ब्रह्म हो अनि ॥७॥

सर्वज्ञत्वादिका साथै बृहत्व आदि धर्म ती ।
ब्रह्ममा मात्र ती मिल्छन् जीवादिमा कहाँ र ती ? ॥८॥

त्यसैकारण सर्वात्मा त्यो सर्वाधार ब्रह्म हो ।
यही नै [2]श्रुतिले भन्छ यही नै सोम्य ! जान्नु हो ॥९॥

यसमा [3]सूत्र सातोटा आएका छन् र ती सब ।
आधार ब्रह्म हो भन्छन् ब्रह्मै हो हेतु उद्भव ॥१०॥



## २. भूमाधिकरण (ब्रह्मसूत्र १।३।२।८–९)

शिष्य –

'यत्र नान्यत्' भनी आयो श्रुतिमा मन्त्र यो जब ।
भूमा उल्लेख भो त्यस्मा के हो ? त्यो भन्नुहोस् अब ॥११॥

त्यो भूमा परमात्मा हो ? अथवा प्राण हो अनि ?
पूर्वपक्षीहरू भन्छन् भूमा नै प्राण हो भनी ॥१२॥

भन्नुहोस् गुरुजी ! भूमा के हो ? स्पष्ट गरीकन ।
प्राण या परमात्मा हो ? जिज्ञासा गरियो जुन ॥१३॥

---

१. यस्मिन् द्यौः पृथिवी चान्तरिक्षमोतं मनः सह प्राणैश्च सर्वैः ।
तमेवैकं जानथ आत्मानमन्यावाचो विमुञ्चथामृतस्यैष सेतुः ॥
– मुण्डकोपनिषद् २।२।५

२. एको देवः सर्वभूतेषु गूढः सर्वव्यापी सर्वभूतान्तरात्मा ।
कर्माध्यक्षः सर्वभूताधिवासः साक्षी चेता केवलो निर्गुणश्च ॥
– श्वेताश्वतरोपनिषद् ६।११

३. द्युभ्वाद्यायतनं स्वशब्दात् । – ब्रह्मसूत्र १।३।१।१–७

गुरु –

प्राणोपदेशका पश्चात् भूमोपदेश जो भयो ।
परमेश्वर हो भूमा प्राण होइन जो गयो ॥१४॥

श्रुतिले [४]‘एष’ का पश्चात् ‘तु’ शब्दबाट तत्त्वतः ।
व्यावृत्ति प्राणको गर्दै आत्मा हो भन्छ शब्दतः ॥१५॥

प्रसङ्ग शुरु भो यस्को [५]‘सोऽहं ... शोकस्य’ नै भनी ।
‘सत्येनाति’ हरू मन्त्र आएका छन् अरू पनि ॥१६॥

त्यसैकारणले वत्स ! तात्पर्यरूपले जुन ।
परमेश्वर हो भूमा परब्रह्म सनातन ॥१७॥

[६]भूमाले अन्य देख्तैन सुन्दैन आदि हुन् गुण ।
अल्पमा ती हुँदै हुन्नन् भूमा हो ब्रह्म निर्गुण ॥१८॥

सबैतर्फ छ [७]भूमा नै अद्वैतरूपमा जब ।
कल्लाई कसले देख्ने हो भूमामात्र नै सब ॥१९

भूमा हो [८]सुखको रूप हुँदैन सुख अल्पमा ।
[९]आनन्द ब्रह्म हो भूमा [१०]बहुको अर्थ शब्दमा ॥२०॥

---

४. एष तु वा अतिवदति यः सत्येनातिवदति । – छान्दोग्योपनिषद् ७।१६।३
५. सोऽहं भगवः शोचामि तं मा भगवान् शोकस्य पारं तारयतु ।
– छान्दोग्योपनिषद् ७।१।३
६. भूमा त्वेव विजिज्ञासितव्य ... यत्र नान्यत्पश्यति नान्यच्छृणोति नान्यद्विजानाति स भूमा । – छान्दोग्योपनिषद् ७।२३।१
७. यत्र त्वस्य सर्वमात्मैवाऽभूत्तत्केन कं पश्येत् । – बृहदारण्यकोपनिषद् ४।५।१५
८. यो वै भूमा तत्सुखं नाल्पे सुखमस्ति भूमैव सुखम् । – छान्दोग्योपनिषद्
९. एषोऽस्य परम आनन्द एतस्यैवानन्दस्यान्यानि भूतानि मात्रामुपजीवन्ति ।
– बृहदारण्यकोपनिषद् ४।३।३२
१०. बहोर्लोपो भू च बहोः । – पाणिनि ६।४।१५८

यसमा दुइटा [११]सूत्र आएका छन् र वस्तुतः ।
दुवैले भन्दछन् भूमा आनन्द ब्रह्म तत्त्वतः ॥२१॥



## ३. अक्षराधिकरण (ब्रह्मसूत्र १।३।३।१०–१२)

शिष्य –

जो छ अक्षर यो शब्द [१२]श्रुतिमा स्पष्ट शंसन ।
ब्रह्मवाचक यो हो ? वा ॐ को वाचक हो कुन ? ॥२२॥

पूर्वपक्षीहरू भन्छन् ॐ हो वाचक अक्षर ।
ब्रह्मवाचक सो हैन भन्छन् वादीहरू तर ॥२३॥

हो 'अक्षर [१३]समाम्नाय' प्रमाण पूर्वपक्षको ।
भन्छन् प्रसिद्धि वर्णैमा छ त्यो अक्षर शब्दको ॥२४॥

त्यो हो 'ओङ्कार[१४] एवेदं सर्वं' नै श्रुति सुन्दर ।
हो सर्वात्मकका साथै वर्णवाचक अक्षर ॥२५॥

त्यसैकारणले वादी भन्दछन् वर्ण अक्षर ।
भन्नुहोस् गुरुजी ! के हो ? ओम् वा हो ब्रह्म अक्षर ? ॥२६॥

गुरु –

अक्षर ब्रह्म हो भन्ने देखिन्छ [१५]श्रुतिको मत ।
यसै अक्षरमा ओत प्रोत छन् भूत वस्तुतः ॥२७॥

---

११. भूमा सम्प्रसादादध्युपदेशात् । – ब्रह्मसूत्र १।३।२।१०–१२

१२. एतद्वै तदक्षरं गार्गि ब्राह्मणा अभिवदन्त्यस्थूलमनण्वह्रस्वम् ।
– बृहदारण्यकोपनिषद् ३।८।८

१३. येनाक्षरसमाम्नायमधिगम्य महेश्वरात् ।

१४. ॐकार एवेदं सर्वम् । – छान्दोग्योपनिषद् २।२३।३

१५. एतस्य वा अक्षरस्य प्रशासने गार्गि सूर्याचन्द्रमसौ विधृतौ तिष्ठतः ।
– बृहदारण्यकोपनिषद् ३।८।९

यो हो श्रुति पराविद्या[16] यल्ले अक्षर ब्रह्मको ।
उपदेश सधैँ गर्छ मार्ग खोल्दछ मुक्तिको ॥२८॥

यसमा सूत्र[17] छन् तीन सबै अक्षर ब्रह्मको ।
प्रतिपादन नै गर्छन् दिई प्रमाण शास्त्रको ॥२९॥



## ४. ईक्षतिकर्मव्यपदेशाधिकरण (ब्रह्मसूत्र १।३।४।१३)

शिष्य –

ध्येयका रूपमा आयो ॐकार [18]श्रुतिमा जुन ।
अपरब्रह्म हो त्यो वा ? हो परब्रह्म वा कुन ? ॥३०॥

पूर्वपक्षीहरू भन्छन् [19]अपरब्रह्म ध्येय हो ।
भन्नुहोस् अपरब्रह्म वा परब्रह्म ध्येय हो ? ॥३१॥

गुरु –

जे भनून् पूर्वपक्षीले [20]श्रुतिले भन्छ कण्ठतः ।
हो परब्रह्म नै ध्येय अर्को होइन तत्त्वतः ॥३२॥

हो साक्षात्कारको योग्य परब्रह्म सनातन ।
अपरब्रह्म हो त्यो ता हिरण्यगर्भ हो जुन ॥३३॥

उत्कृष्ट हो परब्रह्म अपरब्रह्मका पर ।
प्राप्तव्य हो परब्रह्म मोक्षरूप परात्पर ॥३४॥

---

१६. परा यया तदक्षरमधिगम्यते । – मुण्डकोपनिषद् १।१।५

१७. अक्षरमम्बरान्तधृते । – ब्रह्मसूत्र १।३।३।१०–१२

१८. यः पुनरेतं त्रिमात्रेणोमित्येतेनैवाक्षरेण परं पुरुषमभिध्यायीत । – प्रश्नोपनिषद् ५।५

१९. स तेजसि सूर्ये सम्पन्नः ... स सामभिरुन्नीयते ब्रह्मलोकम् ।
– प्रश्नोपनिषद् ५।५

२०. स एतस्माज्जीवघनात्परात्परं पुरिशयं पुरुषमीक्षते । – प्रश्नोपनिषद् ५।५

उपासना गरी पुग्छ [२१]ब्रह्मलोक उपासक ।
ब्रह्मा मुक्त हुँदा साथै मुक्त हुन्छ उपासक ॥३५॥

[२२]श्रुतिस्मृति यही भन्छन् मुमुक्षु अन्तमा गई ।
अर्चिले मुक्तिमा पुग्छन् परब्रह्म स्वयं भई ॥३६॥

अन्तमा ब्रह्मज्ञानी त्यो ब्रह्मबोध गरीकन ।
पैले [२३]ब्रह्म थियो फेरि जान्छ मुक्त भईकन ॥३७॥

यौटा छ यसमा [२४]सूत्र यसले भन्छ तत्त्वतः ।
ॐकार ब्रह्मकै गर्छ प्रतिपादन वस्तुतः ॥३८॥



## ५. दहराधिकरण (ब्रह्मसूत्र १।३।५।१४–२१)

शिष्य –

श्रुतिमा[२५] दहराकाश आएको छ गुरो ! जुन ।
त्यो भूताकाश हो यद्वा जीव वा ब्रह्म हो कुन ? ॥३९॥

यो ब्रह्मपुरमा सानो हृत्पद्मभित्रै छ जो घर ।
दहराकाश हो त्यो नै जिज्ञासा गर्नु सुन्दर ॥४०॥

त्यो ब्रह्मप्राप्तिको स्थान ब्रह्मैपुर भनीकन ।
श्रुतिले भन्छ हे ब्रह्मन् ! आज्ञा होस् सुन्न भो मन ॥४१॥

---

२१. ब्रह्मणा सह ते सर्वे सम्प्राप्ते प्रतिसञ्चरे ।
परस्यान्ते कृतात्मानः प्रविशन्ति परं पदम् ॥ –कूर्मपुराण १।१२।२६९

२२. एतेन प्रतिपद्यमान इमं मानवमावर्तं नावर्तन्ते । – छान्दोग्योपनिषद् ८।१५।१

२३. न तस्य प्राणा उत्क्रामन्ति ब्रह्मैव सन् ब्रह्माप्येति । – बृहदारण्यकोपनिषद् ४।४।६

२४. ईक्षतिकर्म व्यपदेशात्सः । – ब्रह्मसूत्र १।३।४।१३

२५. अथ यदिदस्मिन् ब्रह्मपुरे दहरं पुण्डरीकं वेश्म दहरोऽस्मिन्नन्तराकाशस्तस्मिन् यदन्तस्तदन्वेष्टव्यं तद्वाव विजिज्ञासितव्यम् । – छान्दोग्योपनिषद् ८।१।१

पूर्वपक्षीहरू भन्छन् त्यो भूताकाश हो भनी ।
त्यो भूताकाशमै रूढ देखिन्छ शास्त्रमा पनि ॥४२॥

अथवा जीव हो त्यो वा परिच्छिन्न र अल्प नै ।
त्यो ब्रह्म हुन सक्तैन वादी ती भन्दछन् कुनै ॥४३॥

गुरु –

दहराकाशले वाच्य ब्रह्मै हो जीव होइन ।
भूताकाश हुँदै हैन श्रुतिको मत होइन ॥४४॥

बाह्य [२६]आकाश जत्रो छ त्यत्रै छ भित्र नै पनि ।
द्यु पृथ्वी आदि छन् त्यस्मै भन्दछ [२७]श्रुतिले पनि ॥४५॥

त्योभन्दा[२८] पनि ठूलो छ हेतु [२९]आकाशको पनि ।
[३०]पापले हीन आत्मा हो धर्ता र सेतु हो अनि ॥४६॥

पूर्वोक्त श्रुतिले भन्छन् दहरै ब्रह्म हो भनी ।
भूताकाश र जीवात्मा होइनन् दहरै तिनी ॥४७॥

यसमा आठ छन् [३१]सूत्र दहरब्रह्म भन्दछन् ।
जड हो भूत आकाश जीव हो अल्प मान्दछन् ॥४८॥



२६. यावान्वा अयमाकाशस्तावानेषोऽन्तर्हृदय आकाशः । – छान्दोग्योपनिषद् ८।१।३
२७. उभे अस्मिन् द्यावापृथिवी अन्तरेव समाहिते । – छान्दोग्योपनिषद् ८।१।३
२८. ज्यायानाकाशात् । – शतपथब्राह्मण १०।६।३।२
२९. तस्माद्वा एतस्मादात्मन आकाश सम्भूतः । – तैत्तिरीयोपनिषद् २।१।१
३०. एष आत्मायहपतपाप्मा विजरो विमृत्युः । – छान्दोग्योपनिषद् ८।१।५
३१. दहर उत्तरेभ्यः । – ब्रह्मसूत्र १।३।५।१४–२१)

## ६. अनुकृत्यधिकरण (ब्रह्मसूत्र १।३।६।२२–२३)

शिष्य –

जगद्भासकबारेमा [३२]श्रुतिले स्पष्ट भन्दछ ।
जसको भास पाएर जगद् भासित बन्दछ ॥४९॥

उसकै भास पाएर चम्किन्छन् चन्द्र तारक ।
त्यो हो ब्रह्म ? कि यद्वा हो ? सूर्याभिभूत भासक ॥५०॥

पूर्वपक्षीहरू भन्छन् सूर्यभन्दा ठुलो कुनै ।
हुनुपर्दछ तेजस्वी पदार्थ चम्किलो कुनै ॥५१॥

भन्नुहोस् गुरुजी ! के हो ? ब्रह्म वा अन्य भासक ।
जो त्यो बन्न सकोस् सूर्य-चन्द्रतारादिभासक ॥५२॥

गुरु –

पूर्वपक्षीहरू गर्छन् कल्पना अन्य भासक ।
ब्रह्मबाहेक को हुन्छ अर्को सूर्यादिभासक ? ॥५३॥

उसकै भास पाएर हुन्छन् सूर्यादि भासित ।
भनेर श्रुतिका द्वारा स्पष्ट नै यो छ घोषित ॥५४॥

अतः चेतन सद्ब्रह्म सबैको हो प्रकाशक ।
ती उसैबाट चम्कन्छन् चन्द्रमा सूर्य तारक ॥५५॥

---

३२. न तत्र सूर्यो भाति न चन्द्रतारकम् । – मुण्डकोपनिषद् २।२।१०

[33]श्रुति स्मृति[34] सबैले नै ब्रह्मै भासक भन्दछन् ।
उसकै भास पाएर सारा भासित बन्दछन् ॥५६॥

यसमा दुइटा [35]सूत्र आएका छन् र ती दुवै ।
सर्वभासक हो ब्रह्म भन्छन् प्रमाण दी सबै ॥५७॥



## ७. प्रमिताधिकरण (ब्रह्मसूत्र १।३।७।२४–२५)

शिष्य –

[36]अङ्गुष्ठमात्रको वस्तु जो मध्ये देह बस्तछ ।
भनेर श्रुतिले ब्रह्मन् ! स्पष्ट उद्घोष गर्दछ ॥५८॥

शरीरबीचमा बस्ने त्यो ईश्वर कि ? जीव हो ?
पूर्वपक्षीहरू भन्छन् हैन ईश्वर जीव हो ॥५९॥

[37]शास्त्रले स्पष्ट नै भन्छ जीव अङ्गुष्ठतुल्य हो ।
सूक्ष्मदेहाभिमानी भै घुम्ने नरक स्वर्ग हो ॥६०॥

गुरु –

पूर्वपक्षीहरूबाट त्यस्तो पुरुष जीव हो –
भन्नु सर्वांश मिथ्या हो त्यसैले यो अयुक्त हो ॥६१॥

---

३३. न तत्र सूर्यो भाति न चन्द्रतारकं नेमा विद्युतो भान्ति कुतोऽयमग्निः ।
तमेव भान्तमनुभाति सर्वं तस्य भासा सर्वमिदं विभाति ॥ – मुण्डकोपनिषद् २।२।१०

३४. न तद्भासयते सूर्यो न शशाङ्को न पावकः ।
यदादित्य गतं तेजो जगद्भासयतेऽखिलम् ॥
यच्चन्द्रमसि यच्चाग्नौ तत्तेजो विद्धि मामकम् ॥– श्रीमद्भागवतगीता १५।१६,१२

३५. अनुकृतेस्तस्य च । – ब्रह्मसूत्र १।३।६।२२–२३

३६. अङ्गुष्ठमात्रः पुरुषो मध्य आत्मनि तिष्ठति । – कठोपनिषद् २।४।१३

३७. अथ सत्यवतः कायात् पाशबद्धं वशं गतम् ।
अङ्गुष्ठमात्रं पुरुषं निश्चकर्ष यमो बलात् ॥ – महाभारत ३।२९७।१७

सामान्यरूपमा जीव भने तापनि तत्त्वतः ।
परमेश्वर नै हो त्यो [३८]श्रुति भन्दछ कण्ठतः ॥६२॥

अङ्गुष्ठमात्रका पश्चात् ईशानादि भनीकन ।
सर्वशासक हो ब्रह्म भूतभव्यादिको जुन ॥६३॥

यसरी श्रुतिले गर्छ जो व्यावर्तन जीवको ।
ब्रह्मकै स्थापना गर्छ यही हो मत वेदको ॥६४॥

जीव हो ब्रह्मकै स्वल्प आभास प्रतिबिम्ब हो ।
हो सर्वाधार सद्‌ब्रह्म नियामक र भास हो ॥६५॥

त्यसैकारण अङ्गुष्ठतुल्य जो भित्र बस्तछ ।
त्यो जीव हैन हो ब्रह्म श्रुतिले नित्य भन्दछ ॥६६॥

सूत्र छन् [३९]दुइटा यस्मा भन्दछन् स्पष्ट सर्वदा ।
अङ्गुष्ठमात्र जो भित्र बस्छ ईश्वर[४०] हो सदा ॥६७॥



## ८. देवताधिकरण (ब्रह्मसूत्र १।३।८।२६–३३)

शिष्य –

देवता ऋषिले जल्ले जाने ब्रह्म सनातन ।
[४१]श्रुतिले भन्छ कैवल्य गए मुक्त भईकन ॥६८॥

---

३८. अङ्गुष्ठमात्रः पुरुषो ज्योतिरिवाधूमकः ।
ईशानो भूतभव्यस्य स एवाद्य स उ श्वः ॥ एतद्वै तत् ॥– कठोपनिषद् २।१।१३

३९. शब्दादेव प्रमितः । – ब्रह्मसूत्र १।३।८।२४–२५

४०. ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति ।
भ्रामयन् सर्वभूतानि यन्त्रारूढानि मायया ॥ – श्रीमद्भगवद्गीता

४१. तद्यो यो देवानां प्रत्यबुद्ध्यत स एव तदभवत् तथर्षीणाम् ।– बृहदारण्यकोपनिषद्

दुवैको ब्रह्मविद्यामा अधिकार छ ? छैन कि ?
भन्ने सन्देहमा ब्रह्मन् ! छ वा छैन छ के छ कि ? ॥६९॥

अर्थी, सामर्थ्य, विद्वत्ता इत्यादिहीन देवमा ।
ब्रह्मविद्याधिकारित्व विधान छैन [४२]शास्त्रमा ॥७०॥

यस्तो सन्देहमा भन्छन् पूर्वपक्षीहरू सब ।
शरीरहीन द्यौतामा संस्कारादि असम्भव ॥७१॥

संस्कारहीनले ब्रह्मविद्या जान्न असम्भव ।
त्यसैकारण द्यौतामा ब्रह्मविद्या असम्भव ॥७२॥

गुरु –
जे भनून् पूर्वपक्षीले द्यौतामा अधिकार छ ।
[४३]अर्थवाद र मन्त्रादिद्वारा शरीर बन्दछ ॥७३॥

व्रतबन्धादि संस्कार नभए पनि देवमा ।
[४४]वेद स्फुरण भै हाल्छ भन्ने देखिन्छ वेदमा ॥७४॥

---

४२. अर्थी समर्थो विद्वाञ्शास्त्रेणापर्युदस्तोऽधिक्रियते ।
४३. विरोधे गुणवादः स्यादनुवादोऽवधारिते ।
भूतार्थवादस्तद्धानादर्थवादस्त्रिधा मतः ॥
(क) प्रजापतिरात्मनो वपामुदक्खिदत् । – गुणवादः
(ख) अग्निर्हिमस्य भेषजम् । – अनुवादः
(ग) इन्द्रो वृत्राय वज्रमुदयच्छत् । – अर्थवादः
(घ) आदित्यो यूपः । यजमानः प्रस्तरः । वायुर्वै क्षेपिष्ठा देवता ।
– शुक्लयजुर्वेदः, अद्वैतसिद्धिः
४४.क. यो ब्रह्माणं विदधाति पूर्वं यो वै वेदांश्च प्रहिणोति तस्मै ।
तं ह देवमात्मबुद्धिप्रकाशं मुमुक्षुर्वै शरणमहं प्रपद्ये ॥ – श्वेताश्वतरोपनिषद् ६।१८
ख. सूर्याचन्द्रमसौ धाता यथापूर्वमकल्पयत् ।
दिवञ्च पृथिविञ्चैव चान्तरिक्षमथो स्वः ॥ – ऋग्वेदसंहिता १०।१९०३।३
ग. युगान्तेऽन्तर्हितान्वेदान् सेतिहासान्महर्षयः ।
लेभिरे तपसा पूर्वमनुज्ञाताः स्वयम्भुवा ॥ – वेदव्यासः

[४५]इन्द्रादि देवले पैले ब्रह्मासँग गईकन ।
ब्रह्मोपदेश पाएको छान्दोग्यमा छ वर्णन ॥७५॥

[४६]भृगु [४७]अश्विनिले त्यस्तै दध्यङ्सँग गईकन ।
ब्रह्मोपदेश पाएको पाइन्छ श्रुतिवर्णन ॥७६॥

त्यसैकारणले ब्रह्मविद्यामा देवको हक ।
भएको स्पष्ट देखिन्छ विनाभ्रम विनाधक ॥७७॥

यसमा [४८]सूत्र छन् आठ सबैले मुक्तकण्ठले ।
अधिकार छ द्यौताको भन्दछन् स्पष्टरूपले ॥७८॥



## ९. अपशूद्राधिकरण (ब्रह्मसूत्र १।३।९।३४–३८)

शिष्य –
जसरी वेदविद्यामा द्यौताको अधिकार छ ।
शूद्रको वेदविद्यामा त्यस्तै नै अधिकार छ ? ॥७९॥

तीनोटा वर्णलाई नै अधिकार भएसरी ।
शूद्रको हक देखिन्छ ? विद्यामा [४९]शास्त्रले गरी ॥८०॥

---

४५. एकशतं ह वै वर्षाणि मघवान् प्रजापतौ ब्रह्मचर्यमुवास ।
– छान्दोग्योपनिषद् ८।११।३

४६. भृगुर्वै वारुणि वरुणं पितरमुपससार अधीहि भगवो ब्रह्म ।
– तैत्तिरीयोपनिषद् ३।१

४७. इदं वै तन्मधु दध्यङ्ङाथर्वणोऽश्विभ्यामुवाच । तदेतदृषिः पश्यन्नवोचत्, रूपं रूपं प्रतिरूपो बभूव तदस्य रूपं प्रतिचक्षणाय । – बृहदारण्यकोपनिषद् २।५।१९

४८. तदुपर्यपि बादरायणः सम्भवात् । – ब्रह्मसूत्र १।३।८।२६–३३

४९. आजहारेमाः शूद्र अनेनैवमुखेनाऽऽलापयिष्यथः । – छान्दोग्योपनिषद्

विद्यामा पूर्वपक्षी ती शूद्रको अधिकार छ ।
भन्दछन् गुरुजी ! भन्नोस् शूद्रको अधिकार छ ? ॥८१॥

गुरु –
देवतातुल्य विद्यामा बन्दैन शूद्रको हक ।
नभए पनि संस्कार द्यौताले पाउँछन् हक ॥८१॥

द्यौतामा पूर्व संस्कार राम्रो सुकृत कर्मले ।
स्वतः नै वेदको ज्ञान हुन्छ स्फुरण धर्मले ॥८२॥

श्रुतिमा शूद्र हुन् राजा जानश्रुति भनी जुन ।
मिथ्या हो शोक गर्नाले भनेथे रैक्वले जुन ॥८३॥

रूढ होइन सो शूद्र शब्द हो शुद्ध यौगिक ।
त्यसैले वेदविद्यामा देखिन्न शूद्रको हक ॥८४॥

संस्कारहीन हो शूद्र त्यसैकारणले पनि ।
संस्कार आदिले हीन हो भन्छन् [५०]मनुले पनि ॥८५॥

शूद्रको हक पुग्दैन [५१]यज्ञमा श्रुति भन्दछ ।
वेदाध्ययनका लागि कसरी हक बन्दछ ? ॥८६॥

यसमा [५२]सूत्र छन् पाँच तात्पर्यरूपमा तब ।
वेदाध्ययनमा शूद्र अयोग्य भन्दछन् सब ॥८७॥



५०. न शूद्रे पातकं किञ्चिन्न च संस्कारमर्हति । – मनुस्मृतिः १०।१२।६
५१. तस्माच्छूद्रो यज्ञेनऽनवा । – तैत्तिरीयसंहिता ७।१।१।६
५२. शुगस्य तदनादरश्रवणात्तदाद्रवणात् सूच्यते । – ब्रह्मसूत्र १।३।९।३४–३८

## १०. कम्पनाधिकरण (ब्रह्मसूत्र १।३।१०।३९)

शिष्य –

[५३]श्रुतिमा जुन हे ब्रह्मन् ! आएको जो छ कम्पन ।
त्रस्त गराउने सारा बनेर अति भीषण ॥८८॥

त्यो हो वज्र कि ! वायु हो ? यद्वा ईश्वर हो कुन ?
सन्देह हुन गो तस्मात् सुन्न पाऊँ म हो कुन ? ॥८९॥

पूर्वपक्षीहरू भन्छन् 'महद्भयं' छ यो जुन ।
यो भयङ्कर हो वज्र भयको मुख्य कारण ॥९०॥

अथवा भन्दछन् वायु 'प्राण एजति' लीकन ।
विश्वचालक हो वायु अधिदैवादि भैकन ॥९१॥

त्यसैकारण हे ब्रह्मन् ! गरी श्रुतिविवेचन ।
कमाउने सबैलाई भन्नुहोस् वस्तु हो कुन ? ॥९२॥

गुरु –

श्रुतिमा स्पष्ट आएका तीनोटा शब्द छन् जुन ।
तिनै आधारमा छोटो म गर्दछु विवेचन ॥९०॥

[५४]महद्भयं भनी आयो उसैका भयले गरी ।
सूर्यादि देवता गर्छन् आफ्नू काम सधैँभरि ॥९३॥

---

५३. यदिदं किञ्च जगत्सर्वं प्राण एजति निःसृतम् ।
महद्भयं वज्रमुद्यतं य एतद्विदुरमृतास्ते भवन्ति ॥ – कठोपनिषद् २।६२

५४. क. भयादस्याग्निस्तपति भयात्तपति सूर्यः ।
भयादिन्द्रश्च वायुश्च मृत्युर्धावति पञ्चमः ॥ – कठोपनिषद् २।६।३

ख. भीषास्माद्वातः पवते भीषोदेति सूर्यः ।
भीषास्मादग्निश्चेन्द्रश्च मृत्युर्धावति पञ्चमः ॥ – तैत्तियरीयोपनिषद् ८।१

‘प्राण एजति’ जो आयो वायुका रूपमा पनि ।
देहादिविश्वब्रह्माण्ड चलाउँछ उही अनि ॥९४॥

वायु वज्र कुनै हैनन् त्यो हो ब्रह्म सनातन ।
मत त्यो पूर्वपक्षीको सबै हुन्छ विखण्डन ॥९५॥

जसको ज्ञान गर्नाले मान्छे [५५]अमृत बन्दछ ।
त्यो हो सच्चित्परं ब्रह्म श्रुतिले स्पष्ट भन्दछ ॥९६॥

यसमा [५६]सूत्र यौटै छ यसले भन्छ नै तब ।
परमेश्वर हो ब्रह्म वज्रवायुहरू सब ॥९७॥



## ११. ज्योतिरधिकरण (ब्रह्मसूत्र १।३।११।४०)

शिष्य –

‘परं ज्योतिः’ भनी आयो [५७]श्रुतिमा शब्द नै जुन ।
सूर्यमण्डल हो यद्वा ब्रह्मवाचक वा कुन ? ॥९८॥

यस सन्देहमा वादी श्रुतिकै आड लीकन ।
ब्रह्म होइन हो सूर्य भन्छन् तर्क गरीकन ॥९९॥

साक्षात्कार हुँदा जीव निर्गमै नगरी स्वतः ।
परब्रह्म त्यही बन्छ यही हो शास्त्रसम्मत ॥१००॥

---

५५. तदेव शुक्लं तद्ब्रह्म तदेवामृतमुच्यते ।
तस्मिँल्लोकाः श्रिताः सर्वे तदु नात्येति कश्चन ॥ – कठोपनिषद् २।६।१
तमेव विदित्वाऽतिमृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय ।
– शुक्लयजुर्वेदः ३१।१८, श्वेताश्वतरोपनिषद् ६।१५।३

५६. कम्पनात् । – ब्रह्मसूत्र १।३।१०।३९

५७. एष सम्प्रसादोऽस्माच्छरीरात्समुत्थाय परं ज्योतिरुपसम्पद्य स्वेन रूपेणाभिनिष्पद्यते ।
– छान्दोग्योपनिषद् ८।१२।३

जानु आउनु पर्दैन उत्क्रान्ति छ निषेधित ।
त्यसैकारण हो ज्योतिः सूर्यमण्डल वस्तुतः ॥१०१॥

पूर्वोक्त पूर्व पक्षीको यही हो मत सारतः ।
सूर्यमण्डल वा ब्रह्म ? के हो ? सुनौँ म तत्त्वतः ॥१०२॥

गुरु –
त्यो ज्योति हो परब्रह्म के हुन्थ्यो ? सूर्यमण्डल ।
ज्योतिको पनि हो ज्योति त्यो परं ज्योति निर्मल ॥१०३॥

शरीरबाट निस्केर [५८]ज्योतिमा प्राप्त बन्दछ ।
भन्ने यो श्रुतिको वाक्य ब्रह्ममा मात्र मिल्दछ ॥१०४॥

यो समुत्थानको अर्थ कतै निर्गम होइन ।
गएर ज्योतिमा मिल्नु त्यो अर्थ पनि होइन ॥१०५॥

यसको अर्थ हो खास त्वम्पदार्थविवेचन ।
स्थूलसूक्ष्मसँगै गर्नु विवेक देहकारण ॥१०६॥

उपसम्पत्तिको अर्थ प्राप्ति होइन शास्त्रतः ।
शुद्ध शोधित त्वंवस्तु ब्रह्म नै हुनु तत्त्वतः ॥१०७॥

यसमा [५९]सूत्र यौटै छ अन्ततः ज्योति शब्दले ।
ब्रह्मकै गर्छ निर्देश ज्योतिर्दर्शन शब्दले ॥१०८॥



५८. शरीरात् समुत्थाय परं ज्योतिरुपसम्पद्य । – छान्दोग्योपनिषद् ८।१२।३
५९. ज्योतिर्दर्शनात् । – ब्रह्मसूत्र १।३।११।४०

## १२. अर्थान्तरत्वव्यपदेशाधिकरण (ब्रह्मसूत्र १।३।१२।४१)

शिष्य –

आकाश शब्द जो आयो [६०]श्रुतिमा यसरी पुनः ।
भूताकाश कि ! हो ब्रह्म ? सन्देह हुन गो जुन ॥१०९॥

अवकाश सबैलाई [६१]निर्वाहक बनीकन ।
दिन्छ जो श्रुतिले भन्छ त्यो भूताकाश हो जुन ॥११०॥

त्यो ब्रह्म हुन सक्तैन शब्द र युक्तिले पनि ।
भन्दछन् पूर्वपक्षीले अत्यन्त दृढ भैँ बनी ॥१११॥

यसरी पूर्वपक्षीले भूताकाश भने जुन ?
भन्नुहोस् गुरुजी ! भूताकाश त्यो ब्रह्म हो कुन ? ॥११२॥

गुरु –

निर्वाहकत्वको अर्थ अवकाश दिने भनी ।
भन्ने त्यो वादीको अर्थ मिल्दैन कहिल्यै पनि ॥११३॥

निर्वाहकत्वको अर्थ नियन्ता स्पष्ट बन्दछ ।
नियन्ता ब्रह्म हो सौम्य ! [६२]श्रुतिले स्पष्ट भन्दछ ॥११४॥

नियन्ता हुन सक्तैन भूताकाश अचेतन ।
[६३]'तद्ब्रह्म' श्रुतिले भन्छ उपान्तमा गईकन ॥११५॥

---

६०. आकाशो वै नाम नामरूपयोर्निर्वहिता ते यदन्तरा तद्ब्रह्म तदमृतं स आत्मा ।
– छान्दोग्योपनिषद् ८।१४।१

६१. नामरूपयोर्निर्वहिता । – छान्दोग्योपनिषद् ८।१४।१

६२. अनेन जीवेनाऽऽत्मनानुप्रविश्य नामरूपे व्याकरवाणि ।– छान्दोग्योपनिषद् ६।३।२

६३. तद्ब्रह्म तदमृतं स आत्मा । – छान्दोग्योपनिषद् ८।१४।१

ब्रह्मत्व अमृतत्वादि चितिका धर्म हुन् स्वतः ।
आकाश शब्द हो ब्रह्मै न भूताकाश तत्त्वतः ॥११६॥

नाम र रूपका कर्ता ब्रह्मबाहेक को हुने ?
कदापि हुन सक्तैन भूताकाश कहाँ हुने ? ॥११७॥

यसमा एउटै [६४]सूत्र आएको छ र तैपनि ।
आकाश ब्रह्म हो भन्छ श्रुति र तर्कले पनि ॥११८॥



## १३. सुषुप्त्युत्क्रान्त्यधिकरण (ब्रह्मसूत्र १।३।१३।४२–४३)

शिष्य –
ब्रह्मन् ! 'कतम आत्मेति' भनेर [६५]श्रुतिमा जुन ।
विज्ञानमय आको छ ब्रह्म वा जीव हो कुन ? ॥११९॥

[६६]श्रुतिले आदिका साथै मध्य र अन्तमा पनि ।
संसारी जीवकै गर्छ बयान स्पष्ट नै भनी ॥१२०॥

जाग्रत्मा कहिले पुग्छ स्वप्नमा कहिले अनि ।
सुषुप्तिमा घुमी पुग्छ सञ्चारी बहुतै बनी ॥१२१॥

यसरी लोकमा घुम्ने विज्ञानमय जीव हो ।
आदिमा छ उभौशब्द 'विज्ञानमय' अन्त हो ॥१२२॥

---

६४. आकाशोऽर्थान्तरत्वादिव्यपदेशात् । – ब्रह्मसूत्र १।३।१२।४१
६५. पुरुषः समानः सन्नुभौ लोकावनुसञ्चरति । – बृहदारण्यकोपनिषद् ४।३।७
६६. कतम आत्मेति योऽयं विज्ञानमयः प्राणेषु हृद्यन्तर्ज्योतिः पुरुषः ।
– बृहदारण्यकोपनिषद् ४।३।७

पूर्वपक्षीहरू दिन्छन् प्रमाण जीव हो भनी ।
जीव हो अथवा ब्रह्म ? भन्नोस् स्पष्ट गरेर नै ॥१२३॥

गुरु –

यसमा पूर्वपक्षीले जीव नै हो भने पनि ।
जीव होइन ब्रह्मै हो जति तर्क दिए पनि ॥१२४॥

'म' प्रत्यय भएकाले आदिमा जीवको कुरो ।
आयो र मध्यमा आयो सङ्गराहित्यको कुरो ॥१२५॥

अन्तमा जुन आयो त्यो जीवस्वरूप हो जुन ।
अनुवाद गरी साक्षात् ब्रह्मज्ञान गराउन ॥१२६॥

जाग्रदादि अवस्था ती तीनभन्दा निकै पर ।
साक्षी भै तीनको बस्छ परमात्मा परात्पर ॥१२७॥

सोफै प्रमाणका द्वारा जानिन्न ब्रह्म वस्तुतः ।
श्रुतितात्पर्यका द्वारा बुझ्नुपर्दछ तत्त्वतः ॥१२८॥

'त्वं' प्रत्यय लिई त्यो नै 'तत्' हो भनी चिनाउन ।
अवस्था तीनको आयो ब्रह्मज्ञान गराउन ॥१२९॥

यसमा जीवको गर्दै उठान अन्तमा तर ।
प्रतिपादन ब्रह्मैको श्रुति गर्छ निरन्तर ॥१३०॥

यसमा दुइटा [६७]सूत्र आएका छन् समग्रमा ।
प्रतिपादन ती गर्छन् ब्रह्मै भनेर अन्तमा ॥१३१॥

ब्रह्मसूत्रको पहिलो अध्यायको तेस्रो पादको कारिका पूरा भयो ।



६७. सुषुप्त्युत्क्रान्त्योर्भेदेन । – ब्रह्मसूत्र १।३।१३।४२–४३

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

# पहिलो समन्वयाध्याय

## चतुर्थ पाद

(यस पादमा अनुमानदेखि सर्वव्याख्यानसहित ८ अधिकरणहरू छन् र यसमा प्रधानको विषयमा सन्देह गरिएको अव्यक्त, अज आदि पदहरूका सम्बन्धमा विचार गरिएको छ)

### १. अनुमानाधिकरण (ब्रह्मसूत्र १।४।१।१–७)

शिष्य –

आयो विषय अव्यक्त [1]श्रुतिमा स्पष्ट नै जुन ।
प्रधान अथवा हो त्यो शरीर हो कि ! वा कुन ? ॥१॥

यस्तो सन्देहमा भन्छन् साङ्ख्यवादी प्रधान हो ।
अव्यक्त–शब्दको वाच्य अरू हैन प्रधान हो ॥२॥

महत् अव्यक्तका साथै आए पुरुष शब्द ती ।
प्रत्यभिज्ञा भएका हुन् श्रुतिबाट अवश्य ती ॥३॥

यो साङ्ख्यमत अव्यक्त प्रधानै हो भनीकन ।
शरीर हुन सक्तैन भन्दछन् श्रुति दीकन ॥४॥

आज्ञा होस् गुरुजी ! के हो ? अव्यक्तवाच्य हो जुन ।
शरीर अथवा त्यो हो ? प्रधान यिनमा कुन ? ॥५॥

शरीरै हो भने ब्रह्मन् ! स्थूल सूक्ष्म र कारण ।
मध्ये हो कुन ? सन्देह गर्नुहओस् निवारण ॥६॥

---

१. महतः परमव्यक्तमव्यक्तात्पुरुषः परः । – कठोपनिषद् १।३।११

गुरु –

अव्यक्त जुन हो शब्द शरीरप्रतिपादक ।
[2]प्रत्यभिज्ञा त्यसैको नै श्रुति गर्छ विनाधक ॥७॥

श्रुतिमा देह इत्यादि रथ आदि भनीकन ।
पूर्वोक्त श्रुतिका साथ सम्बन्ध गर्छ शंसन ॥८॥

साङ्ख्यले प्रत्यभिज्ञाको देखाईकन कारण ।
प्रधान भन्दछन् त्यस्को श्रुति गर्छ निवारण ॥९॥

साङ्ख्यको प्रत्यभिज्ञाका अपेक्षा श्रुतिवर्णित ।
प्रत्यभिज्ञा ठुलो हुन्छ यै हुन्छ शास्त्रसम्मत ॥१०॥

शरीर तीनमध्येमा जो कारणशरीर हो ।
अत्यन्त सूक्ष्म मानिन्छ भास्तैन जो अवेद्य हो ॥११॥

अव्यक्त शब्दले वाच्य त्यो कारणशरीर हो ।
प्रधान हुन सक्तैन यही नै श्रुतिसार हो ॥१२॥

'ईक्षतेः' सूत्रबाटै त्यो प्रधान हुन्छ खण्डित ।
त्यसैकारण अव्यक्त नै हो कारण शास्त्रतः ॥१३॥

अव्यक्त कहिल्यै हुन्न ज्ञेय श्रुत्यनुसारतः ।
ज्ञेय हो परमात्मा नै प्रधान हुन्न तत्त्वतः ॥१४॥

---

२. आत्मानं रथिनं विद्धि शरीरं रथमेव तु ।
बुद्धिं तु सारथिं विद्धि मनः प्रग्रहमेव च ।
इन्द्रियाणि हयानाहुर्विषयांस्तेषु गोचरान् ॥ – कठोपनिषद् १।३।३,४

यसमा [3]सूत्र सातोटा आएका छन् र सारतः ।
अनुमान प्रधानैको श्रुतिबाट छ बाधित ।।१५।।



## २. चमसाधिकरण (ब्रह्मसूत्र १।४।२।८–१०)

शिष्य –

गुरुजी ! श्रुतिमा आयो [4]'अजामेकाम्' भनीकन ।
साङ्ख्यका मतमा आयो अजा प्रकृतिशंसन ।।१६।।

तेज हो ? जल हो ? यद्वा अन्न, प्रकृति वा कुन ?
सन्देह हुन गो ब्रह्मन् ! अजा हो यिनमा कुन ? ।।१७।।

लोहित शुक्लकृष्णाख्य सत्त्वादिले समन्वित ।
तीनोटा गुणले युक्त त्यो हो प्रकृति साङ्ख्यतः ।।१८।।

साङ्ख्यवादीहरू भन्छन् अजा प्रकृति हो भनी ।
भन्नुहोस् गुरुजी के हो ? अजा जान्दिन मै पनि ।।१९।।

गुरु –

[5]छान्दोग्यश्रुतिले भन्छ लोहित अग्नि तेज हो ।
त्यो शुक्लवर्ण हो पानी त्यो कृष्णवर्ण अन्न हो ।।२०।।

---

३. अनुमानिकमप्येकेषामिति चेन्न शरीररूपकविन्यस्तगृहीतेर्दर्शयति च ।
– ब्रह्मसूत्र १।४।१।१

४. अजामेकां लोहितशुक्लकृष्णां बह्वीः प्रजाः सृजमानां सरूपाः ।
अजो ह्येको जुषमाणोऽनुशेते जहात्येनां भुक्तभोगामजोऽन्यः ।।
– श्वेताश्वतरोपनिषद् ४।५

५. यदग्ने रोहितं रूपं तेजसस्तद्रूपं यच्छुक्लं तदपां यत्कृष्णं तदन्नस्य ।
– छान्दोग्योपनिषद् ६।४।१

सृष्टिका शुरुमा आए त्रिवृत् भएर वर्ण ती ।
त्यही प्रकृति वेदोक्त साङ्ख्योक्त हैन जान ती ॥२१॥

आयो प्रकृतिका लागि अजा-शब्द बुझाउन ।
आदित्य मधु हो जस्तै कल्पना गरियो जुन ॥२२॥

[६]'अर्वाग्बिल' भनी आयो भाँडो चमसनामको ।
के हो पदार्थ जानिन्न त्यस्तै अजा बह्वर्थको ॥२३॥

अजा प्रकृति हो भन्ने [७]साङ्ख्यको मत हो जुन ।
साङ्ख्योक्त स्मृतिका द्वारा त्यो भएको छ वर्णन ॥२४॥

अजा लोहितशुक्लाख्या प्रकृति श्रुतिवर्णित ।
अजा प्रकृति अन्नाख्या जलतेज समन्वित ॥२५॥

स्मृतिभन्दा सदा हुन्छ श्रुति नै बलवत्तर ।
त्यसैकारण वेदोक्त अजा प्रकृति हो तर ॥२६॥

जो हो प्रकृति साङ्ख्योक्त गर्दै खण्डन ती अजा ।
छान्दोग्य श्रुतिमा व्यक्त बुझ्नू प्रकृति हुन् अजा ॥२७॥

यसमा तीन छन् [८]सूत्र सबैले श्रुतिवर्णित ।
अजा प्रकृतिकै गर्छन् प्रतिपादन तत्त्वतः ॥२८॥



---

६. अर्वाग्बिलश्चमस ऊर्ध्वबुध्नः । – बृहदारण्यकोपनिषद् २।२।३

७. मूलप्रकृतिरविकृतिः । – साङ्ख्यकारिका ४

८. चमसवदविशेषात् । – ब्रह्मसूत्र १।४।२।८–१०

## ३. सङ्ख्योपसङ्ग्रहाधिकरण (ब्रह्मसूत्र १।४।३।११–१३)

शिष्य –

त्यो पञ्चजन भन्ने जो आयो विषय शास्त्रतः ।
[९]श्रुतिको मत भिन्नै छ बुझ्नुपर्दछ तत्त्वतः ॥२९॥

त्यो पञ्चजन भन्नाले साङ्ख्योक्त तत्त्व हो ? कि ? के ?
श्रुत्युक्त पाँच सङ्ख्या हो ? भयो सन्देह हो त के ? ॥३०॥

पञ्च पञ्चजना जो छ यसको नै गुणा गरी ।
[१०]पच्चीसै तत्त्व हो भन्छन् पूर्वपक्षी सधैँभरि ॥३१॥

साङ्ख्यवादीहरू भन्छन् पच्चीसतत्त्व हो जुन ।
श्रुतिवर्णित प्राणादि सङ्ख्या हो ? अथवा कुन ? ॥३२॥

गुरु –

पञ्च पञ्चजना आयो सङ्ख्या त्यो श्रुतिमा जुन ।
पच्चीसतत्त्व त्यो हैन प्राणादि पाँच हुन् सुन ॥३३॥

आयो आत्मा र आकाश श्रुतिमा स्पष्ट नै जब ।
साङ्ख्यमा यिनी पर्दैनन् होला मान्य कहाँ ? तब ॥३४॥

पहिलो पञ्च हो सङ्ख्या दोस्रो संज्ञा भनीकन ।
श्रुतिको अर्थ निस्कन्छ यसैको गर चिन्तन ॥३५

आधार सबको आत्मा सोही आधेय भैकन ।
कसरी श्रुतिले गर्छ ? विरोधाभास वर्णन ॥३६॥

---

९. यस्मिन् पञ्च पञ्चजना आकाशश्च प्रतिष्ठितः, तमेव मन्य आत्मानं विद्वान् ब्रह्ममृतोऽमृतम् । – बृहदारण्यकोपनिषद् ४।४।१७

१०. मूलप्रकृतिरविकृतिर्महदाद्याः प्रकृतिविकृतयः सप्त ।
षोडकश्च विकारो न प्रकृतिर्न विकृतिः पुरुषः ॥ – साङ्ख्यकारिका ४

पहिलो पञ्च हो प्राण, चक्षु श्रोत्र मनै अनि ।
अन्न आदि गरी पर्छन् संज्ञावाचक यी बनी ।।३७।।

दोस्रो त्यो पञ्चमा पर्छ साक्षी प्राणादिसंज्ञित ।
त्यो [11]वाक्यशेषले गर्दा यो हो श्रुतिप्रकल्पित ।।३८।।

अतः साङ्ख्योक्त सिद्धान्त श्रुतिले गर्छ खण्डन ।
प्राण आत्मादि नै हुन् ती पञ्च पञ्च भनीकन ।।३८।।

आत्मामै सब छन् पञ्च पञ्चजना प्रतिष्ठित ।
[12]श्रुतिले स्पष्ट नै भन्छ साङ्ख्योक्त हैन तत्त्वतः ।।३९।।

यसमा तीन छन् [13]सूत्र सबैले श्रुतिवर्णित ।
पञ्चसिद्धान्तकै गर्छन् प्रतिपादन तत्त्वतः ।।४०।।



## ४. कारणत्वाधिकरण (ब्रह्मसूत्र १।४।४।१४–१५)

शिष्य –

जगत्कारणमा ब्रह्मन् ! वेदान्तमा समन्वय ।
छ युक्त अथवा छैन ? भयो उत्पन्न संशय ।।४१।।

यसमा भन्दछन् वादी समन्वय अयुक्त छ ।
श्रुतिका वाक्यमा धेरै परस्पर विरोध छ ।।४२।।

---

११. प्राणस्य प्राणमुत चक्षुषश्चक्षुरुत श्रोत्रस्य श्रोत्रमुतान्नस्यान्नं मनसो ये मनो विदुः ।
– श्रुतिः

१२. अस्मिन्पञ्च पञ्चजना आकाशश्च प्रतिष्ठितः ।
तमेव मन्य आत्मानं विद्वान् ब्रह्मामृतोऽमृतम् ।। – बृहदारण्यकोपनिषद् ४।४।१७

१३. न सङ्ख्योपसङ्ग्रहादपि नानाभावादतिरेकाच्च । – ब्रह्मसूत्र १।४।३।११–१३

वादीले [14]श्रुतिका मन्त्र केही गरेर उद्धृत ।
सृष्टिका मन्त्रमा छैन एकत्व भन्दछन् स्वतः ॥४३॥

स्मृतिन्यायादिमा जो छ ब्रह्मातिरिक्त कारण ।
सृष्टिमा मान्य हो त्यो नै श्रुत्युक्त हुन्न कारण ॥४४॥

गुरुजी ! पूर्वपक्षीले श्रुतिका सृष्टिवाक्यमा ।
विरोधाभास देखाए विभिन्नता समग्रमा ॥४५॥

म भएँ अति नै भ्रान्त बुझ्न मुस्किल भो अति ।
भन्नुहोस् स्पष्ट पारेर जिज्ञासा गर्छु सम्प्रति ॥४६॥

गुरु –
सृष्टिका मन्त्रमा केही असमन्वयझैँ कहीँ ।
देखिन्छ स्थूल आँखाले न बुझ्दामा जहीँ तहीँ ॥४७॥

'उपक्रमोपसंहार' आदि तात्पर्यग्राहक ।
षड्लिङ्गले बुझेमा नै बन्दैनन् श्रुतिबाधक ॥४८॥

[15]भविष्यद्वृत्तिले गर्छन् श्रुतिले सृष्टिवर्णन ।
गूढार्थ श्रुतिको हुन्छ गर्नुपर्दछ चिन्तन ॥४९॥

---

१४. क. आत्मन आकाशः सम्भूतः । – तैत्तिरीयोपनिषद् २।१
ख. तत्तेजोऽसृजत । – छान्दोग्योपनिषद् ६।२।३
ग. स प्राणमसृजत प्राणाच्छ्रद्धाम् । – प्रश्नोपनिषद् ४।१।२
घ. स इमाल्लोँकानसृजत अम्भोमरीचीर्मरमापः । – ऐतरेयोपनिषद् ४।१।२
ङ. असद्वा इदमग्र आसीत्ततो वै सदजायत । – तैत्तिरीयोपनिषद् २।७
च. असदेवेदमग्र आसीत्तत्सदासीत्तत्समभवत् । – छान्दोग्योपनिषद् ३।१९।१
छ. सदेव सौम्येदमग्र आसीत्, तद्धैक आहुरसदेवेदमग्र आसीत् ।
– छान्दोग्योपनिषद् ६।२।१,२
ज. तद्धेदं तर्ह्यव्याकृतमासीत्तन्नामरूपाभ्यामेव व्याक्रियते । – श्रुतिः
१५. मृल्लोहविस्फुलिङ्गाद्यैः सृष्टिर्या चोदितान्यथा ।
उपायः सोऽवतराय नास्ति भेदः कथञ्चन ॥ – माण्डूक्यकारिका ३।२५

तसर्थ श्रुतिमा जे जे पूर्वपक्ष बनीकन ।
आएका मन्त्र सारा हुन् सिद्धान्त नै बढाउन ।।५०।।

पूर्व मन्त्रहरू आए अध्यारोपार्थ वस्तुतः ।
मन्त्र उत्तरमा आए अपवादार्थ तत्त्वतः ।।५१।।

सृष्टिवर्णनमा व्यक्त श्रुतिका [१६]मन्त्र जो अब ।
टिप्पणीमा म उल्लेख क्यै गर्ने छु बुझ्के सब ।।५२।।

अथवा हुनसक्ला नै विभेद सृष्टिवर्णन ।
विभेद हुन सक्तैन स्रष्टामा त्यो कथञ्चन ।।५३।।

स्मृतिन्यायादिमा व्यक्त सृष्टिकारण ती सब ।
वेदबाह्य भएकाले अमान्य तुच्छ हुन् सब ।।५४।।

वादीका मतको गर्दै जडकारण खण्डन ।
सृष्टिकारण हो सत् चित् ब्रह्मको हुन्छ मण्डन ।।५५।।

दुई छन् यसमा [१७]सूत्र जगत्को सृष्टिकारण ।
श्रुतिले ब्रह्म हो भन्दै अरू गर्छ निवारण ।।५६।।



---

१६. क. तत्सृष्ट्वा तदेवानुप्राविशत् । – तैत्तिरीयोपनिषद् २।६।१
ख. बहु स्यां प्रजायेय । – तैत्तिरीयोपनिषद् २।६।१
ग. इदं सर्वमसृजत यदिदं किञ्च । – तैत्तिरीयोपनिषद् २।६।१
घ. सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम्, तदैक्षत बहु स्यां प्रजायेयेति, तत्तेजोऽसृजत । – छान्दोग्योपनिषद् ६।२।१,३
ङ. आत्मा वा इदमेक एवाग्र आसीत् नान्यत्किञ्चन मिषत्, स ईक्षत लोकान्नु सृजा इति । – ऐतरेयोपनिषद् ४।१।२
च. तद्धेवं तर्ह्यव्याकृतमासीत् । – श्रुतिः
छ. अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरवाणि । – छान्दोग्योपनिषद् ६।३।२

१७. कारणत्वेन चाऽऽकाशादिषु यथाव्यपदिष्टोक्तेः । – ब्रह्मसूत्र १।४।४।१४–१५

## ५. बालाक्यधिकरण (ब्रह्मसूत्र १।४।५।१६–१८)

शिष्य –

जगत्कर्तृत्वका बारे [१८]श्रुतिले गर्छ वर्णन ।
प्राण हो ? जीव वा ब्रह्म कर्ता हो यिनमा कुन ? ॥५७॥

यसरी जब सन्देह प्राप्त भो यसमा अनि ।
पूर्वपक्षीहरू भन्छन् कर्म या जीव हो भनी ॥५८॥

कर्म अपूर्वको स्रष्टा यसैले सब रच्तछ ।
कर्मै चालनमा पर्छ प्राणलाई चलाउँछ ॥५९॥

स्वामी अपूर्वको जीव त्यसैकारणले तर ।
प्राण या जीव हो कर्ता किन्तु होइन ईश्वर ॥६०॥

यसरी पूर्वपक्षीले जगत्स्रष्टा भने जब ।
प्राण हो अथवा जीव के हो त्यो ? भन्नुहोस् अब ॥६१॥

गुरु –

क्रियावाचक हो कर्म न त्यो अपूर्ववाचक ।
'क्रियते इति' भन्नाले कर्म संसारवाचक ॥६२॥

जीव प्राण दुवै हैनन् जगत्कर्ता कुनै पनि ।
परमेश्वर हो कर्ता आधार सबको अनि ॥६३॥

परमेश्वर हो कर्ता स्वतन्त्ररूपमा अनि ।
अस्वतन्त्र अरू हुन् नै जीव प्राणादि ती पनि ॥६४॥

---

१८. यो वै बालाक एतेषां पुरुषाणां कर्ता यस्य वैतत्कर्म स वेदितव्यः ।
– कौषीतकिब्राह्मणोपनिषद् ४।१९

उपक्रमोपसंहारद्वारा तात्पर्य लीकन ।
श्रुतिले ब्रह्म नै भन्छ जगत्कर्ता भनीकन ॥६५॥

'यस्य वै' श्रुतिका द्वारा 'यस्य कर्म' भनीकन ।
जगत्कर्तृत्वको कर्ता ब्रह्मकै हुन्छ कीर्तन ॥६६॥

जीव प्राणादि सारा हुन् ब्रह्ममै अवलम्बित ।
त्यसैकारणले बन्छन् शास्त्रद्वारा विखण्डित ॥६७॥

मृषावादित्वको दोष राजालाई नदीकन ।
श्रुति कोषीतकी गर्छ ब्रह्मकर्तृत्वशंसन ॥६८॥

[१९]वेदितव्य भनी आयो श्रुतिमा स्पष्ट नै जब ।
वेदितव्य त हो ब्रह्म जीवादि होइनन् तब ॥६९॥

तीन छन् यसमा [२०]सूत्र ब्रह्मै हो विश्वसर्जक ।
भन्दछन् श्रुतिका द्वारा विनाभय विनाधक ॥७०॥



## ६. वाक्यान्वयाधिकरण १।४।६।१९–२२

शिष्य –

जो [२१]'आत्मा वा अरे' मन्त्र श्रुतिमा स्पष्ट जो थिए ।
ती याज्ञवल्क्यले ज्ञान मैत्रेयीकन जो दिए ॥७१॥

गर दर्शन आत्माको श्रवणादि तिमी गर ।
भन्यो त्यो श्रुतिले स्पष्ट आत्मा के हो ? गुरो ! तर ॥७२॥

---

१९. यस्य वैतत्कर्म स वेदितव्यः । – कौषीतकिब्राह्मणोपनिषद् ४।१९
२०. जगद्वाचित्वात् । – ब्रह्मसूत्र १।४।५।१६–१८
२१. आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यः ।
– बृहदारण्यकोपनिषद् २।४।५

आफ्ना नै स्वार्थका लागि पति पत्नी सबैसित ।
गर्दछन् प्रेम [२२]स्वार्थी भै आत्मा हो जीव निश्चित ॥७३॥

पैदा भो अब सन्देह जीव या ब्रह्म हो कुन ?
वादीका मतमा आत्मा जीव हो ब्रह्म होइन ॥७४॥

भन्नुहोस् गुरुजी ! आत्मा ब्रह्म हो कि त जीव हो ?
जीवात्मा परमात्मा वा त्यो आत्मा कुन वस्तु हो ? ॥७५॥

गुरु –

उपक्रम तिमी सम्झ मैत्रेयीले भनिन् जब ।
मान्छे अमृत बन्ला र ? धन पाएर नै तब ॥७६॥

ती याज्ञवल्क्यजी बोले [२३]वित्तद्वारा कुनै पनि ।
पाइन्न मुक्ति मैत्रेयि ! आत्मा जान व्रती बनी ॥७७॥

उपक्रम भयो पैले [२४]आत्मा जान भनीकन ।
श्रवणादिक सारा ती भने साधन गैकन ॥७८॥

अन्तमा [२५]उपसंहार आयो जोड दिईकन ।
आत्मा जान त्यसैबाट मुक्त हुन्छ्यौ भनीकन ॥७९॥

उपक्रमोपसंहार हेर्दा अमृतनिम्तिमा ।
आत्माको ज्ञान नै आयो श्रुतिमा तत्त्वरूपमा ॥८०॥

---

२२. न वा अरे पत्युः कामाय पतिः प्रियो भवति आत्मनस्तु कामाय पतिः प्रियो भवति । ... न सर्वस्य कामाय सर्वं प्रियं भवत्यात्मनस्तु कामाय सर्वं प्रियं भवति ।
– बृहदारण्यकोपनिषद् २।४।५

२३. अमृतत्वस्य तु नाशास्ति वित्तेन । – बृहदारण्यकोपनिषद् २।४।२

२४. आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यः ।
– बृहदारण्यकोपनिषद् २।४।५

२५. अयमात्मेदममृतमिदं ब्रह्मेदं सर्वम् । – बृहदारण्यकोपनिषद् २।५।११

[26]आत्मज्ञान भए सारा बुझिन्छन् जडचेतन ।
आत्मा हो ब्रह्म ज्ञातव्य जीव स्वल्प अकिञ्चन ।।८१।।

यसमा [27]सूत्र छन् चार अन्तमा सूत्र गैकन ।
आत्मा ब्रह्म भनी गर्छन् सबैले प्रतिपादन ।।८२।।



## ७. प्रकृत्यधिकरण (ब्रह्मसूत्र १।४।७।२३–२७)

शिष्य –

जगत्कारणमा ब्रह्म उपादान ? निमित्त हो ?
सन्देह गुरुजी ! आयो दुइटै हुन् कि ! एक हो ? ।।८३।।

यसमा पूर्वपक्षीले [28]'तदैक्षत' लिईकन ।
कुमालेझैँ त हो ब्रह्म भने निमित्तकारण ।।८४।।

घटको सिर्जना गर्दा हो उपादान मृत् जब ।
निमित्तमात्र नै बन्छ कुमाले घटको तब ।।८५।।

त्यसै गरेर नै ब्रह्म निमित्त बन्छ सृष्टिमा ।
उपादान भने हुन्न त्यो ब्रह्म सृष्टिकार्यमा ।।८६।।

यसरी पूर्वपक्षीले श्रुतिवाक्य लिई मत ।
भने निमित्त हो ब्रह्म सुन्न पाऊँ म तत्त्वतः ।।८७।।

---

२६. इदं सर्वं यदयमात्मा । – बृहदारण्यकोपनिषद् २।४।६
२७. वाक्यान्वयात् । – ब्रह्मसूत्र १।४।६।१९–२२
२८. तदैक्षत । – छान्दोग्योपनिषद् ६।२।३।

गुरु –

[२९]‘श्रुतिले स्पष्टतासाथ समुद्घोष गरीकन ।
‘तदैक्षत’ भन्यो पैले ‘बहु स्याम्’ पछि गैकन ॥८८॥

जुन ईक्षणकर्ता हो उही नै धेर भैकन ।
उत्पन्न हुन जो चाह्यो हो उपादान कारण ॥८९॥

निमित्त र उपादान अभिन्नरूप कारण ।
ब्रह्मै हो जड बन्दैन जगत्को सृष्टिकारण ॥९०॥

[३०]ब्रह्मज्ञान भएपश्चात् सबैको ज्ञान फुर्दछ ।
[३१]मृत्तिकाज्ञानका पश्चात् घटादिज्ञान खुल्दछ ॥९१॥

[३२]आत्मज्ञान जसै हुन्छ सबैको ज्ञान बन्दछ ।
श्रुतिले यसरी स्पष्ट ब्रह्मकारण भन्दछ ॥९२॥

जगत्कारणमा ब्रह्म उपादान निमित्त हो ।
विवर्तित भई ब्रह्म त्यो चराचररूप हो ॥९३॥

विभिन्न श्रुतिले भन्छन् ब्रह्मै कारण हो भनी ।
मत त्यो पूर्वपक्षीको निवारण भयो अनि ॥९४॥

---

२९. तदैक्षत बहु स्यां प्रजायेय । – छान्दोग्योपनिषद् ६।२।३

३०. येनाश्रुतं श्रुतं भवत्यमतं मतमविज्ञातं विज्ञातम् । – छान्दोग्योपनिषद् ६।१।२

३१. यथा सोम्येकेन मृत्पिण्डेन सर्वं मृण्मयं विज्ञातं स्याद् वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम् । – छान्दोग्योपनिषद् ६।१।४

३२. आत्मनि खल्वरे दृष्टे श्रुते मते विज्ञाते इदं सर्वं विदितम् ।
– बृहदारण्यकोपनिषद् ४।५।६।

पाँच छन् यसमा [३३]सूत्र सबैले ब्रह्मकारण –
भन्दछन् गर्दछन् सारा वादीमत निवारण ॥९५॥



## ८. सर्वव्याख्यानाधिकरण (ब्रह्मसूत्र १।४।८।२८)

शिष्य–

श्रुतिमा जुन आएको अण्वादि सृष्टिकारण।
अणु हो ? अथवा ब्रह्म ? जगत्को मुख्य कारण ॥९६॥

सन्देह जब पैदा भो अण्वादि सृष्टिकारण।
हुनसक्ने भनी आयो वादीको मत हो जुन ॥९७॥

श्रुतिमा वटको बीज दृष्टान्त अणुकारण।
सृष्टिकारणमा पर्छन् भन्छन् वादीहरू जुन ॥९८॥

कसैले भन्दछन् शून्य असत् हो सृष्टिकारण।
[३४]स्वभाव भन्दछन् कोही काल हो सृष्टिकारण ॥९९॥

[३५]असत् हो कतिले भन्छन् सृष्टिको मुख्य कारण।
विज्ञानपक्षले भन्छन् मन हो सृष्टिकारण ॥१००॥

भन्नुहोस् गुरुजी ! ब्रह्म यद्वा हो अणु कारण।
जसबाट बनोस् मेरो सन्देहको निवारण ॥१०१॥

---

३३. प्रकृतिश्च प्रतिज्ञादृष्टान्तानुपरोधात्। – ब्रह्मसूत्र १।४।७।२३–२७
३४. स्वभावमेके कवयो वदन्ति कालं तथान्ये। – वेदान्तसन्दर्भ
३५. असदेवेदमग्र आसीत्। – छान्दोग्योपनिषद् ६।२।२
क. असद्वा इदमग्र आसीत्। – तैत्तिरीयोपनिषद् २।७।१

गुरु –

[३६]एकविज्ञानले सर्वविज्ञान हुन्न शून्यले ।
सृष्टि सम्भव बन्दैन अणु काल स्वभावले ॥१०२॥

वटको बीज दृष्टान्त दिएको सूक्ष्म हो भनी ।
फैलिन्छ सूक्ष्मबाटै नै वटवृक्ष महान् बनी ॥१०३॥

[३७]इन्द्रियातीत सद्ब्रह्मबाटै सृष्टि चराचर ।
विवर्तित भई सारा देखापर्छ सधैँभर ॥१०४॥

त्यसैकारण चिद् ब्रह्म जगत्को मुख्य कारण ।
जडको [३८]श्रुतिले गर्छ स्रष्टृत्वको निवारण ॥१०५॥

यसमा एउटा [३९]सूत्र आएको छ र अन्तमा ।
जगत्सर्जक चिद् ब्रह्म हो भन्छ सूक्ष्मसारमा ॥॥१०६॥

ब्रह्मसूत्रको पहिलो अध्यायको चौथो पादको कारिका पूरा भयो ।



---

३६. एकेन मृत्पिण्डेन सर्वं मृन्मयं विज्ञातं स्याद्वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम् । – छान्दोग्योपनिषद् ६।१।४

३७. अणोरणीयान् । – कठोपनिषद् २।२०

३८. तदैक्षत बहुस्यां प्रजायेय । – छान्दोग्योपनिषद् ६।२।३
क. ईक्षतेर्नाशब्दम् । – ब्रह्मसूत्र १।१।५

३९. एतेन सर्वे व्याख्याता व्याख्याताः । – ब्रह्मसूत्र १।४।८।२८

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

## द्वितीय अविरोधाध्याय

द्वितीये स्मृतितर्काभ्यामविरोधोऽन्यदुष्टता ।
भूतभोक्तृश्रुतेर्लिङ्गश्रुतेरप्यविरुद्धता ॥

## प्रथम पाद

(यस पादमा स्मृतिदेखि सर्वधर्मोपपत्तिसहित १३ अधिकरणहरू छन् र यसमा साङ्ख्य, योग, वैशेषिक आदिले प्रस्तुत गरेका पूर्वपक्षलाई समेत वेदान्तमा समन्वय गरेर तिनको परिहार गरिएको छ)

### १. स्मृत्यधिकरण (ब्रह्मसूत्र २।१।१।१–२)

शिष्य –

वेदैसमन्वयैमा त्यो साङ्ख्यका सृष्टिले जुन ।
सङ्कोच हुन्छ वा हुन्न ? सन्देह युक्त भो मन ॥१॥

साङ्ख्यले भन्छ नै वेद धर्ममा सावकाश हो ।
स्मृतिले वेद सङ्कोच हुनु नै अति युक्त हो ॥२॥

स्मृतिले गर्छ नै खालि वस्तुत्वको निरूपण ।
गर्दैन यो अनुष्ठेय धर्मको प्रतिपादन ॥३॥

वेदले धर्मका साथै ब्रह्म गर्छ निरूपण ।
ब्रह्मबाधित होस् धर्म वेद गर्छ निरूपण ॥४॥

त्यसैकारण हो वेद सावकाश चिरन्तन ।
निरवकाश साङ्ख्यैले सङ्कोच गर्छ तत्क्षण ॥५॥

गुरु –

जगत्कारण हो ब्रह्म भन्ने मन्वादि ती स्मृति-
द्वारा बाधित नै हुन्छ अन्ततः साङ्ख्यको स्मृति ।।६।।

वेदमूलक मन्वादि स्मृति प्रबल बन्दछन् ।
प्रधान सृष्टिकर्ता हो भन्ने बाहिर पर्दछन् ।।७।।

अवैदिक स्मृतिद्वारा सङ्कोच हुन्न नै श्रुति ।
[1]वेदका पछि लागेर हिँड्ने गर्छन् सबै स्मृति ।।८।।

दुइटा [2]सूत्र छन् गर्छन् त्यो साङ्ख्यस्मृतिखण्डन ।
वेदानुकूल मन्वादि गर्दछन् स्मृतिमण्डन ।।९।।



## २. योगप्रत्युक्त्यधिकरण (ब्रह्मसूत्र २।१।२।३)

शिष्य –

त्यो समन्वय वेदोक्त योग सङ्कोच गर्दछ ?
यद्वा सङ्कोच गर्दैन ? ब्रह्मन् ! सन्देह लाग्दछ ।।१०।।

वेदानुकूल हो योग अष्टाङ्गयोग वस्तुतः ।
यो तत्त्वज्ञानका लागि बन्छ साधन तत्त्वतः ।।११।।

जगत्कारणमा योग प्रधानलाई मान्दछ ।
त्यसैकारण योबाट वेद सङ्कोच बन्दछ ।।१२।।

---

१. श्रुतेरिवार्थं स्मृतिरन्वगच्छत् । – रघुवंश २।२

२. स्मृत्यनवाकाशदोषप्रसङ्ग इति चेन्नान्यस्मृत्यनवकाशदोषप्रसङ्गात् ।
– ब्रह्मसूत्र २।१।१।१–२

यसरी गुरुजी ! आयो योगीको मत निर्भ्रम ।
भन्नुहोस् गुरुजी ! के हो ? गर्नोस् सङ्क्षय सम्भ्रम ॥१३॥

गुरु –
यो योगस्मृतिका द्वारा बन्दैन वेद सीमित ।
[३]चित्तवृत्तिनिरोधै हो योगको काम वस्तुतः ॥१४॥

योगको लक्ष्य देखिन्न प्रधानप्रतिपादन ।
अतः सङ्कोच गर्दैन वेदलाई कथञ्चन ॥१५॥

श्रुतिमा योगको चर्चा आए पनि सुनिश्चित ।
यसले मुक्ति मिल्दैन ज्ञानै चाहिन्छ तत्त्वतः ॥१६॥

योगको साङ्ख्यको छैन विरोध वेदको जहाँ ।
त्यति ती अंशमात्रै नै हुन्छन् स्वीकार्य वेदमा ॥१७॥

[४]जसमा वेदको ज्ञान छैन मोक्ष असम्भव ।
वेदको ज्ञानद्वारा नै ब्रह्मज्ञान छ सम्भव ॥१८॥

[५]साङ्ख्य खण्डनका द्वारा योग बन्दछ खण्डित ।
यसमा एउटै सूत्र आएको छ अखण्डित ॥१९॥



३. अथ योगानुशासनम्, योगश्चित्तवृत्तिनिरोधः । – योगसूत्र
४. नावेदविन्मनुते तं बृहन्तम् । – तैत्तिरीय ब्राह्मण ३।१२।९।७
५. एतेन योगः प्रत्युक्तः । ब्रह्मसूत्र २।१।२।३

## ३. विलक्षणत्वाधिकरण (ब्रह्मसूत्र २।१।३।४–११)

शिष्य –

वेदै समन्वयै तर्कद्वारा बाधित बन्दछ ?
यद्वा बाधित बन्दैन ? गुरो ! संशय लाग्दछ ।।२०।।

तर्कवादीहरू भन्छन् तर्कले हुन्छ बाधित ।
यो जगत् जडको कर्ता बन्दैन ब्रह्म निश्चित ।।२१।।

ब्रह्म चेतन हो दृश्य जगत् हो जड वस्तुतः ।
वैलक्षण्य जगत्सृष्टि हुन सक्तैन तत्त्वतः ।।२२।।

[६]कार्यमा पनि देखिन्छन् स्पष्टै कारणका गुण ।
जगत्मा तर देखिन्नन् हेतु चिद् ब्रह्मका गुण ।।२३।।

वैलक्षण्य जगत् ब्रह्म जीव देखिन्छ स्पष्टतः ।
त्यसैकारणले वेद तर्कले हुन्छ बाधित ।।२४।।

तर्कले बन्छ बन्दैन ? वेद बाधित वेदतः ।
आज्ञा होस् गुरुजी ! के हो ? स्पष्ट पारेर तत्त्वतः ।।२५।।

गुरु –

कार्यकारण सामान्य भन्ने यो [७]व्याप्ति हो जुन ।
लागू सर्वत्र बन्दैन उदाहरण हुन् सुन ।।२६।।

त्यस्तै नै माकुराबाट जालो निस्किन्छ बाहिर ।
कार्यकारणको व्याप्ति बन्दैन यो सबैतिर ।।२७।।

---

६. कारणगुणाः कार्यगुणानारभन्ते । – साङ्ख्यदर्शन

७. यत्र यत्र धूमस्तत्र तत्र वह्निः । – अनुमानखण्डः तर्कसङ्ग्रहः

[8]जड गोबरबाटै नै बिच्छी हुन्छ समुद्भव ।
हुन्छन् ती नखकेशादि चित् मान्छेबाट उद्भव ।।२८।।

तर्कले ब्रह्मको ज्ञान हुन सक्तैन तत्त्वतः ।
[9]अवेदज्ञ कुतर्की हुन् ती तार्किक सुनिश्चित ।।२९।।

[10]हुँदैन तर्कको अन्त तर्कले अभ्र बद्ध्दछ ।
यौटा तार्किकको तर्क अर्को तार्किक काट्तछ ।।३०।।

त्यो वैलक्षण्य जो हेतु हो तर्काभास न्यायतः ।
वेदसमन्वयै बाध गर्न सक्तैन तत्त्वतः ।।३१।।

[11]अचिन्त्य ब्रह्म जानिन्न जति तर्क तिमी गर ।
ब्रह्म हो अति दुर्ज्ञेय भन्दा प्रकृतिले पर ।।३२।।

---

८. यथोर्णनाभिः सृजते गृह्णते च । – मुण्डकोपनिषद् १।१।७
९. नैषा तर्केण मतिरापनेया । – कठोपनिषद् १।२।९
   क. तार्किको हि अनागमज्ञः स्वबुद्धिपरिकल्पितं यत् किञ्चिदेव कथयन्ति ।
   – शाङ्करभाष्य, कठोपनिषद् १।२।९
   ख. ते तु कुतर्क दूषितान्तःकरणा ब्राह्मणादिवर्णापसदा अनुकम्पनीया आगमार्थविच्छिन्नसम्प्रदायबुद्धय इति । अहो अनुमानकौशलं दर्शितमपुच्छशृङ्गैस्तार्किकवलिवर्दैः । यो ह्यात्मानमेव न जानाति स कथं मूढस्तद्गतं भेदमभेदं वा जानीयात् ?
   – बृहदारण्यकोपनिषद् २।१।२० – शाङ्करभाष्य
१०. यत्नेनानुमितोऽप्यर्थः कुशलैरनुमातृभिः ।
   अभियुक्ततरैरन्यैरन्यथैवोपपद्यते । – वाक्यपदीय, ब्रह्मकाण्ड ४२
११. अचिन्त्याः खलु ये भावा न तांस्तर्केण योजयेत् ।
   प्रकृतिभ्यः परं यत्तु यदचिन्तस्य लक्षणम् ।। – महाभारत, भीष्मपर्व ५।१२

[12]वेदबाहेक सद्धर्म जान्दैनन् ऋषिले पनि ।
तर्कको स्थान नै छैन धर्मनिर्णयमा अनि ।।३३।।

[13]वेदानुकूलको तर्क गर्नु चाहिँ सुतर्क हो ।
वेदबाह्य हुने तर्क गर्नु चाहिँ कुतर्क हो ।।३४।।

तर्कले हुन सक्तैन बाध वेदसमन्वय ।
वेदानुकूलको तर्क बन्छ साधन निश्चय ।।३५।।

आठोटा [14]सूत्र छन् यस्मा यौटै मत छ निश्चय ।
तर्कले बाध गर्दैन भन्छन् वेदसमन्वय ।।३६।।



## ४. शिष्टापरिग्रहाधिकरण (ब्रह्मसूत्र २।१।४।१२)

शिष्य –

कणाद आदि सिद्धान्तबाट वेदसमन्वय ।
बाध हुन्छ ? कि वा हुन्न ? भयो अतीव संशय ।।३७।।

जो सानो तन्तुबाटै नै विस्तीर्ण पट बन्दछ ।
सानो त्यो अणुबाटै नै विशाल विश्व बन्दछ ।।३८।।

त्यसैकारणले ठूलो त्यो ब्रह्मबाट अल्प यो ।
द्रव्यादि कार्य उत्पन्न हुन सम्भव छैन यो ।।३९।।

---

१२. न चागमादृते धर्मस्तर्केण व्यवतिष्ठते ।
ऋषीणामपि यज्ज्ञानं तदप्यागमपूर्वकम् ।। – वाक्यपदीय, ब्रह्मकाण्ड ३०

१३. बुद्ध्यारोहाय तर्कश्चेदपेक्षेत तथा सति ।
स्वानुभूत्यानुसारेण तर्क्यतां मा कुतर्क्यताम् ।।– वाक्यपदीय

१४. न विलक्षणत्वादस्य तथात्वञ्च शब्दात् । – ब्रह्मसूत्र २।१।३।४–११

त्यसै कारणले वेद ब्रह्ममा त्यो समन्वय ।
कणादमतकाद्वारा बाध बन्दछ निश्चय ॥४०॥

यसरी पूर्वपक्षी ती भन्दछन् बाध हुन्छ नै ।
भन्नुहोस् गुरुजी ! बाध हुन्छ ? वा बाध हुन्न नै ॥४१॥

गुरु –
साङ्ख्य योग दुवै ठानी सृष्टिमा अति दुर्बल ।
व्यासादि ऋषिले त्यागे काणाद अझ दुर्बल ॥४२॥

सारा शिष्टहरूबाट अणुवाद उपेक्षित ।
जगत्को सृष्टिमा हेय वैशेषिक छ तत्त्वतः ॥४३॥

[15]बकवृत्ति भएका र हेतुवादीहरूसित ।
नबोल्नु शिष्टले भन्ने निन्दा सुनिन्छ शब्दतः ॥४४॥

सृष्टिमा न्यूनबाटै नै बृहत् संसार बन्दछ ।
भन्ने काणादसिद्धान्त सोझै श्रुतिविरुद्ध छ ॥४५॥

श्रौतसिद्धान्तमा यस्को मान्यता छैन वस्तुतः ।
श्रौतसिद्धान्त हो खास विवर्तवाद तत्त्वतः ॥४६॥

यसैकारण काणादद्वारा वेदसमन्वय ।
बन्दैन बाध, यै नै हो अद्वैतवाद निश्चय ॥४७॥

यसमा सूत्र[16] यौटै छ यसले पनि निश्चय ।
काणाद बाध गर्दैन भन्छ वेदसमन्वय ॥४८॥



१५. हैतुकान् बकवृत्तींश्च वाङ्मात्रेणापि नार्चयेत् ।
१६. एतेन शिष्टापरिग्रहा अपि व्याख्याताः । – ब्रह्मसूत्र २।१।४।१२

## ५. भोक्त्रापत्त्याधिकरण (ब्रह्मसूत्र २।१।५।१३)

भोक्ताभोग्यादिले ब्रह्मन् ! अद्वैत बाध बन्दछ ?
बन्दैन अथवा बाध ? सन्देह तर लाग्दछ ।।४९।।

ब्रह्महेतु भएदेखि ब्रह्मभिन्न भई सब ।
द्वैतबाध भई होला व्यवहार असम्भव ।।५०।।

प्रत्यक्ष आदि प्रामाण्य पूर्वपक्षी लिई तर ।
बाध हुन्छ सिधै भन्छन् रट लाई निरन्तर ।।५१।।

के हुन्छ ? बाध निर्बाध श्रौत प्रमाण दीकन ।
जिज्ञासा गर्नुहोस् शान्त जान्न उत्सुक भो मन ।।५२।।

गुरु –
समुद्र जसरी बन्छ तरङ्ग फेन बुद्बुद ।
भेद देखिन्छ आँखाले समुद्रमात्र हो खुद ।।५३।।

द्वैत हुन् भोक्तृभोगादि व्यावहारिक वस्तुतः ।
पारमार्थिक आँखाले अद्वैतमात्र तत्त्वतः ।।५४।।

[१७]द्वैतसृष्टि गरी ब्रह्म त्यहीँ पसेर बस्तछ ।
विवर्तित भई ब्रह्म द्वैतैसमान भास्तछ ।।५५।।

उपाधिरूपले भेद अभेद निरुपाधिक ।
व्यावहारिक हो भेद अभेद ब्रह्म तात्त्विक ।।५६।।

---

१७. तत्सृष्ट्वा तदेवानुप्राविशत् । –तैत्तिरीयोपनिषद् २।६।१
१८. भोक्त्रापत्तेरविभागश्चेत्स्याल्लोकवत् । – ब्रह्मसूत्र २।१।५।१३

यसमा [18]सूत्र यौटा छ गर्छ भेद निवारण ।
पारमार्थिक हो ब्रह्म त्यो उपादानकारण ॥५७॥



## ६. आरम्भणाधिकरण (ब्रह्मसूत्र २।१।६।१४–२०)

शिष्य –

व्यावहारिक हुन् ? यद्वा हुन् भेदाभेद तात्त्विक ।
यस्तो सन्देह भो पैदा व्यावहारिक तात्त्विक ? ॥५८॥

पूर्वपक्षीहरू भन्छन् फेनमा र समुद्रमा ।
विभेद छैन हे सोम्य ! पानी नै हो यथार्थमा ॥५९॥

अभेद भेदमा त्यस्तै विरोध छैन लोकमा ।
भेदाभेद दुवै नै हुन् पारमार्थिक अन्तमा ॥६०॥

यसरी पूर्वपक्षीको आयो अभेदकसाधक ।
पारमार्थिक हो ? यद्वा भन्नुहोस् व्यावहारिक ॥६१॥

गुरु –

[19]नानात्व ब्रह्ममा छैन स्पष्ट नै श्रुति भन्दछ ।
भेदको बाध योबाटै ब्रह्ममा स्पष्ट बन्दछ ॥६२॥

परस्पर विरोधी ती भेदाभेद दुवै कहाँ ?
एक चन्द्रसरी सौम्य ! [20]ब्रह्ममात्रै जहाँ तहाँ ॥६३॥

---

१९. नेह नानास्ति किञ्चन । – बृहदारण्यकोपनिषद् ४।४।१९
२०. इदं सर्वं यदयमात्मा । – बृहदारण्यकोपनिषद् ४।४।१९
२१. ब्रह्मैवेदं सर्वम् । – मुण्डकोपनिषद् २।२।११

आकारभेद बन्दैन अद्वितीय पदार्थमा ।
समुद्रमा हुने गर्छ हुँदैन परमार्थमा ॥६४॥

शास्त्रैकवेद्य हो [21]ब्रह्म प्रत्यक्ष दृष्ट होइन ।
व्यावहारिक हो भेद पारमार्थिक होइन ॥६५॥

देखिन्छन् घट भाण्डादि माटोबाट विनिर्मित ।
मिथ्या विकार भाण्डादि माटो नै [22]सत्य वस्तुतः ॥६६॥

त्यस्तै नै भेद हो मिथ्या ब्रह्म नै एक सत्य हो ।
[23]नानात्व जसले देख्छ जन्मेर फेरि मर्नु हो ॥६७॥

[24]'अभयं ब्रह्म' को प्राप्ति श्रुतिले गर्छ शंसन ।
अद्वैत ब्रह्ममा नाना सर्वथा हुन्छ खण्डन ॥६८॥

[25]सूत्र छन् यसमा सात गर्छन् अभेद वर्णन ।
तात्पर्यरूपमा भन्छन् 'नेह नानास्ति किञ्चन' ॥६९॥



## ७. इतरव्यपदेशाधिकरण (ब्रह्मसूत्र २।१।७।२१–२३)

शिष्य –
आफू र जीवमा ऐक्य देख्ने ईश्वरमा कतै ।
हिताहितादिको दोष लाग्छ ? लाग्दैन ? वा कतै ॥७०॥

---

२२. यथा सोम्यैकेन मृत्पिण्डेन सर्वं मृन्मयं विज्ञातं स्यादवाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम् । – छान्दोग्योपनिषद् ६।१।१
२३. मृत्योः स मृत्युमाप्नोति य इह नानेव पश्यति ।– बृहदारण्यकोपनिषद् ४।४।१९
२४. अभयं वै जनक प्राप्तोऽसि । – बृहदारण्यकोपनिषद् ४।२।४
२५. तदन्यत्वमारम्भणशब्दादिभ्यः । – ब्रह्मसूत्र २।१।६।१४–२०

पूर्वपक्षीहरू भन्छन् त्यो ईश जीवको तर ।
कुनैमा अहितै गर्छ कुनैमा हित नै तर ॥७१॥

हिताहितादिको दोष भन्छन् लाग्दछ वस्तुतः ।
लाग्छ ? लाग्दैन ? वा दोष भन्नोस् शास्त्रानुसारतः ॥७२॥

गुरु –
संसार जीवको मिथ्या त्यसबाट कुनै पनि ।
ईशको हुन्न नै हानि जस्तो जे जे भने पनि ॥७३॥

शुभाशुभ गरी कर्म जीव घुम्छ निरन्तर ।
जीवको हित वा हानि गर्दैन कत्ति ईश्वर ॥७४॥

यसमा तीन छन् [२६]सूत्र यिनले गई अन्ततः ।
लाग्दैन जीवमा दोष भन्छन् वेदानुसारतः ॥७५॥



## ८. उपसंहारदर्शनाधिकरण (ब्रह्मसूत्र २।१।८।२४–२५)

शिष्य –
अद्वैत ब्रह्मका द्वारा सृष्टि हुन्छ ? हुँदैन ? वा ।
भन्ने सन्देह पैदा भो सृष्टि नै हुन्छ ? हुन्न ? वा ॥७६॥

स्वगतादिकभेदादिशून्य ब्रह्म सनातन ।
सृष्टिकारण बन्दैन अद्वैतबाट किञ्चन ॥७७॥

स्रष्टव्य वस्तु आकाश वायु अग्न्यादि ती सब ।
विभिन्नरूप देखिन्छन् विचित्ररूप ती सब ॥७८॥

२६. इतरव्यपदेशाद्धिताकारणादिदोषप्रसक्तिः ।– ब्रह्मसूत्र २।१।७।२१–२३

यदि कारणमा छैन भने चित्रविचित्रता ।
कार्यमा पनि आउन्नन् त्यस्ता चित्रविचित्रता ॥७९॥

त्यस्तो विचित्रको सृष्टि क्रमयुक्त गरी सब ।
[२७]अद्वैत ब्रह्मका द्वारा हुनलाई असम्भव ॥८०॥

यसरी पूर्वपक्षीको मत आयो गुरो ! अब ।
के सृष्टि हुनसक्ला र ? भन्छन् हुन असम्भव ॥८१॥

भन्नुहोस् गुरुजी ! लाग्यो मलाई पनि संशय ।
जसबाट बनोस् मेरो संशय पूर्ण सङ्क्षय ॥८२॥

गुरु –

वस्तुतः ब्रह्म हो एक अद्वितीय सनातन ।
ब्रह्मले सृष्टि यो गर्छ [२८]मायासाथ लिईकन ॥८३॥

मायाद्वारा परब्रह्म [२९]नानारूप लिईकन ।
विचित्ररूपमा भास्छ स्वयं ब्रह्म सनातन ॥८४॥
हो व्यवस्थापिका [३०]माया ब्रह्मकी हो सहायिका ।
सृष्टि यो क्रमले गर्छे अविद्या भावरूपिका ॥८५॥

[३१]नाना केही छँदैछैन भास्छ तै पनि सृष्टि यो ।
विवर्तित भई ब्रह्म भास्छ चित्र विचित्र यो ॥८६॥

---

२७. सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् । – छान्दोग्योपनिषद् ६।२।१
२८. मायां तु प्रकृतिं विद्यान्मायिनं तु महेश्वरम् ।– श्वेताश्वतरोपनिषद् ४।१०
२९. रूपं रूपं प्रतिरूपो बभूव तदस्य रूपं प्रतिचक्षणाय । – बृहदारण्यकोपनिषद् २।५।१३
३०. इन्द्रो मायाभिः पुरुरूप ईयते । – बृहदारण्यकोपनिषद् २।५।१३
३१. मनसैवानुद्रष्टव्यं नेह नानास्ति किञ्चन । – बृहदारण्यकोपनिषद् ४।४।१९

[32]ब्रह्मका देहनेत्रादि छैनन् अधिक वा सम ।
सजातीय विजातीय छैनन् ब्रह्म स्वयं सम ।।८७।।

स्वाभाविक लिई शक्ति ज्ञानक्रियादि ती सब ।
मायाको शक्ति ली गर्छ विचित्र सृष्टिवैभव ।।८८।।

जसरी देवता पितृ विनासाधन नै पनि ।
गर्दछन् सृष्टि त्यस्तै नै गर्दछ ब्रह्मले पनि ।।८९।।

दुई छन् [33]सूत्र ती भन्छन् नभए पनि साधन ।
विचित्र सृष्टि यो गर्छ माया साथ लिईकन ।।९०।।



## ९. कृत्स्नप्रसक्त्यधिकरण (ब्रह्मसूत्र २।१।९।२६–२९)

शिष्य –
ब्रह्म हो परिणामी त्यो यद्वा होइन नै भनी ।
भयो सन्देह अत्यन्त मनमा भार झैँ बनी ।।९१।।

सम्पूर्ण रूपमा ब्रह्म परिणामी भयो भने ।
अनित्य हुन जाने छ त्यो नित्य कसरी हुने ? ।।९२।।

अंशतः परिणामी भो त्यो सावयव बन्दछ ।
[34]'निष्कलं निष्क्रियं शान्तं' श्रुति नै बाध बन्दछ ।।९३।।

---

३२. न तस्य कार्यं करणञ्च विद्यते न तत्समश्चाभ्यधिकश्च दृश्यते ।
परास्य शक्तिर्विविधैव श्रूयते स्वाभाविकी ज्ञानबलक्रिया च ।
– श्वेताश्वतरोपनिषद् ६।२

३३. उपसंहारदर्शनान्नेति चेन्न क्षीरवद् । – ब्रह्मसूत्र २।१।८।२४–२५

३४. निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम् । – श्वेताश्वतरोपनिषद् ६।१९

पूर्वपक्षीहरू भन्छन् [३५]श्रुतिप्रमाण लीकन ।
विवर्ती परिणामी वा बन्दैन ब्रह्म किञ्चन ॥९४॥

ब्रह्म निष्क्रिय भै हुन्छ परिणामी कहाँ कुन ?
भन्नुहोस् गुरुजी ! हुन्छ कसरी सृष्टिसर्जन ? ॥९५॥

गुरु –
धेरै [३६]श्रुतिहरू भन्छन् ब्रह्म कारण हो भनी ।
माया साथ लिई नाना रूप लिन्छ जगत् बनी ॥९६॥

सजिलैसित नै ब्रह्म परिणामी भईकन ।
भित्र [३७]आफैँ पसी गर्छ विचित्र सृष्टि सर्जन ॥९७॥

[३८]अचिन्त्य ब्रह्ममा धेरै सन्देह यो अयुक्त हो ।
[३९]नेतिनिर्दिष्ट यो ब्रह्म भुक्ति मुक्ति प्रदातृ हो ॥९८॥

---

३५. क. दिव्यो ह्यमूर्तः पुरुषः स बाह्याभ्यन्तरो ह्यजः । – मुण्डकोपनिषद् २।१।२
ख. इदं महद् भूतमनन्तमपारं विज्ञानघन एव । – बृहदारण्यकोपनिषद् २।४।१२
ग. स एष नेति नेत्यात्मा । – बृहदारण्यकोपनिषद् ३।९।२६
घ. अस्थूलमनणु । – बृहदारण्यकोपनिषद् ३।८।८

३६. क. सेयं देवतैक्षत हन्ताहमिमास्तिस्रो देवता अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरवाणि । – छान्दोग्योपनिषद् ६।३।२
ख. तावानस्य महिमा ततो ज्यायांश्च पुरुषः ।
पादोऽस्य विश्वा भूतानि त्रिपादस्यामृतं दिवि । – छान्दोग्योपनिषद् ३।१२।६
ग. सता सोम्य तदा सम्पन्नो भवति । – छान्दोग्योपनिषद् ६।८।१

३७. तत्सृष्ट्वा तदेवानुप्राविशत् । – तैत्तिरीयोपनिषद् २।६।१

३८. अचिन्त्याः खलु ये भावा न तांस्तर्केण साधयेत् ।
प्रकृतिभ्यः परं यत्तु तदचिन्त्यस्य लक्षणम् ॥ – महाभारत भीष्मपर्व ५।१२

३९. स एष नेति नेत्यात्मा ... अभयं वै जनक प्राप्तोऽसि ।
– बृहदारण्यकोपनिषद् ४।२।४

यसरी ब्रह्म आफैँ नै परिणामी भईकन ।
[40]माया साथ लिई गर्छ यो जगत् सृष्टि सर्जन ॥९९॥

चार छन् यसमा [41]सूत्र सबैले सृष्टि सर्जन ।
ब्रह्मबाटै हुने भन्छन् परिणामी बनीकन ॥१००॥



## १०. सर्वोपेताधिकरण (ब्रह्मसूत्र २।२।१०।३०–३१)

शिष्य –
शरीरहीन हो ब्रह्म माया बस्छे कि बस्तिन ।
सन्देह हुन गो धेरै बुझ्नै सकिन हो किन ? ॥१०१॥

यस्तो सन्देहमा भन्छन् पूर्वपक्षी सुनिश्चित ।
शरीरहीनमा माया बस्नै सक्तिन निश्चित ॥१०२॥

ऐन्द्रजालिक जो जो छन् शरीरयुक्त हुन् सब ।
पदार्थ गर्दछन् सृष्टि मायाद्वारा सधैँ तब ॥१०३॥

त्यसैकारण कायाले हीन त्यो ब्रह्ममा गई ।
माया कदापि के बस्थी ! ब्रह्मसहचरी भई ॥१०४॥

आज्ञा होस् गुरुजी ! माया बस्छे के ब्रह्ममा गई ?
शास्त्रप्रमाणका साथ भन्नोस् सुन्छु खुशी भई ॥१०५॥

---

४०. क. इन्द्रो मायाभि पुरुरूप ईयते । – बृहदारण्यकोपनिषद् २।५।१९
ख. न तत्र रथा न रथयोगा न पन्थानो भवन्त्यथ रथान् रथयोगान् पथः सृजते ।
– बृहदारण्यकोपनिषद् ४।३।१०

४१. कृत्स्नप्रसक्तिर्निरवयवत्वशब्दकोपो वा । – ब्रह्मसूत्र २।१।९।२६–२९

गुरु –

लोकमा स्पष्ट देखिन्छ निर्माण गर्न साधन ।
चाहिन्छ अनि कर्ताले गर्न सक्तछ सर्जन ॥१०६॥

परन्तु [४२]सर्वकर्मा हो ब्रह्ममा बाह्य साधन ।
नभए पनि बाह्यार्थ सजिलै गर्छ सर्जन ॥१०७॥

विभिन्न श्रुतिले भन्छन् [४३]सत्यकाम भईकन ।
[४४]सर्वज्ञ ब्रह्मले गर्छ [४५]सूर्यादि ती प्रवर्तन ॥१०८॥

[४६]आँखा कान कुनै छैनन् [४७]हात पाउ विना पनि ।
सर्वज्ञ ब्रह्मले गर्छ सृष्टि [४८]माया लिई अनि ॥१०९॥

त्यसैकारण माया त्यो शरीरै नभए पनि ।
[४९]अनिर्वाच्या भई बस्छे ब्राह्मी सहायिका बनी ॥११०॥

दुई छन् यसमा [५०]सूत्र माया साथ लिईकन ।
ब्रह्मले गर्छ संसृष्टि नानारूप भईकन ॥१११॥



४२. सर्वकर्मा: सर्वकाम: सर्वगन्ध: सर्वरस: सर्वमिदमभ्यात्तोऽवाक्यनादर: ।
– छान्दोग्योपनिषद् ३।१४।४

४३. सत्यकाम: सत्यसङ्कल्प: । – छान्दोग्योपनिषद् ८।७।१

४४. य: सर्वज्ञ: सर्ववित् । – मुण्डकोपनिषद् १।१।९

४५. एतस्य वा अक्षरस्य प्रशासने गार्गि सूर्याचन्द्रमसौ विधृतौ तिष्ठत: ।
– बृहदारण्यकोपनिषद् ३।८।९

४६. अचक्षुष्कमश्रोत्रमवागमन: । – बृहदारण्यकोपनिषद् ३।९।८

४७. अपाणिपादो जवनो ग्रहीता पश्यत्यचक्षु: स शृणोत्यकर्ण: । – श्वेताश्वरोपनिषद् ३।१९

४८. मायां तु प्रकृतिं विद्यान्मायिनं तु महेश्वरम् । – श्वेताश्वतरोपनिषद्. ४।१०

४९. अनिर्वाच्याविद्या । – भामतीटीका १

५०. सर्वोपेता च दर्शनात् । – ब्रह्मसूत्र २।१।१०।३०–३१

## ११. प्रयोजनवत्त्वाधिकरण (ब्रह्मसूत्र २।१।११।३२–३३)

शिष्य –

ब्रह्म हो नित्य संतृप्त कहाँ त्यो सृष्टि गर्दछ ?
के बन्छ ? सृष्टिको स्रष्टा सन्देह भित्र लाग्दछ ॥११२॥

यसैमा भन्दछन् वादी [५१]आनन्द ब्रह्म भैकन ।
नित्यतृप्त भएकाले गर्दैन सृष्टिसर्जन ॥११३॥

अथवा सृष्टि नै गर्छ व्याघात तृप्तिको भयो ।
विना इच्छा गरेदेखिन् उन्मत्त कार्य नै भयो ॥११४॥

त्यसैकारणले ब्रह्म स्रष्टा बन्दैन सृष्टिको ।
भन्छन् वादी गुरो ! भन्नोस् स्रष्टा को सृष्टिकार्यको ? ॥११५॥

गुरु –

प्रयोजनविना जस्तै राजाले खेल खेल्दछ ।
विनाप्रयास नै प्राणी शास लिन्छ र छोड्दछ ॥११६॥

जस्तै बालकले खेल्छ विनाप्रयोजनै पनि ।
खेल्छ लीला सधैँ गर्छ रमाउँछ स्वयं अनि ॥११७॥

त्यसै गरेर नै ब्रह्म नित्य तृप्त भए पनि ।
जगत्को रचना गर्छ विवेकी अति नै बनी ॥११८॥

विचित्र सृष्टिको स्रष्टा फलहीन भए पनि ।
[५२]लीला हो ब्रह्मको भन्छ सूत्रले स्पष्ट नै अनि ॥११९॥

---

५१. क. आनन्दं ब्रह्मणो विद्वान् न बिभेति कुतश्चन । आनन्दो ब्रह्मेति व्यजानात् ।
– तैत्तिरीयोपनिषद् २।७।१, ३।६।१

ख. विज्ञानमानन्दं ब्रह्म । – बृहदारण्यकोपनिषद् ३।९।२८

५२. लोकवत्तु लीला कैवल्यम् । – ब्रह्मसूत्र २।१।११।३३

दुई छन् यसमा [53]सूत्र स्रष्टा हो ब्रह्म सृष्टिको ।
दुवैले भन्दछन् लीला पूर्वोत्तर भई निको ॥१२०॥



## १२. वैषम्यनैर्घृण्याधिकरण (ब्रह्मसूत्र २।१।१२।३४–३६)

शिष्य –

वैषम्य अनि नैर्घृण्य यी दोषहरू ब्रह्ममा ।
हुन सम्भव यद्वा छ ? अथवा छैन ब्रह्ममा ? ॥१२१॥

वादीले दुइटै दोष ब्रह्ममा छन् भनीकन ।
उदाहरणका साथ भने तर्क गरीकन ॥१२२॥

देवताकन अत्यन्त सुखी पार्दछ ईश्वर ।
पशुपक्षीहरूलाई दुःख दिन्छ भयङ्कर ॥१२३॥

मनुष्यजनमा दिन्छ सुखदुःख बराबर ।
वैषम्य ब्रह्मले गर्छ जीवात्मामा निरन्तर ॥१२४॥

अन्तमा ब्रह्मले गर्छ सारा यो सृष्टि सङ्क्षय ।
नैर्घृण्य नामको दोष ब्रह्ममा लाग्छ निश्चय ॥१२५॥

यसरी पूर्वपक्षीले दुइटै दोष निर्भ्रम ।
लाग्दछन् ब्रह्ममा भन्छन् मनमा उब्जियो भ्रम ॥१२६॥

भन्दछन् पूर्वपक्षी ती ब्रह्ममा दोष लाग्दछ ।
भन्नुहोस् गुरुजी ! साँच्चै ब्रह्ममा दोष लाग्दछ ? ॥१२७॥

---

५३.न प्रयोजनवत्त्वात् । – ब्रह्मसूत्र २।१।११।३२–३३

गुरु –

पूर्वमा यी सबै आए दृढता निम्तिमा पनि ।
स्थूणानिखनको न्यायद्वारा भनिन्छ तैपनि ॥१२८॥

दोष वैषम्य नैर्घृण्य लाग्दैनन् ब्रह्ममा कबै ।
सापेक्षरूपमा गर्छ ब्रह्मले सृष्टि यो सबै ॥१२९॥

निरपेक्ष भएदेखि ब्रह्ममा दोष लाग्दछ ।
अन्यथा दोष लाग्दैन यही नै श्रुति भन्दछ ॥१३०॥

शिष्य –

निरपेक्ष र सापेक्ष के हुन् यी सृष्टिकारण ।
जिज्ञासा मनमा उब्ज्यो गर्नोस् ब्रह्मन् ! निवारण ॥१३१॥

गुरु –

जो सृज्यमान छन् प्राणी तिनको पूर्व कर्म ली ।
सापेक्षरूपले गर्छ ब्रह्मसृष्टि समत्व ली ॥१३२॥

धर्माधर्म विचारेर सुखदुःख सबैकन ।
ब्रह्मले जीवमा दिन्छ पूर्वाग्रह नलीकन ॥१३३॥

हुन् [५४]धर्माधर्म प्राणीका असाधारण कारण ।
यिनै आधारमा भोग्छन् जीव भोग चिरन्तन ॥१३४॥

[५५]धर्मले सुखको प्राप्ति दुःखप्राप्ति अधर्मले–
पाउँछन् जीव वैषम्य गर्दैन कत्ति ईशले ॥१३५॥

---

५४. पुण्यो वै पुण्येन कर्मणा भवति पापः पापेन । – बृहदारण्यकोपनिषद् ३।२।१३

५५. एष ह्येव साधु कर्म कारयति त यमेभ्यो लोकेभ्य उन्निनीषते एष उ एवासाधु कर्म कारयति तं यमधो निनीषते ।– कौषीतकीब्राह्मण ३।८

यसमा श्रुति छन् धेरै [५६]स्मृति यही बताउँछन् ।
धर्माधर्मानुसारै नै प्राणीले भोग पाउँछन् ॥१३६॥

शिष्य –

जब कर्मानुसारै नै प्राणीले भोग पाउँछ ।
भने त्यो ब्रह्मले ब्रह्मन् ! भूमिका के निभाउँछ ? ॥१३७॥

गुरु –

बीज उमार्नुमा मेघ हो साधारण कारण ।
सामर्थ्य बीजको नै हो असाधारण कारण ॥१३८॥

त्यस्तै नै भोगमा ब्रह्म हो साधारण कारण ।
हुन् धर्माधर्म प्राणीका असाधारण कारण ॥१३९॥

कर्मानुसार नै दिन्छन् सुखदुःखादि ईशले ।
लिनुपर्दैन वैषम्य नैर्घृण्य दोष ईशले ॥१४०॥

[५७]अनादि सृष्टिमा सौम्य ! बीजाङ्कुरसरी गरी ।
जन्म मृत्यु र भोगादि दिन्छ कर्म सधैँभरि ॥१४१॥

यसमा [५८]सूत्र छन् तीन एउटै भन्दछन् सबै ।
वैषम्यादिक ती दोष लाग्दैनन् ब्रह्ममा कबै ॥१४२॥



५६. ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम् । – गीता ४।११
५७. न रूपमस्येह तथोपलभ्यते नान्तो न चादिर्न च सम्प्रतिष्ठा । – गीता १५।३
५८. वैषम्यनैर्घृण्ये न सापेक्षत्वात्तथा हि दर्शयति । – ब्रह्मसूत्र २।१।१२।३४–३६

## १३. सर्वधर्मोपपत्त्यधिकरण (ब्रह्मसूत्र २।१।१३।३७)

शिष्य –

जो हो प्रकृति निर्गौणी के उपादानकारण –
हुनसक्छ ? कि ! सत्तैन ? भयो सन्दिग्ध यो मन ॥१४३॥

यसमा पूर्वपक्षीले हुन सत्तैन निर्गुणी ।
उपादान भनी दिन्छन् मृत्तिका हो गुणी भनी ॥१४४॥

जसरी घटका लागि मृत्तिका बन्छ कारण ।
निर्गुणी बन्न सत्तैन सगुणी बन्छ कारण ॥१४५॥

भन्नुहोस् गुरुजी ! बन्छ ? निर्गुण ब्रह्म कारण ।
अथवा बन्न सत्तैन गर्नोस् शङ्का निवारण ॥१४६॥

गुरु –

[५९]कार्यरूप भई देखा पर्ने प्रकृति हो जुन ।
भनिन्छ त्यसलाई नै हो उपादानकारण ॥१४७॥

विकारका दुई रूप दूधबाट दही हुने ।
दोस्रो हो रज्जुमा सर्प नभए पनि देखिने ॥१४८॥

हो अधिष्ठान डोरी त्यो सर्पको भ्रमकारण ।
अन्ततः निर्गुणी ब्रह्म अधिष्ठानात्म कारण ॥१४९॥

बन्ने सगुणका लागि निर्गुण मुख्य कारण ।
माथि नै भनियो ब्रह्म हो उपादानकारण ॥१५०॥

---

५९. प्रक्रियते अनया प्रकृतिः ।

अतः बन्दछ निर्गौणी आद्या प्रकृति कारण ।
यसको हो अधिष्ठान निर्गुणी ब्रह्म कारण ॥१५१॥

सर्वज्ञ शक्तिमान् [६०]ब्रह्म मायायुक्त भईकन ।
निर्गुणी ब्रह्मले गर्छ सगुणी सृष्टि सर्जन ॥१५२॥

त्यसैकारण निर्गौणी ब्रह्म प्रकृतिकारण ।
ब्रह्मवैवर्त्य हो सृष्टि त्यो उपादानकारण ॥१५३॥

भ्रमको जो अधिष्ठान त्यो नै प्रकृति निर्गुण ।
निर्गुण ब्रह्म साराको हो उपादानकारण ॥१५४॥

यसमा [६१]सूत्र यौटै छ यसले प्रतिपादन ।
निर्गुण ब्रह्मको गर्छ सृष्टिको मूलकारण ॥१५५॥

ब्रह्मसूत्रको द्वितीय अध्यायको प्रथम पादको कारिका पूरा भयो ।



६०. सर्वज्ञं सर्वशक्तिर्महामायाञ्च ब्रह्म ।
६१. सर्वधर्मोपपत्तेश्च । – ब्रह्मसूत्र २।१।१३।३७

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

# द्वितीय अविरोधाध्याय

द्वितीये स्मृतितर्काभ्यामविरोधोऽन्यदुष्टता ।
भूतभोक्तृश्रुतेर्लिङ्गश्रुतेरप्यविरुद्धता ॥

## द्वितीय पाद

(यस पादमा रचनानुपपत्तिदेखि उत्पत्त्यसम्भवसहित ८ अधिकरणहरू छन् र यसमा साङ्ख्य आदि मतको परिहार गरिएको छ ।)

### १. रचनानुपपत्त्यधिकरण ( ब्रह्मसूत्र २।२।१।१–१० )

शिष्य –

जगत्को हेतु साङ्ख्योक्त प्रधान हो ? कि ! होइन ?
सन्देह यसमा लाग्यो अति चञ्चल भो मन ॥१॥

घटादि जड मायाको विकार कार्यवैभव ।
सुख दुःख र मोहाक्त त्रिगुणात्मक हुन् सब ॥२॥

प्रधानमा रहन्छन् यी तीनोटा गुण वस्तुतः ।
जगत् यो त्रिगुणैबाट रचना हुन्छ तत्त्वतः ॥३॥

त्यसैकारण साङ्ख्योक्त प्रधान सृष्टिहेतु हो ।
भन्दछन् साङ्ख्यवादीले भन्नुहोस् सृष्टिहेतु हो ? ॥४॥

गुरु –

देह इन्द्रिय शैलादि असाधारण सर्जन ।
जड प्रधानले गर्न सक्तैन विश्वसर्जन ॥५॥

व्यावहारिक जो कार्य राम्रा संरचना सब ।
अत्यन्त बुद्धिसम्पन्न मान्छेबाटै छ सम्भव ॥६॥

प्रधानले अधिष्ठाता पाई पुरुषसंश्रय ।
रचना गर्छ मान्दामा असङ्गता हुने क्षय ॥७॥

घटादि सुखका साथै दुःख मोहाक्त हुन् भनी ।
मान्दामा पनि मिल्दैन सबै नै बाह्य हुन् तिनि ॥८॥

अतः सुख र दुःखादि वस्तु आन्तर निश्चय ।
घटादि वस्तु हुन् बाह्य असम्भव समन्वय ॥९॥

[१]सृष्टिमा साङ्ख्यवादीको मत छैन सुसङ्गत ।
भ्रान्तिमूलक हो साङ्ख्य प्रधान हुन्छ खण्डित ॥१०॥

शुरुमै [२]साङ्ख्यसिद्धान्त युक्त छैन भनीकन ।
जडकारणवादीको मत भाको छ खण्डन ॥११॥

जड प्रधान सक्तैन सृष्टि गर्न भनीकन ।
शुरुमा नै भएको छ 'ईक्षतेः' बाट खण्डन ॥१२॥

साङ्ख्यका मतमा छैन सृष्टिसिद्धान्त निश्चित ।
यसैकारणले हुन्छ साङ्ख्यको मत खण्डित ॥१३॥

---

१. विप्रतिषेधाच्चासमञ्जसम् । – ब्रह्मसूत्र २।२।१।१०
२. ईक्षतेर्नाशब्दम् । – ब्रह्मसूत्र १।१।५।५

यसमा दश छन् [३]सूत्र प्रकारान्तर तत्त्वतः ।
सृष्टिमा साङ्ख्यसिद्धान्त हो भन्दछन् असङ्गत ॥१४॥



## २. महद्दीर्घाधिकरण (ब्रह्मसूत्र २।२।२।११)

शिष्य –

असादृश्य भए हेतु सादृश्य कार्य सम्भव ।
हुन सक्तैन भन्ने हो काणाद मत नै अब ॥१५॥

कतै कारणदेखिन्को पृथक् त्यो कार्य हुन्छ र ?
माटोबाटै घडा बन्छ अन्यले बन्न सक्छ र ? ॥१६॥

श्वेत वस्त्र सधैँ बन्छ सेतो धागो लिईकन ।
बन्दैन रक्त धागोले श्वेत वस्त्र कदाचन ॥१७॥

गुण कारणका जान्छन् कार्यमा सदृशै बनी ।
भन्ने सादृश्यसिद्धान्त काणाद मत हो त नि ॥१८॥

यसरी पूर्वपक्षीको मतमा उठ्छ संशय ।
कार्यकारणसिद्धान्त माथि नै भो अनिश्चय ॥१९॥

काणादमत हो युक्त ? अथवा युक्त होइन ?
भन्नुहोस् गुरुजी ! मेरो जिज्ञासा यो बुझीकन ॥२०॥

गुरु –

पहिलो पाउमा आयो चितिद्वारा अचेतन ।
वैलक्षण्य हुने सृष्टि बिच्छी गोबर दीकन ॥२१॥

---

३. रचनानुपपत्तेश्च नानुमानम् । – ब्रह्मसूत्र २।२।१।१

कार्यकारणसादृश्य अब वैशेषिकी मत ।
हुन्छ खण्डित सोभै नै उनकै मतले स्वतः ॥२२॥

पारिमाण्डल्य जो हो त्यो भनिन्छ परमाणुको ।
हो परिमाणले युक्त अयुक्त अणुमानको ॥२३॥

त्यो ह्रस्व द्व्यणुकैबाट दीर्घ त्र्यणुक बन्दछ ।
अणुले पारिमाण्डल्य महद् द्व्यणुक बन्दछ ॥२४॥

काणादमत यै हो सृष्टिकारणमा पनि ।
हो वैसादृश्य उत्पत्ति काणाद मतमा पनि ॥२५॥

काणादमत देखिन्छ अद्वैतमतकै सरी ।
चितिकारणबाटै नै अचित् उत्पत्तिकै सरी ॥२६॥

सादृश्य कार्य उत्पत्ति काणादमत खण्डन ।
हुन्छ, अद्वैतमतको यहाँ सर्वांश मण्डन ॥२७॥

यसमा [४]सूत्र यौटा छ सर्वांशरूपमा गई ।
काणादमत सादृश्य अस्वीकार्य भयो गई ॥२८॥



## ३. परमाणुजगदकारणत्वाधिकरण (ब्रह्मसूत्र २।२।३।१२–१७)

विषय –
संयुक्त परमाणु त्यो जगत्कारण बन्दछ ?
बन्दैन ? अथवा सारै सन्देह भित्र लाग्दछ ॥२९॥

---

४. महद्दीर्घवद् वा ह्रस्वपरिमण्डलाभ्याम् । – ब्रह्मसूत्र २।२।२।११

सृष्टिका पूर्वमा कर्मजन्य संयोगले गरी।
परमाणु गई मिल्छ द्व्यणुकादि क्रमै गरी ॥३०॥

मिल्दै गै अणुबाटै नै जगत् विशाल बन्दछ।
काणादमतले यो नै दृढतासाथ भन्दछ ॥३१॥

भन्नुहोस् गुरुजी ! के यो काणादमत युक्त हो ?
जिज्ञासा अति नै जाग्यो सिद्धान्त कुन युक्त हो ? ॥३२॥

गुरु –
सनिमित्तक हो कर्म ? अथवा हो अनिमित्तक ?
विकल्प यसमा आयो निमित्त अनिमित्तिक ॥३३॥

पैलो निमित्त बन्दैन आदि कर्म असम्भव।
अनिमित्तिक मानेमा प्रलयोत्पत्ति दुर्लभ ॥३४॥

कर्माभाव जसै हुन्छ संयोग छ असम्भव।
संयोगाभावले गर्दा जगत्सृष्टि असम्भव ॥३५॥

[५]मन्वादि शिष्टकाद्वारा अस्वीकार्य छ यो मत।
कल्याणार्थीहरूद्वारा हेय मानिन्छ यो मत ॥३६॥

६ ओटा यसमा [६]सूत्र यौटै छ सबको मत।
यिनबाट भएको छ अणुवाद विखण्डित ॥३७॥



५. अपरिग्रहाच्चात्यन्तमनपेक्षा। – ब्रह्मसूत्र २।२।३।१७
६. उभयथापि न कर्मास्तदभावः। – ब्रह्मसूत्र २।२।३।१२–१७

## ४. समुदायाधिकरण (ब्रह्मसूत्र २।२।४।१८–२७)

शिष्य –

[७]बाह्यातिरिक्त अर्को छ [८]आभ्यान्तर गरीकन ।
बाह्य अस्तित्ववादीका समुदाय दुई जुन ।।३८।।

परमाणु मिली बन्छन् ती समुदाय बाहिरी ।
[९]स्कन्धहेतुक हुन् भित्री यी समुदायले गरी ।।३९।।

जगत् उत्पत्ति यीबाट कसरी हुन सक्तछ ?
भयो सन्देह हे ब्रह्मन् ! भन्नोस् के हुन सक्तछ ? ।।४०।।

गुरु –

समुदाय यी हुन् बाह्य पृथ्वी नदी समुद्र ती ।
आन्तर समुदायै हुन् चित्तै र चैत्यरूप ती ।।४१।।

समुदाय यी हुन् यौटै जगद्रूप समग्रमा ।
भन्ने सिद्धान्त देखिन्छ सर्वास्तिवादी बौद्धमा ।।४२।।

बाहिरी समुदायैका कारणै परमाणु हुन् ।
तीभित्र समुदायैका कारणै पञ्चस्कन्ध हुन् ।।४३।।

सङ्घातोत्पत्तिका लागि निमित्तभूत चेतन ।
नहुँदा हुन सक्तैन विज्ञानी सृष्टि नै हुन ।।४४।।

---

७. बाह्य समुदाय हुन् – पृथिवी, नदी, समुद्र आदि ।

८. आन्तर समुदाय हुन् – चित्त र चैत्यरूप ।

९. पाँच स्कन्धहरू हुन् – रूपस्कन्ध, विज्ञानस्कन्ध, वेदनास्कन्ध, संज्ञास्कन्ध र संस्कारस्कन्ध । यी आध्यात्मिक हुन् । यी सबै व्यवहारका विषयका रूपले सङ्घीभूत हुन्छन् ।

अचेतन भएकाले त्यो स्कन्ध परमाणुको ।
त्यो समुदाय बन्दैन हुन्छ खण्डन सृष्टिको ॥४५॥

यसमा दश छन् [१०]सूत्र सबैले स्कन्ध आदिको ।
गर्छन् खण्डन सोझै नै समुदाय र स्कन्धको ॥४६॥



## ५. अभावाधिकरण (ब्रह्मसूत्र २।२।५।२८–३२)

शिष्य –

बौद्धविज्ञानवादीले खाली विज्ञान मान्दछन् ।
पदार्थ बाहिरी छैनन् भनी आन्तर मान्दछन् ॥४७॥

विज्ञानी बौद्धसिद्धान्त युक्त हो ? कि ! अयुक्त हो ?
सन्देह यसमा आयो के यो सिद्धान्त युक्त हो ? ॥४८॥

पूर्वपक्षीहरू भन्छन् विज्ञानस्कन्धमात्रता –
युक्त हो यसमा नै छ सिद्धान्तभित्र युक्तता ॥४९॥

जसरी सपनाभित्र पदार्थै नभईकन ।
बुद्धिकै भरमा चल्छन् व्यवहार अनेकन ॥५०॥

त्यसै गरेर जाग्रत्का चल्दछन् व्यवहार ता ।
भन्छन् के उपयुक्तै हो ? विज्ञानस्कन्धमात्रता ॥५१॥

गुरु –

जाग्रत्मा स्वप्न दृष्टान्त यो ता विषम नै भयो ।
जाग्रत्मा स्वप्नको कार्य सम्पूर्ण बाध नै भयो ॥५२॥

---

१०. समुदाय उभयहेतुकेऽपि तदप्राप्तिः । – ब्रह्मसूत्र २।२।४।२८–३२

जाग्रद्का व्यावहारादि बाध हुन्नन् कतै पनि ।
बाह्य पदार्थको लब्धि मान्दछन् जसले पनि ॥५३॥

योविना काम चल्दैन आन्तर्विज्ञानमात्रले ।
'बहिर्वत्' उक्ति वादीको मिल्दैन व्यवहारले ॥५४॥

क्षणिकै मान्छ वादीले विज्ञान आलयै पनि ।
बन्न सक्तैन विज्ञान वासना आश्रयै पनि ॥५५॥

बाह्य पदार्थको ज्ञान वासना प्रतिकारण ।
नहुँदा बाहिरी वस्तु वासना भो निवारण ॥५६॥

जाग्रत् र स्वप्नको ज्ञान अबाधित र बाधित ।
वैधर्म्य स्वप्न दृष्टान्त जाग्रत् बन्दैन बाधित ॥५७॥

विज्ञानवादसिद्धान्त बाध हुन्छ जसै स्वतः ।
वैभाषिकसँगै हुन्छन् शून्य सौत्रान्त बाधित ॥५८॥

वादीको ग्रन्थ औ अर्थ असङ्गत दुवै भए ।
कल्याण दिन सक्तैनन् भ्रान्तिमूलक यी भए ॥५९॥

अतः विज्ञानवादीको निराधार छ यो मत ।
यो हो कल्पित सर्वांश आधारशून्य तत्त्वतः ॥६०॥

यसमा [११]सूत्र छन् पाँच ऊहापोह गरीकन ।
विज्ञानवादको गर्छन् सबैले मतखण्डन ॥६१॥



११. नाभाव उपलब्धेः । – ब्रह्मसूत्र २।२।५६।२८–३२

## ६. एकस्मिन्नसम्भवाधिकरण (ब्रह्मसूत्र २।२।६।३३–३६)

शिष्य –

[१२]सप्तभङ्गीन्यायसिद्धिद्वारा [१३]सप्तपदार्थको ।
हुन्छ ज्ञान भनी आयो सिद्धान्त जैनपक्षको ।।६२।।

यो सप्तभङ्गीसिद्धान्त देखिन्छ नै अनिश्चित ।
'स्याद्वाद'माथि सन्देह उत्पन्न भो सुनिश्चित ।।६३।।

यसमा जैनपक्षीको साधकन्यायसम्प्लुत ।
अस्तित्वले हुने प्राप्त सिद्धि हो त्यो यथार्थतः ।।६४।।

भन्नुहोस् गुरुजी के हो ? जैनसम्प्रदायको मत ।
हो मोक्षरूप के कस्तो ? के हुन् साधन वस्तुतः ।।६५।।

गुरु –

जैनसिद्धान्त हो सप्तभङ्गाख्य न्यायसाधक ।
स्यादस्ति आदि अस्तित्व यिनै हुन् सिद्धिदायक ।।६६।।

सप्तभङ्गी छ जो न्याय त्यो अपन्याय बन्दछ ।
एउटै जीवलाई त्यो सद्-असद्-रूप भन्दछ ।।६७

जीव सावयवी मान्छ अत्यन्त गल्ति गर्दछ ।
मान्दा सावयवी जीव अनित्य जीव बन्दछ ।।६८।।

---

१२. स्यादस्ति, स्यान्नास्ति, स्यादस्ति च नास्ति च स्याद्वक्तव्यः, स्यादस्ति चावक्तव्यश्च, स्यान्नास्ति चावक्तव्यश्च, स्यादस्ति च नास्ति चावक्तव्यश्च ।

१३. जीव, अजीव, आस्रव, स्संवर, निर्जर, बन्ध र मोक्ष ।

वेढङ्गी जैनवादीको सिद्धान्तबाट जो हुने ।
मोक्षरूप पुरुषार्थ को हो ? अन्तिम पाउने ॥६९॥

यो न्याय सप्तभङ्गीले जीवादि सात वस्तुको ।
कुनै हालतमा सिद्धि हुन सक्तैन जैनको ॥७०॥

साध्य छैन यहाँ लेखी बेढङ्गी मत यी सब ।
टिप्पणीरूपमा दिन्छु [१४]सङ्क्षिप्तरूपमा अब ॥७१॥

यसमा [१५]सूत्र छन् चार सबैले मत आर्हत ।
गर्छन् खण्डन तस्मात् यो मत हुन्छ अनादृत ॥७२॥



## ७. पत्यधिकरण (ब्रह्मसूत्र २।२।७।३७–४१)

शिष्य –
हो ईश्वर सधैँ साक्षी तटस्थ हो परात्पर ।
सृष्टिकारण बन्ला ? त्यो न वा ? सन्देह भो तर ॥७३॥

योगी र साङ्ख्यवादी ती दृष्टान्त कुम्भकारको ।
दिई, निमित्त हो हेतु भन्छन् ईश्वर सृष्टिको ॥७४॥

---

१४. सङ्क्षेपमा दुई पदार्थहरू – जीव र अजीव । यिनको यथायोग्य एउटाको अर्कोमा अन्तर्भाव हुने भनेर मान्दछन् । ती हुन् – जीवास्तिकाय, पुद्‍गलास्तिकाय, धर्मास्तिकाय, अधर्मास्तिकाय र आकाशास्तिकाय । यी पाँच अस्तिकायसमेत सबै आर्हतमत युक्ति र प्रमाणले शून्य उनका शास्त्रमा केवल कल्पित हुन् ।
१५. नैकस्मिन्नसम्भवात् । – ब्रह्मसूत्र २।२।६।३३–३६

उदाहरण दिँदै भन्छन् अनुपादान हेतु हो ।
कुलालतुल्य हो ईश नियन्तामात्र मुख्य हो ।।७५।।

यसमा अब भो शङ्का के ईश्वर निमित्त हो ?
उपादान कि वा ब्रह्मन् ! दुवै कारण ईश हो ? ।।७६।।

गुरु –
योभन्दा पहिले ईश उपादान निमित्त हो ।
भनेर मानियो फेरि आयो मात्र कुतर्क हो ।।७७।।

निमित्तवाद मानेमा हुने छ यो अवैदिक ।
ईशमा दोष नैर्घृण्य लाग्लान् वैषम्य तात्त्विक ।।७८।।

त्यसैकारणले ईश तटस्थ हुन्छ सृष्टिमा ।
सापेक्ष कर्म हो मात्र प्राणीका सृष्टिकार्यमा ।।७९।।

यसले दोष लाग्दैन तटस्थ बस्छ ईश्वर ।
वेदले पनि यै भन्छ [१६]साक्षी चेतन ईश्वर ।।८०।।

यसमा पाँच छन् [१७]सूत्र सबैको एउटै स्वर ।
द्रष्टा ईश्वर हो साक्षी निर्लेप जगदीश्वर ।।८१।।



१६. एको देवः सर्वभूतेषु गूढः सर्वव्यापी सर्वभूतान्तरात्मा । कर्माध्यक्षःसर्वभूताधिवासः साक्षी चेता केवलो निर्गुणश्च ।। – श्वेताश्वतरोपनिषद् ६।११
१७. पत्युरसामञ्जस्यात् । – ब्रह्मसूत्र २।२।७।३७–४१

## ८. उत्पत्यसम्भवाधिकरण (ब्रह्मसूत्र २।२।८।४२–३५)

शिष्य –

त्यो पाञ्चरात्रसिद्धान्त त्योबाट प्रतिपादित–
जीव-उत्पत्ति बारेमा सन्देह भो सुनिश्चित ।।८२।।

जसरी वासुदेवै र उनको पूजनादिक ।
युक्त मानिन्छ त्यस्तै नै जीव उत्पत्ति आदिक ।।८३।।

यसरी पूर्वपक्षीको मत आयो सुनिश्चित ।
युक्त हो अथवा हैन भन्नोस् गुरुजी ! निश्चित ।।८४।।

गुरु –

उनका मतमा एक भगवान् वासुदेव हुन् ।
निमित्त उपदानादि उनी कारण एक हुन् ।।८५।।

जीव उत्पत्ति ती हुन्छन् वासुदेव क्रमैसँग ।
सङ्कर्षण र प्रद्युम्न अनिरुद्ध क्रमैसँग ।।८६।।

यसरी जीवबाटै नै जीव उत्पत्तिको मत ।
श्रुतिसम्मत देखिन्न शिष्टबाट बहिष्कृत ।।८७।।

उपासना र पूजादि वासुदेव भनीकन ।
मानिन्छ तर मानिन्न जीवोत्पत्ति कदाचन ? ।।८८।।

चार व्यूह जीवोत्पत्ति नाश सिद्धान्त यी सब ।
अवैदिक भएकाले मान्न हुन्छ असम्भव ।।८९।।

हुँदामा जीव उत्पत्ति नाश हुन्छन् सबै गई ।
कर्मसंस्कार नासिन्छन् एकछत्त सबै भई ।।९०।।

नवीन जीव जन्मन्छन् संहार पछि सृष्टिमा ।
पूर्वसंस्कार धर्मादि हुँदैनन् नवसृष्टिमा ॥९१॥

गरेको कर्म नाशिन्छन् जीव उत्पत्तिमा जुन ।
[18]नगरेका आइलाग्छन् गरेका नाश भैकन ॥९२॥

जीवात्मा नाश नै हुन्न वैदिकी मतमा तर ।
यो पाञ्चरात्रले मान्छ अवैदिक भयङ्कर ॥९३॥

सिद्धान्त जीव उत्पत्ति करणादिकबाट यो ।
असम्भव छ सोझै नै अव्यवहारिक हुन्छ यो ॥९४॥

गुणी र गुणको भेद छैन स्पष्ट गरीकन ।
विरुद्ध मत देखिन्छ परस्पर मिलीकन ॥९५॥

शाण्डिल्य मुनिले लेखे यो पाञ्चरात्र आगम ।
वेदैविरुद्धमा लेखे अस्वीकार्य छ आगम ॥९६॥

अतः आराधना आदि ती स्वीकार्य भए पनि ।
उत्पत्ति आदि सिद्धान्त मानिन्नन् कहिल्यै पनि ॥९७॥

यसमा [19]सूत्र छन् चार सबैको एउटै मत ।
उत्पत्ति आदि सिद्धान्त पाञ्चरात्र असम्मत ॥९८॥

ब्रह्मसूत्रको दोस्रो अध्यायको द्वितीय पादको कारिका पूरा भयो ।



१८. अकृताभ्यागमः कृतप्रणाशः ।
१९. उत्पत्त्यसम्भवात् । – ब्रह्मसूत्र २।२।८।४–४५

ॐ तत्सद्ब्रह्मणे नमः

# ब्रह्मसूत्र

## द्वितीय अविरोधाध्यायः

## तृतीय पाद

(यस पादमा वियद्देखि अंश सहित १७ अधिकरणहरू छन्, यसमा पञ्चमहाभूत र जीवादिको सम्बन्धमा श्रुतिमा देखिएको परस्पर विरोधको परिहार गरिएको छ।)

### १. वियदधिकरण ( ब्रह्मसूत्र २।३।१।१–७ )

शिष्य –

आकाश नित्य हो यद्वा अनित्य हो भनीकन।
विप्रपत्ति उठेको छ अत्यन्त सुन्न भो मन ॥१॥

पूर्वपक्षीहरू भन्छन् 'तस्माद्वा' श्रुतिले जुन।
भने तापनि मिल्दैन कारणत्रयका विना ॥२॥

समवायसँगै दोस्रो असमवाय कारण।
तेस्रो निमित्त चाहिन्छ उत्पत्तिनिम्ति कारण ॥३॥

उत्पन्न कसरी हुन्छ ? आकाश कारणैविना।
त्यसैकारण आकाश नित्य हो संशयैविना ॥४॥

उत्पन्न हुन्न आकाश श्रुतिमा छैन यो मत।
अतः आकाश हो नित्य सर्वदर्शनसम्मत ॥५॥

यसरी पूर्वपक्षी ती कारणत्रय दीकन ।
भन्छन्, हो नित्य आकाश ? यद्वा त्यो नित्य होइन ? ॥६॥

गुरु –

पूर्वपक्षीहरू भन्छन् आफ्नै सिद्धान्तको मत ।
अद्वैतवादमा छैन महत्त्व कत्ति तत्त्वतः ॥७॥

छान्दोग्य श्रुतिमा छैन आकाशोत्पत्ति कण्ठतः ।
[1]तैत्तिरीयकले भन्छ आकाशोपत्ति तत्त्वतः ॥८॥

[2]एउटा वस्तु जान्नाले सम्पूर्ण वस्तु जानिने ।
श्रुतिसिद्धान्त हो माटो जाने घटादि जानिने ॥९॥

[3]ब्रह्मको कार्य आकाश ब्रह्म जान्दा स्वतः सबै ।
जानिन्छन् अनुमानादि लाग्दैनन् यसमा कबै ॥१०॥

सृष्टिका शुरुमा यौटा [4]सदात्मामात्र नै थियो ।
प्रतिज्ञा श्रुतिले गर्छ त्यैबाट सृष्टि फैलियो ॥११॥

उपक्रमोपसंहार श्रुतिको बुझ्नुपर्दछ ।
सम्पूर्ण सृष्टिको हेतु ब्रह्म हो जान्नुपर्दछ ॥१२॥

श्रुतिका मन्त्रले भन्छन् प्रत्यक्ष र परोक्षले ।
सृष्टिकारण हो ब्रह्म उपादान निमित्तले ॥१३॥

---

१. तस्माद् वा एतस्मादात्मन आकाशः सम्भूतः । – तैत्तिरीयोपनिषद् २।१।१

२. एकस्मिन् विदिते सर्वं विदितम् । – छान्दोग्योपनिषद् ६।१।३

३. क. आत्मनि खल्वरे दृष्टे श्रुते मते विज्ञात इदं सर्वं विदितम् ।
– बृहदारण्यकोपनिषद् ४।५।६

ख. येनाश्रुतं श्रुतं भवत्यमतं मतमविज्ञातं विज्ञातम् । – छान्दोग्योपनिषद् ६।१।१

४. सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् । – छान्दोग्योपनिषद् ६।२।१

विकार जति छन् हुन्छन् परस्पर विभाजित ।
सुराही, घटजस्तै नै आकाश छ विभाजित ॥१४॥

त्यसैकारण आकाश हो ब्रह्मबाट निर्मित ।
रचना जति छन् सौम्य ! हुन्छन् अनित्य वस्तुतः ॥१५॥

आरम्भवादमा होलान् यी कारण अपेक्षित ।
विवर्तवादमा किन्तु हुँदैनन् ती अपेक्षित ॥१६॥

पूर्वोक्त श्रुतिका साथै युक्ति प्रमाणले पनि ।
ठानिन्न नित्य आकाश अतः अनित्य यो पनि ॥१७॥

यसमा सात छन् [५]सूत्र पूर्व उत्तर भैकन ।
भनी अनित्य आकाश गर्दछन् प्रतिपादन ॥१८॥



## २. मातरिश्वाधिकरण (ब्रह्मसूत्र २।३।२।८)

शिष्य –

वायु हो नित्य ? वा हैन भन्ने सन्देहमा तर ।
पूर्वपक्ष यहाँ भन्छ वायु नित्य सधैँभर ॥१९॥

[६]'सैषाऽनास्तमिता' वाक्य श्रुतिप्रमाण लीकन ।
भन्दछन् वायु हो द्यौता अविनाशी चिरन्तन ॥२०॥

भन्नुहोस् गुरुजी ! वायु नित्य हो ? कि ! अनित्य हो ?
जिज्ञासा मनमा जाग्यो वायु त्यो कुन वस्तु हो ? ॥२१॥

---

५. न वियदश्रुतेः – ब्रह्मसूत्र २।३।१।१–७

६. सैषाऽनस्तमिता देवता यद्वायुः । – बृहदारण्यकोपनिषद् १।५।२२

गुरु –

छान्दोग्यश्रुतिमा छैन वायु-उत्पत्ति कण्ठतः ।
तैत्तिरीमा गई हुन्छ छान्दोग्य उपसंहृत ॥२२॥

वायु नित्य भनी मान्ने श्रुति त्यो मुख्य होइन ।
उपासनार्थ आएको स्तुत्यर्थमात्र हो जुन ॥२३॥

[७]सदात्माबाट आकाश त्योबाट वायु जन्मने ।
यसरी वायु जन्मन्छ पारम्परिक यो हुने ॥२४॥

अतः आकाशजस्तै नै वायु उत्पत्तियुक्त हो ।
अनित्य जन्मने हुन्छ तस्मात् वायु अनित्य हो ॥२५॥

यौटा छ यसमा [८]सूत्र वायु अनित्य भन्दछ ।
आत्माबाहेक सम्पूर्ण अनित्य सूत्र मान्दछ ॥२६॥



## ३. असम्भवाधिकरण (ब्रह्मसूत्र २।३।३।९)

शिष्य –

सद्रूप ब्रह्मको जन्म हुँदैन ? हुन्छ ? वा भनी ।
विप्रपत्ति उठेको छ पूर्वपक्षी स्वयं बनी ॥२७॥

[९]'सदेव' श्रुतिको मन्त्र ली भन्छन् तर्क नै गरी ।
सद्रूप ब्रह्म जन्मन्छ हो कारण वियत्-सरी ॥२८॥

---

७. तस्माद्वा एतस्मादात्मन आकाशः सम्भूतः, आकाशाद्वायुः ।
– तैत्तिरीयोपनिषद् २।१।१

८. एतेन मातरिश्वा व्याख्यातः । – ब्रह्मसूत्र २।३।२।८

९. सदेव सौम्येदमग्र आसीत् । – छान्दोग्योपनिषद् ६।२।१

यसरी गुरुजी ! आयो वादीको मत वस्तुतः ।
जन्मन्छ ? अथवा ब्रह्म जन्मन्न ? कि त तत्त्वतः ॥२९॥

गुरु –
सद्रूप ब्रह्मको जन्म हुन सक्तैन सर्वथा ।
विश्व ब्रह्माण्ड जन्मन्छन् ब्रह्मैबाट त सर्वदा ॥३०॥

हो कारण उपादान सिद्ध वस्तु स्वयं पनि ।
आकाशतुल्य उत्पन्न त्यो हुन्छ कसरी ? अनि ॥३१॥

त्यो तर्क पूर्वपक्षीको लागू हुँदैन ब्रह्ममा ।
यो कुरा स्पष्ट देखिन्छ विभिन्न वेदवाक्यमा ॥३२॥

[१०]महान् अज पिता भन्छन् उनै हुन् सर्वकारण ।
कुतर्क पूर्वपक्षीको श्रुति गर्छ निवारण ॥३३॥

[११]असत् कारण बन्दैन सद्ब्रह्मको कसै पनि ।
अतः सद्ब्रह्म उत्पन्न नहुने सिद्ध भो अनि ॥३४॥

यसमा [१२]सूत्र यौटा छ सद्ब्रह्म नित्य भन्दछ ।
कुतर्क पूर्वपक्षीको यल्ले खण्डन गर्दछ ॥३५॥



१०. स कारणं कारणाधिपाधिपो न चास्य कश्चिज्जनिता न चाधिपः ।
– श्वेताश्वतरोपनिषद् ६।९

११. कथमसतः सज्जायेत । – छान्दोग्योपनिषद् ८।७।१

१२. असम्भवस्तु सतोऽनुपपत्तेः । – ब्रह्मसूत्र २।३।३।९

## ४. तेजोऽधिकरण (ब्रह्मसूत्र २।३।४।१०)

शिष्य –

ब्रह्मबाट सिधै अग्नि उत्पन्न हुन्छ ? हुन्न ? कि ?
सन्देह यसमा आयो जन्मन्छ ? वायुबाट कि ? ॥३६॥

यसमा पूर्वपक्षी ती 'तत्तेजः' श्रुति लीकन ।
ब्रह्मबाट त जन्मन्छ अग्नि भन्छन् बुझीकन ॥३७॥

त्यो अग्नि जन्मने ब्रह्मबाट वा वायुबाट हो ?
भन्नुहोस् गुरुजी ! वायु जन्मिने कसबाट हो ? ॥३८॥

गुरु –

[१३]'वायोरग्निः' भनी आयो श्रुतिमा स्पष्ट नै जब ।
ब्रह्मबाट सिधै जन्म अग्निको हुन्न सम्भव ॥३९॥

'वायोरग्निः' छ जो वाक्य 'तत्तेजः' सँग गैकन ।
एकवाक्य हुँदा वायु सोझै कारण होइन ॥४०॥

वायुस्वरूप हो ब्रह्म ऊबाटै जन्म अग्निको ।
हुने वैदिक सिद्धान्त देखिन्छ अन्ततः निको ॥४१॥

विरोध श्रुतिको छैन यही सिद्धान्त निश्चय ।
यसरी श्रुतिको हुन्छ पूर्वापर समन्वय ॥४२॥

---

१३. तस्माद्वा एतस्मादात्मन आकाशः सम्भूतः, आकाशाद्वायुः, वायोरग्निः ।
– तैत्तिरीयोपनिषद् २।१।१

यसमा [14]सूत्र यौटा छ भन्छ श्रुति बुझीकन ।
वायुरूपत्व आत्माले अग्निको गर्छ सिर्जन ॥४३॥



## ५. अबधिकरण (ब्रह्मसूत्र २।३।५।११)

शिष्य –
[15]'तदपो' श्रुतिका साथै [16]'अग्नेरापः' लिईकन ।
त्यो अग्निबाट नै आपः उत्पन्न हुन्छ ? होइन ? ॥४४॥

यस्तो सन्देहमा वादी भन्छन् कुतर्क ली तब ।
नाश्यनाशकको हुन्न कार्यकारण सम्भव ॥४५॥

नाश्य हो अग्नि हे विद्वन् ! जल हो अग्निनाशक ।
उत्पन्न कसरी हुन्छ ? जल त्यो भन्नुहोस् अब ॥४६॥
गुरु –
पञ्चीकृताग्नि जो अग्नि त्यसमा अनि आपमा ।
नाश्यनाशक देखिन्छ देखिन्न शुद्ध अग्निमा ॥४७॥

अपञ्चीकृतमा छैन नाश्यनाशकभाव नै ।
अतीन्द्रिय अवस्था त्यो जानिन्छ श्रुतिबाट नै ॥४८॥

अग्निरूप लिने ब्रह्म जलको बन्छ कारण ।
बध्यबाधक आपत्ति हुन्छ स्वतः निवारण ॥४९॥

---

१४. तेजोऽतस्तथा ह्याह । – ब्रह्मसूत्र २।३।४।१०
१५. तदपोऽसृजत । – छान्दोग्योपनिषद् ६।२।३
१६. अग्नेरापः । – तैत्तिरीयोपनिषद् २।१।२

अन्ततः जल उत्पन्न हुने सिद्धान्त हो जुन ।
जलकारण हो ब्रह्म परम्परा भईकन ॥५०॥

यसमा [१७]सूत्र यौटै छ [१८]श्रुतिकै मत बोल्दछ ।
अग्निका रूपले युक्त ब्रह्मकारण बन्दछ ॥५१॥



## ६. पृथिव्यधिकाराधिकरण (ब्रह्मसूत्र २।३।६।१२)

शिष्य –
[१९]'ता आपः' श्रुतिमा व्यक्त अन्न त्यो शब्द हो जुन ।
त्यो अन्न ब्रीहि इत्यादि हुन् ? वा पृथ्वी कि ! वा कुन ? ॥५२॥

सन्देह यसमा आयो त्यो पूर्वपक्ष सत्वर ।
व्रीह्यादि अन्न हो भन्छन् पृथिवी हैन नै तर ॥५३॥

यसमा गुरुजी ! भन्नोस् अन्न त्यो कुन वस्तु हो ?
व्रीह्यादि अन्न हुन् यद्वा पृथ्वीवाचक अन्न हो ? ॥५४॥

गुरु –
पृथ्वीवाचक हो अन्न यै हो प्रकरणै पनि ।
महाभूताख्य यो सृष्टि हो 'अद्भ्यः पृथिवी' भनी ॥५५॥

---

१७. आपः । – ब्रह्मसूत्र २।३।५।११
१८. एतस्माज्जायते प्राणो मनः सर्वेन्द्रियाणि च ।
खं वायुर्ज्योतिरापः पृथिवी विश्वस्य धारिणी ॥ – मुण्डकोपनिषद् २।१।३
१९. ता आप ऐक्षन्त बह्व्यः स्याम प्रजायेमहीति ता अन्नमसृजन्त ।
– छान्दोग्योपनिषद् ६।२।४

पानीबाट भयो सृष्टि पृथिवीको भनीकन ।
श्रुतिले भन्छ पृथ्वी हो व्रीहि हैन कदाचन ॥५६॥

त्यो [२०]'अद्भ्यः पृथिवी' भन्छन् अन्यान्य श्रुतिले पनि ।
स्पष्ट नै बुझ हे सोम्य ! पृथिवी अन्न हो भनी ॥५७॥

सृष्टिप्रकरणैभित्र 'अद्भ्यः' हो श्रुतिशंसन ।
जलका पछि पृथ्वीको हुने गर्दछ सर्जन ॥५८॥

पृथ्वी हो अन्नको हेतु त्यो साक्षात् अन्न होइन ।
त्यसैकारणले अन्न पृथ्वी हो व्रीहि होइन ॥५९॥

यसमा [२१]सूत्र यौटा छ अन्न हो पृथिवी भनी ।
सोझै नै गर्छ उद्घोष त्यो 'अद्भ्यः पृथिवी' भनी ॥६०॥



## ७. तदभिध्यानाधिकरण (ब्रह्मसूत्र २।३।७।१३)

शिष्य –

आकाशादिक सारा नै आफैँ उत्पन्न हुन् कि ! ती ।
आकाशरूप आपन्न ब्रह्मबाट हुने कि ! ती ॥६१॥

यस्तो सन्देहमा पूर्वपक्षी भन्छन् क्रमैसँग ।
आकाशादिहरूबाटै हुन्छन् उत्पन्न ती सब ॥६२॥

---

२०. अद्भ्यः पृथिवी 'तद्यदपां शर आसीत्तत्समहन्यत' सा पृथिव्यभवत् ।
– बृहदारण्यकोपनिषद् १।२।२

२१. पृथिव्यधिकाररूपशब्दान्तरेभ्यः । – ब्रह्मसूत्र २।३।६।१२

यसमा कत्ति देखिन्न ब्रह्मको उपयोगिता ।
भन्छन्, गुरो ! छ ? वा छैन ? ब्रह्मको उपयोगिता ।।६३।।

गुरु –
जे भनून् पूर्वपक्षीले [22]अन्तर्यामी बनीकन ।
आकाशभित्र गै ब्रह्म गर्छ व्योमनियन्त्रण ।।६४।।

उपलक्षण हो उक्त सम्पूर्ण सृष्टिमा पसी ।
ब्रह्मले नै सबै गर्छ नियन्त्रण स्वयं बसी ।।६५।।

उसकै शक्ति पाएर आकाशादिहरू पनि ।
सृष्टिकर्ता सरी बन्छन् जड-चेतनभैँ बनी ।।६६।।

श्रुतिले भन्छ यो सृष्टि हुन्छ [23]ईक्षणपूर्वक ।
जडले देख्न सक्तैन ब्रह्म हो सृष्टिसर्जक ।।६७।।

अतः यो सृष्टि सम्पूर्ण ब्रह्मबाटै हुने भनी ।
कण्ठतः श्रुतिले भन्छ [24]'यतो वा' स्पष्ट नै भनी ।।६८।।

यसमा [25]सूत्र यौटै छ त्यसले सृष्टिकारण ।
ब्रह्म चेतन हो भन्छ वादी गर्छ निवारण ।।६९।।



२२. यः पृथिव्यां तिष्ठन् पृथिव्या अन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयत्येष त आत्मान्तर्याम्यमृतः । – बृहदारण्यकोपनिषद् ३।७।३
२३. तदैक्षत बहु स्यां प्रजायेय । – छान्दोग्योपनिषद् ६।२।३
२४. यतो वा इमानि भूतानि जायन्ते । – तैत्तिरीयोपनिषद् ३।१।१
२५. तदभिध्यानादेव तु तल्लिङ्गात् । – ब्रह्मसूत्र २।३।७।१३

## ८. विपर्ययाधिकरण (ब्रह्मसूत्र २।३।८।८)

शिष्य –

सृष्टिका क्रमले यद्वा विपरीत गरीकन ।
हुन्छ प्रलय भन्ने नै सन्देहयुक्त भो मन ॥७०॥

पूर्वपक्षी उठी भन्छन् सृष्टिकै क्रमले गरी ।
हुन्छ प्रलय पैह्लेकै अनुलोम क्रमै गरी ॥७१॥

भन्नुहोस् गुरुजी ! स्पष्ट वैदिक कुन हो क्रम ।
शास्त्रतः सुन्न पाऊँ म नासियोस् मनको भ्रम ॥७२॥

गुरु –

गरी प्रकृतिको सृष्टि पृथ्वीसम्म पुगीकन ।
क्रमैले ब्रह्मले गर्छ यो चराचरसिर्जन ॥७३॥

सृष्टिको क्रमले हैन विपरीत लिई क्रम ।
हुन्छ प्रलय सर्वांश नलेऊ यसमा भ्रम ॥७४॥

श्रुतितः कार्यको हुन्छ गई कारणमा लय ।
[२६]'यतो वा' श्रुतिले गर्छ सृष्टिप्रलयको तय ॥७५॥

[२७]स्मृतिले पनि सर्वांश यही नै क्रम भन्दछ ।
भऱ्याङ ओर्लंदा चढ्दाजस्तै नै क्रम बन्दछ ॥७६॥

---

२६. यतो वा इमानि भूतानि जायन्ते, येन जातानि जीवन्ति, यत्प्रयन्त्यभिसंविशन्ति ।
– तैत्तिरीयोपनिषद् ३।१।१

२७. जगत्प्रतिष्ठा देवर्षे पृथिव्यप्सु प्रलीयते ।
ज्योतिष्यापः प्रलीयन्ते ज्योतिर्वायौ प्रलीयते ।
वायुःप्रलीयते व्योम्नि तच्चाव्यक्ते प्रलीयते ॥ – विष्णुपुराण

अतः प्रलय भैदिन्छ सृष्टिका विपरीत गै ।
पृथिवीबाट मिल्दै गै ब्रह्ममै मिल्छ अन्त नै ॥७७॥

सृष्टिकै क्रमले नाश भएमा कार्यकारण ।
सिद्धान्त नाश भै जान्छ, तस्मात् हुन्छ निवारण ॥७८॥

सृष्टिक्रमानुसारै नै मानेमा लयको क्रम ।
सृष्टिस्थिति र भङ्गादि नासिन्छ भै व्यतिक्रम ॥७९॥

जसरी घटको हुन्छ मृत्तिकामा गई लय ।
त्यस्तै हो लय सिद्धान्त हुन्छ कारणमा लय ॥८०॥

यसरी श्रौतसिद्धान्त गरी सङ्क्षिप्त वर्णन ।
अन्ततः पूर्वपक्षीको मतको हुन्छ खण्डन ॥८१॥

यसमा [२८]सूत्र यौटै छ यल्ले शास्त्र बुझीकन ।
वेदानुसार नै गर्छ सृष्टिप्रलय वर्णन ॥८२॥



## ९. अन्तराविज्ञानाधिकरण (ब्रह्मसूत्र २।३।९।१५)

शिष्य –

सृष्टिप्रलयको जो छ श्रौतसिद्धान्तको क्रम ।
[२९]'एतस्माज्जायते' बाट भङ्ग हुन्छ कि ! सो क्रम ॥८३॥

सन्देह यसमा आयो तर वादी भने क्रम–
भङ्ग हुन्छ सिधै भन्छन् उब्जियो मनमा भ्रम ॥८४॥

---

२८. विपर्ययेण तु क्रमोऽत उपपद्यते च । – ब्रह्मसूत्र २।३।८।१४

२९. एतस्माज्जायते प्राणो मनः सर्वेन्द्रियाणि च ।
खं वायुर्ज्योतिरापः पृथिवी विश्वस्य धारिणी ॥ – मुण्डकोपनिषद् २।१।३

भन्नुहोस् गुरुजी ! यल्ले सृष्टिको क्रमभङ्गता ।
गर्छ ? गर्दैन ? आज्ञा होस् के हो ? स्पष्ट यथार्थता ? ॥८५॥

गुरु –

ती [३०]'अन्नमय' इत्यादि ? श्रुतिका मन्त्रले पनि ।
सृष्टिका क्रमको भङ्ग गर्दैनन् कहिल्यै पनि ॥८६॥

'एतस्माज्जायते' अर्को मुण्डकश्रुतिले पनि ।
गर्दैन क्रमको भङ्ग सृष्टिको कहिल्यै पनि ॥८७॥

प्राणादि सब हुन् सृष्टि मात्र भौतिक ती जुन ।
अन्तर्भूत उतै हुन्छन् गर्दैनन् सृष्टिभञ्जन ॥८८॥

तिनले क्रमराहित्य गर्छन् उत्पत्तिवर्णन ।
ती मन्त्रबाट बन्दैन सृष्टिको क्रमभञ्जन ॥८९॥

त्यसैकारण हे सौम्य ! सृष्टिको जुन हो क्रम ।
श्रौतसिद्धान्तबाटै नै चल्ने विनाव्यतिक्रम ॥९०॥

यसमा [३१]सूत्र यौटा छ यसले सृष्टिको क्रम ।
वेदानुसार नै भन्छ नगरेर व्यतिक्रम ॥९१॥



## १०. चराचरव्यपाश्रयाधिकरण (ब्रह्मसूत्र २।३।१०।१६)

शिष्य –

त्यो जन्ममृत्यु जो हुन्छ आत्माको हो कि ! जीवको ।
सन्देह यसमा आयो जीवको ? वा शरीरको ? ॥९२॥

३०. 'अन्नमयं हि सोम्य मनः, आपोमयः प्राणः, तेजोमयी वाक्' ।

३१. अन्तरा विज्ञानमनसी क्रमेण तल्लिङ्गादिति चेन्नाविशेषात् । – ब्रह्मसूत्र २।३।९।१५

वादीको मत देखिन्छ जातकर्मादिले गरी ।
जीवकै जन्मका साथै मृत्यु हुन्छ सधैँभरि ॥९३॥

'पुत्रो मे जात' इत्यादि लौकिकव्यवहारले ।
जीवकै जन्म औ मृत्यु देखिन्छ स्पष्टरूपले ॥९४॥

भन्नुहोस् गुरुजी ! स्पष्ट मर्ने को ? अनि जन्मने ?
आत्मा हो ? अथवा देह मर्ने र अनि जन्मने ? ॥९५॥

गुरु –

जन्ममृत्यु दुवै नै हुन् देहको न त जीवको ।
जीवको मृत्यु नै हुन्न यो सारा भ्रम अज्ञको ॥९६॥

जीव मर्ने भएदेखि गरेको नाश बन्दछ ।
नगरेको छ जो आई श्रुतिले दोष भन्दछ ॥९७॥

यो हो केवल अध्यास औपचारिक बन्दछ ।
देह मर्दछ मर्दैन जीव यो श्रुति भन्दछ ॥९८॥

जीवको मृत्यु-जन्मादि मानेमा दोष आउने ।
[३२]गरेको कर्म भै नाश नगऱ्या कर्म पाउने ॥९९॥

जीव [३३]जन्मन्न मर्दैन श्रुतिले पनि भन्दछ ।
देहभौतिक मर्ने हो अजन्मा जीव शाश्वत ॥१००॥

देहसंयोगले जन्म मृत्यु हुन्छ वियोगले ।
जीव जन्मन्न मर्दैन देह-योग-वियोगले ॥१०१॥

---

३२. अकृताभ्यागमः कृतप्रणाशः । – न्यायः

३३. न जायते म्रियते वा विपश्चिन्नायं कुतश्चिन्न बभूव कश्चित् ।
अजो नित्यः शाश्वतोऽयं पुराणो न हन्यते हन्यमाने शरीरे । – कठोपनिषद् १।२।१८

[34]आत्मभाव गरेदेखि देहमा जन्म पाउने ।
शरीरदेखि निस्केमा गर्छ अन्यत्र धाउने ॥१०२॥

अध्यासभ्रम हो सारा मर्नु र अनि जन्मनु ।
अजन्मा जीव हो नित्य न मर्नु न त जन्मनु ॥१०३॥

[35]मर्ने हो जीवले हीन देह, मर्दैन जीव यो ।
पूर्वपक्षी भनून् मर्छ वृथा हो सत्य हैन यो ॥१०४॥

यसमा [36]सूत्र यौटै छ यसले पनि शास्त्रतः ।
जीवका जन्म औ मृत्यु निषेध गर्छ वस्तुतः ॥१०५॥



## ११. आत्माधिकरण (ब्रह्मसूत्र २।३।११।१७)

शिष्य –

कल्प-आरम्भमा जीव आकाशसम नै भई ।
उत्पन्न हुन्छ ? वा हुन्न ? सन्देह भो गुरो ! गई ॥१०६॥

पूर्वपक्षी सिधै भन्छन् [37]फिलुङ्गा अग्निकै सरी ।
जीव त्यो ब्रह्मबाटै नै उत्पन्न हुन्छ सर्सरी ॥१०७॥

---

३४. स वा अयं पुरुषो जायमानः शरीरमभिसम्पद्यमानः स उत्क्रामन् म्रियमाणः ।
– बृहदारण्यकोपनिषद् ४।३।८

३५. जीवापेतं वाव किलेदं म्रियते न जीवो म्रियते । – छान्दोग्योपनिषद् ६।११।३

३६. चराचर व्यपाश्रयस्तु स्यात्तद्व्यपदेशो भाक्तस्तद्भावभावित्वात् ।
– ब्रह्मसूत्र ३।३।१०।१६

३७. यथाग्नेः क्षुद्रा विस्फुलिङ्गा व्युच्चरन्त्येवमेवास्मादात्मनः सर्वे प्राणाः सर्वे वेदाः, सर्वाणि भूतानि सर्व एत आत्मानो व्युच्चरन्ति । – बृहदारण्यकोपनिषद् २।१।२०

भन्नुहोस् गुरुजी ! जीव उत्पन्न हुन्छ ? हुन्न ? वा ।
अथवा ब्रह्मबाटै नै सोझै उत्पन्न हुन्छ ? वा ॥१०८॥

गुरु –
जीवको हुन्न उत्पत्ति, बुद्धि उत्पत्तिका पछि ।
[३८]जीवका रूपले ब्रह्म धीमा पस्तछ नै पछि ॥१०९॥

विस्फुलिङ्गसरी जीव जन्मन्न त्यो उपाधि हो ।
[३९]जीव शाश्वत हो नित्य जन्मने त्यो त मर्त्य हो ॥११०॥

[४०]नित्यमा नित्य हो आत्मा चेतमा चिति चैत्य हो ।
कल्पका आदिमा आत्मा उत्पन्न हुन्न नित्य हो ॥१११॥

यसरी पूर्वपक्षीका मतको हुन्छ खण्डन ।
विभिन्न [४१]श्रुतिले गर्छन् सिद्धान्तपक्ष मण्डन ॥११२॥

यसमा [४२]सूत्र यौटै छ यसले पनि तत्त्वतः ।
जीव उत्पत्तिकै गर्छ निषेध श्रुतिसम्मत ॥११३॥



---

३८. तत्सृष्ट्वा तदेवानुप्राविशत् । – तैत्तिरीयोपनिषद् २।६।१
३९. अजो नित्य शाश्वतोऽयं पुराणः । – कठोपनिषद् २।१८
४०. नित्यो नित्यानां चेतनश्चेतनानामेको बहूनां यो विदधाति कामान् ।
– कठोपनिषद् २।२।१३
४१. क. न जीवो म्रियते । – छान्दोग्योपनिषद् ६।११।३
ख. न जायते म्रियते वा विपश्चित् । – कठोपनिषद् २।१८
ग. स वा एष महानज आत्माऽजरोऽमरोऽमृतोऽभयो ब्रह्म ।
– बृहदारण्यकोपनिषद् ४।४।२५
घ. अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरवाणि । – छान्दोग्योपनिषद् ६।३।२
४२. नात्मा ऽश्रुतेर्नित्यत्वाच्च ताभ्यः । ब्रह्मसूत्र २।३।११।१७

## १२. ज्ञाधिकरण (ब्रह्मसूत्र २।३।१२।१८)

शिष्य –

चैतन्यरूप हो जीव ? यद्वा त्यो हो अचेतन ?
भयो संशय उत्पन्न संशयापन्न भो मन ॥११४॥

यसमा भन्दछन् वादी सुषुप्ति आदिमा गई ।
चैतन्याभाव देखिन्छ सुत्छ मूढोसरी भई ॥११५॥

जाग्रत् र स्वप्नमा जीव चेतनायुक्त बन्दछ ।
संयोग मन आत्माको भई चेतन बन्दछ ॥११६॥

यसरी पूर्वपक्षीको मत आयो दरो भई ।
चेतना जीवको नाश हुन्छ ? सुषुप्तिमा गई ॥११७॥

यसमा भन्नुहोस् ब्रह्मन् ! हटाएर सबै भ्रम ।
जीव चेतन हो ? यद्वा अचेतन ? हटोस् भ्रम ॥११८॥

गुरु –

वादीको मत हो मिथ्या चैतन्यरूप हो जीव ।
[४३]जीवरूप लिई ब्रह्म पस्छ त्यो बुद्धिमा तब ॥११९॥

श्रुतिले भन्छ सद् जीव ब्रह्मको प्रतिबिम्ब हो ।
साक्षात् हो ब्रह्म नै बिम्ब जीवब्रह्म अभेद हो ॥१२०॥

सुषुप्ति आदिमा जीव हुन्न लुप्त कसै पनि ।
साक्षीका रूपमा हुन्छ परिवर्तित जीव नि ॥१२१॥

---

४३. तत्सृष्ट्वा तदेवानुप्राविशत् । – तैत्तिरीयोपनिषद् २।६।१

द्वैतप्रपञ्चको हुन्छ लोप सुषुप्तिमा जब।
इन्द्रियादि हुने लोप दहराकाशमा तब ॥१२२॥

जीवको कहिल्यै लोप हुँदैन श्रुति भन्दछ।
देखेर पनि देख्तैन दृष्टि अमोघ बन्दछ ॥१२३॥

जाग्रत्मा तुल्य द्रष्टा र दृश्य दर्शनको क्रम।
सुषुप्तिमा भई लोप 'न पश्यति' हुने भ्रम ॥१२४॥

स्वरूपभूत आत्माको हुँदैन नाश दृष्टिको।
[44]अविनाशी भएकाले लोप हुँदैन दृष्टिको ॥१२५॥

द्रष्टाका दृष्टिको लोप हुँदैन कहिल्यै पनि।
द्रष्टा साक्षी भएकाले ऊ देख्छ जहिल्यै पनि ॥१२६॥

[45]ज्योतिस्वरूप हो जीव उत्पन्न हुन्न नै कबै।
आत्मस्वरूप हो नित्य त्यसको हुन्न उद्भवै ॥१२७॥

विकारहीन सद्ब्रह्म उपाधि साथ लीकन।
जीवभाव लिई पर्छ विज्ञानात्मा सनातन ॥१२८॥

[46]अद्वैत ब्रह्म आनन्द स्वयंज्योति परात्पर।
सुषुप्तभाव सम्पूर्ण देख्छ असुप्त भै तर ॥१२९॥

---

४४. यद्वैतन्न पश्यति पश्यन् वै तन्न पश्यति नहि द्रष्टुर्दृष्टेर्विपरिलोपो विद्यतेऽविनाशित्वान्नतु तद्द्वितीयमस्ति ततोऽन्यद्विभक्तं यत् पश्येत।
– बृहदारण्यकोपनिषद् ४।३।२३

४५. अत्रायं पुरुषः स्वयंज्योतिर्भवति। – बृहदारण्यकोपनिषद् ४।३।९

४६. असुप्तः सुप्तानभिचाकशीति। – बृहदारण्यकोपनिषद् ४।३।११

जीवात्मा परमात्माको गर्दै अभेदवर्णन ।
विभिन्न [47]श्रुतिले गर्छन् अभेदात्मक शंसन ॥१३०॥

विज्ञानानन्द चिद्ब्रह्म त्यसकै रूप जीव हो ।
त्यसैकारणले जीव चैतन्यरूप नित्य हो ॥१३१॥

अनित्य देहका भित्र बस्छ नित्य सनातन ।
चैतन्यरूप हो जीव वादीको हुन्छ खण्डन ॥१३२॥

यसमा [48]सूत्र यौटै छ यल्ले चैतन्य जीवको ।
प्रतिपादन नै गर्छ स्वयंज्योतिस्वरूपको ॥१३३॥



## १३. उत्क्रान्तिगत्यधिकरण (ब्रह्मसूत्र २।३।१३।१९–३२)

शिष्य –

जीव हो अणु ? यद्वा त्यो विभु हो ? सर्वव्यापक ।
भन्ने सन्देह पैदा भो अणु ? वा विभु व्यापक ? ॥१३४॥

यसमा पूर्वपक्षीले केही सूत्र लिईकन ।
[49]जीवात्मा अणु हो भन्छन् गरेर श्रुतिमन्थन ॥१३५॥

[50]जीवात्मा देह छोडेर जो उत्क्रमण गर्दछ ।
सारा इन्द्रियसाथैमा जान्छन् नै श्रुति भन्दछ ॥१३६॥

---

४७. क. सत्यं ज्ञानमनन्तं ब्रह्म । – तैत्तिरीयोपनिषद् २।१।१
ख. अनन्तरोऽबाह्यः कृत्स्नः प्रज्ञानघन एव । – बृहदारण्यकोपनिषद् ४।५।१३
४८. ज्ञोऽत एव । – बत्रह्मसूत्र ३।३।१२।१८
४९. एषोऽणुरात्मा चेतसा वेदितव्यः । – मुण्डकोपनिषद् ३।१।९
५०. यो वै के चास्माल्लोकान् प्रयन्ति चन्द्रमसमेव ते सर्वे गच्छन्ति ।
– कौषीतकिब्राह्मणोपनिषद् १।२

[51]शरीरबाट निस्केर जीव प्रयाण गर्दछ ।
चन्द्रलोक गई [52]फर्की जीवात्मा फेरि झर्दछ ॥१३७॥

[53]जीवात्मा अणु हो पाँच प्राणवायुहरू पनि ।
त्यसमा पस्तछन् भन्छ मुण्डकश्रुतिले पनि ॥१३८।

[54]'बालाग्रशतभागस्य शतधा' कल्पना गरी ।
जीवात्मा अणु जत्रो हो श्रुति भन्छ निधो गरी ॥१३९॥

इत्यादि श्रुतिका साथै तर्कप्रमाणले पनि ।
जीवात्मा अणु हो सोझै जानु आउनुले पनि ॥१४०॥

यसरी पूर्वपक्षी ती भन्छन् प्रमाण दीकन ।
अणुका तुल्य हो जीव विभु हैन भनीकन ॥१४१॥

श्रुतिले भन्छ जीवात्मा सर्वव्यापक ? वा अणु ?
यसमा भन्नुहोस् ब्रह्मन् ! जीव हो विभु ? वा अणु ॥१४२॥

गुरु –
[55]जीवात्मा विभु हो नित्य अजन्मा हो महान् पर ।
सबैको अन्तरात्मा हो सर्वव्यापी परात्पर ॥१४३॥

---

५१. स यदास्मच्छरीरादुत्क्रामति सहैवैतैः सर्वैरुत्क्रामति । – कौषीतकिब्राह्मण ३।३
५२. तस्माल्लोकात् पुनरेत्यस्मै लोकाय कर्मणे । – बृहदारण्यकोपनिषद् ४।४।६
५३. एषोऽणुरात्मा चेतसा वेदितव्यो यस्मिन्प्राणः पञ्चधा संविवेश ।
– मुण्डकोपनिषद् ३।१९
५४. बालाग्रशताभागस्य शतधा कल्पितस्य च । भागो जीवः स विज्ञेयः ।
– श्वेताश्वतरोपनिषद् ५।८
५५. स वा एष महानज आत्मा योऽयं विज्ञानमयः प्राणेषु ।

वादीले अणु हो जीव भन्छन् प्रमाण दीकन ।
बुद्धिसंयोगले गर्दा देखिन्छ अणु भैकन ॥१४४॥

चैतन्यको प्रतिबिम्ब बुद्धिमा जब पर्दछ ।
बुद्ध्युपाधि भएकाले अणुझैँ भान पर्दछ ॥१४५॥

त्यसै उपाधिले जीव आवागमन गर्दछ ।
उपाधि ज्ञानले डढ्दा जीवात्मा विभु बन्दछ ॥१४६॥

[56]विज्ञानमय हो आत्मा बुद्धिका भित्र बस्तछ ।
बुद्धितुल्य भई आत्मा दुइटै लोक घुम्दछ ॥१४७॥

मानो ध्यानसरी गर्छ चलेझैँ पनि गर्दछ ।
उपाधिवश भै आत्मा अणुझैँ भान पर्दछ ॥१४८॥

[57]सुषुप्तिमा गई जीव सद्वाच्य देवतासँग ।
एकाकार भई मिल्छ साक्षी ईश्वरका सँग ॥१४९॥

पूर्वपक्ष बनी केही बोल्दछन् श्रुति ती अरू ।
भविष्यद्वृत्तिले सारा आएका सम्झिऊँ बरू ॥१५०॥

स्थूणानिखननन्यायद्वारा सिद्धान्तपक्षको ।
दृढता तिनले गर्छन् यही नै ठान्नु हो निको ॥१५१॥

उपाधिवश भै जीव अणुका तुल्य बन्दछ ।
[58]ब्रह्म हो ब्रह्म नै बन्छ श्रुतिले स्पष्ट भन्दछ ॥१५२॥

---

५६. योऽयं विज्ञानमयः प्राणेषु हृद्यन्तर्ज्योतिः पुरुषः स समानः सन्नुभौ लोकावनुसञ्चरति ध्यायतीव लेलायतीव । – बृहदारण्यकोपनिषद् ४।३।७

५७. सता सौम्य तदा सम्पन्नो भवति स्वमपीतो भवति । – छान्दोग्योपनिषद् ६।८।१

५८. न तस्य प्राणा उत्क्रामन्ति ब्रह्मैव सन् ब्रह्माप्येति । – बृहदारण्यकोपनिषद् ४।४।६

पैले ब्रह्म थियो जीव जान्छ त्यो ब्रह्म भैकन ।
यसरी हुन्छ वादीको जीवाणुवाद खण्डन ।।१५३।।

[५९]चौध छन् यसमा सूत्र पूर्वोत्तर भईकन ।
जीव हो विभु सर्वात्मा भन्छन् प्रमाण दीकन ।।१५४।।



## १४. कर्त्रधिकरण (ब्रह्मसूत्र २।३।१४।३३–३९)

शिष्य –

कर्ता हो जीव ? यद्वा हो कर्ता बुद्धि ? भनीकन ।
सन्देह देखियो ब्रह्मन् ! जिज्ञासायुक्त भो मन ।।१५५।।

साङ्ख्यवादीहरू भन्छन् कर्ता हो बुद्धि निश्चय ।
असङ्ग जीव हो आत्मा कर्ता बन्दैन निश्चय ।।१५६।।

परिणामी भएकाले कर्ता नै बुद्धि बन्दछ ।
अकर्ता जीव कर्ता त्यो कसरी बन्न सक्तछ ? ।।१५७।।

यसरी साङ्ख्यवादीको आयो मत अनिश्चित ।
यसमा भन्नुहोस् विद्वन् ! कर्ता को हो ? सुनिश्चित ।।१५८।।

गुरु –

कर्ता हो जीव, बुद्धि त्यो कर्ता अवश्य होइन ।
कर्ता चेतन नै हुन्छ जड त्यो बुद्धि होइन ।।१५९।।

मात्रै करण हो बुद्धि कर्ताको मुख्यसाधन ।
जीवात्माले यसैबाट गर्छ काम समापन ।।१६०।।

---

५९. उत्क्रान्तिगत्यागतीनाम् । – ब्रह्मसूत्र २।३।१३।१९–३२

यजेत, जुहुयात्, दद्यात्, इत्यादि विधि छन् जति ।
जीवकै लागि हुन् सारा विधान विधिशास्त्र ती ॥१६१॥

कर्ताकै निम्ति नै वेद [६०]द्रष्टा श्रोतादि भन्दछ ।
जीव कर्ता भएमा नै शास्त्र सार्थक बन्दछ ॥१६२॥

जीव कर्ता भएकाले [६१]स्वप्नमा पनि चल्दछ ।
जो कर्ता हैन चल्दैन कसरी बुद्धि चल्दछ ? ॥१६३॥

जीव कर्ता भएकाले काम [६२]इच्छित गर्दछ ।
विहार उपदेशादि बुद्धि लीसाथ गर्दछ ॥१६४॥

मानेमा बुद्धि नै कर्ता त्यो विपर्यय बन्दछ ।
बसिला जडमा कैले कर्तृत्व हुन सक्तछ ? ॥१६५॥

जीवात्मानिम्ति नै वेद [६३]'द्रष्टव्य' आदि भन्दछ ।
[६४]'ओमित्येवं' भनी ध्यान आत्माको गर भन्दछ ॥१६६॥

[६५]विज्ञानशब्दले वाच्य जीवात्मा यज्ञ गर्दछ ।
कर्म गर्दछ जीवात्मा यही नै श्रुति भन्दछ ॥१६७॥

प्रवृत्ति र निवृत्यादि जीवकै लागि हुन् सब ।
यी सारा श्रुतिनिर्देश बुद्धिनिम्ति असम्भव ॥१६८॥

---

६०. एष हि द्रष्टा श्रोता मन्ता बोद्धा कर्ता विज्ञानात्मा पुरुषः । – प्रश्नोपनिषद् ५।९
६१. स ईयतेऽमृतो यत्र कामम् । – बृहदारण्यकोपनिषद् ४।३।१२
६२. स्वे शरीरे यथाकाम परिवर्तते । – बृहदारण्यकोपनिषद् २।१।१८
६३. आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यः ।
– बृहदारण्यकोपनिषद् ३।४।४
६४. ओमित्येवं ध्यायथ आत्मानम् । – मुण्डकोपनिषद् २।२।६
६५. विज्ञानं यज्ञं तनुते कर्माणि तनुतेऽपि च । – तैत्तिरीयोपनिषद् २।५।१

लोकमा कृषिकर्मादि कर्ताबाट छ सम्भव ।
कर्ता चेतन नै हुन्छ जड बुद्धि असम्भव ॥१६९॥

कर्ता बुद्धि भनी मान्दा त्यो हास्यास्पद बन्दछ ।
साङ्ख्यको जडसिद्धान्त श्रुति खण्डन गर्दछ ॥१७०॥

सात छन् यसमा [६६]सूत्र कर्ता हो जीव नै भनी ।
भन्छन् र जड बुद्धिको गर्छन् खण्ड ती पनि ॥१७१॥



## १५. तक्षाधिकरण (ब्रह्मसूत्र २।३।१५।४०)

शिष्य –

पूर्वाधिकरणै भन्छ आत्मामा कर्तृता गुण ।
छ ? वा छैन ? भनी आयो सन्देह मनमा पुनः ॥१७२॥

कर्तृत्व सत्य हो ? यद्‌वा त्यो हो कल्पित वस्तुतः ।
पूर्वपक्ष भने भन्छन् कर्तृत्व सत्य हो स्वतः ॥१७३॥

कर्तृत्व वा अकर्तृत्व आत्मामा रहने कुन ?
ती हुन् कल्पित ? वा सत्य ? जिज्ञासा गर्छ यो मन ॥१७४॥

गुरु –

सिकर्मीजसरी आफ्ना बसिला आदि लीकन ।
काम गर्दा हुने कर्ता, अकर्ता बसिलाविना ॥१७५॥

[६७]आत्मा करण बुद्‌ध्यादि लिई भोक्ता बनीकन ।
अध्यासवश संसारी कर्ता बन्छ अकिञ्चन ॥१७६॥

---

६६. कर्ता शास्त्रार्थवत्त्वात् । – ब्रह्मसूत्र २।३।१४।३३–३९
६७. आत्मेन्द्रियमनोयुक्तं भोक्तेत्याहुर्मनीषिणः । – कठोपनिषद् ३।४

स्वभावतः अकर्ता हो परमानन्द चिद्घन ।
अध्यारोपित कर्तृत्व आत्मा [६८]असङ्ग हो जुन ॥१७८॥

विवेकी जनका निम्ति कर्ता भोक्ता कुनै कहीँ ।
रहन्नन् सब [६९]अद्वैत आत्मा देख्छन् जहीँ तहीँ ॥१७९॥

[७०]जहाँ देखिन्छ अर्को क्वै द्वैतदृष्टि त्यहाँ हुने ।
[७१]जहाँ रहन्छ आत्मा नै कोबाट कुन देखिने ? ॥१८०॥

कर्तृत्व अनि भोक्तृत्व आत्मामा नहुने स्वतः ।
अविद्याजन्य हुन् सारा यी हुन् कल्पित वस्तुतः ॥१८१॥

करणादि-अपेक्षाले आत्मा कर्ता हुने तर ।
अपेक्षा नहुँदा आत्मा अकर्ता हो परात्पर ॥१८२॥

जपाकुसुमले गर्दा रातो स्फटिक बन्दछ ।
त्यस्तै करणले गर्दा अकर्तृ कर्तृ बन्दछ ॥१८३॥

अतः त्यो जीव कर्ता हो अन्तःकरण लीकन ।
करणादिकनिर्मुक्त जीव आत्मा निरञ्जन ॥१८४॥

यसमा [७२]सूत्र यौटै छ यसले पनि अन्ततः ।
अकर्ता जीव हो भन्छ सिकर्मीतुल्य वस्तुतः ॥१८५॥



६८. असङ्गो ह्ययं पुरुषः । – श्रुतिः
६९. नान्योऽतोऽस्ति द्रष्टा । – बृहदारण्यकोपनिषद् ४।२।२३
७०. यत्र हि द्वैतमिव भवति तदितर इतरं पश्यति । – बृहदारण्यकोपनिषद् २।४।१४
७१. यत्र त्वस्य सर्वमात्मैवाभूत्तत् केन कं पश्येत् । – बृहदारण्यकोपनिषद् ४।३।२१
७२. यथा च तक्षोभयथा । – ब्रह्मसूत्र २।३।१५।४०

## १६. परायत्ताधिकरण (ब्रह्मसूत्र २।३।१६।४१–४२)

शिष्य –

जीव संसारमा हुन्छ प्रवृत्त रागले ? कि ! वा ।
ईश्वर प्रेरणा पाई प्रवृत्त हुन्छ जीव ? वा ॥१८६॥

प्रवर्तक भए ईश वैषम्यदोष लाग्दछ ।
पक्षपाती हुने शङ्का ईश्वरैमाथि जाग्दछ ॥१८७॥

भन्नुहोस् गुरुजी ! के हो जीवको त्यो प्रवर्तक ?
रागद्वेषादि हुन् ? यद्‌वा ईश हुन् ? कि ! प्रवर्तक ॥१८८॥

गुरु –

ईश्वरैकन लाग्दैन दोषै विषमता कुनै ।
धान्यादिसस्यमा जस्तै वृष्टिनिमित्त हुन्छ नै ॥१८९॥

त्यस्तै नै जीवका पूर्व पुण्यपापादिका फल ।
लिई गराउने भोग निमित्त बन्छ ईश्वर ॥१९०॥

[७३]पुण्यले पुण्य नै मिल्छ पापले पाप मिल्दछ ।
भनेर श्रुतिले भन्छ निमित्त ईश बन्दछ ॥१९१॥

[७४]वैषम्यदोष लाग्दैन निमित्तमात्र ईश्वर ।
जीवको कर्म जस्तो छ सोही नै दिन्छ ईश्वर ॥१९२॥

[७५]राम्रो कर्म गरेदेखि राम्रो नै फल पाउँछ ।
माथि लाने भए ईश शुभ कर्म गराउँछ ॥१९३॥

---

७३. पुण्यो वै पुण्येन कर्मणा भवति पापः पापेन । –बृहदारण्यकोपनिषद् ३।२।१३

७४. वैषम्यनैर्घृण्ये न सापेक्षत्वात् । – ब्रह्मसूत्र १।४।१७

७५. एष ह्येव साधु कर्म कारयति तं यमेभ्यो लोकेभ्य उन्निनीषते ।
– कौषीतकिब्राह्मणोपनिषद् ३।८

[76]तल लाने भए ईश अशुभै नै गराउँछ ।
[77]अन्तर्यामी भई ईश जीवलाई घुमाउँछ ॥१९४॥

[78]विहितै कर्म गर्नाले मान्छेले स्वर्ग पाउँछ ।
[79]निषिद्ध कर्मले मान्छे नरकादिक धाउँछ ॥१९५॥

श्रुतिस्मृतिहरू भन्छन् साक्षी ईश्वर हो भनी ।
कर्मको फल दिन्छन् ती तटस्थ अति नै बनी ॥१९६॥

राम्रो [80]आचारले जीव योनि उत्तम पाउँछ ।
शुभ ब्राह्मण वा क्षेत्री वैश्यको योनि पाउँछ ॥१९७॥

नराम्रो [81]कामले जीव जुनी अशुभ पाउँछ ।
श्वको, सुँगरको यद्वा चण्डाल योनि पाउँछ ॥१९८॥

आफ्ना नै कर्मले जीव सुख या दुःख पाउँछ ।
अतः ईश्वर वैषम्य नैर्घृण्य दोषमुक्त छ ॥१९९॥

प्रवर्तक बनून् राग द्वेष आपत्ति हुन्न नि ।
प्रवर्तकत्वमा हानि ईशको कत्ति हुन्न नि ॥२००॥

---

७६. एष ह्येवासाधु कर्म कारयति तं यमधो निनीषते । – कौषीतकिब्राह्मणोपनिषद् ३।८

७७. क. य आत्मनितिष्ठन्नानन्तरो यमयति । – बृहदारण्यकोपनिषद् ३।२।१३
ख. ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति ।
भ्रामयन् सर्वभूतानि यन्त्रारूढानि मायया ॥ – गीता १८।६१

७८. स्वर्गकामो यजेत । – श्रुतिः

७९. ब्राह्मणो न हन्तव्य । – श्रुतिः

८०. तद्य इह रमणीयचरणा अभ्याशो ह यत्ते रमणीयां योनिमापद्येरन् ब्राह्मणयोनिं वा क्षत्रिययोनिं वा वैश्वयोनिं वा । – छान्दोग्योपनिषद् ५।१०।७

८१. अथ य इह कपूयचरणा अभ्याशो ह यत्ते कपूयां योनिमापद्येरञ्श्वयोनिं वा सूकरयोनिं वा चण्डालयोनिं वा । – छान्दोग्योपनिषद् ५।१०।७

अन्तर्यामी बनी ईश रागद्वेषादिको पनि ।
उल्ले नियमनै गर्छ सर्वप्रवर्तकै बनी ॥२०१॥

सर्वमान्य भयो ईश जीवको हो प्रवर्तक ।
सामर्थ्य अन्यमा छैन ईशमा छ सबै हक ॥२०२॥

अतः ती पूर्वपक्षीको रागद्वेषप्रवर्तक ।
हुने सिद्धान्त भो दूर बन्दैनन् ती प्रवर्तक ॥२०३॥

[८२]दुई छन् यसमा सूत्र दुवैको एउटै स्वर ।
जीवको कर्मका दाता भन्छन् हुन् एक ईश्वर ॥२०४॥



## १७. अंशाधिकरण (ब्रह्मसूत्र २।३।१७।४३–५३)

शिष्य –

जीव ईश्वरका बीच साङ्कर्य छ ? परस्पर ।
अथवा श्रुतिका द्वारा व्यवस्था हुन्छ ? वा तर ॥२०५॥

यस्तो सन्देहमा वादी [८३]श्रुतिस्मृति लिईकन ।
जीव ईश्वरसाङ्कर्य गर्दछन् प्रतिपादन ॥२०६॥

---

८२. परात्तु तच्छ्रुतेः । – ब्रह्मसूत्र २।३।१६।४१–४२

८३. क. अभयं वै जनक प्राप्तोऽसि । – बृहदारण्यकोपनिषद् ४।२।४
ख. आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यः । – बृहदारण्यकोपनिषद् २।४।५
ग. सोऽन्वेष्टव्यः स विजिज्ञासितव्यः । – छान्दोग्योपनिषद् ८।७।१
घ. त्वं स्त्री त्वं पुमानसि त्वं कुमार उत वा कुमारी ।
त्वं जीर्णो दण्डेन वञ्चसि त्वं जातो भवसि विश्वतोमुखः ॥
– श्वेताश्वतरोपनिषद् ४।३
ङ. तावानस्य महिमा ततो ज्यायांश्च पुरुषः ।
पादोऽस्य सर्वा भूतानि त्रिपादस्यामृतं दिवि ॥ – छान्दोग्योपनिषद् ३।१२।६
च. ममैवांशो जीवलोके जीवभूतः सनातनः । – गीता १५।७
छ. ब्रह्म दाशा ब्रह्म दासा ब्रह्मैवेमे कितवाः । – श्रुतिः

यसमा भन्नुहोस् ब्रह्मन् ! साङ्कर्य जीव-ईशको ।
हुन्छ ? वा श्रुतिका द्वारा व्यवस्था हुन्छ ? वा निको ॥२०७॥

गुरु –

जीव ईश्वरका बीच हुन्न साङ्कर्य तत्त्वतः ।
वेदप्रमाणका द्वारा हुन्छ खण्डित यो स्वतः ॥२०८॥

व्यवहार हुँदा जीव आभास, अंश बन्दछ ।
परमार्थत अंशांशी हुँदैन श्रुति भन्दछ ॥२०९॥

अनंश जीव हो नित्य अनंश प्रतिपादक ।
श्रुतिहरू यही भन्छन् हट्छन् अद्वैतभेदक ॥२१०॥

अंशी अंश भएदेखि अंशीले दुःख अंशको ।
लिनुपर्छ अतः हैन विभेद अंशी अंशको ॥२११॥

बुद्ध्युपाधि लिई जीव सुखदुःखादि भोग्दछ ।
टाढै बसेर साक्षी भै ईश केवल हेर्दछ ॥२१२॥

आभास, प्रतिबिम्बै हो जीव ईश्वरबिम्बको ।
यसैकारण साङ्कर्य हुँदैन जीव ईशको ॥२१३॥

जीव [८४]झोक्रिन्छ भोगेर आफ्ना नै कर्मको फल ।
हेरेर बस्छ साक्षी भै नखाई ईश केवल ॥२१४॥

[८५]ब्रह्ममा अंश वा अंशी जसले पनि देख्तछ ।
अज्ञानी द्वैतवादी त्यो जन्मिन्छ अनि मर्दछ ॥२१५॥

अविद्याधीश हो ईश अविद्याधीन जीव हो ।
बिम्ब ईश्वर हो जीव उनैको प्रतिबिम्ब हो ॥२१६॥

---

८४. द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परिषस्वजाते । तयोरन्यः पिप्पलं स्वाद्वत्त्यनश्नन्नन्योऽभिचाकशीति । – श्वेताश्वतरोपनिषद् ४।६

८५. मृत्योः स मृत्यमाप्नोति य इह नानेव पश्यति । – बृहदारण्यकोपनिषद् ४।४।१९

[86]द्रष्टा ईश्वरबाहेक अर्को छैन कुनै पनि ।
द्रष्टाका दृष्टिको लोप हुँदैन कहिल्यै पनि ॥२१७॥

बिम्बस्थानीय सूर्यैको पानीमा प्रतिबिम्ब हो ।
हल्लिँदा सूर्य हल्लिन्न त्यस्तै नै ईशबिम्ब हो ॥२१८॥

पर्ने त्यो जलमा जस्तै सूर्यको प्रतिबिम्ब हो ।
साक्षीको बुद्धिमा पर्ने जीव त्यै प्रतिबिम्ब हो ॥२१९॥

[87]देहसृष्टि गरी ब्रह्म त्यहीँ नै भित्र [88]पस्तछ ।
जीवका रूपमा ब्रह्म भई [89]विवर्त बस्तछ ॥२२०॥

[90]रूप रूप सरी ब्रह्म प्रतिरूप भईकन ।
असङ्ख्यरूप भैदिन्छ [91]माया साथ लिईकन ॥२२१॥

आभास, प्रतिबिम्बै हो जीव ईश्वरबिम्बको ।
त्यसैकारण साङ्कर्य हुन्न ईश्वर जीवको ॥॥२२२॥

यहाँ छन् [92]सूत्र एघार पूर्वोत्तर भईकन ।
अंशी र अंश साङ्कर्य गर्दछन् पूर्ण खण्डन ॥२२३॥

ब्रह्मसूत्रको दोस्रो अध्यायको तृतीय पादको कारिका पूरा भयो ।



---

८६. नान्योऽतोऽस्ति द्रष्टा नान्योऽतोऽस्ति श्रोता । – बृहदारण्यकोपनिषद् ३।७।२३
८७. तत्सृष्ट्वा तदेवानुप्राविशत् । – तैत्तिरीयोपनिषद् २।६।१
८८. स एष इह प्रविष्टः । – बृहदारण्यकोपनिषद् १।४।७
८९. उपादानविषमसत्ताकत्वं विवर्तत्वम् ।
अतत्त्वोऽन्यथाप्रथा विवर्त इत्युदीरित ॥ – पञ्चदशी
९०. रूपं रूपं प्रतिरूपो बभूव तदस्य रूपं प्रतिचक्षणाय । – बृहदारण्यकोपनिषद् २।५।१९
९१. इन्द्रोमायाभिः पुरुरूप ईयते । – बृहदारण्यकोपनिषद् २।५।१९
९२. अंशो नानाव्यपदेशादन्यथा चापि दाशकितववादित्वमभिधीयत एके ।
– ब्रह्मसूत्र २।३।१७।४३–५३

ॐ तत्सद्ब्रह्मणे नमः

# ब्रह्मसूत्र

# द्वितीय अविरोधाध्याय

## चतुर्थ पाद

(यस पादमा प्राणोत्पत्तिदेखि संज्ञामूर्तिक्लृप्तिसहित ९ अधिकरणहरू छन् र यसमा लिङ्गशरीरका सम्बन्धमा श्रुतिमा देखिएको विरोधको परिहार गरिएको छ।)

### १. प्राणोत्पत्त्यधिकरण ( ब्रह्मसूत्र २।४।१।१–४ )

शिष्य –

यी इन्द्रियहरू जो छन् अनादि हुन् ? कि सादि हुन् ?
सादि ती परमात्माले सिर्जेका हुन् ? कि ! होइनन् ? ।।१।।

पूर्वपक्षीहरू भन्छन् [१]श्रुतिप्रमाण दीकन ।
ती इन्द्रियहरू सारा अनादि हुन् भनीकन ।।२।।

उत्पन्न परमात्माले गरे भन्ने श्रुतिहरू ।
गौणी हुन् श्रुति ती सारा अनादि इन्द्रियैहरू ।।३।।

यसरी पूर्वपक्षीको श्रुतिप्रमाणले युत ।
आयो जो तर हे ब्रह्मन् ! भयो संशय वस्तुतः ।।४।।

यदि हैन भने युक्त प्रत्याख्यान गरीकन ।
सिद्धान्तपक्ष आज्ञा होस् सुन्न उत्सुक भो मन ।।५।।

१. असद् वा इदमग्र आसीत् । तदाहुः किं तदसदासीदित्यृषयो वाव तेऽग्रेऽसदासीत्, तदाहुः के ते ऋषय इति, प्राणा वाव ऋषयः । – तैत्तिरीयोपनिषद् २।७।१

गुरु –

प्रमाण पूर्वपक्षीका सुन्दा इन्द्रिय सर्सरी ।
जगत् उत्पत्तिका पूर्व भान हुन्छ थिए सरी ॥६॥

मानेमा त्यसरी एक विज्ञानबाट तत्त्वतः ।
सर्वविज्ञानको वाचा [२]श्रुतिको हुन्छ खण्डित ॥७॥

यै उपक्रममा आयो [३]'एतस्मात् जायते' भनी ।
[४]अन्यान्य श्रुतिले भन्छन् सोही समर्थकै बनी ॥८॥

यसरी श्रुतिका धेरै गरी प्रमाण चिन्तन ।
सकिन्छ भन्न आत्मै हो इन्द्रियादिककारण ॥९॥

सृष्टिपूर्व थिए भन्छन् इन्द्रिय श्रुतिले सुन ।
त्यो अवान्तर सृष्टिको कुरा हो गौण हो जुन ॥१०॥

अनादि भन्न मिल्दैन कर्मेन्द्रियहरू सब ।
श्रुतितः तिनको हुन्छ यै आत्मादेखि उद्भव ॥११॥

---

२. कस्मिन्नु भगवो विज्ञाते सर्वमिदं विज्ञातं भवति । – मुण्डकोपनिषद् १।१।३

३. क. एतस्माज्जायते प्राणो मनः सर्वेन्द्रियाणि च, इति, सप्त प्राणाः प्रभवन्ति तस्मात् । – मुण्डकोपनिषद् २।१।३,८
ख. यथाग्नेर्ज्वलतः क्षुद्रा विस्फुलिङ्गा व्युच्चरन्त्येव मे वैतस्मादात्मनः सर्वे प्राणाः ।
ग. स प्राणमसृत प्राणाच्छ्रद्धां एवं वायुर्ज्योतिरापः पृथिवीन्द्रियं मनोऽन्नम् ।
– प्रश्नोपनिषद् ६।४

४. क. एतस्मात्मनः सर्वे प्राणाः सर्वे लोकाः सर्वे देवास्सर्वाणि भूतानि व्युच्चरन्ति ।
– बृहदारण्यकोपनिषद् २।१।२०
ख. एतस्माज्जयते प्राणो मनः सर्वेन्द्रियाणि च ।
खं वायुर्ज्योतिरापः पृथिवी विश्वस्य धारिणी ॥ – मुण्डकोपनिषद् २।१।३

यसमा [5]सूत्र छन् चार कर्मेन्द्रियादि ती सब ।
उत्पन्न परमात्माले गरेका भन्दछन् तब ॥१२॥



## २. सप्तगत्यधिकरण (ब्रह्मसूत्र २।४।२।५–६)

शिष्य –

सङ्ख्या इन्द्रियको [6]सात पछि [7]आठ, [8]नवौँ, [9]दश ।
[10]एघार, बाह्रका साथै भन्छन् श्रुति [11]त्रयोदश ॥१३॥

यसरी श्रुतिका मन्त्र परस्पर विरुद्ध ती ।
आएका पूर्वपक्षीले भन्छन् [12]सात प्रमाण ली ॥१४॥

सन्देह मनमा आयो बुझ्नै मुस्किल भो अति ।
भन्नुहोस् गुरुजी ! लौन सङ्ख्या इन्द्रियका कति ? ॥१५॥

गुरु –

आए धेरैथरी सङ्ख्या भनी इन्द्रिय ती सब ।
यसमा मुख्य [13]एघार भन्दछ श्रुतिले सब ॥१६॥

---

५. तथा प्राणाः । – ब्रह्मसूत्र २।४।१।१–४
६. सप्त प्राणाः भवन्ति तस्मात् । – मुण्डकोपनिषद् २।१।८
७. अष्टौ ग्रहा अष्टावतिग्रहाः । – बृहदारण्यकोपनिषद् ३।२।१
८. नव वै पुरुषे प्राणा नाभिर्दशमी । – तैत्तिरीयसंहिता ५।१।१
९. क. दशमे पुरुषे प्राणाः । – बृहदारण्यकोपनिषद् ३।९।४
   ख. सर्वेषां स्पर्शानां त्वगेकायनम् । – बृहदारण्यकोपनिषद् २।४।११
१०. आत्मैकादशः । – बृहदारण्यकोपनिषद् २।९।४
११. त्रयोदश चक्षुश्च द्रष्टव्यञ्च । – प्रश्नोपनिषद् ४।८
१२. सप्त वै शीर्षण्याः प्राणाः । – बृहदारण्यकोपनिषद् ३।९।४
१३. दशमे पुरुषे प्राणा आत्मैकादशः । – बृहदारण्यकोपनिषद् ३।९।४

तीनमा कर्मका पाँच ज्ञानका पाँच भैकन ।
अन्तःकरणले गर्दा एघार इन्द्रियै जुन ॥१७॥

सातोटा जसले मान्छन् चारैमात्र हुने भयो ।
नासिका कान आँखा र वाणीमा सीमितै रह्यो ॥१८॥

भिन्नै वृत्ति हओस् जे होस् सातै इन्द्रिय हुन् भनी ।
वादीले भन्दछन् छैन उपयुक्त कसै पनि ॥१९॥

अझै विस्तृत गर्ने हो भने ता स्मृति भन्दछ ।
इन्द्रियादि सबै जोड्दा त्यो [१४]पुर्यष्टक बन्दछ ॥२०॥

अतः सङ्क्षेपमा भन्दा हुन्छन् [१५]एघार इन्द्रिय ।
यही नै हुन गो सौम्य ! सिद्धान्तपक्ष निर्णय ॥२१॥

[१६]दुई छन् यसमा सूत्र ऊहापोह गरीकन ।
एघार इन्द्रियै भन्छन् श्रुतिप्रमाण लीकन ॥२२॥



## ३. प्राणाणुत्वाधिकरण ( ब्रह्मसूत्र २।४।३।७ )

शिष्य –

ती इन्द्रियहरू हुन् वा अणु ? व्यापक वा विभु ?
यस्तो सन्देहमा भन्छन् साङ्ख्यवादी भने विभु ॥२३॥

---

१४. पुर्यष्टकेन लिङ्गेन प्राणाद्येन स युज्यते ।
तेन बद्धस्य वै बन्धो मोक्षो मुक्तस्य तेन च ॥ – स्मृतिः

१५. क. हस्तौ चादातव्यं चौपस्थश्चानन्दयितव्यञ्च पायुश्च विसर्जयितव्यञ्च पादौ च गन्तव्यञ्च । – प्रश्नोपनिषद् ४।८
ख. तथा दशेमे पुरुषे प्राणा आत्मैकादशस्ते यदास्माच्छरीरान्मर्त्यादुत्क्रामन्त्यथ रोदयन्ति । – बृहदारण्यकोपनिषद् ३।९।४

१६. सप्त गतेर्विशेषितत्वाच्च । – ब्रह्मसूत्र २।४।२।५–६

ती इन्द्रियहरू तत् तत् शरीर अवच्छिन्न भै ।
तत् तत् प्रदेशमा दिन्छन् कर्मको फल वृत्ति भै ॥२४॥

हुन् सर्वगत ती सारा सहयोग पुऱ्याउँछन् ।
विभु भै वृत्तिको लाभ जीवलाई गराउँछन् ॥२५॥

गुरु –
अयुक्त पूर्वपक्षी ती हुन् इन्द्रियहरू अणु ।
अति सूक्ष्म भनौँ यद्वा परिच्छिन्न त हुन् बरु ॥२६॥

श्रुतिले तिनको भन्छ जाने र आउने सब ।
विभुमा त्यो कहाँ होला ? जानु आउनु सम्भव ॥२७॥

जीवका सहयोगी हुन् भोगका निम्ति साधन ।
मुख्यत्वसिद्धिका लागि बन्दैनन् यिनी बाधन ॥२८॥

जीवजस्तै भएदेखि वृत्तिव्यापक इन्द्रिय ।
उत्क्राति आदिमा होला असम्भव अनिश्चय ॥२९॥

त्यसै कारणले भन्छन् सूत्रकार भनी अणु ।
श्रुतिले पनि यै भन्छ हुन् इन्द्रिय सबै अणु ॥३०॥

यसमा [१७]सूत्र यौटै छ यसले पनि सूत्रको ।
समर्थन गरी भन्छ अणु इन्द्रिय हुन् निको ॥३१॥



१७. अणवश्च । – ब्रह्मसूत्र २।४।३।७

## ४. प्राणश्रैष्ठ्याधिकरण (ब्रह्मसूत्र २।४।४।८)

शिष्य –

श्वासप्रश्वास गर्ने त्यो वायु जो मुख्य प्राण हो ।
अनादि हो कि ? उत्पन्न हुने प्राण अनित्य हो ? ।।३२।।

सन्देह यसमा देखी वादी भन्छन् अनादि हो ।
सृष्टिभन्दा थियो पूर्व श्रुति भन्छ अनादि हो ।।३३।।

ऋग्वेदमा छ आएको [१८]'आनीत्' यो शब्द हो जुन ।
त्यो सृष्टिपूर्वको गर्छ 'प्राणव्यापार'सूचन ।।३४।।

अतः त्यो प्राण हो नित्य अनादि हो सनातन ।
अनादि सादि के हो ? त्यो भन्नोस् सुन्छु दिई मन ।।३५।।

गुरु –

ऋग्वेदमा छ अएको 'आनीत्' यो जुन शब्द हो ।
प्राणव्यापार यो हैन 'अवातम्' त्यो निषेध हो ।।३६।।

ऋग्वेदमन्त्रमा व्यक्त 'अवातम्' शब्दले पनि ।
ब्रह्मकै मात्र सत्ताको गर्छ सूचन सत् भनी ।।३७।।

[१९]'सदेव' आदिले गर्छन् जो सृष्टिपूर्व वर्णन ।
गर्छ ऋग्वेदले सोही सर्वांशमा समर्थन ।।३८।।

---

१८. न मृत्युरासीदमृतं न तर्हि न रात्र्या अह्नः आसीत् प्रकेतः ।
आनीदवातं स्वधया तदेकं तस्माद्धान्यन्न परः किञ्चनास ।। – ऋग्वेदसंहिता ८।७।१७

१९. तदेव सोम्येद मग्र आसीदेकमेवाद्वितीयम् । – छान्दोग्योपनिषद् ६।२।१

[20]'एतस्मात्' श्रुतिले भन्छ ब्रह्मबाट तिनै सब ।
प्राणेन्द्रिय मनै साथ हुन्छन् उत्पन्न ती सब ॥३९॥

गर्भस्थ शिशुमा पैले प्राणसञ्चार गर्दछ ।
[21]त्यो 'प्राणो वाव ज्येष्ठश्च' श्रुतिले स्पष्ट भन्दछ ॥४०॥

सबै इन्द्रियमा प्राण जेठो हो तिनमा अनि ।
अस्तित्व बँच्न सक्तैन विनाप्राण कुनै पनि ॥४१॥

आफ्नो अस्तित्व नै राख्न प्राणको स्तुतिवन्दन ।
गर्छन् इन्द्रियले भन्ने [22]श्रुतिले गर्छ वर्णन ॥४२॥

पूर्वोक्त श्रुतिले भन्छन् सादि हो प्राण यो भनी ।
सादिमा तर जेठो हो हुन्छ उत्पन्न यो पनि ॥४३॥

यसमा [23]सूत्र यौटै छ यसले पनि वस्तुतः ।
श्रेष्ठ हो प्राण हो सादि भन्छ वेदानुसारतः ॥४४



## ५. वायुक्रियाधिकरण (ब्रह्मसूत्र २।४।५।९–१२)

शिष्य –

प्राण हो वायु ? वा अन्य ? हो वा सामान्य इन्द्रिय ?
सन्देह यसमा आयो सकेन हुन निश्चय ॥४५॥

---

२०. क. एतस्माज्जायते प्राणो मनः सर्वेन्द्रियाणि च । – मुण्डकोपनिषद् २।१।३
ख. स प्राणमसृजत । – प्रश्नोपनिषद् ६।४
२१. प्राणो वाव ज्येष्ठश्च श्रेष्ठश्च । – छान्दोग्योपनिषद् ४।१।१
२२. न वै शक्ष्यामस्वदृते जीवितुम् । – बृहदारण्यकोपनिषद् ६।१।१३
२३. श्रेष्ठश्च । – ब्रह्मसूत्र २।४।४।८

साङ्ख्यवादी भने भन्छन् [२४]श्रुतिप्रमाण ली अनि ।
प्राण हो वायुको साथै सामान्य [२५]करणै पनि ॥४६॥

प्राण हो वायु [२६]पाँचोटा भएर काम गर्नु हो ।
तन्त्रान्तरीयले भन्छन् प्राण इन्द्रियवृत्ति हो ॥४७॥

यसमा प्राण हो वायु ? यद्वा सामान्य इन्द्रिय ?
आज्ञा होस् गुरुजी ! मेरो गरी संशय-सङ्क्षय ॥४८॥

गुरु –
न प्राण वायु हो हैन व्यापार करणै पनि ।
पृथक् त्यो श्रुतिले गर्छ [२७]'प्राण एव' जहाँ भनी ॥४९॥

उपासनार्थ हो वायु चतुष्पाद् ब्रह्मरूपक ।
आध्यात्मिकादि छन् भेद उपकार्योपकारक ॥५०॥

'यः प्राणः' श्रुतिमा व्यक्त अभेदप्रतिपादक ।
कार्यकारण एकै हो सम्झँदा फलदायक ॥५१॥
'सामान्यकरणवृत्तिः' साङ्ख्यको हो असङ्गत ।
सामान्यवृत्ति नै हुन्नन् इन्द्रियका यथार्थतः ॥५२॥

सबै इन्द्रियका वृत्ति पृथक् छन् काम छन् पृथक् ।
[२८]'पञ्जरचालनन्याय' लाग्दैन यसमा पृथक् ॥५३॥

---

२४. यः प्राणः स एष वायुः । – बृहदारण्यकोपनिषद् १।५।३
२५. सामान्यकरणवृत्तिः प्राणाद्या वायवः पञ्चः । – श्रुतिः
२६. वायुः पञ्चविधः प्राणोऽपानो व्यान उदानः समानः । – बृहदारण्यकोपनिषद् १।५।३
२७. प्राण एव ब्रह्मणश्चतुर्थः पादः स वायुना ज्योतिषा भाति च तपति च ।
– छान्दोग्योपनिषद् ३।१८।४
२८. ननु पञ्जरचालनन्यायेनैतद्भविष्यति । – शाङ्करभाष्य

जीवात्मातुल्य नै प्राण छैन स्वतन्त्र वस्तुतः ।
अरू इन्द्रियजस्तै नै पराधीन छ तत्त्वतः ॥५४॥

प्राणइन्द्रियसंवाद क्रममा प्राण हो जड ।
भन्ने निर्णय देखिन्छ तस्मात् त्यो प्राण हो जड ॥५५॥

जडै भए पनि प्राण शरीरेन्द्रिय [२९]धान्दछ ।
[३०]'तान् वरिष्ठः' श्रुतिद्वारा अन्ततः श्रुति भन्दछ ॥५६॥

दर्शन श्रवणै आदि इन्द्रियैकार्य हुन् पृथक् ।
प्राण त्यो अन्य हो वस्तु वायुव्यापारले पृथक् ॥५७॥

यसमा [३१]सूत्र छन् चार सब नै एक बन्दछन् ।
वायु इन्द्रिय भन्दा ता पृथक् हो प्राण भन्दछन् ॥५८॥



## ६. श्रेष्ठाणुत्वाधिकरण (ब्रह्मसूत्र २।४।६।१३)

शिष्य –

प्राण हो विभु ? वा अल्प ? परिच्छिन्न छ जो अति ।
सन्देह मनमा आयो प्राणसम्बन्धमा अति ॥५९॥

२९. अथ ह प्राण अहं श्रेयसि व्यूदिरे, यस्मिन् व उत्क्रान्ते शरीरं पापिष्ठतरमिव दृश्यते स वः श्रेष्ठः । – छान्दोग्योपनिषद् ५।१।६–७

३०. तान् वरिष्ठः प्राण उवाच मा मोहमापद्यथाहमेवैतत्पञ्चधात्मानं प्रविभज्यैतद्बाण-मवष्टभ्य विधारयामि, इति च एतमेवार्थं श्रुतिराह प्राणेन रक्षन्नवरं कुलायम् ।
– बृहदारण्यकोपनिषद् ४।३।१२

३१. न वायुक्रिये पृथगुपदेशात् । – ब्रह्मसूत्र २।४।५।९–१२

[32]प्लुषीदेखि लिई माथि हिरण्यगर्भसम्ममा।
प्राणीका देहका भित्र रहन्छ यो समग्रमा ॥६०॥

अतः हो प्राण सर्वांश विभु सर्वत्र विस्तृत।
श्रुतिले पनि यै भन्छ भन्छन् वादी यथार्थतः ॥६१॥

यसमा हुन गो शङ्का प्राण हो विभु ? अल्प हो ?
भन्नुहोस् गुरुजी ! प्राण साँच्चै यो विभु ? अल्प हो ? ॥६२॥

गुरु –
अरू इन्द्रियका तुल्य अणु हो प्राण नै पनि।
अणुत्व अनि सूक्ष्मत्व आदि छन् प्राणमा पनि ॥६३॥

पाँचोटा मुख्य ती वृत्ति व्याप्त नै छन् शरीरमा।
उत्क्रान्ति गतिले हुन्छन् सूक्ष्मच्छिन्नत्व प्राणमा ॥६४॥

आधिदैविक हो प्राण समष्टि व्यष्टिरूपमा।
हिरण्यगर्भको प्राण हुँदा हो विभुरूपमा ॥६५॥

प्लुषीका रूपमा प्राण रहन्छ सब जीवमा।
भन्ने हो श्रुतिको अर्थ मात्र अध्यात्मरूपमा ॥६६॥
अध्यात्मरूपमा प्राण परिच्छिन्न र सूक्ष्म हो।
यसैले अणु हो प्राण यही सिद्धान्तपक्ष हो ॥६७॥

यसमा [33]सूत्र यौटै छ यसले पनि वस्तुतः।
प्राण हो अणु नै भन्छ जुन हो श्रुतिसम्मत ॥६८॥



---

३२. समः प्लुषिणा समो मशकेन समो नागेन सम एभिस्त्रिभिर्लोकैः समोऽनेन सर्वेण।
– बृहदारण्यकोपनिषद् १।३।२२

३३. अणुश्च। – ब्रह्मसूत्र २।४।७।१३

## ७. ज्योतिराद्यधिकरण (ब्रह्मसूत्र २।४।७।१४–१६)

शिष्य –

वागादि इन्द्रियै हुन् ती देवाधीन ? स्वतन्त्र ? वा ।
सन्देह मनमा आयो पराधीन ? स्वतन्त्र ? वा ॥६९॥

पूर्वपक्षी भने भन्छन् स्वतन्त्र सब इन्द्रिय ।
वागादिजन्य हो भोग द्यौतामा जान्छ निश्चय ॥७०॥

त्यसैकारणले तत् तत् इन्द्रियैहरू नै सब ।
तत् तत् विषयका भोक्ता अवश्यै पनि हुन् तब ॥७१॥

यसमा भन्नुहोस् ब्रह्मन् ! वागादि सब इन्द्रिय ।
देवताधीन हुन् ? यद्वा स्वतन्त्र ? सब इन्द्रिय ॥७२॥

गुरु –

वाक् आदि इन्द्रियै सारा [३४]अग्न्यादि देवका वश –
भएर भोग सम्पन्न गर्दछन् जीवको सब ॥७३॥

अनुग्राहक हुन् द्यौता सहयोगी बनीकन ।
वागादि इन्द्रियद्वारा पस्कन्छन् भोगसाधन ॥७४॥

देवता भोग गर्दैनन् आधिदैविक हुन् सब ।
अध्यात्मभावमा हुन्छन् वागादि इन्द्रियै सब ॥७५॥

वक्तृत्व आदि हुन् सारा [३५]आधिभौतिक ती जुन ।
भोक्ता हो जीव सर्वांश इन्द्रियै भोगसाधन ॥७६॥

---

३४. अग्निर्वाग्भूत्वा मुखं प्राविशत् वायुः प्राणो भूत्वा नाशिके प्राविशत् ।
– ऐतरोपनिषद् २।४

३५. वागध्यात्ममिति प्राहुर्ब्राह्मणास्तत्त्वदर्शिनः ।
वक्तव्यमधिभूतं तु वह्निस्तत्राधिदैवतम् ॥ – स्मृतिः

गर्दैनन् देवता भोग मनुष्ययोनिको सब ।
[३६]देवता भोग्दछन् भोग आफ्नू त्यो दिव्य वैभव ॥७७॥

प्राणवान् जीवका साथ इन्द्रिय जति छन् सब ।
स्वस्वामिभावसम्बन्ध रहन्छ निश्चयै तब ॥७८॥

जीव हो भोगको भोगी भोग्दैनन् भोग देवता ।
अनुग्राहकमात्रै हुन् ती अधिष्ठातृ-देवता ॥७९॥

धर्मोपार्जित आफ्ना नै शरीरमा बसीकन ।
जीवले भोग्छ प्रारब्ध भोग्दैनन् देव किञ्चन ॥८०॥

प्राण र जीवको हुन्छ नित्य सम्बन्ध वस्तुतः ।
[३७]जीव निस्केपछि प्राण साथमै जान्छ निश्चित ॥८१॥

इन्द्रियादिक साराका देवता हुन् नियामक ।
जीवको भोग भोग्दैनन् ती हुन् केवल रक्षक ॥८२॥

कर्तृत्व अनि भोक्तृत्व रहन्छन् साथ जीवका ।
भोक्तृत्वपक्षका हैनन् द्यौता करणपक्षका ॥८३॥

त्यसैकारणले जीव देवाधीन नभैकन ।
प्रारब्धकर्मको भोग भोग्छ स्वतन्त्र भैकन ॥८४॥

सिद्धान्तपक्षको गर्दै शास्त्रानुसार मण्डन ।
यसरी पूर्वपक्षीको मतको हुन्छ खण्डन ॥८५॥

---

३६. पुण्यमेवामुं गच्छति न ह वै देवान् पापं गच्छति । – बृहदारण्यकोपनिषद् १।५।२
३७. तमुत्क्रामन्तं प्राणोऽनूत्क्रामति प्राणमनूत्क्रामन्तं सर्वे प्राणा अनुत्क्रामन्ति ।
– बृहदारण्यकोपनिषद् ४।४।२

[38]तीन छन् यसमा सूत्र सबैले नित्य भन्दछन् ।
स्वतन्त्ररूपले जीव प्रारब्धभोग भोग्दछन् ॥८६॥



## ८. इन्द्रियाधिकरण (ब्रह्मसूत्र २।४।८।१७–१९)

शिष्य –

हुन् इन्द्रियहरू सारा प्राणका वृत्ति ? या पृथक् ?
सन्देह यिनमा आयो वृत्ति हुन् ? अथवा पृथक् ? ॥८७॥

यसमा भन्दछन् वादी प्राणका वृत्ति इन्द्रिय ।
प्राणभन्दा पृथक् छैन अस्तित्व [39]श्रुतिनिश्चय ॥८८॥

गुरु –

देखिन्छ स्पष्ट यो भेद प्राण इन्द्रियमा जब ।
कसरी वृत्ति ती हुन्छन् प्राणका इन्द्रियै तब ॥८९॥

प्राणातिरिक्त भिन्नै हुन् एघार इन्द्रियै पनि ।
[40]श्रुतिले स्पष्ट नै भन्छ होइनन् वृत्ति ती भनी ॥९०॥

अन्यप्रकरणैभित्र प्राण इन्द्रिय भिन्न हुन् ।
भनेर [41]श्रुतिले भन्छ तिनका काम भिन्न हुन् ॥९१॥

---

३८. ज्योतिराद्यधिष्ठानं तु तदामननात् । – ब्रह्मसूत्र २।४।७।१४–१६
३९. हन्त्यास्यैव सर्वे रूपसामेति त एतस्यैव सर्वे रूपमभवन् ।
– बृहदारण्यकोपनिषद् १।५।२१
४०. तानि मृत्युः श्रमो भूत्वोपयेमे तस्माच्छ्राम्यत्येव वाक् ... अथेममेव नाप्नोद्योऽयं मध्यमः प्राणः । – बृहदारण्यकोपनिषद् १।५।२१
४१. एतस्माज्जायते प्राणो मनः सर्वेन्द्रियाणि च । – मुण्डकोपनिषद् २।१।३

त्यसैकारणले हैनन् प्राणका वृत्ति इन्द्रिय ।
भेदोक्त श्रुतिले गर्छन् यिनको भेदनिर्णय ।।९२।।

प्राण इन्द्रियमा स्पष्ट देखिन्छ भेद कार्यमा ।
इन्द्रियादिक चल्दैनन् प्राण चल्छ सुषुप्तिमा ।।९३।।

प्राण इन्द्रियमा स्पष्ट वैलक्षण्य भयो जब ।
होइनन् प्राणका वृत्ति इन्द्रिय स्पष्ट भो जब ।।९४।।

[४२]तीन छन् यसमा सूत्र भन्दछन् स्पष्ट ती सब ।
होइनन् प्राणका वृत्ति भिन्नै हुन् इन्द्रियै सब ।।९५।।



## ९. संज्ञामूर्तिक्लृप्त्यधिकरण (ब्रह्मसूत्र २।४।९।२०–२२)

शिष्य –

नामरूपादि व्याकर्ता जीव हो ? हो कि ! ईश्वर ?
भन्ने सन्देह पैदा भो मनमा यो निरन्तर ।।९६।।

यसमा पूर्वपक्षी ती भन्दछन् नामरूपको ।
व्याकर्ता जीव हो ? हैन तर ईश्वर हो निको ।।९७।।

वादीले श्रुतिको सार्दै प्रमाण जो भने तब ।
भनाई ठीक हो ? हैन ? भन्नुहोस् गुरुजी ! अब ।।९८।।

गुरु –

[४३]'तासां त्रिवृत्' भनी आयो श्रुतिमा वाक्यवैभव ।
नामरूप दुवैको हो व्याकर्ता ईश्वरै तब ।।९९।।

---

४२. त इन्द्रियाणि तद्व्यपदेशादन्यत्र श्रेष्ठात् । – ब्रह्मसूत्र २।४।८।१७–१९
४३. तासां त्रिवृतं त्रिवृतमेकैकामकरोत् ।

[४४]‘सेयं’ यो शुरुमा भन्दै ‘करवाणि’ भनीकन ।
अन्तमा श्रुतिले भन्छ ईश्वर गर्छ सिर्जन ॥१००॥

त्रिवृत्करण यो सृष्टि गर्न सक्तैन जीवले ।
आदित्यचन्द्र अन्नादि सिर्जना गर्छ ईशले ॥१०१॥

पञ्चीकरणका पैले त्रिवृत्करण हो जुन ।
पृथिवीजलका साथै अग्निको हुन्छ सर्जन ॥१०२॥

[४५]आकाशश्रुतिमा व्यक्त आत्मा नै नामरूपको ।
व्याकर्ता सृष्टिकर्ता हो यही सिद्धान्त वेदको ॥१०३॥

प्रत्येक नाम औ रूप आदिको सृष्टि हो जुन ।
तेज पानी र अन्नैका नामले हुन्छ सर्जन ॥१०४॥

[४६]अग्निको रूप जो रातो तेजको रूप हो त्यही ।
जो शुक्लरूप हो त्यो नै जलको रूप हो त्यही ॥१०५॥

कृष्ण हो अन्नको रूप पृथिवी उपलक्षित ।
सृष्टिको क्रम यो नै हो त्रिवृत्करण तत्त्वतः ॥१०६॥

मांसविष्टाहरू बन्नु अन्नाख्य भूमि कार्य हुन् ।
मूत्ररक्तहरू बन्नु शुक्लाख्य जलकार्य हुन् ॥१०७॥

---

४४. सेयं देवतैक्षत हन्ताहमिमास्तिस्रो देवता अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरवाणीति, तासां त्रिवृतमेकैकां करवाणीति । – छान्दोग्योपनिषद् ६।३।२
४५. आकाशो ह वै नाम नामरूपयोर्निर्वहिता । – छान्दोग्योपनिषद् ८।१४।१
४६. यदग्ने रोहितं रूपं यच्छुक्लं तदपां यत्कृष्णं तदन्नस्य । – छान्दोग्योपनिषद् ६।४।१

हो त्रिवृत्कृत पृथ्वी नै व्रीहि-अन्नादि नै सब ।
[४७]खाएका अन्नका तीन भाग हुन्छन् गई तब ॥१०८॥

स्थूलले बन्छ त्यो विष्टा मध्यले मासु बन्दछ ।
सूक्ष्मांशबाट अत्यन्त मसिनो मन बन्दछ ॥१०९॥

सक्तैन सब यो सृष्टि जीवले गर्न निश्चित ।
'अनेन' श्रुतिमा हुन्छ श्रेष्ठ पुरुष वर्णित ॥११०॥

ईशकर्तृक हुन् सारा नामरूपाख्यसर्जन ।
वादीको जीवकर्तृत्व श्रुतिले गर्छ खण्डन ॥१११॥

यसमा तीन छन् [४८]सूत्र नामरूपाख्यसर्जन ।
गर्छन् ईश्वरले भन्छन् श्रुतिप्रमाण लीकन ॥११२॥

ब्रह्मसूत्रको द्वितीय अध्यायको चतुर्थ पादको कारिका पूरा भयो ।



---

४७. अन्नमशितं त्रेधा विधीयते तस्य यः स्थविष्ठो धातुस्तत्पुरीषं भवति यो मध्यमस्तन्मासं योऽणिष्ठस्तन्मनः । – छान्दोग्योपनिषद् ६।५।१

४८. सञ्ज्ञामूर्तिक्लृप्तिस्तु त्रिवृत्कुर्वत उपदेशात् । – ब्रह्मसूत्र २।४।९।२०–२२

गुरुशिष्यसंवादात्मिका–

# नेपाली ब्रह्मसूत्रकारिका

# तृतीय साधनाध्याय

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

## तृतीय साधनाध्याय

तृतीये विरतिस्तत्त्वम्पदार्थपरिशोधनम् ।
गुणोपसंहृतिर्ज्ञानबहिरङ्गादिसाधनम् ॥

## प्रथम पाद

(यस पादमा तदनन्तरप्रतिपत्तिदेखि अन्याधिष्ठितसहितका ६ अधिकरणहरू छन् । यी अधिकरणहरूमा गत्यागति र वैराग्यका सम्बन्धमा विचार गरिएको छ ।)

### १. तदनन्तरप्रतिपत्त्यधिकरण (ब्रह्मसूत्र ३।१।१।१–७)

शिष्य –

जीवात्मा मृत्युका पश्चात् भएर भूतवेष्टित ?
जाँदैन ? अथवा जान्छ ? नभई भूतवेष्टित ? ॥१॥

सन्देह यसमा आयो वादी सिद्धान्त राख्तछन् ।
सर्वत्र सूक्ष्म ती भूत हुन्छन् सुलभ भन्दछन् ॥२॥

यसमा भूत सूक्ष्मैले अवेष्टित कि ! वेष्टित ?
जीव त्यो कसरी जान्छ ? भन्नुहोस् अब निश्चित ॥३॥

गुरु –

सामान्य भूत पाइन्छन् जहाँ पनि सुनिश्चित ।
देहकारक ती सूक्ष्म पाइन्नन् भूत निश्चित ॥४॥

देहारम्भक ती भूत जाने हुन् जीवकै सित ।
तीविना गति नै हुन्न जीव जान्छ तिनैसित ॥५॥

उपलक्षित [1]अप् जीव होम पञ्चाग्निमा भई ।
स्वर्ग गै फल ऊ भोग्छ धूममार्ग हुँदै गई ॥६॥

पञ्चाग्निमा हुँदै होम जीव फर्किन्छ तत्क्षण ।
पाँचौँ योषाग्निमा होमी जन्मन्छ जीव भैकन ॥७॥

तदनन्तर नै जीव पुरुषाभिध बन्दछ ।
शरीरभावको प्राप्ति भएर जीव बाँच्तछ ॥८॥

प्रारब्धकर्म भोगेर जीव शरीर छोड्दछ ।
सूक्ष्मभूत लिई साथ त्यो इहामुत्र घुम्दछ ॥९॥

अन्यथा गति नै हुन्न नभए भूतवेष्टित ।
वादीको मत मिल्दैन जान्छ भन्ने अवेष्टित ॥१०॥

यसमा [2]सूत्र छन् सात सम्परिष्वक्तरंहति ।
बाट वेष्टित भै जाने देखिन्छ जीवको गति ॥११॥



## २. कृतात्ययाधिकरण ( ब्रह्मसूत्र ३।१।२।८–११ )

शिष्य –
जो स्वर्गबाट फर्केर जीव आउँछ जन्मन ।
त्यो सानुशय ? यद्वा हो विनानुशय ? जन्मन ॥१२॥

पूर्वपक्षीहरू भन्छन् विनानुशय भैकन ।
पृथ्वीमा जीव फर्कन्छ प्राणी भै फेरि जन्मन ॥१३॥

---

१. वेत्थ यथा पञ्चम्यामाहुतावापः पुरुषवचसो भवन्ति । – छान्दोग्योपनिषद् ५।३।३
२. तदन्तरप्रतिपत्तौरंहति सम्परिष्वक्तः प्रश्ननिरूपणाभ्याम् । – ब्रह्मसूत्र ३।१।१।१–७

[3]'यावत्सम्पात' यो वाक्य श्रुतिबाट लिईकन ।
विनानुशय फर्कन्छ भन्दछन् दृढ भैकन ॥१४॥

बँचेको शब्दको अर्थ कर्म भोग गरीकन ।
बँचेको अंश भन्ने हो फर्कन्छ जीव लीकन ॥१५॥

सन्देह प्राप्त भो ब्रह्मन् ! फर्की जो जीव आउँछ ।
त्यो सानुशय ? नै यद्वा विनानुशय आउँछ ? ॥१६॥

गुरु –
[4]स्वर्गबाट जसै जीव पृथ्वीमा फेरि आउँछ ।
अभुक्त कर्म साथै ली प्रारब्ध भोग्न धाउँछ ॥१७॥

त्यसरी फर्कंदा जीव भै सानुशय आउँछ ।
पञ्चाग्नि होमिँदै योषा अग्निबाट उदाउँछ ॥१८॥

[5]धर्माधर्महरूबाट उद्भूत कर्मको फल –
भोगेर, शेष कर्मादि भोग्न आउँछ नै तल ॥१९॥

सम्पाततक भोगेर स्वर्गमा कर्मको फल ।
जुन मार्ग गयो जीव सोबाटै फर्कने तल ॥२०॥

[6]हुनेले शुभ आचार योनि उत्तम पाउँछ ।
शुभ ब्राह्मण क्षत्री वा वैश्यको योनि पाउँछ ॥२१॥

---

३. तस्मिन्यावत्सम्पातमुषित्वाथैतमेवाध्वानं पुनर्निवर्तन्ते यथेतम् ।
– छान्दोग्योपनिषद् ५।१०।५

४. प्राप्यन्तं कर्मणस्तस्य यत्किञ्चेह करोत्ययम् ।
तस्माल्लोकात्पुनरेत्यस्मै लोकाय कर्मणे ॥ – बृहदारण्यकोपनिषद् ४।४।६

५. ते तं भुक्त्वा स्वर्गलोकं विशालम्, क्षीणे पुण्ये मर्त्यलोकं विशन्ति । – गीता ९।२१

६. तद्य इह रमणीयचरणा अभ्याशो ह यत्ते रमणीयां योनिमापद्येरन् ब्राह्मणयोनिं वा क्षत्रिययोनिं वा वैश्ययोनिं वा । – छान्दोग्योपनिषद् ५।१०।७

[७]अशुभाचार जस्को छ अशुभै योनि पाउँछ।
श्वको सूकरको यद्वा चण्डाल योनि पाउँछ ॥२२॥

बोकी अनुशयै जीव फर्केर फेरि झर्दछ।
[८]भाण्डानुसारि चिल्लोझैँ त्यो सानुशय बन्दछ ॥२३॥

चरणानुशयी यी हुन् समानार्थी सुनिश्चित।
दुवैको अर्थ यौटै हो छैन पार्थक्य निश्चित ॥२४॥

आचार [९]शीलले मान्छे जान्छ मुक्त सिधै बनी।
[१०]आचारहीनको शुद्धि गर्दैनन् वेदले पनि ॥२५॥

'चरणै' शब्दले पुण्यपाप कर्महरूकन।
लिने बादरि ती भन्छन् [११]'धर्मं चर' भनीकन ॥२६॥

आचार पनि धर्मै हो त्यसैकारणले पनि।
आचारयुक्त मान्छेले पाउने शुभ सद् जुनी ॥२७॥

धर्मीले स्वर्गको भोग पापी नरक पाउँछ।
पारत्र भोग भोगेर त्यो सानुशय आउँछ ॥२८॥

वादीको मत हो जीव विनानुशय आउँछ।
विनानुशयको जीव कसरी जन्म पाउँछ ? ॥२९॥

---

७. अथ य इह कपूयचरणा अभ्याशो ह यत्ते कपूयां योनिमापद्येरन् श्वयोनिं वा सूकरयोनिं वा चण्डालयोनिं वा। – छान्दोग्योपनिषद् ५।१०।७
८. शाङ्करभाष्य। – ब्रह्मसूत्र ३।१।२।८
९. अद्रोहः सर्वभूतेषु कर्मणा मनसा गिरा।
अनुग्रहश्च ज्ञानञ्च शीलमेतद्विदुर्बुधाः। – स्मृतिः
१०. आचारहीनं न पुनन्ति वेदाः। – स्मृतिः
११. सत्यं वद, धर्मं चर। यान्यनवद्यानि कर्माणि तानि सेवितव्यानि, नो इतराणि, यान्यस्माकं सुचरितानि, तानि त्वयोपास्यानि। – तैत्तिरियोपनिषद् १।११।१–२

जीव सानुशयीमात्रै स्वर्ग जान्छ र आउँछ ।
अतः सिद्धान्त वादीको बेकार हुन आउँछ ॥३०॥

यसमा [१२]चार छन् सूत्र सबैको एउटै मत ।
जीव सानुशयै फिर्छ यै भो सिद्धान्त निश्चित ॥३१॥



## ३. अनिष्टादिकार्यधिकरण (ब्रह्मसूत्र ३।१।३।१२–१९)

शिष्य –
पापी त्यो चन्द्रको लोक जान्छ ? जान्न ? भनीकन ।
यस सन्देहमा वादी भन्छन् जान्छ भनीकन ॥३२॥

[१३]'ये वै के' श्रुतिको सार्दै प्रमाण अघि निश्चित ।
पञ्चमाहुतिका लागि जानैपर्छ सुनिश्चित ॥३३॥

यसरी पूर्वपक्षीको मत आएपछि जब ।
के चन्द्रलोकमा पापी जान्छ ? भन्नोस् गुरो अब ॥३४॥

गुरु –
पञ्चमाहुतिकै निम्ति पापी जाँदैन चन्द्रमा ।
धर्मात्मा भोगकै निम्ति जानैपर्दछ चन्द्रमा ॥३५॥

'ये वै के' श्रुतिको मन्त्र धर्मात्मा निम्ति हो तर ।
पापीले भोग्दछन् दुःख परी नरक दुस्तर ॥३६॥

---

१२. कृत्यात्ययेऽनुशयवान्दृष्टस्मृतिभ्यां यथेतमनेवञ्च । – ब्रह्मसूत्र ३।१।२।१२–२१
१३. ये वै के चास्माल्लोकात्प्रयन्ति चन्द्रमसमेव ते सर्वे प्रयन्ति ।
– कौषीतकिब्राह्मणोपनिषद् १।२

[14]त्यस्ता पापीहरू जान्छन् सधैँ नै यमका घर ।
मेरा नै वशमा पर्छन् भन्दछन् यम दुर्धर ॥३७॥

शिष्य –
देवयानादिका मार्ग जानका लागि हुन् जुन ।
मान्छे मर्दा सबै जाने तिनै हुन् ? अथवा कुन ? ॥३८॥

गुरु –
आयो पञ्चाग्निविद्याका [15]प्रश्न उत्तरमा जुन ।
तीनोटा मार्ग छन् सोमा पढ श्रुति दिई मन ॥३९॥

विद्या र कर्मका मार्ग उत्तरै अनि दक्षिण ।
ज्ञानी उत्तरमा जान्छ कर्मी त्यो जान्छ दक्षिण ॥४०॥
[16]यी मार्ग जुन जाँदैनन् तेस्रो स्थान लिईकन ।
जन्मन्छन् अनि ती मर्छन् छुद्र जीव भईकन ॥४१॥

तीनको मुक्ति नै हुन्न यहीँ नै घुम्नुपर्दछ ।
[17]त्यसैकारणले स्वर्ग भरिन्न श्रुति भन्दछ ॥४२॥

[18]पाँचौँ आहुति यो वेद मनुष्यनिम्ति भन्दछ ।
पाँचौँ आहुतिबाटै अप् पुरुषाभिध बन्दछ ॥४३॥

---

१४. क. न साम्परायः प्रतिभाति बालं प्रमाद्यन्तं वित्तमोहेन मूढम् ।
अयं लोको नास्ति पर इति मानी पुनः पुनर्वशमापद्यते मे ॥ – कठोपनिषद् २।६
ख. वैवस्वतं सङ्गमनं जनानाम् । – कठोपनिषद् २।६
१५. वेत्थ यथासौ लोको न सम्पूर्यते । – छान्दोग्योपनिषद् ५।३।३
१६. यथैतयोः पथोर्न कतरेणचन तानीमानि क्षुद्राण्यसकृदावर्तीनि भूतानि भवन्ति ।
– छान्दोग्योपनिषद् ५।१०।८
१७. जायस्व म्रियस्वेत्येतत्तृतीयं स्थानं तेनासौ लोको न सम्पूर्यते ।
– छान्दोग्योपनिषद् ५।१०।८
१८. पञ्चम्यामाहुतावापः पुरुषवचसो भवन्ति । – छान्दोग्योपनिषद् ५।३।३

[१९]भई पुरुष जीवात्मा जानु आउनु गर्दछ ।
अन्य आहुति सङ्ख्याकै विना उत्पन्न बन्दछ ॥४४॥

तृतीयस्थान [२०]उद्‌भिज्ज यद्‌वा स्वेदज आदि हुन् ।
यही नै [२१]सूत्रले भन्छ जन्मन्छन् अनि मर्दछन् ॥४५॥

पापी नरक गै फर्की चन्द्रबिम्ब चढीकन ।
पञ्चाग्निमा हुँदै होम जन्मिन्छ श्वादि भैकन ॥४६॥

यसमा दश छन् [२२]सूत्र चन्द्रलोक गईकन ।
पञ्चाग्निमा भई होम फर्कन्छ जीव जन्मन ॥४७॥



## ४. साभाव्यापत्त्यधिकरण (ब्रह्मसूत्र ३।१।४।२२)

शिष्य –

कर्मको फल भोगेर भोग क्षीण भएपछि ।
कर्मी अनुशयी फर्की पृथ्वीमा आउँछन् पछि ॥४८॥

त्यसरी आउँदा जीव वियदादि हुँदै परी ।
पञ्चाग्निमा हुँदै होम लिन्छन् जन्म यहीँ झरी ॥४९॥

यसरी फर्कंदा जीव वियदादिस्वरूप ली ।
फर्कन्छ ? अथवा ब्रह्मन् फर्कन्न ? साम्यभाव ली ॥५०॥

---

१९. तत्र येषामारोहावरोहौ सम्भवस्तेषां पञ्चम्यामाहुतौ देह उद्‌भविष्यति । अन्येषान्तु विनैवाहुतिसङ्ख्याया भूतान्तरोपसृष्टाभिरद्‌भिर्देह आरप्स्यन्ते ।
– शाङ्करभाष्य, ब्रह्मसूत्र ३।१।३।१८

२०. आण्डजं जीवजमुद्‌भिज्जम् । – छान्दोग्योपनिषद् ६।३।१

२१. तृतीयशब्दविरोधः संशोकजस्य । – ब्रह्मसूत्र ३।१।३।२१

२२. अनिष्टादिकारिणामपि च श्रुतम् । – ब्रह्मसूत्र ३।१।३।१२–२१

सन्देह यसमा आयो पूर्वपक्षी भने तर ।
[२३]वियदादिस्वरूपै ली फर्कन्छ भन्दछन् तर ॥५१॥

यसमा भन्नुहोस् ब्रह्मन् ! साम्यता कि ? स्वरूप नै ।
कर्मी अनुशयी फर्की आउने हो कुन ? सही ॥५२॥

गुरु –
धूमयान हुँदै कर्मी चन्द्रमण्डलमा गई ।
भोगार्थ जलको देह लिने जलमयै भई ॥५३॥

भोगक्षय जसै हुन्छ प्रविलीन भईकन ।
[२४]आकाशतुल्य नै सूक्ष्म हुने अनुशयी जुन ॥५४॥

वियदादि नभै जीव वियद्भैँ सूक्ष्म बन्दछ ।
वायुभैँ त्यो क्रियाशील बर्सिने मेघ बन्दछ ॥५५॥

पृथ्वी, पुरुषका पश्चात् योषाका अग्निमा परी ।
प्राणी भैकन जन्मन्छ जीव यै क्रमले गरी ॥५६॥

आरोहजसरी त्यस्तै अवरोह गरीकन ।
कर्मी यै रीतले जन्ममृत्युमा घुम्छ फन्फन ॥५७॥

आकाशरूप मानेमा वाय्वादिमा क्रमैसँग ।
अवरोहण मिल्दैन जाँदैन अन्यका सँग ॥५८॥

---

२३. अथैतमेवाध्वानं पुनर्निर्वतन्ते यथेतमाकाशमाकाशाद्वायुं वायुर्भूत्वा धूमो भवति, धूमो भूत्वा अभ्रम्भवति, अभ्रम्भूत्वा मेघो भवति, मेघो भूत्वा प्रवर्षीति ।
– छान्दोग्योपनिषद् ५।१०।५

२४. अथेतमाकाशमाकाशाद्वायुम् । – छान्दोग्योपनिषद् ५।१०।५

लक्षणा श्रुतिका बीच स्वीकार्य श्रुतिन्याय हो ।
[25]श्रुत्यसम्भवमा चाहिँ लक्षणा पनि न्याय हो ॥५९॥

झर्दा अनुशयी जीव कर्मभोग गरीकन ।
आकाशतुल्य बन्ने हो आकाशरूप होइन ॥६०॥

यसमा [26]सूत्र यौटै छ यसले पनि वस्तुतः ।
माथि व्यक्त भएजस्तै व्यक्त गर्छ यथार्थतः ॥६१॥



## ५. नातिचिराधिकरण (ब्रह्मसूत्र ३।१।५।२३)

शिष्य –
व्रीह्यादिभावका पूर्व झर्दा अनुशयी तल ।
विलम्ब साथमा यद्वा ? चाँडै त्यो झर्छ ? नै तल ॥६२॥

यस्तो संशयमा वादी भन्छन् छैन नियामक ।
त्वरा विलम्ब जे जस्तो होला छैन नियामक ॥६३॥

यसमा गुरुजी ! भन्नोस् त्वरा विलम्ब के गरी ?
झर्ने अनुशयी जीव पाँचोटा अग्निमा परी ॥६४॥

गुरु –
बन्दै अनुशयी जीव व्योमादि अग्निभर्जन ।
वर्षाका साथमा झर्छ पृथ्वीमा फेरि जन्मन ॥६५॥

---

२५. श्रुत्यसम्भवे च लक्षणाश्रयणं नाय्यमेव । – शाङ्करभाष्य, सूत्र २२
२६. साभाव्यापत्तिरुपपत्तेः । – ब्रह्मसूत्र ३।१।४।२२

[27]त्यो चाँडै तल ओर्लन्छ विशेष सूत्र ली भर ।
यवव्रीह्यादिदेखि त्यो पार पाउन दुष्कर ।।६६।।

व्रीह्यादिबाट धूमादिमार्ग भै चढ्न दुस्तर ।
श्रुतिले पनि यै भन्छ निस्कन अति दुष्कर ।।६७।।

व्रीह्यादिभावका पूर्व शीघ्र त्यो जीव झर्दछ ।
व्रीह्यादिभाव छोडेर उठ्न मुस्किल पर्दछ ।।६८।।

यसमा [28]सूत्रले भन्छ नराम्रो कर्मको फल ।
व्रीह्यादिभाव छोडेर पार पाउन मुस्किल ।।६९।।



## ६. अन्याधिष्ठिताधिकरण (ब्रह्मसूत्र ३।१।६।२४–२७)

शिष्य –
जो हो अनुशयी जीव त्यसको व्रीहि आदिमा ।
संश्लेषमात्र हो ? यद्वा मुख्य जन्म ? यथार्थमा ।।७०।।

यस्तो सन्देहमा वादी [29]'जायन्ते' श्रुति लीकन ।
त्यै मुख्य जन्म हो भन्छन् तर मान्दैन यो मन ।।७१।।

त्यसैकारण हे ब्रह्मन् ! शास्त्रप्रमाण लीकन –
भन्नुहोस् मुख्य हो जन्म ? संश्लेष हो ? कि ! वा कुन ? ।।७२।।

---

२७. अभ्रं भूत्वा मेघो भवति मेघो भूत्वा प्रवर्षति त इह व्रीहियवा ओषधिवनस्पतयस्तिलमाषा इति जायन्तेऽतो वै खलु दुर्निष्प्रपतरम् । – छान्दोग्योपनिषद् ५।१०।६
२८. नातिचिरेण विशेषात् । – ब्रह्मसूत्र ३।१।५।२३
२९. त इह व्रीहियवा ओषधिवनस्पतयस्तिलमाषा इति जायन्ते ।
– छान्दोग्योपनिषद् ५।१०।६

गुरु –

जीवाधिष्ठित जे जे ती व्रीह्यादिमा गईकन ।
बस्छन् अनुशयी जीव संश्लेषित भईकन ।।७३।।

व्रीह्यादिमा गई जीव भोग्दैन सुख दुःख ती ।
पुरुषाग्निविषे होम हुनलाई तयार ती ।।७४।।

कर्मव्यापारमात्रैले सुखदुःखादि पाइने ।
रमणीयादि हुन् मन्त्र श्रुतिले नित्य गाइने ।।७५।।

अग्निष्टोमादि गर्दामा पशुहिंसा गरीकन ।
भएका पापले जीव जन्मन्छ अन्न भैकन ।।७६।।

[३०]नगर्नू प्राणीको हिंसा निषेध श्रुति गर्दछ ।
[३१]अग्नीषोमीयमा सोही विधेय पनि बन्दछ ।।७७।।

[३२]वैदिकी पशुहिंसामा रहन्न दुःखहेतुता ।
धर्माधर्महरू हुन्छन् विधिशास्त्रानुसारतः ।।७८।।

अतः व्रीह्यादिमा जन्म मुख्य जन्म भनीकन ।
भन्ने ती पूर्वपक्षीको धारणा हुन्छ खण्डन ।।७९।।

फर्कने चन्द्रमाबाट जो छन् अनुशयीहरू ।
पाउन्नन् स्थावरीभाव भन्दछन् शास्त्रले बरु ।।८०।।

---

३०. अहिंसन्सर्वभूतान्यन्यत्र तीर्थेभ्यः । – छान्दोग्योपनिषद् ८।१५।१
३१. अग्निषोमीयं पशुमालभेत । – तैत्तरीयसंहिता ६।१।११।६
३२. शास्त्रहेतुत्वाद्धर्माधर्मविज्ञानस्य, अयं धर्मोऽयमधर्म इति शास्त्रमेव विज्ञाने कारणम्, अतीन्द्रियत्वात्तयोः । – शाङ्करभाष्य, ब्रह्मसूत्र ३।१।६।२५

व्रीह्यादि अन्न ती योग्य पुरुषाग्नि परीकन ।
रेत बन्दछ होमिन्छ योषाग्निमा गईकन ।।८१।।

योषाग्निमा [३३]परी रेत जन्मने जीव हो जुन ।
त्यही हो मुख्य नै जन्म शुभाशुभ मिलीकन ।।८२।।

[३४]राम्रो आचारले जीव राम्रो नै योनि पाउँछ ।
ब्राह्मणक्षत्रियै यद्वा वैश्यको योनि पाउँछ ।।८३।।

[३५]अशुभाचारले जीव अशुभै योनि पाउँछ ।
श्वको सूकरको यद्वा चण्डाल योनि पाउँछ ।।८४।।

जो स्वर्गबाट पृथ्वीमा फिर्छन् अनुशयीहरू ।
व्रीह्यादि मुख्य ती जन्म हैनन् संश्लेष हुन् बरु ।।८५।।

यसमा [३६]सूत्र छन् चार यी पूर्वोत्तर बन्दछन् ।
व्रीह्यादि जीवको जन्म गौण संश्लेष भन्दछन् ।।८६।।

ब्रह्मसूत्रको तृतीय अध्यायको प्रथम पादको कारिका पूरा भयो ।



३३. यो यो ह्यन्नमत्ति यो रेतः सिञ्चति तद्भूय एव भवति ।
– छान्दोग्योपनिषद् ५।१०।६५

३४. तद्य इह रमणीयचरणा अभ्याशो ह यत्ते रमणीयां योनिमापद्येरन्ब्राह्मणयोनिं वा क्षत्रिययोनिं वा वैश्वयोनिं वा । – छान्दोग्योपनिषद् ५।१०।७

३५. तद्य इह कपूयचरणा अभ्याशो ह यत्ते कपूयां योनिमापद्येरन्श्वयोनिं सूकरयोनिं वा चण्डालयोनिं वा । – छान्दोग्योपनिषद् ५।१०।७

३६. अन्याधिष्ठितेषु पूर्ववदभिलापात् । – ब्रह्मसूत्र ३।१।६।२४–२७

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

## तृतीय साधनाध्याय

## द्वितीय पाद

(यस पादमा सन्ध्यादेखि फलसहित ८ अधिकरणहरू छन् । यी अधिकरणहरूमा तत् र त्वंको परिशोधनका सम्बन्धमा विचार गरिएको छ ।)

### १. सन्ध्याधिकरण (ब्रह्मसूत्र ३।२।१।१–६)

शिष्य –

त्यो स्वप्नदृष्टि साँचो हो ? मिथ्या हो ? अथवा भनी ।
सन्देह हुन गो ज्यादै सत् हो यद्वा असत् भनी ॥१॥

यसमा भन्दछन् वादी स्वप्न जाग्रत्-समान हो ।
[1]जाग्रत् सुषुप्तिका माझ तृतीय स्वप्नस्थान हो ॥२॥

यसमा पूर्वपक्षीले नाना श्रुति दिईकन ।
स्वप्नको दृष्टि सत्यै हो भन्छन् आग्रह लीकन ॥३॥

---

१. सन्ध्यं तृतीयं स्वप्नस्थानम् । – बृहदारण्यकोपनिषद् ४।३।९

अरू [२]शाखीहरू भन्छन् स्वप्नका काम सिर्जना ।
सबै यो प्राज्ञले गर्छ स्वप्न हो सत्य सिर्जना ।।४।।

[३]रथ घोडा र पन्थादि स्वप्नका सृष्टिवैभव ।
जाग्रत्का तुल्य ती सारा व्यावहारिक हुन् सब ।।५।।

गुरु –

स्वप्नको सृष्टि हो मिथ्या शुक्तिरूप्यसमान हो ।
प्रातिभासिक हो स्वप्न संस्कारजन्यमात्र हो ।।६।।

त्यो सान्ध्यसृष्टि माया हो पारमार्थिक होइन ।
देशकाल निमित्तादि हुँदैनन् स्वप्नमा जुन ।।७।।

रथादि हुन सक्तैनन् भित्र संवृत देशमा ।
त्यस्तै काल निमित्तादि रहन्नन् स्वप्नदेहमा ।।८।।

संस्कार वासना बोकी [४]जीवात्मा सब बन्दछ ।
रथ, वृक्ष, मनुष्यादि विश्वब्रह्माण्ड रच्तछ ।।९।।

---

२. क. य एव सुप्तेषु जागर्ति कामं कामं पुरुषो निर्मिमाण । – कठोपनिषद् ४।८
ख. शातायुषः पुत्रपौत्रान्वृणीष्व । – कठोपनिषद् १।२३
ग. कामानां त्वा कामभाजं करोमि । कठोपनिषद् १।२४
घ. अथ खल्वाहुर्जागरित देश एवास्यैष इति यानि ह्येष जाग्रत्पश्यति तानि सुप्तः ।
– बृहदारण्यकोपनिषद् ४।३।१४
ङ. अन्यत्र धर्मादन्यत्राधर्मात् । – कठोपनिषद् २।१४
च. तमेव शुक्रं तद्ब्रह्म तदेवामृतमुच्यते ।
तस्मिंल्लोकाः श्रिताः सर्वे तदु नात्येति कश्चन ।। – कठोपनिषद् २।४

३. स यत्र प्रस्वपिति, न तत्र रथा न रथयोगा न पन्थानो भवन्त्यथ रथान् रथयोगान् पथः सृजते । – बृहदारण्यकोपनिषद् ४।३।९,१०

४. स्वयं विहत्य स्वयं निर्माय स्वेन भासा स्वेन ज्योतिषा प्रस्वपिति ।
–बृहदारण्यकोपनिषद् ४।३।९

प्रातिभासिक हुन् मिथ्या स्वप्नका रचना सब ।
[5]रथादि यान मार्गादि सारा क्षणिक हुन् तब ॥१०॥

शिष्य –

असत् स्वप्न भएदेखि शुभाशुभादिको फल ।
जाग्रत्मा कसरी मान्छे पाउने तिनको फल ? ॥११॥

[6]स्त्रीको दर्शन पाएमा कार्यको सिद्धिसूचक ।
[7]काला दाँत हुने काले देखेमा मृत्युसूचक ॥१२॥

यसरी श्रुतिले भन्छ स्वप्नको फल सत्य हो ।
कसरी स्वप्न हे ब्रह्मन् ! भन्नसक्ने असत्य हो ? ॥१३॥

कार्यकारणसम्बन्ध अभेद्य दुर्निवारण ।
कार्य सत्य हुने किन्तु असत् हो किन कारण ? ॥१४॥

यसमा भन्नुहोस् ब्रह्मन् ! वादीको मत लीकन ।
स्वप्नको फल हो सत्य असत्य स्वप्न हो किन ? ॥१५॥

गुरु –

स्वप्नमा देखिने वस्तु यत्किञ्चित् सत्य हुन् तर ।
स्वप्न चाहिँ असत्यै हो अव्यवाहार्य अस्थिर ॥१६॥

स्वप्न हो जीवव्यापार [8]'य एष' श्रुतिले पनि ।
'त्वम्' को सङ्केत नै गर्छ अज्ञानावृत हो भनी ॥१७॥

---

५. न तत्र रथा न रथयोगा न पन्थानो भवन्ति । – बृहदारण्यकोपनिषद् ४।३।१०

६. यदा कर्मसु काम्येषु स्त्रियं स्वप्नेषु पश्यति ।
समृद्धिं तत्र जानीयात् तस्मिन् स्वप्ननिदर्शने ॥– स्मृतिः

७. पुरुषं कृष्णं पश्यति स एनं हन्ति ॥ – छान्दोग्योपनिषद् ५।२।९

८. य एष सुप्तेषु जागर्ति कामं कामं पुरुषो निर्मिमाणः । – कठोपनिषद् ५।८

त्यहाँ [९]'तदेव' अर्को त्यो श्रुतिले अन्तमा गई ।
जीवत्वभाव व्यावृत्ति निर्देश गर्छ तद् भई ॥१८॥

'तत्त्वम्' पदार्थको हो यो शोधनाध्याय नै अतः ।
प्राकारान्तरले त्यस्कै विचार हुन्छ तत्त्वतः ॥१९॥

स्वप्नमा प्राज्ञले रच्छ स्वप्न संसार त्यो तर ।
निषेध स्वप्नको हुन्छ निषिद्ध हुन्न ईश्वर ॥२०॥

अंशी ईश्वर हो अंश जीव हो अति नश्वर ।
जीव सङ्कल्पले स्रष्टा बन्दैन तुल्य ईश्वर ॥२१॥

[१०]जीवात्मा ब्रह्मका बीच तत्त्वं उपाधि जौन छ ।
ज्ञानाग्निले डढी तत्त्वं जीव नै ब्रह्म बन्दछ ॥२२॥

ऐश्वर्यभाव जीवैको देहाभिमानले गरी ।
तिरोभाव भई जान्छ अज्ञानवशमा परी ॥२३॥

जाग्रत्को वासनाबाट स्वप्नको हुन्छ सर्जन ।
जाग्रत्समान नै भान हुन्छ त्यो तुच्छ सर्जन ॥२४॥

अज्ञान जीवको हट्ता स्वयं नै ब्रह्म मान्दछ ।
त्यस्तै जाग्रत् जसै हुन्छ असत्य स्वप्न भाग्दछ ॥२५॥

त्यसैले स्वप्नको सृष्टि मिथ्या हो प्रातिभासिक ।
वादीको मत हो मिथ्या हुन सक्तैन तात्त्विक ॥२६॥

---

९. तदेवं शुक्रं तद्ब्रह्म तदेवामृतमुच्यते । तस्मिँल्लोकाः श्रिताः सर्वे तदु नान्येति कश्चन । – कठोपनिषद् ५।८।

१०. ज्ञात्वा देवं सर्वपाशापहानिः क्षीणैः क्लेशैर्जन्ममृत्युप्रहाणिः ।
तस्याभिध्यानात्तृतीयं देहभेदे विश्वैश्वर्यं केवल आत्मकामः ॥
– श्वेताश्वतरोपनिषद् १।११

छओटा [११]सूत्र छन् भन्छन् सबैले गरी चिन्तन ।
मिथ्या हो स्वप्नको सृष्टि श्रुतिले गर्छ शंसन ॥२७॥



## २. तदभावाधिकरण (ब्रह्मसूत्र ३।२।२।७–८)

शिष्य –

नाडी, पुरीतती साथै ब्रह्म ती तीन तत्त्वतः ।
सुषुप्ति निम्ति हुन् के यी ? विकल्पित ? समुच्चित ? ॥२८॥

[१२]सुषुप्तिकालमा हुन्छन् करणै उपसंहृत ।
सुषुप्तिकालमा जीव देख्तैन स्वप्न वस्तुतः ॥२९॥

नाडीभित्र पसी जीव [१३]पुरीतत्मा गईकन ।
गई हृदयमा सुत्छ ब्रह्मापन्न भईकन ॥३०॥

[१४]नाडी अनुक्रमै गर्दै नाडीमा तब पस्तछ ।
सपना जब देख्तैन प्राणमा एक बन्दछ ॥३१॥

[१५]अन्तर्हृदय आकाश जहाँ छ त्यैँ गईकन ।
अन्यले भन्दछन् जीव सुत्छ शान्त भईकन ॥३२॥

---

११. सन्ध्ये सृष्टिराह हि । – ब्रह्मसूत्र ३।१।१।१–६

१२. तद्यत्रैतत्सुप्तः समस्तः सम्प्रसन्नः स्वप्नं न विजानात्यासु तदा नाडीषु सृप्तो भवति । – छान्दोग्योपनिषद् ८।६।३

१३. ताभिः प्रत्यवसृप्य पुरीतति शेते । – बृहदारण्यकोपनिषद् २।१।१९

१४. तासु तदा भवति यदा सुप्तः स्वप्नं न कञ्चन पश्यत्यथास्मिन् प्राण एवैकधा भवति । – कौषीतकिब्राह्मणोपनिषद् ४।१९

१५. य एषोऽन्तर्हृदय आकाशस्तस्मिन् शेते । – कौषीतकिब्राह्मणोपनिषद् ४।१९

त्यस्तो समयमा जीव सत्-मा [16]प्रलीन भैकन ।
एकीभूत जसै हुन्छ बस्छ सद्ब्रह्म भैकन ॥३३॥

[17]प्राज्ञात्मा साथमा बस्छ एकीभूत भई जब ।
भित्र बाहिर जान्दैन क्यै कत्ति जीवले तब ॥३४॥

यसरी धेर नाडीमा निरपेक्ष परस्पर ।
विभिन्न स्थानमा बस्छ ? अपेक्षाहीन वा ? तर ॥३५॥

भन्दछन् पूर्वपक्षी ती केही [18]श्रुति दिईकन ।
विभिन्न स्थानमा बस्छन् निरपेक्ष भईकन ॥३६॥

विशेषरूप विज्ञानशून्य सुषुप्ति हो जुन ।
त्यो सर्वज्ञसमानै हो नाडी एकार्थशंसन ॥३७॥

त्यसैकारणले जीव विकल्पित भई भई ।
विभिन्न स्थानमा सर्दै जीव सुत्छ गई गई ॥३८॥

अतः सुषुप्तिमा जीव नाडी विभिन्नमा परी ।
विकल्पित भई सुत्छ अति आनन्दमा परी ॥३९॥

वादीको मत हे ब्रह्मन् ! सन्दिग्धपूर्ण लाग्दछ ।
भन्नोस् समुच्चितै यद्वा भै विकल्पित सुत्तछ ॥४०॥

---

१६. सता सोम्य तदा सम्पन्नो भवति स्वमपीतो भवति । – छान्दोग्योपनिषद् ६।८।१
१७. प्राज्ञेनात्मना सम्परिष्वक्तो न बाह्यं किञ्चन वेद नान्तरम् ।
– बृहदारण्यकोपनिषद् ४।३।२१
१८. क. सता सौम्यतदा सम्पन्नो भवति । – छान्दोग्योपनिषद् ६।८।१
ख. सति सम्पद्य न विदुः सति सम्पद्यामहे । – छान्दोग्योपनिषद् ६।९।२

गुरु –

[19]सुषुप्तिकालमा जीव नाडी अनेकमा सरी ।
त्यहाँ समुच्चितै सुत्छ देख्तैन स्वप्न सो घरी ॥४१॥

जस्तै [20]प्रासादमा रामु सुत्छ पलँगमा भनी–
भन्दा समुच्चयै हुन्छ दुई विभक्तिले पनि ॥४२॥

त्यस्तै नै जीव [21]नाडी र पुरीतत्, ब्रह्ममा पनि ।
समुच्चयी भई सुत्छ भन्दछ श्रुतिले पनि ॥४३॥

सुषुप्तिमा गई जीव [23]नाडीका भित्र पस्तछ ।
छुँदैन पापले तेजसाथ भै एक बन्दछ ॥४४॥

[24]ब्रह्म नै तेज हो त्यैमा एकीभूत भईकन ।
पापहीन भई बस्छ बनी ब्रह्म सनातन ॥४५॥

---

१९. तासु तदा भवति यदा सुप्तः स्वप्नं न कञ्च पश्यत्यथास्मिन् प्राण एवैकधा भवति ।
– कौषीतकिब्राह्मणोपनिषद् ४।१९

२०. नानार्थत्वसमुच्चयोरप्येक विभक्तिनिर्देशदर्शनात् प्रासादे शेते पर्यङ्के शेते इत्येवमादिषु, तथेहापि नाडीषु पुरीतति ब्रह्मणि च स्वपितीत्येतदुपपद्यते समुच्चयः ।
– ब्रह्मसूत्रशाङ्करभाष्य

२१. आसु तदा नाडीषु सृप्तो भवति । – छान्दोग्योपनिषद् ८।६।३

२३. नाडीषु सृप्तो भवति, तं न कश्चन पाप्मा स्पृशति, तेजसा हि तदा सम्पन्नो भवति ।
– छान्दोग्योपनिषद् ८।६।३

२४. क. ब्रह्मैव तेज एव । – बृहदारण्यकोपनिषद् ४।४।७
ख. सर्वे पाप्मानोऽतो निवर्तन्तेऽपहतपाप्मा ह्येष ब्रह्मलोकः ।
– छान्दोग्योपनिषद् ८।४।२

[25]हृदयाकाश हो स्वच्छ त्यहीँ सुषुप्ति ठाउँ छ ।
पुरीतति हुँदै जान्छ त्यहीँ नै जीव सुत्तछ ।।४६।।

[26]पुरीतत् भाष्यले भन्छ हृदयपरिवेष्टन ।
त्यसैका भित्र भै जान्छ सुत्छ ब्रह्म भईकन ।।४७।।

ब्रह्म, सत्, प्राज्ञ यी तीन सुषुप्तिस्थान हुन् भनी ।
भाष्यले गर्छ उद्घोष यी समुच्चय हुन् भनी ।।४८।।

नाडी पुरीतति, ब्रह्म यी समुच्चय तीन हो ।
नाडी पुरीतति द्वार सुषुप्तिस्थान ब्रह्म हो ।।४९।।

जीवको एक आधार ब्रह्म नै हो सुषुप्तिमा ।
आधाराधेय यो हैन तादात्म्य हो यथार्थमा ।।५०।।

त्यो [27]सत्का साथमा जीव एकीभूत भईकन ।
प्रलीन हुन्छ आफैँमा श्रुति भन्छ सनातन ।।५१।।

---

२५. क. य एषोऽन्तर्हृदय आकाशस्तस्मिञ्शेते । – बृहदारण्यकोपनिषद् २।१।१७
ख. हृदयाकाशस्य च ब्रह्मत्वं समधिगतम् 'दहर उत्तरेभ्यः' (ब्रह्मसूत्र १।३।१४) तथा नाडीपुरीततितत्समुच्चयोऽपि 'ताभिः प्रत्यवसृप्य पुरीतति शेते' (बृहदारण्यकोपनिष्द् २।१।१९) इत्येक-वाक्योपादानादवगम्यते सत्प्राज्ञयोश्च प्रसिद्धमेव ब्रह्मत्वम् ।
– शाङ्करभाष्य

२६. क. पुरीतति शेते । – बृहदारण्यकोपनिषद् २।१।१९
ख. पुरीतदिति हृदयपरिवेष्टनमुच्यते । – बृहदारण्यकोपनिष्द्, शाङ्करभाष्य २।१।१९
ग. ताभिः प्रत्यवसृप्य पुरीतति शेते । – बृहदारण्यकोपनिषद् २।१।१९

२७. सता सोम्य तदा सम्पन्नो भवति स्वमपीतो भवति । – छान्दोग्योपनिषद् ६।८।१

त्यो सत्‌का साथमा हुन्छ स्वरूपापन्न नै जब ।
[२८]अद्वैत ब्रह्म नै बन्छ देख्तैन द्वैत नै तब ।।५२।।

सुषुप्तिस्थान आत्मा हो स्वाप विषयमा यही ।
त्यो प्रश्नोत्तरका द्वारा श्रुतिको वाक्य हो सही ।।५३।।

आई [२९]सत्‌बाट जान्दैन जीव भ्रमित बन्दछ ।
श्रुतिले जीव आत्माको नित्य सम्बन्ध भन्दछ ।।५४।।

जसरी [३०]अग्निका साना निस्कन्छन् कणिका सब ।
आत्माबाट त्यहाँ त्यस्तै निस्कन्छन् प्राण नै तब ।।५५।।

सुषुप्तिस्थानको छैन विकल्प नै कतै पनि ।
नाडीमा कहिले आत्मा पुरीतत् कहिले अनि ।।५६।।

'नाडी' आत्मा पुरीतत् यी सुषुप्तिनिम्ति तत्त्वतः ।
हुन् समुच्चित, यी हैनन् ती विकल्पित वस्तुतः ।।५७।।

नाडीद्वारा पुरीतत्‌मा हुँदै हृद्‌ब्रह्ममा गई ।
सुषुप्तिकालमा जीव बस्छ ब्रह्म स्वयं भई ।।५८।।

यस विज्ञानको खास प्रयोजन छ सुन्दर ।
जीव नै ब्रह्म हो मुक्त जाग्रत् र स्वप्नले पर ।।५९।।

---

२८. तत्केन कं विजानीयात्, यत्र वाऽन्यदिव स्यात्तत्रान्योऽन्योऽन्यत् पश्येत् ।
– बृहदारण्यकोपनिषद् २।४।१४, ४।३।३१

२९. क. कुत एतदागात् । – बृहदारण्यकोपनिषद् २।१।१६
ख. सत आगम्य न विदुः सत आगच्छामहे । – छान्दोग्योपनिषद् ६।१०।२

३०. यथाग्नेः क्षुद्रा विस्फुलिङ्गा व्युच्चरन्त्येवमेवास्मादात्मनः सर्वे प्राणाः ।
– बृहदारण्यकोपनिषद् २।१।२०

विकल्प मत मानेमा आठदोषहरू पनि ।
प्रसक्त हुन जाने छन् ग्राह्यै समुच्चयै अनि ॥६०॥

दुई छन् यसमा [३१]सूत्र सबैले नै विकल्पित ।
मान्दैनन्, सबले मान्छन् श्रुत्युक्त नै समुच्चित ॥६१॥



## ३. कर्मानुस्मृतिशब्दविध्यधिकरण (ब्रह्मसूत्र ३।२।३।९)

शिष्य –
सुषुप्तिपछि जो जीव जाग्छ ? उही कि ! वा अरू ?
भन्ने सन्देह उत्पन्न यसमा अब भो शुरु ॥६२॥

भन्दछन् पूर्वपक्षी ती अर्को नै जीव उठ्तछ ।
ब्रह्मापन्न उही जीव कसरी उठ्न सक्तछ ? ॥६३॥

अनन्त जलथुप्रोमा मिलेको जलको कण ।
कसरी उही नै फिर्छ असम्भव छ फर्कन ॥६४॥

त्यस्तै सुषुप्तिमा जीव ब्राह्मीभूत भईकन ।
मिलेको ब्रह्म भै जीव, कसरी सक्छ फर्कन ? ॥६५॥

अतः सुषुप्तिका पश्चात् अर्को नै जीव उठ्तछ ।
नयाँ कर्म गरी उल्ले नयाँ जीवन पाउँछ ॥६६॥

यसरी पूर्वपक्षीको मत आयो यहाँ जब ।
सुषुप्तिपछिको जीव उही वा अन्य हो ? तब ॥६७॥

---

३१. तदभावो नाडीषु तच्छ्रुतेरात्मनि च । – ब्रह्मसूत्र ३।२।२।७–८

गुरु –

सुषुप्तिमा पुगी उठ्ने उही हो जीव वस्तुतः ।
[३२]'कर्मानुस्मृति'ले गर्दा उही नै उठ्छ तत्त्वतः ॥६८॥

विभिन्न [३३]श्रुतिले भन्छन् सुतेकै जीव उठ्तछ ।
[३४]अन्यथा कर्मविद्याको विधि नैरर्थ्य बन्दछ ॥६९॥

सुषुप्तिमा भई ब्रह्म ऊ डुबे पनि अन्ततः ।
उपाधिदोषले गर्दा उही नै उठ्छ वस्तुतः ॥७०॥

अतः सुषुप्तिकै जीव फर्केर फेरि आउँछ ।
वादीको मत सर्वांश हुन खण्डित आउँछ ॥७१॥

यसमा [३५]सूत्र यौटै छ कर्मानुस्मृतिले तब ।
सुतेकै जीव उठ्ने हो श्रुतिले भन्छ यो सब ॥७२॥



३२. कर्मानुस्मृति शब्दादिभ्यः पञ्चभ्यो हेतुभ्यः । सुप्तो भूय उत्थाय शिष्टं तत्करोति, अत्र अनु प्रत्यभिज्ञां सूचयति । – ब्रह्मसूत्र, शाङ्करभाष्य

३३. क. पुनः प्रतिन्यायं प्रतियोन्याद्रवति बुद्धान्तायैव ।
– बृहदारण्यकोपनिषद् ४।३।१६

ख. इमाः सर्वाः प्रजा अहरहर्गच्छन्त्य एतं ब्रह्मलोकं न विन्दन्ति ।
– छान्दोग्योपनिषद् ८।३।२

ग. त इह व्याघ्रो वा सिंहो वा वृको वा वराहो वा कीटो वा पतङ्गो वा दंशो वा मशको वा यद्यद्भवन्ति तदा भवन्ति । – छान्दोग्योपनिषद् ६।९।३

३४. अकृताभ्यागमकृतविप्रणाशौ च दुर्निवारावनयोत्थानपक्षे स्याताम्, तस्मात् स एवोत्तिष्ठति नान्य इति । – ब्रह्मसूत्र, शाङ्करभाष्य

३५. स एव तु कर्मानुस्मृतिशब्दविधिभ्यः । – ब्रह्मसूत्र ३।२।३।९

## ४. मुग्धेऽर्धसम्पत्यधिकरण (ब्रह्मसूत्र ३।२।४।१०)

शिष्य –

जाग्रत्स्वप्नादि हो ? मूर्च्छा अवस्था वा अरू कुन ?
सन्देह यसमा आयो मैले यो स्पष्ट जानिनँ ।।७३।।

वादी ती भन्दछन् जाग्रत् सुषुप्ति स्वप्नका पर ।
अवस्था अन्य देखिन्न यिनैमा पर्छ यो तर ।।७४।।

यसमा गुरुजी ! भन्नोस् यो मुग्धस्थिति हो कुन ?
जाग्रत्, सुषुप्ति वा स्वप्न ? मूर्च्छा हो तीनमा कुन ? ।।७५।।

गुरु –

सुषुप्ति स्वप्न जाग्रत्मा कुनै हालतमा पनि ।
मूर्च्छा पर्दैन वादीले जति तर्क दिए पनि ।।७६।।

मुग्ध निश्चित जाग्रत् न सपनाभित्र पर्दछ ।
जान्दैन स्वप्न देख्तैन अँध्यारोभित्र डुब्दछ ।।७७।।

जीवात्माले [३६]सुषुप्तिमा ब्रह्मसम्पत्ति पाउँछ ।
श्वासप्रश्वास भै स्वस्थ मिथ्या द्वैत हराउँछ ।।७८।।

मुग्धको तर सर्वाङ्ग काम्छ वक्त्र भयानक ।
देखिन्छ, नेत्र विस्फार्य सर्वाङ्ग कष्टदायक ।।७९।।

---

३६. क. सता सोम्य तदा सम्पन्नो भवति । – छान्दोग्योपनिषद् ६।८।१
ख. नैतं सेतुमहोरात्रे तरत न जरा न मृत्युर्न शोको न सुकृतं न दुष्कृतम् ।
– छान्दोग्योपनिषद् ८।४।१
ग. अत्र स्तेनोऽस्तेनो भवति । – बृहदारण्यकोपनिषद् ४।३।२२

त्यसैकारणले मूर्च्छा सुषुप्ति पनि होइन ।
जाग्रत् स्वप्न कुनै हैन यो मृत्यु पनि होइन ॥८०॥

ब्रह्मवेत्ताहरू भन्छन् मुग्धता परिशेषतः ।
अर्धसम्पत्ति मान्दा नै स्वीकार्य हुन्छ वस्तुतः ॥८१॥

यसमा [३७]सूत्र यौटै छ यसले परिशेषतः ।
मुग्धता अर्धसम्पत्ति भन्छ शास्त्रानुसारतः ॥८२॥



## ५. उभयलिङ्गाधिकरण (ब्रह्मसूत्र ३।२।५।११–२१)

शिष्य –
सुषुप्ति आदिमा सारा उपाधि शान्त भैकन ।
जीवात्मा ब्रह्मका साथ सम्पन्न हुन्छ तत्क्षण ॥८३॥

श्रुतिसामर्थ्यले हुन्छ ब्रह्मस्वरूप निश्चित ।
श्रुति छन् उभयैलिङ्गी [३८]सविशेषाख्य वस्तुतः ॥८४॥

क्यै [३९]निर्विशेष लिङ्गी छन् सन्देह यिनमा भयो ।
दुइटै लिङ्गवाला हो ? या ब्रह्म एक लिङ्ग हो ? ॥८५॥

या अन्यतर लिङ्गी हो ? या लिङ्गी निर्विशेष हो ?
यसमा भन्दछन् वादी लिङ्गी उभय ब्रह्म हो ॥८६॥

---

३७. मुग्धेऽर्धसम्पत्तिः परिशेषात् । – ब्रह्मसूत्र ३।२।४।१०
३८. सर्वकर्मा सर्वकामः सर्वगन्धः सर्वरसः । – छान्दोग्योपनिषद् ३।१४।२
३९. अस्थूलमनण्वह्रस्वमदीर्घम् । – बृहदारण्यकोपनिषद् ३।८।८

हे गुरो ! भन्नुहोस् ब्रह्म निर्विशेष ? विशेष हो ?
उभयै लिङ्गवाला हो ? यद्वा अन्यतरै कि ! हो ? ॥८७॥

रूपवान् पनि हो ब्रह्म नीरूप पनि ब्रह्म हो ।
यसै कारणले ब्रह्म सरूप र नीरूप हो ॥८८॥

रूपवान् पनि हो ? यद्वा ब्रह्मस्वरूपहीन हो ?
अनेकरूप हो ब्रह्म ? यद्वा त्यो एक रूप हो ? ॥८९॥

वादीले भन्दछन् ब्रह्म लिङ्गवाला अलिङ्ग हो ।
श्रुतिले भन्छ सो ब्रह्म 'चतुष्पाद्' बहुरूप हो ॥९०॥

गुरु –
मूलतः ब्रह्म लिङ्गी वा अलिङ्गी हुन्न तत्त्वतः ।
[४०]माया उपाधिले गर्दा अनेकौँ बन्छ वस्तुतः ॥९१॥

जस्तै स्फटिकमा रातो जपा उपाधिले गरी ।
रातो स्फटिक देखिन्छ त्यस्तै उपाधिले गरी ॥९२॥

[४१]रूपरूप सँगैरूप ब्रह्म लिन्छ अनेकन ।
निरूप ब्रह्म हो नित्य शान्त स्वच्छ सनातन ॥९३॥

सबै नै [४२]श्रुति यै भन्छन् भेद पुग्छ अभेदमा ।
उपासनार्थ हो भेद तात्पर्य छ अभेदमा ॥९४॥

---

४०. इन्द्रो मायाभिः पुरुरूप ईयते । – बृहदारण्यकोपनिषद् २।५।१९
४१. रूपं रूपं प्रतिरूपो बभूव । – बृहदारण्यकोपनिषद् २।५।१९
४२. यश्चायमस्यां पृथिव्यां तेजोमयोऽमृतमयः पुरुषो यश्चायमध्यात्मं शारीरस्तेजोमयोऽमृतमयः पुरुषोऽयमेव स योऽयमात्मा । – बृहदारण्यकोपनिषद् २।५।१

भेदको अन्य [४३]शाखाले निन्दा गर्दै अनेकन ।
अभेद परमात्माको गर्दछन् प्रतिपादन ॥९५

[४४]निषेध श्रुतिले गर्छन् निर्गुण ब्रह्मवर्णन ।
नेति नेति भनी वेद नानात्व गर्छ खण्डन ॥९६॥

सूर्यप्रकाशमा बाँस ऋजु वक्र भईकन ।
नाना आकार देखिन्छ उपाधिले गरीकन ॥९७॥

साकार र निराकार नाना रूपत्व वर्णन ।
उपासनार्थ नै हुन् यी उपाधिजन्य शंसन ॥९८॥

[४५]नूनको पिण्डभैँ ब्रह्म अन्यत्वरूपले पर ।
भित्र बाहिर सम्पूर्ण प्रज्ञानघन हो तर ॥९९॥

[४६]ब्रह्म मूर्तसँगै फेरि अमूर्त पनि होइन ।
नेति नेति भनी गर्छ निषेध श्रुतिशंसन ॥१००॥

---

४३. क. मनसैवेदमाप्तव्यं नेह नानास्ति किञ्चन ।
मृत्योः स मृत्युमाप्नोति य इह नानेव पश्यति ॥ – कठोपनिषद् ४।११
ख. भोक्ता भोग्यं प्रेरितारञ्च मत्वा सर्वं प्रोक्तं त्रिविधं ब्रह्ममेतत् ।
– श्वेताश्वतरोपनिषद् १।१२

४४. क. अशब्दमस्पर्शमरूपमव्ययम् । – कठोपनिषद् ३।१५
ख. दिव्यो ह्यमूर्तः पुरुषः स बाह्याभ्यन्तरो ह्यजः । – मुण्डकोपनिषद् २।१।२
ग. तदेतद् ब्रह्मापूर्वमनपरमनन्तरमबाह्यमयमात्मा ब्रह्म सर्वानुभूः ।
– बृहदारण्यकोपनिषद् २।५।१९

४५. स यथा सैन्धवघनोऽनन्तरोऽबाह्यः कृत्स्नः प्रज्ञानघन एव ।
– बृहदारण्यकोपनिषद् ४।५।१३

४६. अथात आदेशो नेति नेति । – बृहदारण्यकोपनिषद् २।३।६

[47]ब्रह्म हो व्यक्त कार्यादि अव्यक्त हेतु हो तर ।
मनका साथमा [48]वाणी पुग्दैन ब्रह्मका निर ।।१०१।।

यसरी श्रुतिले गर्छन् निषेधमुख वर्णन ।
अतद् विकार फ्याँकेर तद्ब्रह्म हुन्छ शंसन ।।१०२।।

[49]उपाधिवश देखिन्छन् सूर्यबिम्ब अनेकन ।
मायोपाधि लिई ब्रह्म देखिन्छ धेर भैकन ।।१०३।।

दृष्टान्त अनि दार्ष्टान्त मिल्दैनन् पूर्णरूपमा ।
केही अंश मिलेमात्रै पनि पुग्दछ पूर्णमा ।।१०४।।

त्यो निर्विशेष आत्मा नै [50]सविशेष भईकन ।
विभिन्न देहमा पस्छ लिङ्गशरीर भैकन ।।१०५।।

वेदको वाक्यतात्पर्य नियोगमा नभैकन ।
वेदवाक्य सधैँ हुन्छ ज्ञाननिष्ठ सनातन ।।१०६।।

ब्रह्म नीरूप हो, रूप उपाधिगत हो भ्रम ।
सम्पूर्ण श्रुतिले गर्छन् नीरूप-ब्रह्मवर्णन ।।१०७।।

---

४७. अन्यदेव तद्विदितादथो अविदितादधि । – केनोपनिषद् १।३
४८. यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह । – तैत्तिरीयोपनिषद् २।४।१
४९. क. यथा ह्ययं ज्योतिरात्मा विवस्वानपो भिन्ना बहुधैकोऽनुगच्छन् ।
उपाधिना क्रियते भेदरूपो देवः क्षेत्रेष्वेवमजोऽयमात्मा । – श्रुतिः
ख. एक एव हि भूतात्मा भूते भूते व्यवस्थितः
एकधा बहुधा चैव दृश्यते जलचन्द्रवत् ।– ब्रह्मबिन्दूपनिषद् १२
५०. क. पुरश्चक्रे द्विपदः पुरश्चक्रे चतुष्पदः ।
पुरः स पक्षी भूत्वा पुरः पुरुष आविशत् । – बृहदारण्यकोपनिषद् २।५।१८
ख. अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे करवाणि । – छान्दोग्योपनिषद् ६।३।२

एघार [५१]सूत्र देखिन्छन् पक्षविपक्ष भैकन ।
उभयरूप वादीको गर्दछन् मतखण्डन ॥१०८॥



## ६. प्रकृतैतावत्त्वाधिकरण (ब्रह्मसूत्र ३।२।६।२२–३०)

शिष्य –

'द्वे वाव [५२]ब्रह्मणो रूपे' भनेर श्रुतिमा जुन ।
दुई छन् ब्रह्मका रूप मूर्तामूर्त गरीकन ॥१०९॥

[५३]'नेति नेति' भनी गर्छ आदेश वेदले जब ।
सन्देह जन्मियो केको निषेध गर्छ यो तब ॥११०॥

यसमा भन्दछन् वादी दुई नकारले अनि ।
प्रपञ्च साथमा हुन्छ निषेध ब्रह्मको पनि ॥१११॥

यसमा गुरुजी ! भन्नोस् ब्रह्म प्रपञ्च नै पनि ।
निषेध कसरी गर्ला ? ब्रह्मको श्रुतिले अनि ॥११२॥

गुरु –

दुवैको हुन सक्तैन निषेध त्यो किमार्थ नै ।
यसले हुन जाने छ शून्यवाद प्रसक्त नै ॥११३॥

---

५१. न स्थानतोऽपि परस्योभयलिङ्गं सर्वत्र हि । – ब्रह्मसूत्र ३।२।५।११–२१

५२. द्वे वाव ब्रह्मणो रूपं मूर्तञ्चैवामूर्तञ्च । मर्त्यञ्चामर्त्यञ्च स्थितञ्च यच्च तच्च ।
– बृहदारण्यकोपनिषद् २।३।१

५३. अथात आदेशो नेति नेति नह्येतस्मादिति नेत्यन्यत्परमस्ति ।
– बृहदारण्यकोपनिषद् २।३।६

सद् ब्रह्मको प्रतिषेध कसरी हुन सक्तछ ?
सर्वात्मा ब्रह्म हो कल्ले निषेध गर्न सक्तछ ? ॥११४॥

[५४]ब्रह्म भन्छु भनी पैले गरीकन उपक्रम ।
निषेध ब्रह्मकै गर्दा मिल्दैन त्यो उपक्रम ॥११५॥

ब्रह्म हो सबको आत्मा निषेध कसरी हुने ?
निषेध जसले गर्छ निषिद्ध ऊ स्वयं हुने ॥११६॥

[५५]त्रिकालातीत हो ब्रह्म त्यो हुन्न कहिल्यै असत् ।
जल्ले ब्रह्म असत् भन्छ आफैँ नै हुन्छ ऊ असत् ॥११७॥

[५६]अस्ति ब्रह्म भने हुन्छ ब्रह्मको उपलब्धता ।
[५७]ब्रह्मविद् ब्रह्म नै बन्छ यही हो परमार्थता ॥११८॥

वीप्सा भएर जो आए नेति नेति भनी दुई ।
कार्यकारणकै गर्छन् निषेध अन्तमा गई ॥११९॥

---

५४. ब्रह्म ते ब्रवाणि । – बृहदारण्यकोपनिषद् २।१।१
५५. असन्नेव स भवति, असद् ब्रह्मेति वेद चेत् । – तैत्तिरियोपनिषद् २।६।१
५६. अस्तीत्येवोपलब्धव्या । – कठोपनिषद् ६।१३
५७. ब्रह्मविदाप्नोति परम् । – तैत्तिरीयोपनिषद् २।१।१

[58]सत्यको पनि हो सत्य शुद्ध ब्रह्म निरञ्जन ।
[59]इन्द्रियग्राह्य नै हैन पूर्ण सत् चित् सनातन ॥१२०॥

[60]इन्द्रियादिहरूलाई ब्रह्माले बाहिरैतिर ।
फर्काइदिनुभाकोले देख्तैन भित्र यो नर ॥१२१॥

कोही धीर सदात्माले फर्केर भित्रका तिर ।
हेरेमा देख्न सक्ने छ प्रत्यगात्मा परात्पर ॥१२२॥

विद्याद्वारा हटाएर मायाको भेद तत्त्वतः ।
पैले [61]ब्रह्म थियो जीव ब्रह्म नै बन्छ अन्ततः ॥१२३॥

भेद काल्पनिकै नै हो अभेद पारमार्थिक ।
श्रुतिको नेतिले भन्छ अद्वैत ब्रह्म तात्त्विक ॥१२४॥

---

५८. सत्यस्य सत्यमिति प्राणा वै सत्यं तेषामेव सत्यम् । – बृहदारण्यकोपनिषद् २।१।२०

५९. क. न चक्षुषा गृह्यते नापि वाचा नान्यैर्देवैस्तपसा कर्मणा वा ।
– मुण्डकोपनिषद् ३।१।८
ख. स एष नेति नेत्यात्माऽगृह्यो नहि गृह्यते । – बृहदारण्यकोपनिषद् ३।९।२६
ग. यत्तदद्रेश्यमग्राह्यम् । – मुण्डकोपनिषद् १।१।६
घ. यदा ह्येवैष एतस्मिन्नदृश्येऽनात्म्येऽनिरुक्तेऽनिलये ।
– तैत्तिरीयोपनिषद् २।७।१
ङ. अव्यक्तोऽयमचिन्त्योऽयमविकार्योऽयमुच्यते । – श्रीमद्भगवद्गीता २।२५

६०. क. पराञ्चि खानि व्यतृणत्स्वयम्भूस्तस्मात्पराङ् पश्यति नान्तरात्मन् ।
कश्चिद्धीरः प्रत्यगात्मानमैक्षदावृत्तचक्षुरमृतत्वमिच्छन् ॥ – कठोपनिषद् ४।१
ख. ज्ञानप्रसादेन विशुद्धसत्त्वस्ततस्तु तं पश्यते निष्कलं ध्यायमानः ।
– मुण्डकोपनिषद् ३।१।८

६१. क. स यो ह वै तत् परमं ब्रह्म वेद ब्रह्मैव भवति । – मुण्डकोपनिषद् ३।२।९
ख. ब्रह्मैव सन् ब्रह्माप्येति । – बृहदारण्यकोपनिषद् ४।४।६

[६२]नव छन् यसमा सूत्र ब्रह्म बाहेकका अरू ।
क्यै छैन श्रुतिले भन्छ यै हो सिद्धान्त सत् सुरु ॥१२५॥



## ७. पराधिकरण (ब्रह्मसूत्र ३।२।७।३१–३७)

शिष्य –

प्रपञ्चशून्य सद्ब्रह्म निर्धारण भयो जुन ।
ब्रह्मभिन्न अरू तत्त्व छन् ? छैनन् ? जान्न भो मन ॥१२६॥

यसमा पूर्वपक्षीले नाना श्रुति लिईकन ।
ब्रह्ममा [६३]सेतुता भन्छन् [६४]उन्मानत्व अनेकन ॥१२७॥

ब्रह्मातिरिक्त देखिन्छन् अरू वस्तुहरू भने ।
तसर्थ ब्रह्म सत् चित् त्यो अद्वैत कसरी हुने ? ॥१२८॥

गुरुजी ! भन्नुहोस् ब्रह्मबाहेक अरू वस्तु छन् ?
छैनन् वस्तु भने ? वादी अरू छन् किन भन्दछन् ? ॥१२९॥

---

६२. क. प्रकृतैतावत्व हि प्रतिषेधति ततो ब्रवीति च भूयः । – ब्रह्मसूत्र ३।२।६।२२–३०
ख. नान्योऽतोऽस्ति द्रष्टा । – बृहदारण्यकोपनिषद् ३।७।२३
ग. अथात आदेशो नेति नेति । – बृहदारण्यकोपनिषद् २।३।६
घ. तदेतद् ब्रह्मापूर्वमनपरमनन्तरमबाह्यम् । – बृहदारण्यकोपनिषद् २।५।९
६३. अथ य आत्मा स सेतुर्विधृतिः । – छान्दोग्योपनिषद् ८।४।१
६४. क. तदेतत् ब्रह्म चतुष्पादष्टाशफं षोडशकलम् । – छान्दोग्योपनिषद् ८।४।१
ख. सता सोम्य तदा सम्पन्नो भवति । – छान्दोग्योपनिषद् ६।८।१
ग. शरीर आत्मा । – तैत्तिरीयकोपनिषद् २।३।१
घ. प्राज्ञेनात्मना सम्परिष्वक्तः । – बृहदारण्यकोपनिषद् ४।३।२१
ङ. अथ य एषोऽन्तरक्षिणि पुरुषो दृश्यते । – छान्दोग्योपनिषद् १।७।५

गुरु –

ब्रह्मबाहेकका वस्तु प्रमाणका अभावमा ।
पाइन्नन्, ब्रह्म हो हेतु सृष्टिका सब कार्यमा ।।१३०।।

निमित्त र उपादान अभिन्न ब्रह्मकारण ।
ब्रह्मातिरिक्तका वस्तु सब हुन्छन् निवारण ।।१३१।।

ब्रह्मकारण सर्वात्मा ब्रह्मको सृष्टि हो सब ।
[६५]कार्यकारणमा भेद हुँदैन ब्रह्म हो सब ।।१३२।।

सृष्टिभन्दा थियो पैले [६६]सदात्मामात्र नै भनी ।
श्रुतिले गर्छ उद्घोष अन्य तत्त्व कहाँ ? अनि ।।१३३।।

ब्रह्म हो सेतु सादृश्य संसृष्टि-स्थितिवाहक ।
जगत् र उसका सारा मर्यादाको विधारक ।।१३४।।

ब्रह्मप्रतीकजस्तै हो चतुष्पाद् मनकल्पित ।
उपासनार्थ हो त्यस्तै परिच्छिन्नत्वकल्पित ।।१३५।।

उपाधिले विना ब्रह्म जान्नलाई छ दुस्तर ।
उन्मान र परिच्छिन्न होइनन् मुख्य ती तर ।।१३६।।

ब्रह्मका भेदको चर्चा उपाधिभेदले गरी ।
भएको, तर त्यो हैन स्वरूपभेदले गरी ।।१३७।।

सुषुप्तिकालमा हुन्छन् ऐकात्म्य जीव औ पर ।
मुख्य होइन, हो मुख्य [६७]सद्रूपप्राप्ति नै तर ।।१३८।।

---

६५. अनन्यत्वं च कारणात् कार्यस्य । – शाङ्करभाष्य, ब्रह्मसूत्र ३।२।७।३१

६६. सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् । – छान्दोग्योपनिषद् ६।२।१

६७. स्वमपीतो भवति । – छान्दोग्योपनिषद् ६।८।१

सेतुत्व आदिको चर्चा अतद्व्यावृत्ति गर्न हो ।
निषेधपछिको शेष अद्वैत ब्रह्ममात्र हो ।।१३९।।

सेतुत्व आदिको हुन्छ व्यपदेशत्व वेदमा ।
वस्त्वन्तरनिषेधै हो मुख्यत्व हैन भेदमा ।।१४०।।

[६८]'आकाशवत्' तथा [६९]'नित्य' श्रुति र [७०]स्मृतिले पनि ।
आत्मा सर्वगतै भन्छन् अद्वैत ब्रह्म हो भनी ।।१४१।।

ब्रह्मबाहेकका वस्तु निषेध [७१]श्रुति गर्दछ ।
[७२]ब्रह्मैवेदम् ? सबै भन्दै भेदव्यावृत्ति गर्दछ ।।१४२।।

यसरी पूर्वपक्षीको अन्यवस्तुत्वकल्पना ।
श्रुतिस्मृति तथा न्यायद्वारा हुन्छ विखण्डन ।।१४३।।

[७३]सूत्र छन् यसमा सात पूर्वोत्तर भईकन ।
गर्छन् प्रमाणका साथ ब्रह्मातिरिक्त खण्डन ।।१४४।।



६८. क. योऽयमन्तः पुरुष आकाशः । – छान्दोग्योपनिषद् ३।१२।८
ख. यो ऽयमन्तर्हृदय आकाशः । – छान्दोग्योपनिषद् ३।१२।९
ग. ज्यायानाकाशात् । – छान्दोग्योपनिषद् ३।१२।९
६९. आकाशवत् सर्वगतश्च नित्यः, ज्यायान् दिवः । – छान्दोग्योपनिषद् ३।१४।३
७०. नित्यः सर्वगतः स्थाणुरचलोऽयं सनातनः । – श्रीमद्भगवद्गीता २।२४
७१. अथात आदेशो नेति नेति । – बृहदारण्यकोपनिषद् २।३।६
७२. क. अथात आत्मादेश एव आत्मैवाधस्तात्, अहमेवाधस्तात् ।
– छान्दोग्योपनिषद् ७।२५।२, ७।२५।१
ख. सर्वं तं परादाद्योऽन्यत्रात्मनः सर्वं वेद । नेह नानास्ति किञ्चन । तदेतद्ब्रह्मापूर्वमनपरमनन्तरमबाह्यम् ।
– बृहदारण्यकोपनिषद् २।४।६, ४।४।१९, २।५।१९
७३. परमतः सेतून्मानसम्बन्धभेदव्यपदेशेभ्यः । – ब्रह्मसूत्र ३।२।७।३१–३७

## ८. फलाधिकरण (ब्रह्मसूत्र ३।२।८।३८–४१)

शिष्य –

ईशिता ईशितव्यादि ब्रह्ममा भेद छन् जुन।
व्यावहारिक हो भेद त्यसैमा हुन्छ चिन्तन ॥१४५॥

इष्टानिष्टादि आधार लिएर कर्मको फल।
दिन्छ ईश्वरले सोझै नगरी माथि या तल ॥१४६॥

सन्देह यसमा आयो दाता हो फलको कुन ?
अदृष्ट हो कि ? यद्वा हो ईश्वरै ? यिनमा कुन ? ॥१४७॥

मीमांसकहरू भन्छन् दाता अपूर्व हो भनी।
साक्षी ईश्वर नै दाता हुँदैन भन्दछन् तिनी ॥१४८॥

कर्मका फलको दाता अपूर्व हो ? कि ! ईश्वर।
यसमा भन्नुहोस् ब्रह्मन् ! अदृष्ट हो ? कि ! ईश्वर ? ॥१४९॥

गुरु –

जीवको कर्म जस्तो छ त्यस्तै नै कर्मको फल।
दिन्छ ईश्वरले कत्ति वैषम्यै नगरी फल ॥१५०॥

अपूर्व जड हो त्यल्ले कसरी फल दिन्छ र ?
विनाशी कर्मले जन्य अपूर्व हुन सक्छ र ? ॥१५१॥

कहीँ अस्तित्व देखिन्न शास्त्रादिमा अपूर्वको।
अर्थापत्ति पनि हुन्न ईशसिद्धि, विनष्टको ॥१५२॥

युक्तिका बलले हुन्न फलको हेतु ईश्वर ।
यसमा [७४]श्रुतिले भन्छ अन्नाद परमेश्वर ॥१५३॥

मुनि जैमिनिले भन्छन् दाता हो धर्म नै भनी ।
[७५]स्वर्गको कामना गर्ने गरोस् यागादि त्यो भनी ॥१५४॥

बादरायण आचार्य भन्दछन् कर्मको फल ।
धर्मले दिन सक्तैन दिन्छन् ईश्वरले फल ॥१५५॥

[७६]धर्माधर्मादिका कर्म ईश्वरले गराउँछन् ।
कैले स्वर्गादिमा लान्छन् कैले नरक पार्दछन् ॥१५६॥

[७७]श्रुतिस्मृति सबैले नै दाता ईश्वर भन्दछन् ।
अपूर्व जडले दिन्न भनी खण्डन गर्दछन् ॥१५७॥

लोकमा पनि स्वामीले आफ्ना सेवकको फल ।
कर्मानुसार नै दिन्छन् लेखाजोखा गरी फल ॥१५८॥

त्यस्तै ईश्वर यागादिबाट उत्पन्न जो फल ।
आफ्नो संस्कारमा राखी कर्तामा दिन्छ नै फल ॥१५९॥

---

७४. स वा एष महानज आत्मान्नादो वसुदानः । – बृहदारण्यकोपनिषद् ४।४।२४

७५. स्वर्गकामो यजेत । – ताण्डिश्रुतिः १६।१५।५

७६. एष ह्येव साधु कर्म कारयति तं यमेभ्यो लोकेभ्य उन्निनीषते ।
एष उ एवासाधु कर्म कारयति तं यमधो निनीषते । – श्रुतिः

७७. यो यो यां यां तनुं भक्तः श्रद्धयार्चितुमिच्छति ।
तस्य तस्याचलां श्रद्धां तामेव विदधाम्यहम् ॥
स तया श्रद्धया युक्तस्तस्याराधनमीहते ।
लभते च ततः कामान्मयैव विहितान् हि तान् ॥ – श्रीमद्भगवद्गीता ७।२१

कर्मानुसार नै दिन्छ कर्मीमा फल ईश्वर ।
वैषम्यदोष लाग्दैन साक्षी निष्पक्ष ईश्वर ।।१६०।।

कर्मका फलको दाता त्यो हो ईश्वर चेतन ।
अपूर्व दिन सक्तैन त्यो हो जड अचेतन ।।१६१।।

ईशहेतुक हो सृष्टि, सारा वेदान्त भन्दछ ।
[७८]कर्मानुरूप यी प्राणी प्रारब्ध, योनि पाउँछ ।।१६२।।

प्रयत्न जीवको हेरी कर्मको फल ईश्वर ।
दिन्छन् र फलहेतुत्व ईशमै छ निरन्तर ।।१६३।।

त्यसैकारण नैर्घृण्य वैषम्यदोष ईशमा ।
लाग्दैन सुखदुःखादि रहन्छन् जीवकर्ममा ।।१६४।।

कर्मको फल दाता हो ईश्वर श्रुतिसम्मत ।
जीवले फल भोग्ने हो यथाकर्म यथाश्रुत ।।१६५।।

रहन्न फलदातृत्व अपूर्वमा भनीकन ।
भयो निश्चय वादीको भयो मत विखण्डन ।।१६६।।

यसमा [७९]सूत्र छन् चार बुझीकन परात्पर ।
कर्मका फलका दाता भन्दछन् एक ईश्वर ।।१६७।।

ब्रह्मसूत्रको तृतीय अध्यायको द्वितीय पादको कारिका पूरा भयो ।



७८. योनिमन्ये प्रपद्यन्ते शरीरत्वाय देहिनः ।
स्थाणुमन्येऽनुसंयन्ति यथा कर्म यथा श्रुतम् ।। – कठोपनिषद् २।७
७९. फलमत उपपत्तेः । – ब्रह्मसूत्र ३।२।८।३८–४१

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

## तृतीय अध्याय

## तृतीय पाद

(यस पादमा सर्ववेदान्तप्रत्ययदेखि यथाश्रयभावसहित ३६ अधिकरणहरू छन् । यी अधिकरणहरूमा पर र अपर ब्रह्मका विषयमा विचार गरिएको छ )

### १. सर्ववेदान्तप्रत्ययाधिकरण (ब्रह्मसूत्र ३।३।१।१–४)

शिष्य –

सबै वेदान्तमा ब्रह्मन् ! यौटै उपासनाविधि ।
छ ? वा विधि अनेकौँ छन् ? भन्नोस् हे ज्ञानका निधि ॥१॥

वादी भन्छन् दुई ओटा छान्दोग्य अनि काण्वमा ।
छन् कैथुम अनि त्यस्तै वाजसनी उपासना ॥२॥

तैत्तिरीयकका साथै कौषीतकी र शाट्यमा ।
उपासनाहरू भिन्नै देखिन्छन् प्रतिवेदमा ॥३॥

छान्दोग्य, काण्वमा भिन्नै पञ्चाग्निको उपासना ।
देखिन्छ, अनि षष्ठाग्नि, शिरोव्रत अथर्वमा ॥४॥

शाखाको भेदले गर्दा पृथक् उपासना पनि ।
देखियो, अतः भिन्नै छन् सबै वेदान्तमा पनि ॥५॥

भन्नुहोस् गुरुजी ! स्पष्ट विभिन्न भेदले गरी ।
यौटै छ वेदमा ? छन् वा उपासना थरी थरी ? ॥६॥

गुरु –

सबै वेदान्तमा शाखा भिन्नाभिन्नै भए पनि ।
उपासना छ यौटै नै शाखा भिन्नै भए पनि ।।७।।

छ [१]प्राणविधि छान्दोग्यमा त्यस्तै [२]काण्वमा पनि ।
पञ्चाग्निविद्या छान्दोग्यमा छ त्यो काण्वमा पनि ।।८।।

आमिक्षायागका साथै यागवाजिन नै पनि ।
दुई पञ्चाग्निविद्या छन् छान्दोग्य काण्वमा पनि ।।९।।

आमिक्षायागमा अर्को वाजिनयागमा पनि ।
रूपले भेद देखिन्छ त्यस्तै पञ्चाग्निमा पनि ।।१०।।

प्रायः देखिन्छ विद्यामा यौटैमा पनि भिन्नता ।
[३]'नातिरात्रे षोडशी' मा भिन्नतामा अभिन्नता ।।११।।

षष्ठाग्नि छ कहीँ छैन शाखाभेद गरीकन ।
किन्तु पञ्चाग्निविद्यामा भेद छैन कथञ्चन ।।१२।।

काण्व षष्ठाग्निको गर्छ [४]'तस्याग्नि'बाट संशन ।
उपसंहार छान्दोग्य गर्छ [५]''एतां'' भनीकन ।।१३।।

श्रुतिमा छैन उल्लेख विद्या कैथुमको कबै ।
अरूमा विधि यौटै छ उपासनादिमा सबै ।।१४।।

---

१. यो ह वै ज्येष्ठञ्च श्रेष्ठञ्च वेद । – छान्दोग्योपनिषद् ५।१।१
२. ज्येष्ठश्चश्रेष्ठश्च स्वानां भवति । – बृहदारण्यकोपनिषद् ६।१।१
३. अतिरात्रे षोडशिनं गृह्णाति, नातिरात्रे षोडशिनं गृह्णाति । – श्रुतिः
४. तस्याग्निरेवाग्निर्भवति । – बृहदारण्यकोपनिषद् ६।२।१४
५. अथ ह य एतानेवं पञ्चाग्नीन्वेद । – छान्दोग्योपनिषद् ५।१०।१०

मुण्डकश्रुतिमा आयो [६]शिरोव्रताख्य लक्षण ॥
त्यो हो स्वाध्यायको अङ्ग उपासनाङ्ग होइन ॥१५॥

छान्दोग्य, काण्वमा यौटै स्वाध्याय र उपासना ।
देखिन्छ, ब्रह्मविद्यामा हुँदैन धर्मचोदना ॥१६॥

सबै वेदान्तमा यौटै उपासनाविधान छ ।
उपसंहारबाटै यो एकता हुन सक्तछ ॥१७॥

[७]'सर्वे वेदाः' भनी आयो यसैकारणले पनि ।
देखिन्छ ब्रह्मविद्यामा एकत्व जहिले पनि ॥१८॥

ऐक्यको हेतु सद्भाव अभाव भेदको अनि ।
उपासना छ यौटै नै शाखाभेद भए पनि ॥१९॥

सबै वेदान्तमा छैनन् उपासना अनेकन ।
श्रुतिले भन्छ सर्वार्थ सबै एक भनीकन ॥२०॥

यसमा [८]सूत्र छन् चार वेदान्तमा सबैतिर ।
निर्गुण ब्रह्मकै गर्छन् उपासना सबैतिर ॥२१॥



---

६. नैतदचीर्णव्रतोऽधीते । – मुण्डकोपनिषद् ३।२।११
७. सर्वे वेदा यत्पदमामनन्ति । – कठोपनिषद् २।१५
८. सर्ववेदान्तप्रत्ययं चोदनाद्यविशेषात् । – ब्रह्मसूत्र ३।३।१।१–४

## २. उपसंहाराधिकरण (ब्रह्मसूत्र ३।३।२।५)

शिष्य –
यौटा उपासनाभित्र श्रुत ती गुण वस्तुतः ।
उपसंहार अन्यत्र गर्न हुन्छ ? कि ? हुन्न ? त ।।२२।।

यसमा भन्दछन् वादी श्रुतिमा छैन यो श्रुत ।
श्रुत ती गुणद्वारा नै विद्या हुन्छ पुरस्कृत ।।२३।।

यौटाका गुण अन्यत्र लगेर उपसंहृत ।
गर्न मिल्छ कि ? मिल्दैन ? भन्नुहोस् सब तत्त्वतः ।।२४।।

गुरु –
जस्तै सर्वत्र यौटै छन् अग्निहोत्रादि शास्त्रतः ।
तिनका शेष गुण्यादि हुन्छन् अन्यत्र संहृत ।।२५।।

त्यस्तै उपासनाभित्र गुणोपसंहृत बन्दछ ।
उपास्यगुणसम्प्राप्य सर्वत्र नै अभेद छ ।।२६।।

कर्माधिक्य भए हुन्छ फलाधिक्य कसैगरी ।
भन्ने यो न्यायले मिल्छ उपसंहार राम्ररी ।।२७।।

भन्छन् सम्पूर्ण विज्ञान सर्ववेदान्तगम्य हो ।
यौटा विज्ञानभैँ गौण्य अर्को विज्ञान योग्य हो ।।२८।।

त्यस्तो विज्ञानमा हुन्छ उपसंहार गैकन ।
तस्मात् त्यो अर्थको भेद रहँदैन कदाचन ।।२९।।

विद्याविशिष्टको जो हो उपकार स्वयं पनि ।
स्वशाखोक्त गुणैतुल्य भन्छ त्यो सूत्रले पनि ।।३०।।

त्यसैले उपसंहार गर्नुहुन्छ भनीकन ।
यै हो वेदान्तसिद्धान्त वादीको हुन्छ खण्डन ॥३१॥

यसमा [१]सूत्र यौटै छ यल्ले निर्णय गर्दछ ।
यौटा गुणोपसंहार अर्कोमा हुन्छ भन्दछ ॥३२॥



## ३. अन्यथात्वाधिकरण (ब्रह्मसूत्र ३।३।३।६–८)

शिष्य –
छान्दोग्य, काण्वमा व्यक्त विद्या उद्‌गीथ हो जुन ।
एउटै हो कि ? भिन्नै हो ? सन्देह हुन गो कुन ? ॥३३॥

यसमा पूर्वपक्षी ती सङ्ग्राम नाम ती सब ।
समान नै भएकाले एकै हो भन्दछन् तब ॥३४॥

यसमा भन्नुहोस् ब्रह्मन् ! विद्या उद्‌गीथ हो जुन ।
दुवैमा एउटै हो ? वा भिन्नै हो ? जान्न भो मन ॥३५॥

गुरु –
भिन्नै उद्‌गीथविद्या हो वेद्यस्वरूप भिन्न छन् ।
छान्दोग्य, काण्वमा भिन्नै आफ्ना आफ्ना विधान छन् ॥३६॥

सामभागविशेषै त्यो उद्‌गीथावयवादिमा ।
ॐको त्यो प्राणदृष्ट्या नै उपासना छ छा.उ.मा ॥३७॥

देखिन्छ काण्वमा चाहिँ उद्‌गीथभक्तिवर्णन ।
उद्‌गाता वाक्य इत्यादि प्राणप्रेरक लीकन ॥३८॥

---

१. उपसंहारोऽर्थभेदाद्विधिविशेषवत्समाने च । – ब्रह्मसूत्र ३।३।२।५

उद्गीथदृष्टिले गर्ने उपासनाविधान छ।
वेद्यको भिन्नताले नै त्यो विद्या पनि भिन्न छ ॥३९॥

विद्या एक हुँदै हैन [१०]'ओमित्येदक्षरम्' जहाँ –
उद्गीथावयवै यल्ले ओङ्कारदृष्टि नै त्यहाँ ॥४०॥

छान्दोग्यले भन्यो साक्षात् अन्यत्र [११]'त्वं न' आदिले।
सम्पूर्ण सामभक्ति नै भनिन्छ प्राणरूपले ॥४१॥

विभिन्न श्रुतिका मन्त्रद्वारा जो उपदिष्ट छ।
विद्यामा भिन्नता स्पष्ट देखिने उपयुक्त छ ॥४२॥

तीन छन् यसमा [१२]सूत्र शाखाका भेदले गरी।
विद्या उद्गीथ छन् भिन्नै भन्दछन् स्पष्ट नै गरी ॥४३॥



## ४. व्याप्त्यधिकरण (ब्रह्मसूत्र ३।३।४।९)

शिष्य –
[१३]'ओमित्येतद्' यहाँ आयो उद्गीथ अनि अक्षर।
सामानाधिकरण्यैझैँ प्रतीत हुन्छ यो तर ॥४४॥

त्यो के अध्यास ? वा बाध ? ऐक्य ? वा हो विशेषण ?
सन्देह यसमा आयो कुन युक्त ? भनीकन ॥४५॥

---

१०. ओमित्येदक्षरमुद्गीथमुपासीत। – छान्दोग्योपनिषद् १।१।१
११. अथ खल्वेतस्यैवाक्षरस्योपव्याख्यानं भवति। – छान्दोग्योपनिषद् १।१।१०
१२. अन्यथात्वं शब्दादिति चेन्नाविशेषात्। – ब्रह्मसूत्र ३।३।३।६–८
१३. ओमित्येतदक्षरमुद्गीथमुपासीत। – छान्दोग्योपनिषद् १।१।१

वादीको मत आएन कुनैमा फलदायक ।
भन्दछन् भन्न गाह्रो छ छैन हेतु नियामक ।।४६।।

वादीको यसरी आयो मत भन्नोस् गुरो ! अब ।
आए विकल्प पाँचोटा यौटा वा युक्त हुन् सब ? ।।४७

गुरु –
सामानाधिकरण्यै जो विशेषणविशेष्यको ।
भावद्वारा छ निर्दिष्ट यही नियम हो निको ।।४८।।

ऋगादिमा छ ओङ्कार व्याप्त अक्षर नै जब ।
अध्यास आदिमा हुन्छ फलको कल्पना तब ।।४९।।

सन्निकृष्टांशमा हुन्छ प्रसक्त लक्षणा तय ।
यसरी यसमा युक्त हुनैपर्दछ निर्णय ।।५०।।

[१४]'नाम ब्रह्मेति'मा आयो सामानाधिकरण्य नै ।
[१५]'यश्चौर'मा भने हुन्छ चौरत्वरूप बाध नै ।।५१।।

[१६]'यो जीवः' यसमा हुन्छ एकत्व ब्रह्मजीवको ।
[१७]'यन्नीलम्' मा हुने भाव विशेषणविशेष्यको ।।५२।।

विचार यिनमा हुन्छ कुन पक्ष लिने भनी ?
भन्नै सकिन्न सोझै नै निर्णायक यहाँ बनी ।।५३।।

१४. नाम ब्रह्मेत्युपासीत । – श्रुतिः
१५. यश्चौरः स स्थाणुः । – श्रुतिः
१६. यो जीवस्तद् ब्रह्म । – श्रुतिः
१७. यन्नीलं तदुत्पलम् । – श्रुतिः

सबै विकल्प छोडेर उद्गीथ अनि अक्षर ।
विशेषणविशेष्यैका भावले ती परस्पर ॥५४॥

युक्त निर्दुष्ट देखिन्छ यही हुन्छ नियामक ।
अरू दूषित हुन् पक्ष [१८]पर्युदास अलायक ॥५५॥

विशेषणविशेष्यै नै यहाँ निर्दुष्ट हो जुन ।
हो ॐ अक्षरको स्पष्टै त्यो उद्गीथ विशेषण ॥५६॥

परिशेष लिँदाखेरि जो विशेषणपक्ष छ ।
गृहीत हुन्छ सोही नै ॐकारव्याप्त वेद छ ॥५७॥

वादीले भन्दछन् छैन निर्णायक नियामक ।
यसमा स्पष्ट देखिन्छ विशेषण नियामक ॥५८॥

यसमा [१९]सूत्र यौटै छ यसले पनि जान्दछ ।
हो विशेषण उद्गीथ ओम्को निर्दुष्ट भन्दछ ॥५९॥



## ५. सर्वाभेदाधिकरण (ब्रह्मसूत्र ३।३।५।१०)

गुरु –

वाजैसनेयका साथै छान्दोग्य श्रुतिमा पनि ।
प्राणसंवादमा आयो प्राणै उपास्य हो भनी ॥६०॥

---

१८. व्याप्तेश्च समञ्जसम् । च शब्दोऽयं तुशब्दस्थाननिवेशी पक्षत्रयव्यावर्तन–प्रयोजन । तदिह त्रयः पक्षा पर्युदस्यन्ते विशेषणपक्ष एवैको निरवद्य इत्युपादीयते ।
– शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।४।९

१९. व्याप्तेश्च समञ्जम् । – ब्रह्मसूत्र ३।३।४।९

बृहद्‌मा वाक्‌हरू सारा वसिष्ठत्व-गुणान्वित ।
भनियो गुण ती फेरि प्राणमा पनि [20]अन्वित ॥६१॥

[21]कौषीतकीहरूभित्र वसिष्ठत्वादि ती गुण ।
छैनन् तथापि हुन्छन् ती उपसंहार गैकन ॥६२॥

सबै शाखाहरूभित्र प्राणसंवादमा स्थित ।
एकता प्राणविद्याको देखिन्छ श्रुतिसम्मत ॥६३॥

पूर्वपक्षीहरू भन्छन् पर्दैन गुण ती लिनु ।
[22]'एवम्' बाट गतार्थै ती भएको पर्छ सम्झिनु ॥६४॥

किन्तु शाखा सबैभित्र प्राणसंवादमा स्थित ।
प्राणविद्या भएकाले एकता हुन्छ वस्तुतः ॥६५॥

अतः प्रकृत जो छन् यी गुणतुल्य अप्राकृत ।
बुद्धिस्थ गुण 'एवम्'ले ग्राह्य हुन्छन् विशेषतः ॥६६॥

सबै नै गुण यी हुन्छन् सबैमा उपसंहृत ।
भन्ने कुरा भयो सिद्ध यै हो निर्णय अन्ततः ॥६७॥

यसमा [23]सूत्र यौटै छ यसले भन्छ शास्त्रतः ।
गुण ती सबको हुन्छ सबैमा उपसंहृत ॥६८॥



२०. यद्वा अहं वसिष्ठोऽस्मि त्वं तद्वसिष्ठोऽसि । – बृहदारण्यकोपनिषद् ६।१।१४
२१. 'अथातो निःश्रेयसादानम्', एता ह वै देवता अहं श्रेयसे ।
– कौषीतकिब्राह्मणोपनिषद् २।१४
२२. अथो य एवं विद्वान् प्राणे निःश्रेयसं विदित्वा । – श्रुतिः
२३. सर्वाभेदादन्यत्रेमे । – ब्रह्मसूत्र ३।३।५।१०

## ६. आनन्दाद्यधिकरण (ब्रह्मसूत्र ३।३।६।११–१३)

शिष्य –

तैत्तिरीयकमा प्रोक्त विद्या परमब्रह्मको ।
आनन्द आदिको अर्को ऐतरेयक आदिको ।।६९।।

तिनको ब्रह्मविद्यामा उपसंहार हुन्छ ? कि !
हुँदैन ? हुन गो शङ्का उपसंहार हुन्न ? कि ! ।।७०।।

आनन्द आदिको हुन्न उपसंहार गर्नु नै ।
पूर्वपक्षीहरू भन्छन् दिई श्रौत प्रमाण नै ।।७१।।

व्यवस्था यिनको हुन्छ वामनी सत्यकाम झैँ ।
यी परस्परमा हुन्न उपसंहार गर्नु नै ।।७२।।

'आनन्दो ब्रह्म' का साथै 'सत्यं ज्ञानम्' भनीकन ।
तैत्तिरीयकको ब्रह्मविद्याभित्र छ शंसन ।।७३।।

ऐतरेयकमा चाहिँ 'प्रज्ञानं ब्रह्म' हो जुन ।
त्यो परब्रह्म विद्यामा आनन्द छैन शंसन ।।७४।।

उपसंहार यी हुन्नन् परस्पर अरूसँग ।
भनेर मत वादी ती राख्तछन् स्पष्टतासँग ।।७५।।

यसरी पूर्वपक्षीको आयो विरोधमा मत ।
यसमा गुरुजी ! भन्नोस् के हो ? सिद्धान्त शास्त्रतः ।।७६।।

यसमा भन्नुहोस् हुन्छ ? उपसंहार वा तर ।
हुँदैन उपसंहार ? तिनीमा जो परस्पर ।।७७।।

गुरु –

आनन्दादिक सम्पूर्ण ब्रह्मका धर्म गैकनै ।
जहाँ श्रवण नै छैन उपसंहार हुन्छ नै ॥७८॥

देखिन्छ सब शाखामा एकत्व ज्ञेय ब्रह्मको ।
त्यसैकारणले हुन्छ उपसंहार धर्मको ॥७९॥

उपास्यधर्मले भिन्न शुद्ध ज्ञानार्थ निम्ति नै ।
आनन्दधर्म साराको उपसंहार हुन्छ नै ॥८०॥

वादीको उक्त दृष्टान्त स्पष्टै विषम हेय हो ।
नबुझी स्पष्ट सिद्धान्त हुन्न भन्नु अयोग्य हो ॥८१॥

[24]वाम नि स्पष्ट हो पुण्य [25]भामनि त्यो प्रकाश हो ।
सद्ब्रह्म ध्येयरूपैले विधीयमान वस्तु हो ॥८२॥

यिनको विधिमाफीक व्यवस्था हुनु युक्त हो ।
तर आनन्दको छैन विधान फल बोध हो ॥८३॥

व्यवस्थापक नै छैन जहाँ विधि अभाव छ ।
त्यो ज्ञानरूप सर्वत्र फल सामान्य एक छ ॥८४॥

यिनको उपसंहार सबैमा हुनुपर्दछ ।
यही हो श्रौततात्पर्य वादीले बुझ्नुपर्दछ ॥८५॥

शाखा सम्पूर्णमा ध्येय ज्ञेय त्यो ब्रह्म एक हो ।
त्यसैकारणले गर्दा ब्रह्मविद्या नि एक हो ॥८६॥

---

२४. एष उ एव वामनीरेष हि सर्वाणि वामानि नयति सर्वाणि वामानि नयति य एवं वेद ।
– छान्दोग्योपनिषद् ४।१५।३

२५. एष उ एव भामनीरेष हि सर्वेषु लोकेषु भाति सर्वेषु लोकेषु भाति य एवं वेद ।
– छान्दोग्योपनिषद् ४।१५।४

उपास्य धर्मले भिन्न मात्र ज्ञानप्रयोजन ।
आनन्दादिक धर्मैको उपसंहार हो जुन ॥८७॥

हुन सक्तछ सर्वत्र ब्रह्म नै प्रतिपाद्य हो ।
एकत्व ब्रह्ममै हुन्छ ब्रह्म नै ज्ञेय वस्तु हो ॥८८॥

तीनोटा [२६]सूत्रले भन्छन् ऊहापोह गरीकन ।
सर्वत्र उपसंहार हुनसक्छ भनीकन ॥८९॥



## ७. आध्यानाधिकरण (ब्रह्मसूत्र ३।३।७।१४–१५)

शिष्य –
[२७]'इन्द्रियेभ्यः परा ह्यर्थाः' भनेर अन्तमा श्रुति ।
'पुरुषान्न परम्' भन्छ 'सा काष्ठा सा परा गति' ॥९०॥

सुरुमै इन्द्रियैबाट विषयादिक भैकन ।
अन्तमा पुरुषैसम्म श्रुति त्यो गर्छ शंसन ॥९१॥

यसरी श्रुतिमा आयो अति लामो परम्परा ।
ज्ञेयत्व सबको हो कि ? ज्ञेय हो पुरुषै कि ? वा ॥९२॥

सन्देह यसमा आयो पूर्वपक्षी भने तर ।
भन्दछन् इन्द्रियैदेखि ज्ञेय हुन् ती सबै तर ॥९३॥

---

२६. आनन्दादयः प्रधानस्य । – ब्रह्मसूत्र ३।३।६।११–१३
२७. इन्द्रियेभ्यः परा ह्यर्था अर्थेभ्यश्च परं मनः ।
मनसस्तु परा बुद्धिर्बुद्धेरात्मा महान्परः ॥
महतः परमव्यक्तमव्यक्तात्पुरुषः परः ।
पुरुषान्न परं किञ्चित्सा काष्ठा सा परा गतिः ॥ – कठोपनिषद् १।३।१०–११

भन्नुहोस् गुरुजी ! साध्य कति हुन् कति साधन ?
बुझ्न मुस्किल भो ज्ञेय अनि ज्ञापक हुन् कुन ? ।।९४।।

गुरु –
इन्द्रियादि सबैदेखि पुरुषै हो परात्पर ।
त्यसैको नै यहाँ हुन्छ प्रतिपादन नै तर ।।९५।।

प्रत्येक अर्थको गर्नु हुँदैन प्रतिपादन ।
छैन प्रयोजनै अन्य अर्थको प्रतिपादन ।।९६।।

अनर्थ वस्तुले हीन ज्ञान मनुष्यले गरे ।
मोक्ष पाउँछ तत्कालै ज्ञानीहरू सबै तरे ।।९७।।

श्रुतिले पनि यै भन्छ ब्रह्मज्ञानार्थ साधन ।
इन्द्रियादि सबै नै हुन् ब्रह्मप्राप्त्यर्थ साधन ।।९८।।

आध्यान अथवा साध्य साक्षात्कारार्थ चिन्तन ।
श्रुतिको अर्थ त्यो गर्छ सूत्रले प्रतिपादन ।।९९।।

प्रवाह जुन हो सारा अर्थ इन्द्रिय आदिको ।
पुरुष ज्ञानकै लागि आएको सम्झनू निको ।।१००।।

[२८]सम्पूर्ण भूतमा बस्छ गूढोत्मा त्यो भईकन ।
त्यो सक्छ सूक्ष्मदर्शीले गर्न आत्मिक दर्शन ।।१०१।।

आत्माका ज्ञानका लागि [२९]वाणी त्यो मनमा लगी ।
क्रमैले उपसंहार गरोस् भन्दछ नै श्रुति ।।१०२।।

---

२८. एष सर्वेषु भूतेषु गूढोत्मा न प्रकाशते ।
दृश्यते त्वग्र्यया बुद्ध्या सूक्ष्मया सूक्ष्मदर्शिभिः ।। – कठोपनिषद् ३।१२

२९. यच्छेद्वाङ्मनसी प्राज्ञः । – कठोपनिषद् ३।१३

[30]संसारमार्गको जल्ले अन्तमा पार पाउँछ।
त्यल्ले नै विष्णुको साक्षात् परमै पद पाउँछ ॥१०३॥

त्यसैका लागि नै यो हो ज्ञानको मार्ग निश्चय।
ब्रह्मज्ञान गरी ज्ञानी ब्रह्म नै बन्छ निर्भय ॥१०४॥

अर्थादिको गरी ज्ञान मोक्ष हुन्न सुनिश्चित।
गरे पुरुषको ज्ञान मोक्ष हुन्छ सुनिश्चित ॥१०५॥

आत्माका शब्दले वाच्य साक्षात् पुरुष हो जुन।
ज्ञेयत्वरूपले गर्छ श्रुतिले प्रतिपादन ॥१०६॥

अर्थादि सब ती हैनन् प्रतिपाद्य कुनै तर।
यौटै पुरुष हो साक्षात् प्रतिपाद्य परात्पर ॥१०७॥

यसै प्रकारले ज्ञान ब्रह्मात्माको गरीकन।
मनुष्य मुक्त भै जान्छ तोडी मायिक बन्धन ॥१०८॥

[31]मृत्युका मुखदेखि त्यो सदा निर्मुक्त भैकन।
पैले ब्रह्म थियो फेरि ब्रह्म बन्छ निरञ्जन ॥१०९॥

दुई छन् यसमा [32]सूत्र सबैले प्रतिपादन।
गर्छन् पुरुषकै साक्षात् श्रौत प्रमाण लीकन ॥११०॥



---

३०. सोऽध्वनः पारमाप्नोति तद्विष्णोः परमं पदम्। – कठोपनिषद् ३।९
३१. निचाय्य तं मृत्युमुखात्प्रमुच्यते। – कठोपनिषद् ३।१५
३२. आध्यानाय प्रयोजनाभावात्। – ब्रह्मसूत्र ३।३।७।१४–१५

## ८. आत्मगृहीत्यधिकरण (ब्रह्मसूत्र ३।३।८।१६–१७)

दुई वर्णक छन् यस्मा पैलो दोस्रो गरीकन ।
पैलोको पहिले हुन्छ संवादात्मक वर्णन ॥१११॥

दोस्रोको पनि संवादरूपमा नै यथामति ।
सङ्क्षिप्त कारिकाद्वारा हुन्छ उल्लेख सम्प्रति ॥११२॥

वर्णक – १

शिष्य –

[33]'आत्मा वा' 'स [34]इमान्' आदि श्रुतिमा स्पष्ट नै तर ।
आत्मा भनेर जो आयो विराट् हो ? कि ! त ईश्वर ? ॥११३॥

यस्तो सन्देहमा वादी विराट् हो, हैन ईश्वर ।
[35]'ताभ्यः' त्यो श्रुतिले भन्छ गामानयनको स्वर ॥११४॥

शरीरी हो विराट् त्यल्ले गाई ल्याउन सक्तछ ।
शरीरहीन आत्माले कहाँ ल्याउन सक्तछ ? ॥११५॥

श्रुतिवर्णित आत्मा त्यो विराट् हो, हैन ईश्वर ।
वादीको मत जो आयो भन्नोस् ! विराट् ? कि ! ईश्वर ? ॥११६॥

गुरु –

'आत्मा' भनेर जो आयो अद्वैत मतमाफिक ।
हो ईश्वर विराट् हैन यै हो सिद्धान्त तात्त्विक ॥११७॥

---

३३. आत्मा वा इदमेक एवाग्र आसीन्नान्यत् किञ्चन मिषत् ईक्षत लोकान्नु सृजा इति ।
– ऐतरेयोपनिषद् १।१

३४. स इमांल्लोकानसृजत अम्भो मरीचीर्मरमापः । ऐतरेयोपनिषद् १।२

३५. ताभ्यो गामनयत्ता अब्रुवन्न वै नोऽयमलमिति । ताभ्योऽश्वमानयत्ता अब्रुवन्न वै नोऽयमलमिति । – ऐतरेयोपनिषद् १।२।२

त्यसैकारणले अन्य श्रुतिको सृष्टिवर्णन ।
उपसंहार आत्मामै गर्नुपर्दछ गैकन ॥११८॥

त्यो 'गामानय' वादीको हो अर्थवाद वस्तुतः ।
स्वतन्त्र ज्ञान नै हैन पुरुषार्थ विशेषतः ॥११९॥

योबाट हुन सक्तैन अविवक्षित सो श्रुति ।
जीव र ब्रह्मको ऐक्य देखिन्छ सर्व विश्रुति ॥१२०॥

[३६]'आत्मा वा' यसबाटै नै उपक्रम सिधै भई ।
'स' बाट उपसंहार हुन्छ ईश्वरमै गई ॥१२१॥

अतः ईश्वर नै आत्मा शब्दबाट विवक्षित ।
विराट् गृहीत बन्दैन श्रुतिबाट सुनिश्चित ॥१२२॥

दोस्रो वर्णकमा हुन्छ आत्मा र सद्-विवेचन ।
यसमा पनि संवादरूपमै हुन्छ लेखन ॥१२३॥

वर्णक – २

शिष्य –

[३७]बृ.उ.मा [३८]कतम आत्मा [३९]'सदेव' छा.उ.मा भनी ।
उपक्रम भएको छ संवादरूपमा अनि ॥१२४॥

आत्मा र अनि सद् वस्तु दुवैको पूर्णरूपमा ।
विवेचना भएको छ दुवैमा भिन्नरूपमा ॥१२५॥

३६. आत्मा वा इदमेक एवाग्रे । – ऐतरेयोपनिषद् १।१
३७. स एतमेव पुरुषं ब्रह्म ततमपश्यत् । – ऐतरेयोपनिषद् ३।१३
३८. कतम आत्मा । – बृहदारण्यकोपनिषद् ४।३।७
३९. क. सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् । – छान्दोग्योपनिषद् ६।२।१
ख. स आत्मा तत्त्वमसि । – छान्दोग्योपनिषद् ६।८।७

सन्देह यिनमा आयो यी यौटै हुन् कि ? भिन्न हुन् ?
तुल्यार्थक यिनी हैनन् भन्छन् वादी विभिन्न हुन् ।।१२६।।

उपक्रमोपसंहार दुवैमा छन् पृथक् पृथक् ।
त्यसैकारणले सत् र आत्मा यी हुन् दुवै पृथक् ।।१२७।।

भन्नुहोस् गुरुजी ! यौटै यी हुन् ? कि ! अथवा पृथक् ?
सन्देह हुन गो ब्रह्मन् ! एकै हुन् ? अथवा पृथक् ? ।।१२८।।

गुरु –
'आत्मा'शब्द यसैबाट उपक्रम गरीकन ।
[४०]ब्रह्मस्वरूपमा हुन्छ उपसंहार गैकन ।।१२९।।

त्यस्तै छान्दोग्यमा भन्दै [४१]'सदेव' अन्तमा गई ।
आत्मग्रहण नै हुन्छ उपसंहृत जो भई ।।१३०।।

[४२]आत्माको ज्ञानले हुन्छन् अश्रुत श्रुत ती सब ।
अतर्कित हुने तर्क्य एक विज्ञानले सब ।।१३१।।

आत्मा जो सत् भनी आयो छान्दोग्यमा त तत्त्वतः ।
उपक्रमसँगै हुन्छ आत्मा त्यो उपसंहृत ।।१३२।।

[४३]सामान्यबाट उठ्तै गै विशेषमा पुगीकन ।
उपसंहृत सत् हुन्छ आत्मामा नै पुगीकन ।।१३३।।

---

४०. सवा एषमहानजआत्माऽजरोऽमरोऽमृतोऽभयो ब्रह्म। – बृहदारण्यकोपनिषद्४।४।२५
४१. क. सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयकम् । – छान्दोग्योपनिषद् ६।२।१
ख. स आत्मा तत्त्वमसि । – छान्दोग्योपनिषद् ६।७।८
४२. येनाश्रुतं श्रुतं भवत्यमतं मतमविज्ञातं विज्ञातम् । – छान्दोग्योपनिषद् ६।१।१
४३. सामान्योपक्रमश्च न वाक्यशेषगतेन विशेषेण विरुध्यते, विशेषाकाङ्क्षित्वात् सामान्यस्य । – शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।८।१७

श्रुतिका वाक्यमा यद्वा भए विषमता पनि ।
कैल्यै विषमता हुन्न [४४]'पात्रमाहर' भनैँ बनी ।।१३४।।

वाक्यप्रकारमा भेद भए तापनि अर्थतः ।
प्रतिपाद्यांशमा हुन्न अन्ततः भेद तत्त्वतः ।।१३५।।

सामान्यरूपमा 'सत्' हो आत्मा अनात्मवाचक ।
श्रुतिका वाक्यशेषैले 'सत्' हो यो आत्मवाचक ।।१३६।।

बृहत्, छान्दोग्यमा व्यक्त सत् आत्मशब्दशब्दित ।
एकार्थक दुवै ती हुन् होइनन् भिन्न अर्थतः ।।१३७।।

दुई छन् यसमा [४५]सूत्र भन्दछन् श्रुति लीकन ।
सत् शब्दवाच्य आत्मा हो विराट् वा अन्य होइन ।।१३८।।



## ९. कार्याख्यानाधिकरण (ब्रह्मसूत्र ३।३।९।१८)

शिष्य –

[४६]गर्दा भोजनका पैले पश्चात् भोजनका पनि ।
गर्नू आचमनै भन्ने देखिन्छ श्रुतिमा पनि ।।१३९।।

---

४४. आम्नानवैषम्यमपि नाऽवश्यमर्थवैषम्यमावहति 'आहर पात्रम्' 'पात्रमाहर' इत्येवमादिष्वर्थसाम्येऽपि तद्दर्शनात् । – शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।८।१७

४५. आत्मगृहीतिरितरवदुत्तरात् । – ब्रह्मसूत्र ३।३।८।१६–१७

४६. क. तस्माद्वा एतदशिष्यन्तः पुरस्ताच्चोपरिष्टाच्चाद्भिः परिदधति ।
– छान्दोग्योपनिषद् ५।२।२

ख. तद्विद्वांसः श्रोत्रिया अशिष्यन्त आचामन्त्यशित्वा चाचामन्त्येतमेव तदनमनग्नं कुर्वन्तो मन्यन्ते । – बृहदारण्यकोपनिषद् ६।१।१४

ग. तस्मादेवंविदशिष्यन्नाचमेदशित्वा वाचामेदेतमेव तदननग्नं कुरुते । – श्रुतिः

त्यो आचमनले भोक्ता प्राणाच्छादन गर्दछन् ।
अनग्न प्राण ती भोक्ता गर्छौं भनेर मान्दछन् ।।१४०।।

त्यो प्राणानग्नता साथै अनि आचमनै पनि ।
हो वा अनग्नता बुद्धि ? विधेयमात्र हो ? अनि ।।१४१।।

वादीले यसमा भन्छन् यी दुवै नै विधेय हुन् ।
दुवै अपूर्व हुन् तस्मात् दुवै नै विधियोग्य हुन् ।।१४२।।

यद्वा आचमनै मात्र विधेय हुन योग्य छ ।
अनग्नता भने मात्र स्तुत्यर्थ हुन सक्तछ ।।१४३।।

यसरी पूर्वपक्षीको मत आयो गुरो जब ।
भन्नुहोस् गुरुजी ! यौटा विधेय ? वा दुवै ? तब ।।१४४।।

गुरु –
त्यो कार्यरूप आख्यान भएकाले यहाँ कुनै ।
विधेयत्वादिको हुन्न उपपत्ति यहाँ कुनै ।।१४५।।

त्यो प्राणानग्नता साथै अनि आचमनै पनि ।
गर्दा विधान होला नै वाक्यभेद भई अनि ।।१४६।।

जो हो भोजनका पैले त्यो भोजन गरेपछि ।
यौटै आचमनैद्वारा हुन्छ भन्दछ [४७]संश्रुति ।।१४७।।

[४८]अप्राप्त विषयैमा त्यो शास्त्र सार्थक बन्दछ ।
शुद्धतानिम्तिमा आचमनै पर्याप्त बन्दछ ।।१४८।।

---

४७. एतमेव तदनमनग्नं कुर्वन्तो मन्यन्ते । – बृहदारण्यकोपनिषद् ६।१।१४
४८. अप्राप्ते शास्त्रमर्थवत् । – न्यायः

अनुवाद गरी सोकै प्राणोपासकनिम्तिमा ।
अनग्न बुद्धिका निम्ति यो विधान छ शास्त्रमा ॥१४९॥

जल त्यो वस्तुका लागि [४९]विधान गरियो जुन ।
त्यो आचमनको हैन विधान न्याय हो जुन ॥१५०॥

यसमा [५०]सूत्र यौटै छ यसले पनि अन्ततः ।
यौटै आचमनैमात्रै विधान गर्छ शास्त्रतः ॥१५१॥



## १०. सामानाधिकरण (ब्रह्मसूत्र ३।३।१०।१९)

शिष्य –

वाजसनेय-शाखाको शाण्डिल्यनाम अङ्कित ।
यौटा विज्ञानविद्या छ [५१]'स आत्मा' बाट चिह्नित ॥१५२॥

यसमा गुण साराको हुन्छ श्रवण नै जुन ।
बृहदारण्यकै भन्छ [५२]'मनोमयः' भनीकन ॥१५३॥

शाण्डिल्यनामका विद्या दुई वा एक हुन् ? तर ।
गुणोपसंहार विद्याको हुन्छ ? हुन्न ? परस्पर ॥१५४॥

यस सन्देहमा वादी यसरी मत राख्तछन् ।
पुनरुक्ति हुने ठानी यी विद्या दुई भन्दछन् ॥१५५॥

---

४९. द्विजो नित्यमुपस्पृशेत् । – स्मृतिः

५०. कार्याख्यानादपूर्वम् । – ब्रह्मसूत्र ३।३।९।१८

५१. स आत्मानमुपासीत मनोमयं प्राणशरीरं भारूपम् । – श्रुतिः

५२. मनोमयोऽयं पुरुषो भाः सत्यस्तस्मिन्नन्तर्हृदये यदा व्रीहिर्वा यवो वा स एष सर्वस्येशानः सर्वस्याधिपतिः सर्वमिदं प्रशास्ति यदिदं किञ्च ।
– बृहदारण्यकोपनिषद् ५।६।१

एउटा श्रुतिले गर्छ विद्याविधान वस्तुतः ।
द्वितीय श्रुतिले गर्छ विधानगुण शास्त्रतः ।।१५६।।

वादीले भन्दछन् विद्या दुवैमा नै परस्पर ।
यिनमा गुणको हुन्न उपसंहार नै तर ।।१५७।।

गुरुजी ! भन्नुहोस् विद्या दुवैको उपसंहृति ।
हुनसक्छ ? कि ! सक्तैन ? परस्पर यथास्थिति ।।१५८।।

गुरु –
मनोमयत्व इत्यादि वेदस्वरूप बन्दछन् ।
प्रत्यभिज्ञा गराएर विद्या हो एक भन्दछन् ।।१५९।।

एउटा श्रुति विद्याको विधान गर्नेनिम्ति हो ।
दोस्रो श्रुति भने साक्षात् विधानगुणनिम्ति हो ।।१६०।।

अतः समान शाखामा विद्याको ऐक्य हुन्छ यो ।
गुणको उपसंहार उपपन्न हुने भयो ।।१६१।।

अतः शाण्डिल्यविद्या त्यो एउटै हो भनीकन ।
श्रुतितः सिद्ध भै, हुन्छ वादीको मतखण्डन ।।१६२।।

यसमा [५३]सूत्र यौटै छ श्रुतिको सार लीकन ।
विद्या शाण्डिल्य यौटै हो अन्तमा भन्छ गैकन ।।१६३।।



५३. समान एवं चाभेदात् । – ब्रह्मसूत्र ३।३।१०।१९

## ११. सम्बन्धाधिकरण (ब्रह्मसूत्र ३।३।११।२०–२२)

शिष्य –

बृहदारण्यकै भन्छ [५४]'सत्यं ब्रह्म' भनीकन।
उपक्रम गरी आयो [५५]'यद्‌यत्‌तत्' नै भनीकन ॥१६४॥

बृ.उ.को सत्य विद्यामा आधिदैविक सूर्यको।
'अहः' नामक जो आयो ध्यानका निम्ति हो निको ॥१६५॥

त्यो आध्यात्मिक नामाख्य अक्षिनामाख्य हो जुन।
त्यो हो पुरुष ध्यानार्थ उपदिष्ट सनातन ॥१६६॥

यी दुवै नामको यौटै लगी पुरुषमा कि ? वा।
उपसंहार वा हुन्छ ? यद्‌वा हुन्छ पृथक् कि ? वा ॥१६७॥

यस सन्देहमा भन्छन् वादी स्वमत वस्तुतः।
दुई पुरुषमा हुन्छ उपसंहार नै स्वतः ॥१६८॥

जस्तै शाण्डिल्यविद्यामा एउटैमा गईकन।
भएथ्यो उपसंहार यसमा हुन्न नै पुनः ॥१६९॥

यसमा हे गुरो ! भन्नोस् यौटै पुरुषमा कि ? वा।
पृथक्‌मा उपसंहार हुन्छ ? वा हुन्न ? नै कि ? वा ॥१७०॥

गुरु –

यिनको उपसंहार दुई स्थल गईकन।
हुन सक्तैन 'तस्याहः' 'तस्यामहम्' भनीकन ॥१७१॥

---

५४. सत्यं ब्रह्म। – बृहदारण्यकोपनिषद् ५।५।१

५५. सद्‌यत्तत्सत्यमसौ स आदित्यो य एष एतस्मिन् मण्डले पुरुषो यश्चायं दक्षिणेऽक्षन्पुरुषः। – बृहदारण्यकोपनिषद् ५।५।२

दुवैको दुइटामा नै हुन प्राप्ति असम्भव ।
स्थानै विशेषमात्रैमा उपासना छ सम्भव ॥१७२॥

स्थानै विशेष भन्नाले [५६]'य एषः पुरुषः' भनी ।
आधिदैविकमा आयो पुरुष स्पष्ट नै अनि ॥१७३॥

त्यो ता उपनिषद् अर्थात् रहस्य नाम हो भनी ।
दाहिने नेत्रका पुंको [५७]'योऽयम्' यो श्रुति भन्छ नि ॥१७४॥

दाहिने नेत्रको पुं हो अध्यात्मपुरुषै जुन ।
स्थानविशेषको हुन्छ उपदेशार्थ शंसन ॥१७५॥

शिष्य –

अधिदैव र अध्यात्म एउटै [५८]सत्य ब्रह्म हो ।
भनेपछि दुई ठाउँ कसरी प्रतिपाद्य हो ? ॥१७६॥

गुरु –

ठीकै हो तर हे सौम्य ! यौटै [५९]आचार्यमा पनि ।
बसेको र उठेकोमा स्थिति हुन्छ पृथक् अनि ॥१७७॥

[६०]'तस्यैतस्य' भनी गर्छ श्रुतिले अतिदेश नै ।
त्यो विद्यास्थलमा हुन्न उपसंहार गर्नु नै ॥१७८॥

---

५६. य एष एतस्मिन् मण्डले पुरुषः । – बृहदारण्यकोपनिषद् ५।५।३

५७. 'तस्योपनिषदहः' इति श्रावयति, योऽयं दक्षिणेऽक्षन्पुरुषः । – बृहदारण्यकोपनिषद् ५।५।४

५८. कुत उभयोरुभयत्र प्राप्तिः ? नन्वेक एवायमधिदैवतामध्यात्मञ्च पुरुषः, एकस्यैव सत्यस्य ब्रह्मण आयतनद्वयप्रतिपादनात् । – शाङ्करभाष्य, ब्रह्मसूत्र

५९. सत्यमेवमेतत्, एकस्यापि त्ववस्थाविशेषोपादानेनैवोपनिषद् विशेषोपदेशात् तदवस्थस्यैव सा भवितुमर्हीति । अस्ति चाऽयं दृष्टान्तः सत्यप्याऽऽचार्यस्वरूपानपाये यदाचार्यस्याऽऽसीनस्याऽनुवर्तनमुक्तं न तत्तिष्ठतो भवति, यच्च तिष्ठत उक्तं न तदासीनस्येति । – शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।११।२१

६०. तस्यैतस्य तदेव रूपं यदमुष्य रूपं यावमनुष्य गेष्णौ तौ गेष्णौ यन्नाम तन्नाम ।
– छान्दोग्योपनिषद् १।७।५

अक्षि आदित्यका स्थान भेदले भिन्न धर्म छन् ।
दुवैमा उपसंहार हुँदैन ती अयोग्य छन् ॥१७९॥

तीन छन् यसमा [६१]सूत्र तीनैले नै परस्पर ।
हुँदैन उपसंहार भन्दछन् श्रुति ली भर ॥१८०॥



## १२. सम्भृत्यधिकरण (ब्रह्मसूत्र ३।३।१२।२३)

शिष्य –
जो छन् सम्भृति गौण्यादि विद्या शाण्डिल्यमा लगी ।
उपसंहार होला ? वा न होला ? गर्न यो लगी ॥१८१॥

सन्देह यसमा आयो यसै विषयमा उनै ।
वादी भने हुने भन्छन् उपसंहार गर्नु नै ॥१८२॥

यसमा श्रुतिको शाखा राणायनीय लीकन ।
धेरै प्रमाण राखेर हुन्छ भन्छन् अडीकन ॥१८३॥

[६२]'ब्रह्मज्येष्ठा' भनी आयो नाम देवादिको जुन ।
आधार ब्रह्मकै पाई सत्तावान् छन् चिरन्तन ॥१८४॥

त्यसमा ब्रह्मसंऋद्धि स्वर्गव्याप्त्यादि लक्षण ।
विभूति ब्रह्मका सारा पढिन्छन् ती सनातन ॥१८५॥

गरेर गुणको चर्चा आधिदैविक ब्रह्मको ।
उपास्यरूपले व्याख्या श्रुति गर्दछ तत्त्वको ॥१८६॥

६१. सम्बन्धादेवमन्यत्रापि । – ब्रह्मसूत्र ३।३।११।२०–२२
६२. ब्रह्म ज्येष्ठा सम्भृतानि ब्रह्माग्रे ज्येष्ठं दिवमाततान ।
– राणायनीय शाखा, खिलशिष्टप्रकरण ।

अतः सम्भृति इत्यादि ब्रह्मका गुण वस्तुतः ।
हुन्छन् शाण्डिल्य विद्यामा सबै ती उपसंहृत ॥१८७॥

यसरी पूर्वपक्षीको मत आयो यहाँ जब ।
भन्नुहोस् उपसंहार हुन्छ ? हुन्न ? गुरो ! अब ॥१८८॥

गुरु –
गुण-सम्भृति-मध्येमा विद्याशाण्डिल्यमा कुनै
एउटै गुण पाइन्न उपसंहार हुन्न नै ॥१८९॥

विद्याको एकता निम्ति प्रत्यभिज्ञा न भैकन ।
हुन्छ शाण्डिल्यविद्यामा उपसंहार नै कुन ? ॥१९०॥

ब्रह्मको मात्र एकत्व लिएर उपसंहृति –
गर्दै जाने भए हुन्न कहाँ अनुपसंहृति ? ॥१९१॥

अतः सम्भृति इत्यादि गुणको जे भनून् जति ।
हुन्न शाण्डिल्यविद्यामा गएर उपसंहृति ॥१९२॥

यसमा [६३]सूत्र यौटै छ यसलेपनि अन्ततः ।
हुन्न शाण्डिल्यविद्यामा उपसंहार भन्दछ ॥१९३॥



## १३. पुरुषाधिकरण (ब्रह्मसूत्र ३।३।१३।२४)

शिष्य –
तैत्तिरीयकका साथै ताण्डिमा नै गईकन ।
देख्छौँ पुरुषविद्या ती समान तुल्य हुन् जुन ॥१९४॥

६३. सम्भृतिद्युव्याप्त्यपि चातः । – ब्रह्मसूत्र ३।३।१२।२४

सन्देह यसमा आयो एकै हुन् कि ? पृथक् ? भनी ।
पूर्वपक्षीहरू भन्छन् एकै हुन् दुइटै भनी ॥१९५॥

वादीले यसमा भन्छन् श्रुतिप्रमाण दीकन ।
यौटै पुरुषविद्या हो भेद छैन कथञ्चन ॥१९६॥

तैत्तिरीयक शाखामा [६४]'तस्यैवं विदुषो' भनी ।
आयो पुरुषविद्या नै [६५]'ताण्डिमा 'पुरुषो' भनी ॥१९७॥

दुवै नै श्रुतिमा धर्म समान छन् यसैगरी ।
प्रातः सवन इत्यादि समान छन् त्यसैगरी ॥१९८॥

पूर्वोक्त पूर्वपक्षीको मत आयो गुरो ! जब ।
हुन् यी पुरुषविद्या ती एकै ? हुन् वा पृथक् ? सब ॥१९९॥

गुरु –
ती वेद्यरूपका धेरै सुनिन्छन् भेदरूपक ।
व्यधिकरणषष्ठी हो 'पुरुषो' तैत्तिरीयक ॥२००॥

ताण्डिशाखीहरू भन्छन् यज्ञैपुरुषमा स्वतः ।
सामानाधिकरण्य त्यो पाइन्छ श्रुतिमा श्रुतः ॥२०१॥

ताण्डिमा तीन आयुष्य भएका छन् विभक्त भै ।
ती हुन् [६६]सवन तीनोटा छैन तैत्तिरमा कतै ॥२०२॥

मरणावभृथत्वादि अल्प धर्म समानता ।
भए तापनि देखिन्छ गुणमा असमानता ॥२०३॥

---

६४. तस्यैवं विदुषो यज्ञस्याऽऽत्मा यजमानः श्रद्धा पत्नी । – राणायनीय ८०
६५. पुरुषो वाव यज्ञः । – ताण्डि उपनिषद्
६६. यत्प्रातर्मध्यन्दिनं सायञ्च तापि सवनानि । – राणायनीय ८

तैत्तिरीयकमा छैन उपासना कुनै तर ।
देखिन्छ ब्रह्मविद्याको प्रशंसामात्र सुन्दर ॥२०४॥

त्यसैकारणले सारा तैत्तिरीयकमा तथा ।
ताण्डिका धर्ममा हुन्न उपसंहार सर्वथा ॥२०५॥

यसमा [७६]सूत्र यौटै छ भन्छ यल्ले यथा श्रुति ।
ताण्डिको तैत्तिरीयैमा हुँदैन उपसंहृति ॥२०६॥



## १४. वेधाद्यधिकरण (ब्रह्मसूत्र ३।३।१४।२५)

शिष्य –
वेधमन्त्रप्रवर्ग्यादि विद्याका अङ्ग हुन् ? भनी ।
सन्देह हुन गो सारै ती हुन् ? कि ! होइनन् ? भनी ॥२०७॥

यसमा भन्दछन् वादी विद्याका साथमा दुवै ।
रहेका वेधकर्मादि विद्याका अङ्ग हुन् दुवै ॥२०८॥

यसमा श्रुतिका [६८]मन्त्र पूर्वपक्षी लिईकन ।
विद्याका अङ्ग हुन् भन्छन् वेधप्रवर्ग्य हुन् जुन ॥२०९॥

जस्तै [६९]बृहस्पतियाग वाजपेयविषे गई ।
विनियोग हुने गर्छ त्यस्तै नै यिनमा गई ॥२१०॥

यसरी पूर्वपक्षीको मत आयो दरो भई ।
उपसंहार यो हुन्छ ? विद्यामा यिनको गई ? ॥२११॥

६७. पुरुषविद्यायामिव चेतरेषामनाम्नात् । – ब्रह्मसूत्र ३।३।१३।२४
६८. भूः प्रपद्येऽमुनामुनामुना । – छान्दोग्योपनिषद् ३।१५।३
६९. वाजपेयेनेष्ट्वा बृहस्पतिसवेन यजेत इति श्रुतिः ।

गुरु –

आथर्वणिकले भन्छन् शुरुमा नै गईकन ।
'सर्वं प्रविध्य हृदयं प्रविध्यम्' नै भनीकन ॥२१२॥

वेधमन्त्र प्रवर्ग्यादि विद्याका अङ्ग ती हुन ।
सक्तैनन् पूर्वपक्षीले दिऊन् प्रमाण जे जुन ॥२१३॥

'सर्वं प्रविध्य' इत्यादि मन्त्रमा आभिचारिक –
कर्म देखिन्छ विद्याको हुन सक्तैन आङ्गिक ॥२१४॥

सान्निध्यमात्रले हुन्नन् विद्याका अङ्ग वेध ती ।
[७०]'श्रुति-लिङ्गादि' का द्वारा बन्छन् दुर्बल कर्म ती ॥२१५॥

लिङ्गरूपादिका द्वारा वेधप्रवर्ग्य हुन् जुन ।
समान धर्ममा हुन्छन् उपसंहार गैकन ॥२१६॥

अतः सन्निधिमात्रैले अङ्ग ती नहुने भए ।
अरण्यानुवचद्वारा समान धर्ममा गए ॥२१७॥

यसमा [७१]सूत्र यौटै छ यसले पनि अन्ततः ।
विद्याका अङ्ग ती हुन्नन् भन्छ शास्त्रानुसारतः ॥२१८॥



---

७०. श्रुतिलिङ्गवाक्यप्रकरणस्थानसमाख्यानां समवाये पारदौर्बल्यमर्थविप्रकर्षात् ।
– जैमिनिसूत्र ३।३।१३

७१. वेधाद्यर्थभेदात् । – ब्रह्मसूत्र ३।३।१४।१५

## १५. हान्यधिकरण (ब्रह्मसूत्र ३।३।१५।२६)

दुई वर्णक राखेर क्रमैले ती दुवैकन।
उत्थापन गरी शङ्का पूर्वपक्ष लिईकन ॥२१९॥

क्रमैले अनि सिद्धान्ती श्रुतिसिद्धान्त नै लिई।
दुवैको उपसंहार गर्दछन् अन्तमा गई ॥२२०॥

वर्णक १

शिष्य –

[७२]ताण्डिले भन्छ घोडाझैँ पुण्यपाप हटीकन।
प्रत्यक्-रूप लिई जान्छ मान्छे मुक्त भईकन ॥२२१॥

त्यस्तै [७३]मुण्डकले भन्छ नदीजस्तै भईकन।
नामरूप सबै त्यागी मिल्छ सागर भैकन ॥२२२॥

[७४]श्रुतिशाट्यायनी भन्छ विद्वान्का धर्म पाप ती।
छोराले धर्म पाउँछन् वैरीले पापमात्र ती ॥२२३॥

श्रुति [७५]कौषीतकी भन्छ त्यागी सुकृत दुष्कृत।
विद्वान् तर्दछ पुण्यादि लिन्छन् ज्ञाति अरू स्वतः ॥२२४॥

ग्राहक श्रुतिमा छैन यदि त्याग भने पनि।
अर्थतः त्यागको प्राप्ति हुन्छ ? हुन्न ? त्यहाँ अनि ॥२२५॥

---

७२. अश्व इव रोमाणि विधूय पापं चन्द्र इव राहोर्मुखात् प्रमुच्य धूत्वा शरीरमकृतं कृतात्मा ब्रह्मलोकमभिसम्भवामि। – छान्दोग्योपनिषद् ८।१३।१

७३. तथा विद्वान् पुण्यपापे विधूय निरञ्जनः परमं साम्यमुपैति। – मुण्डकोपनिषद् ३।२।८

७४. तस्य पुत्रा दायमुपयन्ति सुहृदः साधुकृत्यां द्विषन्तः पापकृत्याम्। – श्रुतिः

७५. तत्सुकृतदुष्कृते विधूनुते तस्य प्रिया:, ज्ञातयः सुकृतमुपयन्त्यप्रियो दुष्कृतम्।
– कौषीतकिब्राह्मणोपनिषद् १।४

पाइन्छ त्यागको मात्र छैन ग्रहणको श्रुति ।
स्वतः ग्रहणको प्राप्ति हुन्छ ? हुन्न ? यथाश्रुति ।।२२६।।

यस सन्देहमा वादी भन्दछन् त्यागमा पनि ।
प्राप्ति ग्रहणको हुन्छ अन्तमा दृढ नै बनी ।।२२७।।

पैलो वर्णकमा प्राप्त छ उपायन नै जुन ।
त्यसको उपसंहार हुन्छ ? हुन्न ? गईकन ।।२२८।।

यसमा भन्दछन् वादी श्रुत, आक्षेप, भेद र ।
विद्याको भेदले हुन्न उपसंहार जे गर ।।२२९।।

यसमा भन्नुहोस् विद्वन् ! विद्याभेद भए पनि ।
त्यो उपायनको हुन्छ ? उपसंहार हुन्न ? नि ।।२३०।।

अथवा हानका लागि उपसंहार हुन्छ ? यो ।
भन्नोस् स्पष्ट गरी ब्रह्मन् ! उपायन कि ! हान ? यो ।।२३१।।

गुरु –
विद्याको भेद होला त्यो अर्थवाद लिईकन ।
त्यो उपायनको हुन्छ उपसंहार गैकन ।।२३२।।

विद्यासामर्थ्यले गर्दा संसारभूत कारण ।
विद्वान्का पापपुण्यादि सारा हुन्छन् निवारण ।।२३३।।

लिन्छन् सुकृति साथीले शत्रुले दुष्कृति लिने ।
त्याग ग्रहण स्तुत्यर्थ त्यागमा ग्रहणै हुने ।।२३४।।

सामान्य स्तुति मानिन्छन् [७६]एकविंशादि हुन् जुन ।
अर्थवादसरी हुन्छ हानको प्रत्यभिज्ञन ।।२३५।।

---

७६. एकविंशो वा इतोऽसावादित्यः । – छान्दोग्योपनिषद् २।१०।५

वर्णक – २

शिष्य –

पैलो वर्णकमा प्राप्त विधून शब्द हो जुन ।
त्याग, चालन, के हो त्यो ? आयो सन्देह नै हुन ॥२३६॥

वादीले भन्दछन् टुप्पो [७७]ध्वजा हल्लाउँछन् भनी ।
भन्दा विधून शब्दार्थ हो चालन न हान नै ॥२३७॥

यस सन्देहमा ब्रह्मन् ! के हो विधूननै छ यो ।
हो चालन ? कि वा त्याग ? आज्ञा होसू स्पष्ट साथ यो ॥२३८॥

गुरु –

त्यो विधूननको अर्थ त्याग हो श्रुति [७८]भन्दछ ।
सारा पाप पखालेर ज्ञानी विमुक्त बन्दछ ॥२३९॥

भनून् चालन वादीले सिद्धान्ती भन्दछन् स्वतः ।
हो विधूननको अर्थ त्याग वा हान तत्त्वतः ॥२४०॥

दुवै वर्णकको यौटै [७९]सूत्रले गर्छ वर्णन ।
श्रुतिले उपसंहार हानको गर्छ शंसन ॥२४१॥



७७. न हानं विधूननमभिधीयते 'धूञ् कम्पने' इति स्मरणात्, 'दोधूयन्ते ध्वजाग्राणि' इति च वायुना चाल्यमानेषु ध्वजाग्रेषु प्रयोगदर्शात् । तस्माच्चालनं विधूननमभिधीयते ।
– शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।१५।२६

७८. अश्व इव रोमाणि विधूय पापम् । – छान्दोग्योपनिषद् ८।१३।१

७९. हानौ तूपायनशब्दशेषत्वात् कुशाछन्दः स्तुत्युपगानवत्तदुक्तम् ।
– ब्रह्मसूत्र ३।३।१५।२६

## १६. साम्परायाधिकरण (ब्रह्मसूत्र ३।३।१६।२७,२८)

शिष्य –

ब्रह्मविद् ब्रह्मको लोक ऊ जाँदाखेरि मार्गमा ।
पुण्यादि फल ती त्याग्छन् ? यद्वा मरणपूर्वमा ।।२४२।।

सन्देह यसरी आयो पूर्वपक्षी भने तर ।
मार्गमा विरजा तर्दा ती त्याग्छन् भन्दछन् तर ।।२४३।।

[८०]पर्यङ्कस्थ जहाँ ब्रह्म रहन्छन् उनका तिर ।
जाने पुरुषका पुण्य फ्याँकिन्छन् पाप सत्वर ।।२४४।।

[८१]देवयान हुँदै जाँदा ब्रह्मविद् विरजानदी ।
तर्दछन् मनले भन्छ यहाँ कौषीतकी श्रुति ।।२४५।।

यसरी पूर्वपक्षीको आयो मत भने अब ।
पुण्यादि मार्गमा त्याग्छन् ? मृत्युका पूर्व वा तब ? ।।२४६।।

गुरुजी ! पुण्यपापादि ब्रह्मविद् मार्गमा गई ।
त्याग्छ ? वा मृत्युकै पूर्व त्याग्छ ? भन्नोस् कहाँ गई ।।२४७।।

गुरु –

मृत्युका पहिले नै ती सुकृतादिहरू सब ।
[८२]ज्ञानाग्निमा परी सारा नाशिन्छन् भस्म भै सब ।।२४८।।

---

८०. स एतं देवयानं पन्थानमासाद्याग्निलोकमागच्छति । – कौषीतकिब्राह्मणोपनिषद् १।३

८१. स आगच्छति विरजां नदीं तां मनसैवात्येति तत्सुकृतदुष्कृते विधूनुते ।
– कौषीतकिब्राह्मणोपनिषद् १।४

८२. यथैधांसि समिद्धोऽग्निर्मस्मसात्कुरुतेऽर्जुन ।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा ।। – श्रीमद्भगवद्गीता ४।३७

त्यसैकारण बाटामा जो पर्छ विरजानदी ।
त्यो तरेपछि नाशिन्छन् शुभादि सब कर्म ती ॥२४९॥

भन्ने भनाइ मिल्दैन ब्रह्मज्ञान हुँदै सब ।
पहिल्यै डढ्दछन् सारा रहन्नन् त्याग्न ती तब ॥२५०॥

ज्ञानाग्निले डढी देह वासनासञ्चयै पनि ।
विलीन बन्दछन् सारा रहन्नन् त्याग्न ती पनि ॥२५१॥

मृत्युका पूर्व नै पाप [८३]घोडाले रोमझैँ गरी ।
झारेर मुक्त भै जान्छ ब्रह्मविद् ब्रह्म नै सरी ॥२५२॥

[८४]मुक्तका पुत्रले प्राप्त गर्दछन् धनसम्पदा ।
सुहृद्ले पाउँछन् पुण्य शत्रुले पाप सर्वदा ॥२५३॥

ज्ञानी साधक वेलामै ब्रह्मज्ञान गरीकन ।
पुण्यपापादि फालेर बन्छ निर्मुक्त बन्धन ॥२५४॥

त्यसैकारण बाटामा त्याग्नुपर्ने कुनै पनि ।
रहन्नन् पुण्यपापादि ज्ञ जान्छ ब्रह्म नै बनी ॥२५५॥

नैमित्तिक निमित्तादि उपपन्न भईकन ।
शाट्यायनी र ताण्डीको मिल्छ सङ्गति गैकन ॥२५६॥

दुई छन् यसमा [८५]सूत्र दुवैले अन्तमा गई ।
मुक्तात्माका सबै कर्म नाशिन्छन् भन्दछन् गई ॥२५७॥



---

८३. अश्व इव रोमाणि विधूय पापम् । – छान्दोग्योपनिषद् ८।१३।१
८४. तस्य पुत्रा दायमुपयन्ति सुहृदः साधुकृत्यां द्विषन्तः पापकृत्याम् । – श्रुतिः
८५. साम्पराये तर्तव्याभावात्तथा ह्यन्ये । ब्रह्मसूत्र ३।३।१६।२७,२८

### १७. गतेरर्थवत्त्वाधिकरण (ब्रह्मसूत्र ३।३।१७।२९,३०)

शिष्य –

पुण्यपापादिको हान पछाडि देवयानको ।
उल्लेख श्रुतिले गर्छ कहीँ गर्दैन मार्गको ॥२५८॥

उपासक र तत्त्वज्ञ दुवैका निम्ति वस्तुतः ।
हुन् अर्चिरादि ती मार्ग समानै ? वा पृथक् कि ! त ? ॥२५९॥

आयो सन्देह हे ब्रह्मन् ! वादीले भन्दछन् स्वतः ।
दुवैको मार्ग यौटै हो अर्चिरादिक वस्तुतः ॥२६०॥

सुकृतादिकको त्यागजस्तै नै यसमा पनि ।
समान सम्झनैपर्छ साम्पराय हुँदा पनि ॥२६१॥

वादीको यसरी आयो मत भन्नोस् गुरो ! अब ।
ठीक हो ? मत यद्वा हो बेठीक ? भन्नुहोस् सब ॥२६२॥

गुरु –

गति अर्थवती हुन्छे हुन्न अर्थवती कतै ।
सगुणोपासनामा नै हुन्छे अर्थवती सधैँ ॥२६३॥

विभिन्न लोकसम्प्राप्ति आदिमा गति बन्दछ ।
सम्यग्दर्शन कैवल्यप्राप्तिमा गतिशून्य छ ॥२६४॥

ज्ञानीका [८६]प्राण निस्किन्नन् जाँदैनन् ती कतै पछि ।
ब्रह्मै थियो र ब्रह्मै नै हुन्छ ज्ञानी मरेपछि ॥२६५॥

---

८६. न तस्य प्राणा उत्क्रामन्ति ब्रह्मैव सन् ब्रह्माप्येति ।– बृहदारण्यकोपनिषद् ४।४।६

सद्ज्ञानी [87]पुण्यपापादि समूल कर्म नष्ट भै ।
निरञ्जन बनी जान्छन् ब्रह्म कैवल्य मुक्त भै ॥२६६॥

लोकमा ग्राममा जाँदा अपेक्षा हुन्छ मार्गको ।
किन्तु आरोग्यका निम्ति अपेक्षा हुन्न मार्गको ॥२६७॥

त्यस्तै नै क्रमले जाँदा अपेक्षा हुन्छ मार्गको ।
कैवल्य मुक्तिमा कैल्यै अपेक्षा हुन्न मार्गको ॥२६८॥

मोक्षको गरियो ऐले केही सङ्क्षिप्त शंसन ।
फल अध्याय चारौँमा हुने छ पूर्ण वर्णन ॥२६९॥

दुई छन् [88]यसमा सूत्र दुवैले मोक्षवर्णन ।
दुई प्रकारले गर्छन् मार्गको सूक्ष्म सूचन ॥२७०॥



## १८. अनियमाधिकरण (ब्रह्मसूत्र ३।३।१८।३१)

शिष्य –
सबै सगुण विद्यामा गति अर्थवती हुने ।
किन्तु निर्गुण विद्यामा गति त्यो व्यर्थ नै हुने ॥२७१॥

केही सगुण विद्यामा सुनिन्छ गति निश्चय ।
सुनिन्न गति केहीमा हुन गो अति संशय ॥२७२॥

जो जो सगुण विद्यामा गति छ श्रुत निश्चित ।
हुने छ गति तीमा नै ? अरूमा के अनिश्चित ? ॥२७३॥

---

८७. पुण्यपापे विधूय निरञ्जनः परमं साम्यमुपैति । – मुण्डकोपनिषद् ३।१।३
८८. गतेरर्थवत्त्वमुभयथाऽन्यथा हि विरोधः । – ब्रह्मसूत्र ३।३।१७।२९–३०

सन्देह जब पैदा भो वादीले भन्दछन् स्वतः ।
सुनिन्छ जुन विद्यामा गति त्यै मान्य वस्तुतः ॥२७४॥

यसमा गुरु जी ! भन्नोस् वादीको मत युक्त हो ?
श्रुतिमा श्रुत हो ? हैन ? भएमा कुन युक्त हो ? ॥२७५॥

गुरु –
यसमा [८९]नियमै छैन हो अभ्युदयको फल ।
सारा सगुण विद्यामा देवायान हुने फल ॥२७६॥

विरोध पनि देखिन्न यहाँ प्रकरणादिको ।
शब्दानुमान साराले गर्दछन् अर्थ यै निको ॥२७७॥

[९०]'तद्‌य इत्थं विदुः' साथै 'ये चे मे' श्रुति लीकन ।
गृहस्थादि सबैको नै देवयान छ शंसन ॥२७८॥

[९१]श्रद्धा र तपमात्रैले पाइन्न देवको गति ।
[९२]विद्याका बलले मात्रै पाइन्छ उत्तमा गति ॥२७९॥

[९३]ब्रह्मलोक पुगी ज्ञानी मुक्त बन्दछ सत्वर ।
अविद्वान् जान सक्तैन ब्रह्मलोक जसो गर ॥२८०॥

---

८९. एवं प्राप्ते पठति – अनियम इति । सर्वासामेवाभ्युदयप्राप्ति फलानां सगुणानां विद्यानामविशेषेणैषा देवयानाख्या गतिर्भवितुमर्हीति ।

– शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।१८।३१

९०. तद्‌य इत्थं विदुः ... एष देवयानः पन्थाः । – छान्दोग्योपनिषद् ५।१०।१

९१. य एवमेतद्‌विदुर्ये चामी अरण्ये श्रद्धां सत्यमुपासते । – बृहदारण्यकोपनिषद् ६।२।१५

९२. विद्यया तदारोहन्ति यत्र कामाः परागताः ।
न तत्र दक्षिणा यन्ति नाविद्वांसस्तपस्विनः ॥ – श्रुतिः

९३. ब्रह्मणा सह ते सर्वे सम्प्राप्ते प्रतिसञ्चरे ।
परस्यान्ते कृतात्मानः प्रविशन्ति परं पदम् । – कूर्मपुराण १।१२।२६९

सत्य हो ब्रह्मको नाम श्रुतिद्वारा समर्थित ।
सत्योपासक ती जान्छन् अर्चिरादि हुँदै स्वतः ।।२८१।।

विद्यापञ्चाग्निका नै हुन् 'इत्थंवित्त्व' ज्ञ वस्तुतः ।
विद्यान्तरी सबै हुन्छन् यसमा ग्राह्य शास्त्रतः ।।२८२।।

दुइटा मार्ग छन् जाने [९४]शुक्ल कृष्ण गरीकन ।
तृतीय [९५]मार्गको गर्छ श्रुतिले स्पष्ट शंसन ।।२८३।।

हो देवयान ज्ञानीको कर्मीको पितृयान हो ।
नभएको अनुष्ठान प्राणीको मार्ग शून्य हो ।।२८४।।

त्यस्ता [९६]प्राणीहरू सारा जन्मन्छन् अनि मर्दछन् ।
कहिल्यै पार तर्दैनन् यहीँ नै नित्य घुम्दछन् ।।२८५।।

देवयान हुँदै जाने फर्कन्न फेरि जन्मन ।
पितृयान हुँदै जाने फर्कन्छ फेरि जन्मन ।।२८६।।

उपकोशलविद्या र विद्यापञ्चाग्निमा जुन ।
दुईपटक आको छ देवयान पथै जुन ।।२८७।।

दुई कथन विद्याको ध्यानका निम्ति हो स्वतः ।
गतिको नियमै छैन यै जान सौम्य ! तत्त्वतः ।।२८८।।

---

९४. शुक्लकृष्णे गती ह्येते जगतः शाश्वते मते ।
एकया यात्यनावृत्तिमन्ययावर्तते पुनः ।। – भगवद्गीता ८।२६

९५. अथ य एतौ पन्थानौ न विदुस्ते कीटाः पतङ्गाः यदिदं दन्दशूकम् ।
– बृहदारण्यकोपनिषद् ६।२।१६

९६. अथैतयोः पथोर्न कतरेणच न तानीमानि क्षुद्राण्यसकृतावर्तीनि भूतानि भवन्ति जायस्व म्रियस्वेत्येतत्तृतीयं स्थानम् । – छान्दोग्योपनिषद् ५।१०।८

यसमा [१७]सूत्र यौटै छ यसले पनि स्पष्टतः ।
शब्दानुमानले भन्छ नियमै छैन शास्त्रतः ।।२८९।।



## १९. यावदधिकाराधिकरण (ब्रह्मसूत्र ३।३।१९।३०)

शिष्य –
ब्रह्मज्ञ जनको मुक्ति नित्य हो ? कि ! अनित्य हो ?
सन्देह हुन गो विद्वन् ! नित्य हो ? कि ! अनित्य हो ? ।।२९०।।

पूर्वपक्षी भने मुक्ति पाक्षिकी भन्दछन् जब ।
अपान्तरतमा आदि दिन्छन् प्रमाण नै तब ।।२९१।।

पाक्षिकी मुक्ति विद्वानूको हो ? वा त्यो नित्य हो ? अब ।
आज्ञा होस् गुरुजी ! लौन स्पष्ट पारेर नै सब ।।२९२।।

गुरु –
ठीकै हो पूर्वपक्षीले अपान्तरतमादिको ।
उदाहरण जो आयो ज्ञातव्य पक्ष हो निको ।।२९३।।

अपान्तरतमा आदि मुक्तात्माकन ईश्वर ।
जगत्सञ्चालनार्थै नै दिन्छन् आदेश नै तर ।।२९४।।

मानी ईश्वरको आज्ञा सञ्चालन गरी भव ।
केही समयका पश्चात् जान्छन् मुक्त भई सब ।।२९५।।

केही समय रोकिन्छ प्रारब्धकर्म नै पनि ।
गर्दछन् सृष्टिको कार्य मुक्तात्मा अज्ञझैँ बनी ।।२९६।।

---

१७. अनियमः सर्वासामविरोधः शब्दानुमानाभ्याम् । – ब्रह्मसूत्र ३।३।१९।३२

तबसम्म रहन्छन् ती ईश्वराधीन भैकन ।
[98]सूर्य नै सरी कैवल्य पाउँछन् मोक्ष गैकन ॥२९७॥

पाउँछन् अन्य विद्वान्‌ले जस्तै प्रारब्धको फल ।
त्यस्तै नै मुक्त आत्माले पाउँछन् मुक्ति केवल ॥२९८॥

जसरी जलको वेग रोकिन्छ बाँधमा परी ।
त्यस्तै प्रारब्ध रोकिन्छ ईश-आदेशले गरी ॥२९९॥

[99]आधिकारिकका सारा जब बन्धन टुट्‌दछन् ।
मुक्तात्मा अनि तत्कालै कैवल्य-मुक्त बन्दछन् ॥३००॥

पाक्षिकी मुक्ति यो हैन ब्रह्मज्ञान भएपछि ।
देहोत्पत्ति कसै हुन्न [100]कर्मबीज डढेपछि ॥३०१॥

[101]द्यौता ऋषि मनुष्यादि ब्रह्मज्ञान भएपछि ।
सबै ब्रह्म भए साक्षात् पाए सद्‌ब्रह्म सद्‌गति ॥३०२॥

---

९८. अथ तत ऊर्ध्व उदेत्य नैवोदेता नास्तमेतैकल एव मध्ये स्थाता ।
— छान्दोग्योपनिषद् ३।११।१

९९. तस्य तावदेव चिरं यावन्न विमोक्ष्येऽथ सम्पत्स्ये । — छान्दोग्योपनिषद् ६।१४।२

१००.क. भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ।
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे ।

ख. स्मृतिलम्भे सर्वग्रन्थीनां विप्रमोक्षः । — छान्दोग्योपनिषद् ७।२६।२

ग. यथैधांसि समिद्धोऽग्निर्भस्मसात् कुरुतेऽर्जुन ।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा ॥ — गीता ४।३७

घ. बीजान्यग्न्युपदग्धानि न रोहन्ति यथा पुनः ।
ज्ञानदग्धैस्तथा क्लेशैर्नात्मा सम्पद्यते पुनः । — स्मृतिः

१०१. तयोर्देवानां प्रत्यबुध्यत स एव तदभवत्तथर्षीणां तथा मनुष्याणाम् ।
— बृहदारण्यकोपनिषद् १।४।१०

ब्रह्मज्ञान भई जल्ले ईश्वराज्ञा मिलीकन ।
संसारी काम जो गर्छन् ईशलाई सघाउन ॥३०३॥

[102]महाप्रलयका वेला ब्रह्ममुक्तजसै हुनन् ।
ती ज्ञानी उनकै साथ कैवल्य मोक्ष पाउँछन् ॥३०४॥

कर्मको फल हो स्वर्ग अनुभाव्यविहीन हो ।
ज्ञानको फल हो मोक्ष त्यो [103]साक्षात् अनुभाव्य हो ॥३०५॥

पाइने मृत्युका पश्चात् स्वर्ग हो, मोक्ष तत्क्षण ।
ज्युँदैमा पाइने साक्षात् [104]'अहं ब्रह्म' भनीकन ॥३०६॥

ती वामदेवले बाँच्तै मनु [105]सूर्य म नै भनी ।
अनुभूति गरे भन्छ श्रुति प्रमाण दी अनि ॥३०७॥

त्यसैकारण विद्वान्को कैवल्य मुक्ति हो जुन ।
पाक्षिकी हैन हो नित्य भन्छ श्रुति चिरन्तन ॥३०८॥

आधिकारिक मुक्तात्मा ईशादेश गरीकन ।
अपान्तरतमा आदि जान्छन् मुक्त भईकन ॥३०९॥

यसमा [106]सूत्र यौटै छ मोक्ष अनित्य होइन ।
नित्य हो भन्छ 'यावद्' यो सूत्रले अर्थ दीकन ॥३१०॥



१०२. ब्रह्मणा सह ते सर्वे सम्प्राप्ते प्रतिसञ्चरे ।
परस्यान्ते कृतात्मानः प्रविशन्ति परं पदम् ॥ – कूर्मपुराणम् १।१२।२६९

१०३. यत्साक्षादपरोक्षाद् ब्रह्म । – बृहदारण्यकोपनिषद् २।४।१

१०४. अहं ब्रह्मास्मि । – बृहदारण्यकोपनिषद् १।४।१०

१०५. तद्धैतत् पश्यन्नृषिर्वामदेवः प्रतिपेदेऽहं मनुरभवं सूर्यश्च ।
– बृहदारण्यकोपनिषद् १।४।१०

१०६. यावदधिकारमवस्थितिराधिकारिकाणाम् । – ब्रह्मसूत्र ३।३।१९।३२

## २०. अक्षरध्यधिकरण (ब्रह्मसूत्र ३।३।२०।३३)

शिष्य –
[१०७]त्यो अस्थूलमनण्वादि वाजसनेय भन्दछ ।
त्यस्तै अथर्व [१०८]'अद्रेश्यमग्राह्यम्' आदि भन्दछ ॥३११॥

यसै प्रकारले अन्य धेरै नै स्थलमा कति ।
विशेषण हटाएर अक्षर ब्रह्मको स्तुति ॥३१२॥

देखिन्छ त्यो कहाँ कत्ति अतिरिक्त विशेषण ।
प्रतिषेध हुने गर्छ त्यसको स्पष्ट शंसन ॥३१३॥

सर्वत्र उपसंहार हुन्छ ? सन्देह भो जब ।
सर्वत्र श्रुतिमा त्यो छ वादीले भन्दछन् तब ॥३१४॥

यसमा गुरुजी ! भन्नोस् सर्वत्र उपसंहृत ।
निषेध बुद्धिको हुन्छ ? हुँदैन ? वा कि ! शास्त्रतः ॥३१५॥

गुरु –
गई अक्षरमा सारा ती विशेषण आदिको ।
उपसंहार नै हुन्छ श्रौतसिद्धान्त हो निको ॥३१६॥

त्यो निराकाररूपत्व ब्रह्मको प्रतिपादन ।
सर्वत्र नै समानै छ नानात्व छैन किञ्चन ॥३१७॥

---

१०७. एतद्वै तदक्षरं गार्गि ब्राह्मणा अभिवन्दन्त्यस्थूलमनण्वह्रस्व मदीर्घमलोहितमस्नेहम् ।
– बृहदारण्यकोपनिषद् ३।८।८

१०८. अथ परा यया तदक्षरमधिगम्यतेयत्तदद्रेश्यमग्राह्यमगोत्रमवर्णम् ।
– बृहदारण्यकोपनिषद् ३।८।८

[109]अहीनकर्ममा जस्तै उदाहरण नै लिई ।
सबैको उपसंहार हुन्छ अक्षरमा गई ।।३१८।।

यसमा [110]सूत्र यौटै छ यसले पनि तत्त्वतः ।
हुन्छ अक्षरमा भन्छ उपसंहार अन्ततः ।।३१९।।



## २१. इयदधिकरण (ब्रह्मसूत्र ३।३।२१।३४)

शिष्य –

[111]'द्वासुपर्णा' भनी आयो श्वेताश्वतर, मुण्डमा ।
यी अध्यात्माधिकारैमा आएका हुन् यथार्थमा ।।३२०।।

अर्को [112]'ऋतं पिबन्तौ' यो कठमा स्पष्ट वर्णित ।
त्रिणाचिकेत पञ्चाग्नि ब्रह्मज्ञबाट शंसित ।।३२१।।

सन्देह हुन गो ऐले विद्या नाना ? कि ! एक हो ।
वादीले भन्दछन् विद्या एक हैन अनेक हो ।।३२२।।

देखिन्छ यिनमा भेद भोक्ताऽभोक्ता गरीकन ।
'द्वा' मा भोग्दछ यौटाले अर्को भोग्दैन किञ्चन ।।३२३।।

---

१०९. अग्नेर्वैर्होत्रं वेरध्वरम् । – शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।२०।३३

११०. अक्षरधियां त्ववरोध सामान्यतद्भावाभ्यामौपसदवत्तदुक्तम् ।
– ब्रह्मसूत्र ३।३।२०।३३

१११. द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परिषस्व जाते ।
तयोरन्यः पिप्पलं स्वादवत्यनश्नन्नन्यो अभिचाकशीति । – मुण्डकोपनिषद् ३।१।१।

११२. ऋतं पिबन्तौ सुकृतस्य लोके गुहां प्रविष्टौ परमेपरार्धे ।
छायातपौ ब्रह्मविदो वदन्ति पञ्चाग्नयो ये च त्रिणाचिकेताः ।। – कठोपनिषद् ३।१

'ऋतं' मा दुइटै भोक्ता देखिन्छन् श्रुतिमा अनि ।
त्यसैकारण विद्यामा देखिन्छ भिन्नता पनि ॥३२४॥

त्यसैकारणले भिन्न हुने त्यो वेद्यले पनि ।
विद्यामा भिन्नता गर्छ भन्दछन् शास्त्रले पनि ॥३२५॥

यसरी भेद विद्यामा देखियो स्पष्ट नै जब ।
भन्नुहोस् गुरुजी ! भेद छ ? छैन ? स्पष्ट नै अब ॥३२६॥

गुरु –
वादीले जे भनून् विद्या एकै हो श्रुतिसम्मत ।
इयत्तापरिछिन्नै जो द्वित्वद्वारा छ अन्वित ॥३२७॥

त्यसैकारणले मन्त्र दुइटैले गईकन ।
जीव ईश्वरको साथै गर्दछन् प्रतिपादन ॥३२८॥

'द्वा' मन्त्रको अनश्ननूले भोकतिर्खा अतीतको ।
गर्छ त्यो परमात्माको प्रतिपादन शुद्धको ॥३२९॥

'ऋतम्' मा चाहिँ जीवात्मा पान गर्ने हुँदो भयो ।
न प्युने परमात्मामा पनि संशय देखियो ॥३३०॥

साहचर्य र तादात्म्य हुनाले छत्रिन्यायले ।
पान गर्छ भनेको हो प्युँदैन तर ईशले ॥३३१॥

[११३]'अन्यत्र' अनि 'यः [११४]सेतुः' इत्यादि मन्त्रले स्वतः ।
गर्दछन् परमात्माकै प्रतिपादन तत्त्वतः ॥३३२॥

---

११३. अन्यत्र धर्मादन्यत्राधर्मादन्यत्रास्मात्कृताकृतात् ।
अन्यत्रभूताच्च भव्याच्च यत्तत्पश्यसि तद्वद । – कठोपनिषद् १।२।१४

११४. यः सेतुरिजानानामक्षरं ब्रह्म यत्परम् ।
अभयं तितीर्षतां पारं नचिकेतशं शकेमहि ॥ – कठोपनिषद् १।३।२

[115]'गुहाम्' यो सूत्रमा सारा भएको छ विवेचन ।
अतः विद्या छ यौटै नै भेद छैन कथञ्चन ॥३३३॥

पौर्वापर्य विचारेर पर्यालोचनले स्वतः ।
श्वेत, काठक, आथर्व सबैको एउटै मत ॥३३४॥

सबैले परमात्माकै गर्दछन् प्रतिपादन ।
विद्यामा भेद देखिन्न अभेद हो सनातन ॥३३५॥

यसमा [116]सूत्र यौटै छ 'इयदामननात्' भनी ।
विद्यामा भेद नै छैन भन्छ यो सूत्रले पनि ॥३३६॥



## २२. अन्तराधिकरण (ब्रह्मसूत्र ३।३।२२।३५–३६)

शिष्य –
[117]'यत्साक्षादपरोक्षाद्' यो उषस्त र कहोलको ।
दुई पटक सम्प्रश्न आयो वाजसनेयको ॥३३७॥

भयो संशय हे ब्रह्मन् ! विद्या के सब एक हुन् ?
अथवा भन्नुपर्दामा विद्या यद्वा अनेक हुन् ? ॥३३८॥

यसमा भन्दछन् वादी विद्याहरू अनेक छन् ।
दुई पटकका प्रश्न अन्यथा व्यर्थ बन्दछन् ॥३३९॥

---

११५. गुहां प्रविष्टावात्मानौ हि । – ब्रह्मसूत्र १।२।११
११६. इयदामननात् । ब्रह्मसूत्र ३।३।२१।३४
११७.क. यत्साक्षादपरोक्षाद् ब्रह्म, य आत्मा सर्वान्तरः ।
– बृहदारण्यकोपनिषद् ३।४।१, ३,५।१
ख. एको देवः सर्वभूतेषु गूढः सर्वव्यापी सर्वभूतान्तरात्मा ।
– श्वेताश्वतरोपनिषद् ६।११

जस्तै 'यजति'ले गर्दा कर्ममा भेद आउँछ ।
त्यस्तै अभ्यासले गर्दा विद्यामा भेद आउँछ ॥३४०॥

वादीको यसरी आयो विद्या अनेक छन् मत ।
भन्नुहोस् गुरुजी ! विद्या कति छन् अब तत्त्वतः ॥३४१॥

गुरु –
आत्मा आन्तर हो ब्रह्म दुइटै श्रुति भन्दछन् ।
यस्तै विषयका प्रश्न तथा उत्तर साम्य छन् ॥३४२॥

यी दुवै मन्त्रमा सारा प्राणीका भित्र वस्तुतः ।
सर्वान्तर उही आत्मा रहन्छ भन्दछन् स्वतः ॥३४३॥

विद्याभेद नमानेमा आम्नायभेद वस्तुतः ।
होला अनुपपन्नै जो भन्न मिल्दैन तत्त्वतः ॥३४४॥

उपदेश अरूजस्तै यसको उपपत्ति त ।
ताण्डिको त्यो [118]'स आत्मा' भन्नैं हुँदैन भेद निश्चित ॥३४५॥

जिज्ञासाशान्तिका लागि गरिन्छ उपदेश नि ।
त्यसले भेद विद्यामा हुँदैन कहिल्यै पनि ॥३४६॥

उपक्रमोपसंहार [119]'अतोऽन्य' श्रुतितः पनि ।
एकार्थकै छ विद्यामा देखिन्न भेद नै अनि ॥३४७॥

'यदेव' श्रुतिको दोस्रो प्रश्नमा जुन 'एव' छ ।
पूर्व नै प्रश्नको त्यल्ले अनुकर्षण गर्दछ ॥३४८॥

---

११८.क. स आत्मा तत्त्वमसि श्वेतकेतो । – छान्दोग्योपनिषद् ६।८।७
ख. भूय एव मा भगवान् विज्ञापयतु ।– छान्दोग्योपनिषद् ६।५।४
११९.यदेव साक्षादपरोक्षाद् । – बृहदारण्यकोपनिषद् ३।५।१

पूर्वापर्य विचार्दामा विद्यामा एक अर्थता ।
देखिन्छ यसमा सोम्य ! हुन सक्तैन अन्यथा ॥३४९॥

दुई छन् भन्दछन् [१२०]सूत्र यिनले पनि अन्ततः ।
त्यो 'तत्त्वमसि'भैँ भेद विद्यामा हुन्न तत्त्वतः ॥३५०॥



## २३. व्यतिहाराधिकरण (ब्रह्मसूत्र ३।३।२३।३७)

शिष्य –
जीव-ईश्वरका बीच व्यतिहार भईकन ।
विशेषणविशेष्यैको भाव हुन्छ ? कि ! होइन ? ॥३५१॥

उपास्य र उपास्यैको श्रुतिले गर्छ वर्णन ।
[१२१]सूर्यमण्डलका साथ स्वदेहको लिईकन ॥३५२॥

जीव-ईश्वरका बीच व्यतिहार छ यो जुन ।
उपासनार्थ हो ? यद्वा अरू नै छ प्रयोजन ? ॥३५३॥

सन्देह यसरी आयो वादीको मत सत्वर ।
एकरूप मति त्यो नै गर्ने हो भन्दछन् तर ॥३५४॥

व्यतिहार भएकाले आत्माको ईश्वरैसित ।
एकत्वभिन्न नै छैन योग्य चिन्तन वस्तुतः ॥३५५॥

तिमी[१२२] म म तिमी भन्ने व्यतिहार लिईकन ।
एकत्वदृढता-निम्ति श्रुतिले गर्छ शंसन ॥३५६॥

---

१२०. अन्तरा भूतग्रामवत्स्वात्मनः । – ब्रह्मसूत्र ३।३।२२।३५–३६
१२१. तद्योऽहं सोऽसौ योऽसौ सोऽहम् । – ऐतरेयोपनिषद्
१२२. त्वं वा अहमस्मि भगवो देवतेऽहं वै त्वमसि । – श्रुतिः

वादीको गुरुजी ! आयो मत प्रमाण दीकन ।
भन्नोस् एकत्वको बुद्धि गर्ने ? यद्वा कि ! होइन ? ॥३५७॥

गुरु –
व्यतिहार त आएको आध्याननिम्ति हो जुन ।
सर्वात्मत्वगुणैजस्तै यो पनि श्रुतिशंसन ॥३५८॥

तिमी म म तिमी भन्ने श्रुतिनिर्देशसाधक ।
दोहोरो मति गर्नाले श्रुत्यर्थ हुन्छ सार्थक ॥३५९॥

आध्याननिम्ति नै हो यो उभय श्रुति-अर्थक ।
अन्यथा श्रुति दोटा नै हुन जालान् अनर्थक ॥३६०॥

ऐक्यै भए पनि त्यो ता व्यतिहारोक्तले गरी ।
दुई प्रकारको बुद्धि उपासनार्थमा परी ॥३६१॥

श्रुतिमा व्यक्त ईशैमा जीवत्व-प्रतिपादन ।
आयो उपासना गर्न व्यतिहारक चिन्तन ॥३६२॥

जसरी सत्यकामादि गुणको उपदेश हो ।
यद्यपि ध्यानका लागि भनिने व्यवहार हो ॥३६३॥

तथापि गुण ती सारा युक्त ईश्वर हो जुन ।
त्यस्तै नै यसमा ल्याई सम्झनुपर्छ तीपन ॥३६३॥

त्यसैकारण यो जो छ महत्व व्यतिहारमा ।
ध्यान गर्न समानैमा उपसंहारनिम्तिमा ॥३६४॥

यसमा [१२३]सूत्रले भन्छ 'व्यतिहारः' भनीकन ।
उपासनासँगै यो हो दृढतानिम्ति शंसन ॥३६५॥



१२३. व्यतिहारो विशिंषन्ति हीतरवत् । – ब्रह्मसूत्र ३।३।२३।३७

## २४. सत्याद्यधिकरण (ब्रह्मसूत्र ३।३।२४।३७)

शिष्य –

त्यो नामाक्षरका साथै सत्यविद्या भनीकन ।
उपासनार्थ विद्याको [१२४]श्रुतिले गर्छ शंसन ॥३६६॥

जसले ब्रह्म हो सत्य भनेर स्पष्ट जान्दछ ।
त्यसले जय यो लोक सजिलै प्राप्त गर्दछ ॥३६७॥

त्यो सत्य जुन हो त्यो नै [१२५]आदित्य श्रुतिसम्मत ।
त्यो मण्डलस्थ पुं नै हो दाहिने नेत्रमा स्थित ॥३६८॥

सन्देह यसमा आयो सत्यविद्या दुई ? अनि ।
एक हो ? तर वादीले भन्दछन् दुइटा भनी ॥३६९॥

ती विद्या हुन् दुई खास फल संयोग भिन्न हो ।
हो [१२६]लोकजय नै पैलो त्यो दोस्रो पाप [१२७]नाश हो ॥३७०॥

यी हुन् उपासनाका नै फल अन्तिम वस्तुतः ।
आकर्षण उपास्यैको एकत्वमा छ तत्त्वतः ॥३७१॥

वादीको यसरी आयो मत द्वित्व गरी जब ।
युक्त हो अथवा हैन ? भन्नुहोस् गुरुजी ! अब ॥३७२॥

---

१२४.स यो हैतत् महद्यक्षं प्रथमजं वेद सत्यं ब्रह्म । – बृहदारण्यकोपनिषद् ५।४।१
१२५.तद् यत् तत्सत्यमसौ स आदित्यो य एष एतस्मिन् मण्डले
पुरुषो यश्चायं दक्षिणेऽक्षन् पुरुषः । – बृहदारण्यकोपनिषद् ५।५।२
१२६.जयतीमाँल्लोकान् । – बृहदारण्यकोपनिषद् ५।४।१
१२७.हन्ति पाप्मानं जहाति च य एवं वेद । – बृहदारण्यकोपनिषद् ५।५।३

गुरु –

सत्यविद्या त हो एक 'यद् यत्सत्यम्' भनीकन ।
यहाँ प्रकृतको हुन्छ आकर्षण चिरन्तन ॥३७३॥

उक्ताकर्षणले गर्दा पूर्वविद्या गईकन ।
सत्य उत्तरका साथ मिल्छ एक भईकन ॥३७४॥

'तद् [१२८]यत्सत्यम्' छ जो मन्त्र सत्य ब्रह्म सनातन ।
अनुवाद गरी हुन्छ [१२९]रविरूपत्ववर्णन ॥३७५॥

त्यसैकारण हो एक सत्यविद्या सनातन ।
[१३०]पापनाशन हो मात्र [१३१]अर्थवादार्थ शंसन ॥३७६॥

विद्या एक भएकाले गएर ब्रह्म सत्यमा ।
उपसंहार नै हुन्छ [१३२]सूत्रले भन्छ अन्तमा ॥३७७॥



## २५. कामाद्याधिकरण (ब्रह्मसूत्र ३।३।२५।३९)

शिष्य –

[१३३]'अथ यद्' श्रुतिबाटै नै उपक्रम गरीकन ।
[१३४]'एव आत्मा' भनी गर्छ दोस्रोले फेरि शंसन ॥३७८॥

---

१२८. तद् यत्सत्यम् । – बृहदारण्यकोपनिषद् ५।५।२
१२९. असौ स आदित्यो य एष । – बृहदारण्यकोपनिषद् ५।५।२
१३०. पापघातलोकजयकाम उपासीत । – श्रुतिः
१३१. अङ्गेषु फलश्रुतिरर्थवादः । – न्यायः
१३२. सैव हि सत्यादयः । – ब्रह्मसूत्र ३।३।२४।३८
१३३. अथ यदिदमस्मिन् ब्रह्मपुरे दहरं पुण्डरीकं वेश्म दहरोऽस्मिन्नन्तराकाशः । – छान्दोग्योपनिषद् ८।१।१
१३४. एष आत्माऽपहतपाप्मा विजरो विमृत्युर्विशोकोऽविजिघित्सोऽपिपासः सत्यकामः सत्यसङ्कल्पः । – छान्दोग्योपनिषद् ८।१।५

यसै गरेर तेस्रोले 'स वा एष' भनीकन ।
विभिन्नरूपले गर्छन् आत्माको श्रुति वर्णन ॥३७९॥

यसमा दहराकाश हार्दाकाश क्रमैसित ।
सत्यकामवशित्वादि गुणले छन् समन्वित ॥३८०॥

एउटा श्रुतिले सूक्ष्म दहराकाश ब्रह्मको ।
उपक्रम उठाएर गर्छ वर्णन ब्रह्मको ॥३८१॥

त्यस्तै नै श्रुति अर्कोले ब्रह्मको स्थिति भन्दछ ।
[135]हृदयाकाशमा ब्रह्म शयनै गर्छ भन्दछ ॥३८२॥

यहाँ आएर विद्याको जो एकत्व परस्पर ।
उपसंहार यो हुन्छ ? हुन्न ? संशय भो तर ॥३८३॥

भन्दछन् पूर्वपक्षी ती उपास्य, ज्ञेयले दुवै ।
भिन्न हुन् उपसंहार हुन सक्तैन नै कवै ॥३८४॥

दुवै नै यिनमा हुन्छ ? हुँदैन ? उपसंहृति ।
यसमा भन्नुहोस् विद्वन् ! दिई प्रमाण सम्प्रति ॥३८५॥

गुरु –
छान्दोग्यमा 'स वा एष' 'एष आत्मा' छ काण्वमा ।
शब्दावली पृथक् होलान् ज्ञातव्य सम अन्तमा ॥३८६॥

वशित्वादि गुणै जो छन् दहराकाशमा स्वतः ।
उपासनार्थ ती हुन्छन् उपसंहार वस्तुतः ॥३८७॥

---

१३५.स वा एष महानज आत्मा योऽयं विज्ञानमय प्राणेषु य
एषोऽन्तर्हृदय आकाशस्तस्मिञ्छेते सर्वस्य वशी । – बृहदारण्यकोपनिषद् ४।४।२२

सत्यकामत्व इत्यादि गुणको चाहिँ तत्त्वतः ।
हृदयाकाशमा हुन्छ उपसंहार वस्तुतः ॥३८८॥

दहराकाशका साथै हृदयाकाश नै पनि ।
आत्मा हुन् अन्य ती हैनन् भन्दछ श्रुतिले पनि ॥३८९॥

स्थान आदि समानै छन् स्थान हो हृदयै स्वतः ।
वेद्य ब्रह्म समानै छ सम सेतुत्व वस्तुतः ॥३९०॥

[१३६]आकाशशब्द हो खास ब्रह्मवाचक छा.उ.मा ।
सगुण ब्रह्मविद्याको उपदेश छ अन्तमा ॥३९१॥

[१३७]आत्मा र सत्यकामादि जो जानीकन मर्दछ ।
त्यो ब्रह्मविद् भई ब्रह्म संसारबाट तर्दछ ॥३९२॥

निर्गुण ब्रह्मको गर्छ उपदेश बृ.उ. स्वतः ।
[१३८]'अत ऊर्ध्वं विमोक्षाय' मन्त्र त्यो भन्छ तत्त्वतः ॥३९३॥

[१३९]'असङ्ग' ब्रह्म हो वेद्य माया विकारका पर ।
[१४०]'नेति नेति' भनी गर्छ निषेध श्रुतिले तर ॥३९४॥

नेति त्यो श्रुतिले सारा अतद् वस्तु गरी पर ।
निर्गुण ब्रह्म नै गर्छ प्रतिपादन आखिर ॥३९५॥

सत्यकामादिको हुन्छ बृ.उ.मा उपसंहृति ।
हुन्छन् सर्ववशित्वादि छा.उ.मा उपसंहृति ॥३९६॥

---

१३६. दहर उत्तरेभ्यः । – ब्रह्मसूत्र १।३।१४

१३७. अथ य इहाऽऽत्मनमनुविद्य व्रजन्त्येतां सत्यां कामान् । – छान्दोग्योपनिषद् ८।१।६

१३८. अत ऊर्ध्वं विमोक्षाय ब्रूहि । – बृहदारण्यकोपनिषद् ४।३।१४

१३९. असङ्गो ह्ययं पुरुषः । – बृहदारण्यकोपनिषद् ४।३।१५

१४०. स एष नेति नेति । – बृहदारण्यकोपनिषद् ३।९।२६

ती आयतन हुन् हेतु समान छन् दुवैतिर ।
दुवैमा उपसंहार सक्तछन् हुन आखिर ॥३९७॥

सगुण ब्रह्म यौटै हो ब्रह्मै विभूतिदर्शन ।
गर्न नै सूत्रमा आयो उपसंहार शंसन ॥३९८॥

उपासनार्थ आएको हुन्न सम्झनु वस्तुतः ।
भनेर [१४१]भाष्यले व्याख्या सूत्रको गर्छ अन्ततः ॥३९९॥

यसमा [१४२]सूत्र यौटै छ यसले पनि शास्त्रतः ।
दुवैमा उपसंहार हुन्छ भन्दछ तत्त्वतः ॥४००॥



## २६. आदराधिकरण (ब्रह्मसूत्र ३।३।२६।४०–४१)

शिष्य –

[१४३]'तद्यद्भक्तम्' भनी आयो श्रुतिमा प्राण आहुति ।
त्यो अग्निहोत्रको होम हो भन्छ [१४४]अन्य नै श्रुति ॥४०१॥

[१४५]भोका बालकले गर्छन् माताको जो उपासना ।
त्यस्तै नै प्राणले गर्छन् अग्निहोत्र-उपासना ॥४०२॥

---

१४१. गुणवतस्तु ब्रह्मण एकत्वाद् विभूतिप्रदर्शनायाऽयं गुणोपसंहारः सूत्रितो नोपासनायेति द्रष्टव्यम् । – शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।२५।३९

१४२. कामादीतरत्र तत्र चायतनादिभ्यः । – ब्रह्मसूत्र ३।३।२५।३९

१४३. तद्यद्भक्तं प्रथममागच्छेत्तद्धोमीयं स यां प्रथमामाहुतिं जुहुयात्तां जुहुयात् प्राणाय स्वाहा । – छान्दोग्योपनिषद् ५।१९।१

१४४. य एतदेवं विद्वानग्निहोत्रं जुहोति । – छान्दोग्योपनिषद् ५।२४।२

१४५. यथेह क्षुधिता बाला मातरं पर्युपासते ।
एवं सर्वाणि भूतान्यग्निहोत्रमुपासते ॥

यहाँ सन्देह यो आयो भएमा लोप भोजन ।
प्राणाग्निहोत्रको लोप हुन्छ ? हुन्न ? भनीकन ॥४०३॥

यसमा भन्दछन् वादी प्राणाग्निहोत्रका सित ।
सुनिन्छ अन्नसंयोग सामान्यरूपमा स्वतः ॥४०४॥

विशेष गुणको गर्न विधान [१४६]'तद्' भनीकन ।
अन्नादि द्रव्यको हुन्छ श्रुतिमा मुख्य शंसन ॥४०५॥

भए भोजनको लोप जल या अन्य वस्तु नै ।
द्वारा प्रतिनिधिन्याय प्राणाग्निहोत्र हुन्छ नै ॥४०६॥

हुँदा भोजनको लोप लोप प्राणाग्निहोत्रको ।
हुँदैन, भन्दछन् वादी दिई प्रमाण [१४७]शास्त्रको ॥४०७॥

यसरी गुरुजी ! आयो वादीको मत नै जब ।
भन्नुहोस् श्रौतसिद्धान्त स्पष्ट पारेर नै सब ॥४०८॥

गुरु –
त्यो भोजन जसै प्राप्त हुन्छ [१४८]प्रथम भातले ।
प्राणाग्निहोत्र सम्पन्न गर्नू भन्दछ शास्त्रले ॥४०९॥

भए भोजनको लोप कसरी द्रव्य अन्यले ।
होला प्रतिनिधिन्यायद्वारा आहुति ? अन्यले ॥४१०॥

भए भोजनको लोप लोप आहुति बन्दछ ।
प्राप्त प्रथम जो भात होमार्थ श्रुति भन्दछ ॥४११॥

---

१४६. पूर्वोऽतिथिभ्योऽश्नीयात्, यथा ह वै स्वयमहुत्वा परस्य जुहुयादेवं तत् ।
– जाबालश्रुतिः

१४७. तद्यद्भक्तम् । – छान्दोग्योपनिषद् ५।१९।१

१४८. तद्यद्भक्तं प्रथममागच्छेत्तद्धोमीयम् । – छान्दोग्योपनिषद् ५।१९।१

गरोस् अतिथिले भन्दा पहिले नित्य भोजन ।
नत्र आहुतिको लोप भई हुन्छ अभोजन ॥४१२॥

वादीको मत मानिन्न भएमा लोप भोजन ।
हुन्छ आहुतिकै लोप शास्त्रले गर्छ सूचन ॥४१३॥

दुई छन् यसमा [१४९]सूत्र पूर्वोत्तर गरीकन ।
प्राणाग्निहोत्रकै गर्छन् दुवैले नै विवेचन ॥४१४॥



## २७. तन्निर्धारणाधिकरण (ब्रह्मसूत्र ३।३।२७।४२)

शिष्य –

[१५०]'ओमित्येतत्' श्रुतिप्रोक्त इत्यादि कर्म हुन् जुन ।
के ज्योतिष्टोम इत्यादि अङ्गका हुन् उपासन ? ॥४१५॥

उपासनादि कर्मैमा जुहूपर्णमयी सरी ।
नित्य हो ? कि ! अनित्यै हो ? गोदोहनसरी गरी ॥४१६॥

यस संशयमा वादी भन्दछन् नित्य हो भनी ।
प्रयोगवचनै जो छ त्यो परिग्रहले पनि ॥४१७॥

पर्णताका समानै त्यो श्रुतिका साथ वाक्यले ।
उपासनाहरूको त्यो नित्य सम्बन्ध जुट्नुले ॥४१८॥

[१५१]जुहूपर्णमयी हुन्छ जसको उसले गई ।
पापश्लोकादि पर्दैन सुन्नु निष्पाप नै भई ॥४१९॥

---

१४९. आदरादलोपः । – ब्रह्मसूत्र ३।३।२६।४०,४१

१५०. ओमित्येतदक्षरमुद्गीथमुपासीत । – छान्दोग्योपनिषद् १।१।१

१५१. यस्य पर्णमयी जुहूर्भवति न स पापं श्लोकं शृणोति । – श्रुतिः

क्रतुप्रकरणैमा यो नपढेको भए पनि ।
जुहू इत्यादिका द्वारा प्रविष्ट ऋतुमा हुने ॥४२०॥

अतः त्यो नित्य नै हुन्छ अनुष्ठेय सधैँभर ।
वादीले भन्दछन्, भन्नोस् अनित्य ? नित्य ? के तर ॥४२१॥

गुरु –
विधीयमान हो खास [152]गोदोहन सरी तर ।
उपासनाहरू हुन्नन् क्रतु अङ्ग कुनै तर ॥४२२॥

स्वतन्त्रपुरुषार्थै हुन् उपासनाहरू सब ।
कर्मको फलभन्दा छ भिन्नै उपासनाफल ॥४२३॥

[153]'कल्पन्ते' श्रुतिले भन्छ पाँचप्रकार साम ती ।
देवतोपासना दृष्टि छन् ऐच्छिक विधान ती ॥४२४॥

[154]'तेनोभौ' श्रुतिले भन्छ अङ्गाश्रित उपासना ।
वाक्यका शेषमा पर्छन् उपासकाऽनुपासक ॥४२५॥

ती दुवैकन आधारभूत त्यो अङ्गबाट नै ।
कर्माऽनुष्ठानमा स्पष्टै भनिएको छ योग्य नै ॥४२६॥

कर्मको फलभन्दा त्यो अर्को नै वीर्यवत्तर ।
कर्मसंवृद्धिरूपत्व फल प्राप्ति हुने तर ॥४२७॥

१५२. चमसेनापः प्रणयेत्, गोदोहनेन पशुकामस्य । – श्रुतिः
१५३. कल्पन्ते हास्मै लोका ऊर्ध्वाश्चावृत्ताश्च । – छान्दोग्योपनिषद् २।२।३
१५४. तेनोभौ कुरुतो यश्चैतदेवं वेद यश्च न वेद ... तदेव वीर्यवत्तरं भवति ।
– छान्दोग्योपनिषद् १।१।१०

यसले कर्म अङ्गत्वहीन हो त्यो उपासना ।
आयो र कर्ममा छैन निमित्त त्यो उपासना ॥४२८॥

उपासना अवश्यै हुन् विशिष्ट र क्रियात्मक ।
उपपन्न भएदेखि उद्गीथ आश्रयात्मक ॥४२९॥

तस्मात् उपासनाका नै विरोध फलमा पनि ।
हुँदैन यज्ञसम्बन्ध गोदोहनादिमा पनि ॥४३०॥

अथवा

शिष्य –

कर्ममा अङ्गरूपैले छन् आश्रित उपासना ।
ती अनुष्ठेय हुन् ? हैनन् ? नियतै ती उपासना ॥४३१॥

वादीले यसमा भन्छन् पर्णताका समान नै ।
क्रतुका साथ वाणीले सम्बन्ध तिनको हुने ॥४३२॥

अतः नियमले ती हुन् अनुष्ठेय भनीकन ।
आयो हे गुरुजी ! भन्नोस् त्यो युक्त हो कि ? होइन ॥४३३॥

गुरु –

फलश्रवण देखिन्छ पृथक् पृथक् गरी जउन् ।
गोदोहनसमानै यी उपासना अनित्य हुन् ॥४३४॥

'तेनोभौ' श्रुतिमा आयो उपासकाऽनुपासक ।
दुवैका लागि हो कर्म सधैँ अनियतात्मक ॥४३५॥

यसमा [१५५]सूत्र यौटै छ त्यसले भन्छ सारतः ।
उपासना हुँदै हैन त्यो कर्माङ्गत्व निश्चित ॥४३६॥



१५५. तन्निर्धारणानियमस्तद्दृष्टो पृथग्ध्यप्रतिबन्धः फलम् । – ब्रह्मसूत्र ३।३।२७।४२

## २८. प्रदानाधिकरण (ब्रह्मसूत्र ३।३।२७।४३)

शिष्य –

के वायु प्राणको गर्ने एकरूपत्वचिन्तन ?
वा पृथक्‌रूपले गर्ने ? भयो संशय मैकन ॥४३७॥

वादीले भन्दछन् दोटै अपृथक् हुन् स्वरूपतः ।
तिनको गर्न मिल्दैन पृथक् चिन्तन वस्तुतः ॥४३८॥

[156]श्रुतिले स्पष्ट नै भन्छ अपृथक् हुन् भनीकन ।
विभिन्न स्थानमा बस्छन् वायु नाना बनीकन ॥४३९॥

[157]जुन हो प्राण सो वायु भेद छैन कुनै पनि ।
यी दुवै एक हुन् भन्छ अन्ततः श्रुतिले पनि ॥४४०॥

यसमा गुरुजी ! भन्नोस् वायु र प्राणचिन्तन ।
अभिन्नरूपले गर्ने ? यद्वा भिन्न गरीकन ॥४४१॥

गुरु –

अध्यात्मरूपका साथ अधिदैवत्वले गरी ।
अवस्था भेदले गर्नु पृथक् चिन्तन सुस्तरी ॥४४२॥

देवता इन्द्र यौटै हुन् गुणका भेदले तर ।
दुईमा भेद देखिन्छ उपाधिले गरी तर ॥४४३॥

त्यस्तै नै एक विद्यामा वायु प्राण अभिन्न हुन् ।
आध्यात्मिकादिले गर्दा दुवैका गुण भिन्न छन् ॥४४४॥

---

१५६. वायुर्वाव संवर्गः, प्राणो वावः संवर्गः । – छान्दोग्योपनिषद् ४।३।२
१५७. यः प्राणः स वायुः । – श्रुतिः

उपास्य अंशको भेद हुँदा उपासना पनि ।
पृथक् नै हुन्छ [158]'नाना' व 'मत जैमिनि'को पनि ॥४४५॥

गुणका भेदका साथै स्थानका भेदले स्वतः ।
अनुचिन्तन भिन्नै नै गर्नुपर्दछ तत्त्वतः ॥४४६॥

यसमा [159]सूत्र यौटै छ यसले पनि सूत्रतः ।
'प्रदानवत्' भनी भन्छ गर्नु चिन्तन भिन्नतः ॥४४७॥



## २९. लिङ्गभूयस्त्वाधिकरण (ब्रह्मसूत्र ३।३।२९।४४–५२)

शिष्य –
आयो [160]वाजसनेयीको रहस्य अग्निमा जुन ।
स्वतन्त्ररूपले अग्नि गरिएको छ शंसन ॥४४८॥

[161]'यत्किञ्चेमानि भूतानि' इत्यादि लिङ्गरूपक ।
प्रमाण सब हुन् मुख्य स्वातन्त्र्यप्रतिपादक ॥४४९॥

प्राकरण्य अपेक्षाले [162]लिङ्ग हो बलवत्तर ।
यही जैमिनिले भन्छन् पूर्वकाण्ड लिई तर ॥४५०॥

मनश्चित् आदि ती अग्नि कर्माङ्ग ? वा स्वतन्त्र हुन् ॥
सन्देह हुन गो, वादी भन्दछन् कर्मशेष हुन् ॥४५१॥

---

१५८. नाना वा देवता पृथग्ज्ञानात् । – जैमिनिसूत्रसङ्कर्षणकाण्डम्
१५९. प्रदानवदेव तदुक्तम् । – ब्रह्मसूत्र ३।३।२८।४३
१६०. नैव वा इदमग्रे सदासीत् । – श्रुतिः
१६१. तदयत्किञ्चेमानि भूतानि मनसा सङ्कल्पयन्ति । – श्रुतिः
१६२. श्रुतिलिङ्गवाक्यप्रकरणस्थानसमाख्यानां समवाये पारदौर्बल्यमर्थविप्रकर्षात् ।
– जैमिनिसूत्र ३।३।१३

यसमा गुरुजी ! भनोस् वादीको मत युक्त हो ?
यद्वा सिद्धान्त नै के हो ? भन्नोस् जो उपयुक्त हो ॥४५२॥

गुरु –
यसमा शब्दतः छैन लिङ्लोट् आदि कुनै विधि ।
अर्थवाद लिई हुन्छ यसमा कल्पना विधि ॥४५३॥

फलोत्पादक जो छन् ती स्तावकै वाक्य लीकन ।
रात्रिसत्राख्यले हुन्छ अधिकारी समर्पण ॥४५४॥

समाप्ति यसमै हुन्छ त्यसै कारणले पनि ।
यो ब्राह्मण अवश्यै हो विधिरूपात्मकै अनि ॥४५५॥

विध्युद्देशगतै यो हो [१६३]लिङ्गप्रबल बन्दछ ।
कर्माङ्गत्व यहाँ सोझै श्रुति व्यावृत्त गर्दछ ॥४५६॥

यसै नै श्रुतिले गर्छ स्वातन्त्र्यको प्रशंसन ।
श्रुतिलिङ्गादिले बाध गर्छन् प्रकरणैकन ॥४५७॥

विद्यात्मक स्वतन्त्रै हुन् मनश्चिदादिशंसन ।
स्वतन्त्ररूपमा पर्छ वह्निको गर्नु चिन्तन ॥४५८॥

अथवा–
शिष्य–
मनश्चिदादि ती अग्नि कर्माङ्ग ? वा स्वतन्त्र ? हुन् ।
भन्ने सन्देह पैदा भो शेषी ? वा कर्मशेष ? हुन् ॥४५९॥

वादीले यसमा भन्छन् लिई प्रकरणी बल ।
कर्माङ्ग अग्नि हुन्, हैनन् ती स्वतन्त्र कुनै बल ॥४६०॥

---

१६३. 'ते हैते विद्याचित एव' इति, विद्यया हैवैते एवंविदश्चिता भवन्ति । – श्रुतिः

लिङ्ग प्रमाण अन्यार्थ ती ता दर्शनरूप हुन् ।
मनश्चिदादि ती अग्नि अतः कर्माङ्गशेष हुन् ॥४६१॥

यसमा गुरुजी ! भन्नोस् मनश्चिदादि अग्नि ती ।
कर्माङ्ग शेष हुन् ? यद्वा हुन् स्वतन्त्र ? कि ! अग्नि ती ?॥४६२॥

गुरु –
गृहीत विधिगात् लिङ्ग श्रुति, वाक्यप्रमाणले ।
हुन्छ प्रकरणै बाध भने जे पूर्वपक्षले ॥४६३॥

[१६४]'सोऽमृतो' यसमा आई विद्याफल लिईकन ।
हुँदैन उपसंहार कर्मप्रधान होइन ॥४६४॥

उपक्रमोपसंहार पूर्वापर लिईकन ।
मनश्चित् आदि हुन् अग्निविद्यात्मक चिरन्तन ॥४६५॥

यसरी मत वादीको भई बाध क्रमैसित ।
स्वतन्त्ररूपमा हुन्छ वह्निचिन्तन वस्तुतः ॥४६६॥

[१६५]नौओटा यसमा सूत्र आएका छन् सनातन ।
भन्दछन् सबले गर्ने स्वतन्त्र वह्निचिन्तन ॥४६७॥



## ३०. ऐकात्म्याधिकरण (ब्रह्मसूत्र ३।३।३०।५३–५४)

शिष्य –
मुमुक्षुनिम्तिमा बन्ध-मोक्षको गर्न वर्णन ।
वेदान्तको भएको छ श्रौतसिद्धान्तशंसन ॥४६६॥

१६४. सोऽमृतो भवति मृत्युर्ह्यस्यात्मा भवति । – श्रुतिः
१६५. लिङ्गभूयस्त्वात्तद्धि बलीयस्तदपि । – ब्रह्मसूत्र ३।३।२९।४४–५२

देहादिरिक्त आत्माको गर्नलाई विवेचन ।
मीमांसाशास्त्रमा गर्छन् स्वामी [166]शबर सूचन ।।४६७।।

आत्मा हो नित्य मिथ्या हो शरीर पाञ्चभौतिक ।
एकत्व जीवको हुन्छ आत्माका साथ तात्त्विक ।।४६८।।

यसका लागि नै स्थूणानिखनन्याय लीकन ।
बुद्धिका दृढतानिम्ति सूत्र गर्छ विवेचन ।।४६९।।

आत्मा शरीर हो ? यद्वा आत्मा शरीरभिन्न हो ?
सन्देह हुन गो आत्मा देहै हो ? त्यो अभिन्न हो ? ।।४७०।।

देहातिरिक्त आत्माको सत्ता छैन कसै पनि ।
रहे देह हुने आत्मा अन्यथा हुन्न नै अनि ।।४७१।।

[167]अन्वयव्यतिरेकाख्य स्थूल दृष्टि लिईकन ।
आत्मा हो स्थूल यो देह भन्छन् चार्वाकका जन ।।४७२।।

मनशक्तिसमानै यो पञ्चभूत मिलीकन ।
चैतन्यशक्ति उत्पन्न देहमा हुन्छ तत्क्षण ।।४७३।।

अतः शरीर हो आत्मा चैतन्यशक्तिले युत ।
देहातिरिक्त आत्माको अस्तित्व छैन वस्तुतः ।।४७४।।

वादी चार्वाक देहै हो आत्मा ती भन्दछन् जब ।
यसमा गुरुजी ! भन्नोस् हो आत्मा देह वास्तव ? ।।४७५।।

---

१६६.सत्यमुक्तं भाष्यकृता, न तु तत्राऽऽत्मास्तित्वे सूत्रमस्ति । इह तु स्वयमेव सूत्रकृता तदस्त्विमाक्षेपपुरःसरं प्रतिष्ठापितम् । इत एव चाऽऽकृष्याऽऽचार्येण शबरस्वामिना प्रमाणलक्षणे वर्णितम् ।
– शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।२०।५३

१६७.शरीर सत्ते आत्मसत्ता शरीराभावे आत्मा भावः । – चार्वाक

गुरु –

आत्मा [168]शरीरभन्दा छ भिन्नै वेदान्त भन्दछ ।
पञ्चभूतात्मसङ्घातभन्दा आत्मा प्रभिन्न छ ॥४७६॥

आत्मा हो विषयी नित्य मिथ्या विषय देह हो ।
होला विषय फेरि त्यो विषयी एउटै कसो ? ॥४७७॥

उठाए यसमा वादी चार्वाकले कुरा जुन ।
अन्वयव्यतिरेकाख्य मत हो त्यो अदर्शन ॥४७८॥

शरीरपातका पश्चात् पुण्यपाप लिईकन ।
नरक स्वर्गको यात्रा गर्छ आत्मा घुमीकन ॥४७९॥

यसैका लागि नै हुन् ती [169]निषेध विधि वैदिक ।
अतः शरीरभन्दा हो पृथक् आत्मा अलौकिक ॥४८०॥

आत्मा शरीर नै हैन यी हुन् भिन्न परस्पर ।
जड चेतनको धर्म यिनमा छ निरन्तर ॥४८१॥

मर्ने समयमा देह रहन्छ ज्ञान हुन्न नै ।
भूतोपलब्धि हैनन् ती भूतधर्म अवश्य नै ॥४८२॥

उपलब्धि र आत्मा ता एउटै हो सनातन ।
यिनमा भेद नै छैन भन्छ वेदान्तदर्शन ॥४८३॥

---

१६८. न जायते म्रियते वा विपश्चिन्नायं कुतश्चिन्न बभूव कश्चित् ।
अजो नित्यः शाश्वतोऽयं पुराणो न हन्यते हन्यमाने शरीरे ।
– कठोपनिषद् १।२।१८, गीता २।२०

१६९. स्वर्गकामो यजेत, सुरां न पिबेत् । – श्रुतिः

[170]प्राणीका भित्र सर्वत्र आत्मा एक निरञ्जन ।
देहका साथ मर्दैन आत्मा सत् चित् सनातन ॥४८४॥

मर्ने र जन्मने देह अध्यास भ्रमसङ्कुल ।
त्रिकालातीत सत् आत्मा स्वच्छ सूक्ष्म र निर्मल ॥४८५॥

[171]श्रुति[172]स्मृति यही भन्छन् अनित्य जड देह हो ।
शरीरभित्र बस्ने त्यो आत्मा चेतन नित्य हो ॥४८६॥

मिथ्या शरीर आत्मा हो भन्ने चार्वाकको मत ।
हुन्छ खण्डित अद्वैत सिद्धान्त हुन्छ मण्डित ॥४८७॥

दुई छन् यसमा [173]सूत्र पूर्व उत्तर निश्चय ।
देहातिरिक्त आत्माको अन्तमा हुन्छ निर्णय ॥४८८॥



## ३१. अङ्गावबद्धाधिकरण (ब्रह्मसूत्र ३।३।३०।५५–५६)

शिष्य –

विभिन्न श्रुतिमा आयो उक्थबुद्ध्यर्थ शंसन ।
[174]ओम्को उपासना आयो [175]प्रजा उक्थ भनीकन ॥४८९॥

---

१७०. एको देवः सर्वभूतेषु गूढः सर्वव्यापी सर्वभूतान्तरात्मा ।
कर्माध्यक्षः सर्वभूताधिवासः साक्षी चेता केवलो निर्गुणश्च ॥
– श्वेताश्वतरोपनिषद् ६।१६

१७१. अशरीरं शरीरेष्वनवस्थेष्ववस्थितम् ।
महान्तं विभूमात्मानं मत्वा धीरो न शोचति । – कठोपनिषद् १।२।२२

१७२. अच्छेद्योऽयमदाह्योऽयमक्लेद्योऽशोष्य एव च ।
नित्यः सर्वगतः स्थाणुरचलोऽयं सनातनः । – गीता २।२४

१७३. एक आत्मनः शरीरे भावात् । – ब्रह्मसूत्र ३।३।३०।५३,५४

१७४. ओमित्येतदक्षरमुद्गीथमुपासीत । – छान्दोग्योपनिषद् १।१।१

१७५. उक्थमुक्थमिति वै प्रजा वदन्ति तदिदमेवोक्थम् । – श्रुति

[176]पाँच प्रकारका साम उपास्य हुन् भनी कतै –
आयो, [177]पृथ्वी कतै आयो र [178]'एषोऽग्निश्चितः' कतै ॥४९०॥

उद्गीथ आदि कर्माङ्ग साथ सम्बद्ध यी श्रुति ।
प्रत्येक वेदशाखामा भाछन् विहितसंस्तुति ॥४९१॥

यहाँ संशय यो हुन्छ स्वरादिभेदले जब ।
उद्गीथ आदिमा भेद हुन्छ ? हुन्न ? गई तब ॥४९२॥

उक्थादिविधि ती सारा स्वशाखानिम्ति मात्र हुन् ?
यद्वा ती अन्य शाखाका निम्तिमा नै विधेय हुन् ? ॥४९३॥

यस सन्देहमा वादी भन्छन् सन्निधिकारण ।
स्वशाखामा विधानै त्यो हुन्छ अन्यत्र होइन ॥४९४॥

तसर्थ स्वीशाखास्थ लगी उद्गीथ आदिमा ।
गर्नुपर्दछ विद्याको यै विधान छ [179]वेदमा ॥४९५॥

आज्ञा होस् यसमा ब्रह्मन् ! के उक्त मत युक्त हो ?
युक्त हैन भनेदेखिन् कुन सिद्धान्त युक्त हो ? ॥४९६॥

गुरु –
त्यो सूत्रस्थ तुले गर्छ वादीको पक्षखण्डन ।
प्रत्येक वेदशाखामा विधान छ उपासना ॥४९७॥

गर्नू उपासना भन्ने उद्गीथको छ जो विधि ।
सामान्य श्रुति हो त्यल्ले बाध गर्दैन सद्विधि ॥४९८॥

---

१७६. लोकेषु पञ्चविधं सामोपासीत । – छान्दोग्योपनिषद् २।२।१
१७७. इयमेव पृथिवी । – श्रुतिः
१७८. अयं वाव लोक एषोऽग्निश्चितः । – श्रुतिः
१७९. उद्गीथमुपासीत । – छान्दोग्योपनिषद् १।१।१

यद्यपि स्वरमा केही देखिन्छ भेद तैपनि ।
त्यो उद्‌गीथत्वमा छैन शाखाभेद कतै पनि ॥४९९॥

अतः सम्पूर्ण शाखास्थ उद्‌गीथ आदिमा स्वतः ।
समानरूपले हुन्छ उपासना सुनिश्चत ॥५००॥

त्यो मुख्य वृत्ति नै खास मानिन्छ मुख्य कारण ।
सबै शाखाविषे हुन्छ उक्थ सामान्य बोधन ॥५०१॥

त्यसैकारण हो उक्थ समान सब वेदमा ।
उक्थबुद्धि स्वशाखा र हुनुपर्दछ अन्यमा ॥५०२॥

तत् तत् शब्दहरूद्वारा उद्‌गीथ अनि उक्थमा ।
हुन्छ प्रतीति सामान्य यी दुवै श्रौतमन्त्रमा ॥५०३॥

सान्निध्य श्रुतिले बाध गर्छ अन्तिममा जब ।
वेदका सब शाखामा उक्थबुद्धि हुने तब ॥५०४॥

दुई छन् यसमा [१८०]सूत्र दुवैमा मत-ऐक्य छ ।
उक्थबुद्धि सबैतर्फ भन्दछन् हुनुपर्दछ ॥५०५॥



### ३२. भूमज्यायस्त्वाधिकरण (ब्रह्मसूत्र ३।३।३२।५७)

शिष्य –

[१८१]'प्राचीनशाल' का साथै [१८२]'तस्य' यो श्रुतिले पनि ।
समस्त व्यस्त हो भन्छन् वैश्वानर उपास्ति नि ॥५०६॥

---

१८०. अङ्गावबद्धस्तु न शाखासु हि प्रतिवेदम् । – ब्रह्मसूत्र ३।३।३१।५५,५६

१८१. प्राचीन शाल औपमन्यवः । औपमन्यव कं त्वमात्मनमुपास्स इति दिवमेव भगवो राजन्निति होवाचैषं वै सुतेजा आत्मा वैश्वानरो यं त्वमात्मनमुपास्से ।
– छान्दोग्योपनिषद् ५।११।१, ५।१२।१

१८२. तस्य ह वा एतस्यात्मनो वैश्वानरस्य मूर्धैव सुतेजाश्चक्षुर्विश्वरूपः प्राणः पृथग्वर्त्मात्मा सन्देहो बहुलो बस्तिरेव रयिः पृथिव्येव पादौ । – छान्दोग्योपनिषद् ५।१८।२

भयो संशय उत्पन्न वैश्वानर-उपासना।
समस्त हो ? कि हो व्यस्त ? दुवै हुन् ? वा उपासना ॥५०७॥

वादीले यसमा ल्याई 'उपास्से' त्यो क्रियापद।
भन्छन् उपासना व्यस्त समस्त गर्नुपर्दछ ॥५०८॥

यसमा गुरुजी ! भन्नोस् वैश्वानर-उपासना।
समस्त अथवा व्यस्त के हो ? गर्नोस् सुदेशना ॥५०९॥

गुरु –
विवक्षित समस्तै छ वैश्वानर-उपासना।
उपक्रमोपसंहार एकवाक्य लिईकन ॥५१०॥

'को न आत्मा' र 'किं ब्रह्म' उपक्रम गरीकन।
उपसंहारमा 'तस्य ह वै' मन्त्र छ शंसन ॥५११॥

यसमा यदि मान्ने हो भने अंश उपासना।
वाक्यभेद हुने गर्छ निषेध्य हो उपासना ॥५१२॥

पृथक् उपासना माने न्याय कैमुतिकी लिई।
समस्तोपासनाको नै स्तुतिमा मिल्छ सो गई ॥५१३॥

पृथक् उपासना गर्दा वाक्यभेद भईकन।
[१८३]'मूर्धा ते व्यपतिष्यत्' यो निन्दावाक्य छ शंसन ॥५१४॥

पृथक् उपासना सोम्य ! अर्थवाद भनीकन।
गर्नुहुन्न भनी गर्छ श्रुतिले स्पष्ट सूचन ॥५१५॥

---

१८३. 'मूर्धा त्वेष आत्मन इति होवाच।' इत्यादिना मूर्धादिभावं तेषां विदधाति। मूर्धा ते व्यपतिष्यद्यन्मा नागमिष्यः। – छान्दोग्योपनिषद् ५।१२।२

अयुक्त मत वादीको व्यस्ताव्यस्त उपासना ।
समस्त नै सधैँ गर्नू वैश्वानर-उपासना ॥५१६॥

यसमा [184]सूत्र यौटै छ यल्ले पनि गईकन ।
समस्तोपासनाको नै पूर्ण गर्छ समर्थन ॥५१७॥



## ३३. शब्दादिभेदाधिकरण (ब्रह्मसूत्र ३।३।३३।५८)

शिष्य –
छान्दोग्यश्रुतिमा विद्या शाण्डिल्यदहरादि छन् ।
त्यस्तै नै अन्य शाखामा पनि विद्या अनेक छन् ॥५१८॥

भूमज्यायादिमा जस्तै विद्या भिन्न भए पनि ।
वेद्य एक भएकाले विद्या अभिन्न हुन् अनि ॥५१९॥

जस्तै [185]'मनोमयः' [186]'कं. खं.' [187]सत्यकामादि मन्त्र छन् ।
वेद्य एक भएकाले विद्या ती एक भन्दछन् ॥५२०॥

विद्यामा ऐक्यका साथै देखिन्छ भिन्नता पनि ।
सन्देह यसमा आयो ऐक्य ? अनैक्य ? के भनी ॥५२१॥

---

१८४. भूम्नः क्रतुवज्ज्यायस्त्वं तथा हि दर्शयति । – ब्रह्मसूत्र ३।३।२२।५७
१८५. मनोमयः प्राणशरीरः । – छान्दोग्योपनिषद् ३।१४।२
१८६. कं ब्रह्म खं ब्रह्म । – छान्दोग्योपनिषद् ४।१०।५
१८७. क. सत्यकामः सत्यसङ्कल्पः । – छान्दोग्योपनिषद् ८।१।५
ख. एक एव प्राणः, प्राणो वाव संवर्गः । – छान्दोग्योपनिषद् ४।३।३
ग. प्राणो वाव ज्येष्ठश्च श्रेष्ठश्च । – छान्दोग्योपनिषद् ५।१।१
घ. प्राणो ह पिता प्राणो माता । – छान्दोग्योपनिषद् ७।१५।१

वादीले यसमा भन्छन् समस्तोपासना छ जो ।
श्रेष्ठ हो अनि आत्म्यैक्य हुँदा उपास्ति एक हो ॥५२२॥

श्रुतिका सब शाखामा आएको एक वेद्य हो ।
विद्याको पूर्णतानिम्ति उपसंहार युक्त हो ॥५२३॥

आज्ञा होस् यसमा विद्वन् ! ती ती उपासना सब ।
अभिन्न ? भिन्न ? वा के हुन् ? जिज्ञासा यो भयो अब ॥५२४॥

गुरु –
'नाना' शब्द छ आएको सूत्रमा यसले पनि ।
अभेद वेद्यमा किन्तु विद्यामा भेद नै अनि ॥५२५॥

विद्या अनन्त छन् सारा एकीकरण ती गरी ।
असम्भव अनुष्ठान गर्न सम्भ्रममा परी ॥५२६॥

त्यसैकारण विद्यामा भेद मान्नु छ उत्तम ।
गुणका भेदले गर्दा ब्रह्ममा भेदको भ्रम ॥५२७॥

शाण्डिल्यादिक विद्यामा समस्तोपासना क्रम ।
त्यो असम्भव देखिन्छ संसृष्ट हुन्छ सम्भ्रम ॥५२८॥

एकैक सब विद्याको इयत्ता छ अनिश्चित ।
भन्न मिल्दैन तात्पर्य ज्ञानले हुन्छ निश्चित ॥५२९॥

उपक्रमोपसंहारद्वारा ज्ञान गरी सब ।
परिमाणादि विद्याको जान्नलाई छ सम्भव ॥५३०॥

गुणका भेदले गर्दा ब्रह्ममा भेद देखिने ।
उपक्रमादिले गर्दा विद्यामा भेद देखिने ॥५३१॥

[188]'नाना शब्दादिभेदात्' यो सूत्रले ठीक भन्दछ ।
प्रत्येक सब विद्यामा नानात्वभेद बन्दछ ॥५३२॥

यसमा [189]सूत्र यौटै छ यसले पनि शब्दतः ।
शाण्डिल्यादिक विद्यामा देखिन्छ भेद तत्त्वतः ॥५३३॥



## ३४. विकल्पाधिकरण (ब्रह्मसूत्र ३।३।३४।५९)

शिष्य –

विद्याको भेद भो सिद्ध विद्याभेद भएपछि ।
समुच्चय छ ? विद्यामा विकल्प छ ? यथेष्ट कि ? ॥५३४॥

अहङ्ग्रह छ जो विद्या भनिन्छ जो उपासना ।
सोका नियम छन् ? छैनन् ? विकल्पान्य उपासना ॥५३५॥

सन्देह यसरी आयो वादीले मत राख्तछन् ।
विद्याभेद भएकाले छैनन् नियम भन्दछन् ॥५३६॥

यसमा भन्नुहोस् ब्रह्मन् ! नियामक छ ? वा कुनै ?
यद्वा नियम नै छैन ? विद्योपासनमा कुनै ॥५३७॥

गुरु –

विकल्प हुन्छ विद्यामा समुच्चय अयुक्त हो ।
विद्याको फल यौटै हो साक्षात्कार उपास्यको ॥५३८॥

---

१८८.नानेति । वेद्याऽभेदेऽप्येवञ्जातीयका विद्याभिन्ना भवितुमर्हीति । कुत ? शब्दादिभेदात् । भवति हि शब्दभेदः 'वेद' 'उपासीत' 'स क्रतुं कुर्वीत' (छान्दोग्योपनिषद् ३।१४।१) इत्येवमादि । शब्दभेदश्च कर्मभेदहेतुः समधिगतः पुरस्तात्-शब्दान्तरेकर्मभेदः कृतानुबन्धत्वात् इति । आदिग्रहणाद् गुणादयोऽपि यथासम्भवं भेदहेतवो योजयितव्याः । – शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।३३।५८

१८९. नाना शब्दादिभेदात् । – ब्रह्मसूत्र ३।३।३।५८

[190]एकै उपासनाबाट साक्षात्कार भएपछि।
उपासना अरू व्यर्थ ब्रह्मज्ञान भएपछि ॥५३९॥

समुच्चय गरे हुन्छ साक्षात्कार असम्भव।
यसले चित्तविक्षेप हुन सक्तछ सम्भव ॥५४०॥

श्रुतिले यसमा भन्छ ब्रह्मज्ञान भएपछि।
जान्नुपर्ने कुनै हुन्न साक्षात्कार भएपछि ॥५४१॥

द्यौता[191] भएर जो मर्छ देवता प्राप्त गर्दछ।
यसरी श्रुति अर्कोले स्पष्टै उद्‌घोष गर्दछ ॥५४२॥

साक्षात्कार गरी जल्ले अन्तमा देह छोड्दछ।
त्यही नै भावमा पुग्छ [192]गीताले पनि भन्दछ ॥५४३॥

त्यो साक्षात्कार हो साध्य विद्याफल भनीकन।
श्रुतिस्मृतिहरू गर्छन् यही नै नित्य शंसन ॥५४४॥

जसको फल उस्तै छ एक विद्या लिईकन।
साक्षात्कार नभासम्म गर्नुपर्छ उपासना ॥५४५॥

यसमा [193]सूत्र यौटै छ यसले स्पष्ट भन्दछ।
विशिष्ट फल भाकोले विकल्पमात्र युक्त छ ॥५४६॥



---

१९०. एकेन चोपासनेन साक्षात्कृत उपास्ये विषय ईश्वरादौ द्वितीयमनर्थकम्। अपि चाऽसम्भव एव साक्षात्करणस्यपक्षे, चित्तविक्षेपहेतुत्वात्।
– शाङ्करभाष्य, ब्रह्मसूत्र ३।३।३४।५९

१९१. देवो भूत्वा देवानप्येति। – बृहदारण्यकोपनिषद् ४।१।२

१९२. यं यं वापि स्मरन्भावं त्यजत्यन्ते कलेवरम्।
तं तमेवैति कौन्तेय सदा तद्‌भावभावितः ॥ – श्रीमद्‌भगवद्‌गीता ८।६

१९३. विकल्पोऽविशिष्टफलत्वात्। – ब्रह्मसूत्र ३।३।३४।५९

### ३५. काम्याधिकरण (ब्रह्मसूत्र ३।३।३५।६०)

शिष्य –

प्रतीकोपासनाभित्र यथेच्छा ? वा विकल्प हो ?
सन्देह हुनगो यद्वा अहङ्ग्रह समान हो ? ॥५४७॥

यसमा पूर्वपक्षी ती अहङ्ग्रह-उपासना ।
समान हो विकल्पै हो यो प्रतीक-उपासना ॥५४८॥

यसमा गुरुजी ! भन्नोस् यथेष्ट ? वा विकल्प हो ।
वादीले यसमा भन्छन् अहङ्ग्रहसमान हो ॥५४९॥

प्रतीकोपासनाभित्र साक्षात्कार प्रयोजन ।
अहङ्ग्रहसमानै यो मान्नुपर्छ विकल्पन ॥५५०॥

आज्ञा होस् यसमा ब्रह्मन् ! यथेष्ट ? वा विकल्प हो ?
अहङ्ग्रहसमानै वा साक्षात्कार्य विकल्प हो ? ॥५५१॥

गुरु –

अनात्मवस्तुमा देहदृष्टि गरी उपासना ।
गर्नु नै शास्त्रले भन्छ हो प्रतीक-उपासना ॥५५२॥

'देवो भूत्वा' भनी आयो अहङ्ग्रह उपासना ।
साक्षात्कारार्थ हो, भिन्नै प्रतीक हो उपासना ॥५५३॥

प्रमाण नै कुनै छैन यो प्रतीक उपास्तिमा ।
विकल्प अथवा चल्छ समुच्चय प्रतीकमा ॥५५४॥

दुवै उपास्तिमा सौम्य ! देखिन्छ स्पष्ट अन्तर ।
साक्षात्कारार्थ पैलो हो दोस्रो [१९४]काम्यार्थ हो तर ॥५५५॥

---

१९४. स य एतमेव वायुं दिशां वत्सं वेद न पुत्ररोदं रोदिति । – छान्दोग्योपनिषद् ३।१५।२

[195]काम्य विद्याविषे जो छ क्रियासदृश जो तर ।
आत्मा अदृष्टका द्वारा फल मिल्दछ सुन्दर ॥५५६॥

साक्षात्कार अपेक्षा नै जसमा छैन वस्तुतः ।
विकल्प अथवा हुन्छ यथाकाम समुच्चितः ॥५५७॥

समुच्चित हओस् यद्वा नहओस् वा स्वभावले ।
समान फलले गर्दा पूर्वहेतु-अभावले ॥५५८॥

यसमा [196]सूत्र यौटै छ यसले भन्छ शास्त्रतः ।
प्रतीकोपासनामा छ यथाकाम समुच्चितः ॥५५९॥



३६. यथाश्रयभावाधिकरण (ब्रह्मसूत्र ३।३।३६।६१–६६)

गुरु –

त्यो लौकिक र कर्माङ्ग भेदले नै गरीकन ।
प्रतीकका दुई भेद शास्त्रले गर्छ वर्णन ॥५६०॥

भनियो लौकिकी माथि कर्माश्रित प्रतीक जो ।
उपासना छ सोको नै विचार अब हुन्छ जो ॥५६१॥

शिष्य –

कर्माश्रित प्रतीकोपासनाको छ समुच्चय ?
अथवा नियमै छैन ? हुन गो अति संशय ॥५६२॥

वादीले भन्दछन् स्पष्ट यसमा छ समुच्चय ।
अर्थात् कर्माङ्गमा हुन्छ यसमा गै समुच्चय ॥५६३॥

१९५. स यो नाम ब्रह्मेत्युपास्ते यावन्नाम्नो गतं तत्रास्य यथाकामचारो भवति ।
– छान्दोग्योपनिषद् ७।१।५

१९६. काम्यास्तु यथाकामं समुच्चीयेरन्न वा पूर्वहेत्वभावात् । – ब्रह्मसूत्र ३।३।३५।६०

कर्माङ्गाश्रित जो त्यो छ प्रतीकोपासना पनि ।
समुच्चय स्वतः हुन्छ विनासन्देह नै अनि ॥५६४॥

कर्माङ्गोद्‌गीथ आश्रित विद्यामा छ समुच्चय ।
अङ्गानुष्ठानमा हुन्छ नियमै जो असंशय ॥५६५॥

जहाँ उपासना हुन्छन् हुन् समुच्चय नै सब ।
त्यहाँ उपासना हुन्छन् आश्रयाधीन नै तब ॥५६६॥

वादीले भन्दछन् हुन्छ उपासना-समुच्चय ।
यसमा भन्नुहोस् ब्रह्मन् ! हुन्छ ? हुन्न ? समुच्चय ॥५६७॥

गुरु –
ती ती उपासना जो छन् जो अङ्गत्वेन आश्रित ।
कदापि हुन सक्तैनन् उपासना समुच्चित ॥५६८॥

जस्तै [१९७]'ग्रहं गृहीत्वा' मा छ अङ्ग सहभावना ।
उपास्तिमा भने सोम्य ! सुनिन्न सहभावना ॥५६९॥

कर्माङ्गोद्‌गीथसंसक्त ती विद्यामा समुच्चय ।
द्वारा नियम देखिन्छ अनुष्ठानार्थ निश्चय ॥५७०॥

आश्रयाधारसंसक्त उपास्ति आश्रयैविना ।
नसक्ला हुन ठीकै हो विनाश्रय उपासना ॥५७१॥

आश्रयै सहभावैले सहभाव हुने भनी ।
कतै नियम देखिन्न भन्दैन श्रुतिले पनि ॥५७२॥

---

१९७. ग्रहं वा गृहीत्वा चमसं वोन्नीय स्तोत्रमुपाकरोति स्तोत्रमनुशंसति प्रस्तोतः साम गाय होतरेतद्‌यज । – श्रुतिः

[198]'एवं विद्ध' भनी आयो श्रुतिमा जुन शंसन ।
असहैभाव देखिन्छ उपास्तिमा गईकन ॥५७३॥

त्यसैकारणले सोमा विकल्प वा समुच्चय ।
गर्नुपर्दछ इच्छाले यै हो वेदान्तनिर्णय ॥५७४॥

षष्ठ छन् यसमा [199]सूत्र भन्छन् गरेर निश्चय ।
उपास्ति हुन्छ इच्छाले विकल्प वा समुच्चय ॥५७५॥

ब्रह्मसूत्रको तृतीय अध्यायको तृतीय पादको कारिका पूरा भयो ।



---

१९८. एवं विद्ध यै ब्रह्मा यज्ञं यजमानं सर्वाश्चर्त्विजोऽभिरक्षति ।
– छान्दोग्योपनिषद् ४।१७।१०

१९९. अङ्गेषु यथाश्रयभावः । – ब्रह्मसूत्र ३।३।३६।६१–६६

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

## तृतीय अध्याय

## चतुर्थ पाद

(यस पादमा पुरुषार्थदेखि मुक्तिफलसहित १७ अधिकरणहरू छन् । यसमा निर्गुणविद्याका अन्तरङ्ग र बहिरङ्ग साधनहरूको विचार गरिएको छ ।)

### १. पुरुषार्थाधिकरण (ब्रह्मसूत्र ३।४।१।१–१७)

वेदान्तज्ञानबाटै नै पाइन्छ परमार्थता ।
[१]आत्मज्ञ शोकका पारि जान्छ तरेर शास्त्रतः ॥१॥

[२]जल्ले जान्दछ सद्ब्रह्म ऊ आफैँ ब्रह्म बन्दछ ।
ब्रह्म जान्ने स्वयं ब्रह्म बन्दछ श्रुति भन्दछ ॥२॥

[३]ब्रह्मवित् परमात्मामा प्राप्त हुन्छ भनीकन ।
विभिन्न श्रुतिले भन्छन् मुक्तकण्ठ बनीकन ॥३॥

[४]आचार्यवान् छ जो मान्छे त्यस्को त्यत्ति विलम्ब छ ।
देहपातपछि ज्ञानी तत्कालै ब्रह्म बन्दछ ॥४॥

[५]'य आत्मा'बाट बिस्तारै उपक्रम गरीकन ।
[६]'स सर्वांश्च' भनी गर्छ उपसंहार शंसन ॥५॥

---

१. तरति शोकमात्मवित् । – छान्दोग्योपनिषद् ७।१।३
२. स यो ह वै तत्परमं ब्रह्म वेद ब्रह्मैव भवति । – मुण्डकोपनिषद् ३।२।९
३. ब्रह्मविदाप्नोति परम् । – तैत्तिरीयोपनिषद् २।१।१
४. आचार्यवान् पुरुषो वेद तस्य तावदेव चिरं यावन्न विमोक्ष्येऽथ सम्पत्स्ये ।
– छान्दोग्योपनिषद् ६।१४।२
५. य आत्माऽपहतपाप्मा । – छान्दोग्योपनिषद् ८।७।१
६. स सर्वांश्च लोकानाप्नोति सर्वांश्च कामान् यस्तमात्मनमनुविद्य विजानाति ।
– छान्दोग्योपनिषद् ८।७।१

[7]‘आत्मा वा’ बाट आचार्य उपक्रम गरीकन ।
[8]‘आत्मा अमृत हो भन्छन् अन्तमा नै गईकन ॥६॥

विभिन्न श्रुतिले भन्छन् विद्या नै पुरुषार्थ हो ।
अन्य साधन हुन् बाह्य विद्या केवल साध्य हो ॥७॥

शिष्य –

यसरी गुरुजी ! आयो विभिन्न श्रुतिको मत ।
हो क्रत्वर्थ ? कि ! वा त्यो हो स्वतन्त्र ? ज्ञान वस्तुतः ॥८॥

वादीले यसमा आफ्नू यसरी राख्तछन् मत ।
आत्मा कर्ता भएकाले कर्मको अङ्ग हो स्वतः ॥९॥

देहभन्दा पृथक् आत्मा भन्ने बुझेर वस्तुतः ।
गर्छन् मनुष्यले कर्म कर्माङ्ग ज्ञान हो स्वतः ॥१०॥

यसमा भन्नुहोस् विद्वन् ! यो आत्मज्ञान वस्तुतः ।
क्रत्वर्थ हो ? कि ! यद्वा हो स्वतन्त्र ज्ञान तत्त्वतः ॥११॥

गुरु –

त्यो आत्मज्ञान कर्माङ्ग हैन त्यस्को विरुद्ध हो ।
[9]‘एतद्ध स्म’ छ जो वाक्य त्यो नै वेदान्तवाक्य हो ॥१२॥

ज्ञानी जनक आदिको आचार लोकसङ्ग्रह –
निम्ति हो, यसले हुन्न ज्ञानको हेतु कर्म त ॥१३॥

---

७. आत्मा वा अरे द्रष्टव्यः । – बृहदारण्यकोपनिषद् ४।५।६

८. एतावदरे खल्वमृतत्वम् । – बृहदारण्यकोपनिषद् ४।५।१५

९. एतद्धस्म वै तद्विद्वांस आहुर्ऋषयः काषवेयः किमर्था वयं यक्ष्यामहे एतद्धस्म वै तत्पूर्वे विद्वांसोऽग्निहोत्रं न जुहवाञ्चक्रिरे । एतं वै तमात्मानं विदित्वा ब्राह्मणाः पुत्रैषणायाश्च वित्तैषणायाश्च लोकैषणायाश्च व्युत्थाय भिक्षाचर्यं चरन्ति ।
– बृहदारण्यकोपनिषद् ३।५।१

आत्मज्ञान त्यसैले नै स्वतन्त्र पुरुषार्थ हो ।
कर्माङ्ग हुन सक्तैन यही सिद्धान्तसिद्ध हो ॥१४॥

पूर्वोत्तर गरी जम्मा यसमा सत्र [10]सूत्र छन् ।
आत्मज्ञान स्वतन्त्रै हो कर्माङ्ग हैन भन्दछन् ॥१५॥



## २. परामर्शाधिकरण (ब्रह्मसूत्र ३।४।२।१८–२०)

दुई वर्णक छन् यस्मा पैलोले ऊर्ध्वरेतको ।
विवेक गर्छ सन्न्यास हो आश्रम ? कि ! हैन ? को ॥१६॥

दोस्रोले लोककामी जो त्यो आश्रमी छ जो नर ।
गर्न सक्तछ ? सक्तैन ? ब्रह्मज्ञान परात्पर ॥१७॥

वर्णक –१

शिष्य –

ऊर्ध्वरेता छ जो स्थान त्यो हो आश्रम ? होइन ?
यस सन्देहमा वादी भन्छन् आश्रम होइन ॥१८॥

यसका लागि पाइन्न विधिवाक्य कतै पनि ।
[11]'वीरहा' श्रुति आएको गृहस्थीनिम्ति नै भनी ॥१९॥

---

१०. पुरुषार्थोऽतः शब्दादिति बादरायणः । – ब्रह्मसूत्र ३।४।१।१–१७

११. क. आचार्याय प्रियं धनमाहृत्य प्रजातन्तुं मा व्यवच्छेत्सीः ।
– तैत्तिरीयोपनिषद् १।११।१

ख. नापुत्रस्य लोकोऽस्तीति तत्सर्वे पशवो विदुः, इत्येवमाद्या ।

ग. ये चेमेऽरण्ये श्रद्धा तप इत्युपासते । – छान्दोग्योपनिषद् ५।१०।१

घ. तपः श्रद्धे ये ह्युपवसन्त्यरण्ये । – मुण्डकोपनिषद् १।२।४४
इति च देवयानोपदेशः, नाश्रमान्तरोपदेशः । – ब्रह्मसूत्र, शाङ्करभाष्य

स्मृतिमा छ कहीँ मात्र सन्न्यासाश्रमशंसन ।
त्यो हो अन्धा र पङ्ग्वादिनिम्ति भनिन्छ नै जुन ॥२०॥

त्यसैकारणले हैन ऊर्ध्वरेताख्य आश्रम ।
वादीले भन्दछन् स्पष्टै छैन सन्न्यासआश्रम ॥२१॥

यसमा भन्नुहोस् ब्रह्मन् ! छैन ? सन्न्यास आश्रम ।
यसले मनमा मेरो जन्मियो अति नै भ्रम ॥२२॥

गुरु –
वादीले जे भनून् सोम्य ! ऊर्ध्वरेता छ आश्रम ।
सोझै नै विधि देखिन्न यो हो तैपनि आश्रम ॥२३॥

अपूर्व विधिको पर्छ यसमा गर्नु कल्पना ।
आहिताग्नि गृहस्थीका निम्ति हो वाक्य वीरहा ॥२४॥

भिन्नै छ विधि अन्धा र पङ्गु इत्यादिको पनि ।
स्वस्थ मानिसका निम्ति [१२]सन्न्यासाश्रम हो अनि ॥२५॥

गृहस्थाश्रमको छैन आधिकारिक जो स्वतः ।
उसका लागि [१३]सन्न्यास विधेय छ सुनिश्चित ॥२६॥

---

१२. एतमेव प्रव्राजिनो लोकमिच्छन्तः प्रव्रजन्ति । – बृहदारण्यकोपनिषद् ४।४।२२

१३. क. न्यास इति ब्रह्मा ब्रह्मा हि परःपरो हि ब्रह्मा तानि वा एतान्यवराणि तपांसि न्यास एवात्यरेचयत् । – नारायणीयोपनिषद् ७८

ख. वेदान्तविज्ञानसुनिश्चितार्थाः सन्न्यासयोगाद्यतयः शुद्धसत्त्वाः ।
– मुण्डकोपनिषद् ३।२।६

ग. अथ पुनरेव व्रती वाऽव्रती वा स्नातको वोत्सन्नाग्निरनग्निको वा ।
– जाबालोपनिषद् ४

घ. अथ परिव्राड् विवर्णवासा मुण्डोऽपरिग्रहः शुचिरद्रोही भैक्षाणो ब्रह्मभूयाय भवति ।
– जाबालोपनिषद् ५

ङ. तद्बुद्धयस्तदात्मानस्तन्निष्ठास्तत्परायणाः ।
गच्छन्त्यपुनरावृत्तिं ज्ञाननिर्धूतकल्मषाः ॥ – गीता ५।१७

जाबाल श्रुतिले भन्छ चारै [१४]आश्रमको क्रम ।
श्रुतिसम्मत हो स्पष्टै चौथो सन्न्यास आश्रम ॥२७॥

वर्णक –२

शिष्य –

लोककाम्याश्रमी सक्छ के ? ब्रह्मज्ञान गर्न र ?
सक्तैन ? अथवा भन्ने आयो सन्देह दुस्तर ॥२८॥

वादीले भन्दछन् स्पष्ट [१५]'त्रयो धर्मः' लिईकन ।
[१६]'सर्वे एते भवन्त्यादि' द्वारा सक्छन् भनीकन ॥२९॥

पुण्यलोकाभिलाषीले यथावकाश ती पनि ।
ब्रह्मनिष्ठाधिकारी ती सक्तछन् बन्न नै अनि ॥३०॥

निषेध पनि देखिन्न गर्नुहुन्न भनी जब ।
सक्तछन् ब्रह्मको ज्ञान गर्न ती सजिलै तब ॥३१॥

वादीको यसरी आयो सक्छन् भन्ने गुरो ! मत ।
सक्तैनन् ? अथवा सक्छन् ? आज्ञाहोस् अब तत्त्वतः ॥३२॥

गुरु –

सबै व्यापार छोडेर एक चित्त भईकन ।
अनन्यचित्ततारूप ब्रह्मनिष्ठा लिईकन ॥३३॥

ब्रह्मज्ञानार्थ संसारी कर्मी बन्दैन सक्षम ।
कर्मानुष्ठानका साथ ब्रह्मज्ञान छ अक्षम ॥३४॥

---

१४. ब्रह्मचर्यं परिसमाप्य गृही भवेद् गृही भूत्वा वनी भवेद् वनी भूत्वा प्रव्रजेत् । यदि वेतरथा ब्रह्मचर्यादेव प्रव्रजेद् गृहाद्वा वनाद्वा ॥ – जाबालोपनिषद् ४

१५. त्रयो धर्मस्कन्धाः । – छान्दोग्योपनिषद् २।२३।१

१६. सर्वे एते पुण्यलोका भवन्ति । – श्रुतिः

कर्म हो तम, हो ज्ञान प्रकाश ब्रह्म निर्भय ।
कर्म र ज्ञान सक्तैनन् बन्न साथ समुच्चय ॥३५॥

कर्मको त्याग जो गर्छ ज्ञान त्यो गर्छ निश्चय ।
सर्वांश हुन सक्तैन ज्ञानकर्म-समुच्चय ॥३६॥

'ब्रह्मसंस्थोऽमृतत्वम्' यो सन्न्यासाश्रम निम्ति हो ।
अन्धपरम्परा हैन वादीमत असत्य हो ॥३७॥

कर्मिष्ठ हुन सक्तैन ब्रह्मनिष्ठ कसै पनि ।
कर्मत्यागी हुने गर्छ ब्रह्मनिष्ठ सधैँ अनि ॥३८॥

[17]यसमा तीन छन् सूत्र भएर कृतनिश्चय ।
भन्दछन् हुन सक्तैन ज्ञानकर्मसचुच्चय ॥३९॥



## ३. स्तुतिमात्राधिकरण (ब्रह्मसूत्र ३।४।३।२१–२२)

शिष्य –

उद्गीथावयवै जो छन् ओङ्कारमा प्रकल्प्य हुन् ।
यद्वा [18]रसतमै जो छन् ध्यान ? या स्तुतिनिम्ति हुन् ? ॥४०॥

यस्तो सन्देहमा जस्तै [19]'इयमेव जुहू' इति ।
आदित्यरूपले भन्छन् जुहूकर्माङ्ग हो स्तुति ॥४१॥

आज्ञा होस् यसमा ब्रह्मन् ! ध्यान हो अथवा स्तुति ।
गुरु –
रसैतमत्व इत्यादि हो ध्यान हैन संस्तुति ॥४२॥

१७. परामर्श जैमिनिरचोदना चापवदति । – ब्रह्मसूत्र ३।४।२।१८–२०

१८. स एष रसानां रसतमः परमः पराध्र्योऽष्टमो यदुद्गीथः । – छान्दोग्योपनिषद् १।१।३

१९. इयमेव जुहूरादित्यः कूर्मः स्वर्गोलोक आहवनीयः । – श्रुतिः

वादीप्रदत्त दृष्टान्त त्यो हो विषम निश्चय ।
जुहूरादित्यको यस्मा सम्बन्धै छैन निश्चय ॥४३॥

'ओमित्ये' मन्त्रका साथ हुँदामा एकवाक्यता ।
रसमयत्व ती आदि ध्यानपरक हुन् सदा ॥४४॥

त्यसैकारण पूर्वोक्त गुणै रसमयै सब ।
ध्यानका लागि हुन् हैनन् स्तुतिका लागि ती तब ॥४५॥

दुई छन् यसमा [२०]सूत्र दुवैले भन्दछन् तब ।
गुणै रसतमै जो छन् ध्यानका लागि हुन् सब ॥४६॥



## ४. पारिप्लवाधिकरण (ब्रह्मसूत्र ३।४।४।२३–२४)

शिष्य –

[२१]'अथ' [२२]'प्रतर्दनो' [२३]'जान' आदि आख्यान यी सब ।
हुन् पारिप्लवका लागि ? वा विद्यास्तुति हुन् ? सब ॥४७॥

यस्तो सन्देहमा वादी पारिप्लवार्थ हुन् भनी ।
विद्यास्तुत्यर्थ यी हैनन् भन्दछन् दृढ ती बनी ॥४८॥

वादीको यसरी आयो पारिप्लव छ यो जुन ।
स्तुत्यर्थ हैन कर्माङ्ग भन्दछन् युक्त हो कुन ? ॥४९॥

---

२०. स्तुतिमात्रमुपादानादिति चेन्नापूर्वत्वात् । – ब्रह्मसूत्र ३।४।३।२१,२२

२१. अथ ह याज्ञवल्क्यस्य द्वे भार्ये बभूवतुर्मैत्रेयी च कात्यायनी च ।
– बृहदारण्यकोपनिषद् ४।५।१

२२. प्रतर्दनो ह वै दैवोदासिरिन्द्रस्य प्रियं धामोपजगाम ।
–कौषीतकि ब्राह्मणोपनिषद् ३।१

२३. जानश्रुतिर्ह पौत्रायणः श्रद्धादेयो बहुदायी बहुपाक्य आस । – छान्दोग्योपनिषद् ४।१।१

गुरु –

'पारिप्लवमाचक्षीत' उपक्रम गरीकन ।
'मनुर्वैवस्वतो राजा' आएको छ विशेषण ॥५०॥

वादी यी मत राखेर कर्माङ्ग भन्दछन् जुन ।
कर्माङ्ग होइनन् हुन् यी विद्यास्तुत्यर्थ शंसन ॥५१॥

श्रुतिमा जो छ आएको 'आत्मा वा' मन्त्र खास यो ।
विद्याका साथमा एकवाक्यता युक्त नै छ यो ॥५२॥

त्यसै गरेर 'प्राणोऽस्मि' [२४]'वायुः' र 'जान' मा पनि ।
एकवाक्य छ विद्याका साथ स्तुत्यर्थ यो पनि ॥५३॥

त्यस्तै [२५]'स आत्मनो' कर्म आख्यान आदि छन् जुन ।
समीपमा रहेका ती विधिस्तुत्यर्थ शंसन ॥५४॥

त्यसै गरेर पूर्वोक्त वादी सन्देहमा पनि ।
आएका श्रौतआख्यान विद्यास्तुत्यर्थ हुन् अनि ॥५५॥

इत्यादि जति छन् कर्म श्रौतआख्यान ती सब ।
सबै समीपवर्ती हुन् विधिस्तुत्यर्थ वस्तुतः ॥५६॥

अतः आख्यान हुन् सारा विद्यास्तुत्यर्थ वस्तुतः ।
पारिप्लवार्थकै हैनन् यै हो सिद्धान्त अन्ततः ॥५७॥

दुई छन् [२६]सूत्र ती भन्छन् आख्यान यिनले पनि ।
विद्यास्तुत्यर्थ हुन्, हैनन् पारिप्लवार्थकै अनि ॥५८॥



२४. वायुर्वाव संवर्गः । – छान्दोग्योपनिषद् ४।३।१
२५. स आत्मनो वपामुदखिदत् । – श्रुतिः
२६. पारप्लवार्था इति चेन्न विशेषितत्वात् । – ब्रह्मसूत्र ३।४।४।२३–२४

## ५. अग्नीन्धनाद्यधिकरण (ब्रह्मसूत्र ३।४।५।२५)

शिष्य –

आत्मबोधफलै-निम्ति अपेक्षा कर्मको छ ? यो ।
अपेक्षा छैन ? सन्देह यसमा अति नै भयो ॥५९॥

यस सन्देहमा अङ्गी अपेक्षा राख्छ अङ्गको ।
वादीले भन्दछन् जस्तै देख्छौँ प्रयाज आदिको ॥६०॥

यसमा गुरुजी ! भन्नोस् वादीको मत हो जुन ।
अपेक्षा राख्छ अङ्गीले अङ्गको युक्त हो ? किन ? ॥६१॥

गुरु –

त्यो आत्मज्ञानले सत् चित् विशुद्ध मोक्षनिम्तिमा ।
अपेक्षा कर्मको कैल्यै गर्दैन मुक्तिनिम्तिमा ॥६२॥

दीपले तम जो नास्न अपेक्षा अन्धकारको ।
गर्दैन स्वैपरी ज्ञान चाहन्न साथ कर्मको ॥६३॥

आत्मज्ञान प्रकाशै हो निवीड कर्म हो तम ।
अँध्यारो नास्न बत्तीले खोज्दैन तम निर्भ्रम ॥६४॥

कर्मजन्य भएदेखि अनित्य मोक्ष बन्दछ ।
प्रकाशरूप हो मोक्ष श्रुतिले पनि भन्दछ ॥६५॥

विद्या हो मोक्षका लागि त्यो नैरपेक्ष कारण ।
यसले गर्छ वादीको सारा मननिवारण ॥६६॥

यसमा [२७]सूत्र यौटै छ मोक्षका लागि वस्तुतः ।
अपेक्षा कर्मको विद्या गर्दैन भन्छ तत्त्वतः ॥६७॥



२७. अत एव चाग्नीन्धनाद्यनपेक्षा । – ब्रह्मसूत्र ३।४।५।२५

## ६. सर्वापेक्षाधिकरण (ब्रह्मसूत्र ३।४।६।२६–२७)

शिष्य –

ब्रह्मतत्त्वावबोधै त्यो उत्पत्तिनिम्ति कर्मको ।
अपेक्षा गर्छ ? गर्दैन ? सन्देह हुन गो निको ॥६८॥

यसमा भन्दछन् वादी ब्रह्मविद्या कसैगरी ।
फलोत्पादनमा कर्म चाहँदैन सधैँभरि ॥६९॥

त्यसै गरेर विद्याले आफ्नू उत्पत्तिमा पनि ।
अपेक्षा कर्मको विद्या गर्दैन कहिल्यै पनि ॥७०॥

अपेक्षा कर्मको विद्या गर्छ उत्पत्तिमा भने ।
शास्त्रीय दृष्टिले अर्धजरती दोष नै हुने ॥७१॥

यसमा भन्नुहोस् ब्रह्मन् ! वादीको मत युक्त हो ?
अयुक्त हो भने विद्वन् ! अर्को के उपयुक्त हो ? ॥७२॥

गुरु –

यसमा दोष लाग्दैन त्यो अर्धजरती कबै ।
अपेक्षा कर्मको हुन्छ कहिले हुन्न नै खुबै ॥७३॥

विद्योत्पन्न जसै हुन्छ अपेक्षा हुन्न कर्मको ।
आफ्नो उत्पत्तिमा विद्या अपेक्षा गर्छ कर्मको ॥७४॥

[२८]यज्ञादि कर्म विद्याका उत्पत्तिनिम्ति साधन ।
श्रुतिले भन्छ विद्याको हो [२९]ब्रह्मचर्य साधन ॥७५॥

---

२८. तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसाऽनाशकेन ।
– बृहदारण्यकोपनिषद् ४।४।२५

२९. अथ यद्यज्ञं इत्याचक्षते ब्रह्मचर्यमेव तत् । – छान्दोग्योपनिषद् ८।५।१

साक्षात् आश्रमको कर्म विद्याको बन्छ साधन ।
कण्ठतः श्रुतिले भन्छ कर्म बन्दैन बाधन ॥७६॥

कर्मले [३०]रागद्वेषादि सम्पूर्ण नाश गर्दछ ।
तदनन्तर नै ज्ञान स्मृतिले हुन्छ भन्दछ ॥७७॥

[३१]वेदशास्त्रादिले भन्छन् प्राप्तव्य एक हो भनी ।
आश्रम ब्रह्मचर्यादि विद्यार्थ कर्म हुन् अनि ॥७८॥

विद्याका अङ्ग हुन् [३२]शान्तदान्तादि बाह्य आन्तर ।
यी अनुष्ठेय हुन् भन्छ श्रुति ज्ञानार्थ तत्पर ॥७९॥

विद्याका साथ संयोग हुँदा शमादि अन्तर ।
हुन् साधन सबै सोम्य ! श्रुतिले भन्छ सुन्दर ॥८०॥

हुँदा विविदिषा साथ संयोग यज्ञ ती पनि ।
बाह्य साधन मानिन्छन् विद्याका निम्तिमा अनि ॥८१॥

जसरी हलमा हुन्न अपेक्षा अश्वको तर ।
अपेक्षा रथमा हुन्छ कर्म विद्यार्थ हुन् तर ॥८२॥

विद्योपत्ति हुँदा त्यस्तै अपेक्षा हुन्छ कर्मको ।
अन्तमा मोक्षका निम्ति अपेक्षा हुन्न कर्मको ॥८३॥

---

३०. कषायपक्ति कर्माणि ज्ञानन्तु परमा गतिः ।
कषाये कर्मभिः पक्वे ततो ज्ञानं प्रवर्तते ॥ – स्मृतिः

३१. सर्वे वेदा यत्पदमामनन्ति तपांसि सर्वाणि च यद् वदन्ति ।
यदिच्छन्तो ब्रह्मचर्यं चरन्ति तत्ते पदं सङ्ग्रहेण ब्रवीमि ॥ – कठोपनिषद् २।१५

३२. तस्मादेवंविच्छान्तो दान्त उपरतस्तितिक्षुः समाहितो भूत्वात्मन्येवात्मानं पश्यति ।
– बृहदारण्यकोपनिषद् ४।४।२३

दुई छन् यसमा [३३]सूत्र दुवैको एउटै मत ।
शुरुमा कर्म चाहिन्छ कर्म चाहिन्न अन्ततः ॥८४॥



## ७. सर्वान्नानुमत्यधिकरण (ब्रह्मसूत्र ३।४।७।२८–३१)

शिष्य –

प्राणोपासकका[३४] निम्ति जो हो सर्वान्नभक्षण ।
शमादितुल्य विद्याको अङ्गरूप भईकन ॥८५॥

विधि हो ? अथवा यो हो मात्र संस्तुतिकीर्तन ?
यसमा भन्दछन् वादी विधि[३५] सर्वान्नभक्षण ॥८६॥

अन्यथा [३६]वामदेव्याख्य विद्या नै बाध बन्दछ ।
भक्ष्याभक्ष्यविभागाख्य शास्त्र नै बाध बन्दछ ॥८७॥

यसमा अब आज्ञा होस् ब्रह्मन् ! सर्वान्नभक्षण ।
अपूर्व विधि हो ? यद्वा त्यो हो संस्तुति कीर्तन ॥८८॥

गुरु –

प्राणनाश हुनेजस्तो महान् सङ्कष्टको क्षण ।
भएमा [३७]श्रुतिले भन्छ गर सर्वान्नभक्षण ॥८९॥

---

३३. सर्वापेक्षा च यज्ञादिश्रुतेरश्ववत् । – ब्रह्मसूत्र ३।४।६।२६,२७

३४. क. न ह वा एवंविदि किञ्चनानन्नं भवति । – छान्दोग्योपनिषद् ५।२।१

ख. न ह वा यस्यान्नं जग्धं भवति नानन्नं प्रतिगृहीतम् ।

– बृहदारण्यकोपनिषद् ६।१।१४

३५. न ह वा एवंविदि किञ्चनानन्नं भवति । – छान्दोग्योपनिषद् ५।२।१

३६. न काञ्चन स्त्रियं परिहरेत् तद्व्रतम् । – छान्दोग्योपनिषद् २।१३।२

३७. न वा आजीविष्यमिमानखादन् । – छान्दोग्योपनिषद् १।१०।४

[38]आपत्तिकालमा विद्वान् अविद्वान् जसमा पनि ।
अन्नभक्षणको आज्ञा देखिन्छ स्मृतिमा पनि ॥९०॥

त्यो सामान्य अवस्थामा श्रुति सर्वान्नभक्षण ।
अनुज्ञा गर्न सक्तैन निषेध गर्छ तत्क्षण ॥९१॥

[39]मद्यपान सधैँ त्यागोस् ब्राह्मण स्मृति भन्दछ ।
न त्यागे दण्ड मिल्ने छ सुराप कृमि बन्दछ ॥९२॥

स्वेच्छाप्रवृत्ति नै रोक्न जसको छ प्रयोजन ।
स्पष्ट नै [40]श्रुतिले भन्छ नपियोस् मद्य बाहुन ॥९३॥

यसरी श्रुतिले गर्छ निषेध सर्वभक्षण ।
[41]'न ह वा' स्तुति हो वाक्य त्यो हैन विधि किञ्चन ॥९४॥

[42]यसमा चार छन् सूत्र सबै सर्वान्नभक्षण ।
त्यो अर्थवादमात्रै हो भन्दछन् विधि होइन ॥९५॥



---

३८. जीवितात्ययमापन्नो योऽन्नमत्ति यतस्ततः ।
लिप्यते न स पापेन पद्मपत्रमिवाम्भसा ॥ – स्मृतिः

३९. मद्यं नित्यं ब्राह्मणः सुरापस्य ब्राह्मणस्योष्णामाषिञ्चेयुः ।
सुरापाः कृमयो भवन्त्यभक्षभक्षणात् ॥ – स्मृतिः

४०. तस्माद्ब्राह्मणः सुरां न पिबेत् । – श्रुतिः

४१. न ह वा एवंविदि । – छान्दोग्योपनिषद् ५।२।१

४२. सर्वान्नानुमतिश्च प्राणात्यये तद्दर्शनात् । – ब्रह्मसूत्र ३।४।७।२८–३१

## ८. आश्रमकर्माधिकरण (ब्रह्मसूत्र ३।४।८।३२–३५)

शिष्य–

आश्रमकर्म हो खास विद्याको एक साधन ।
[४३]'सर्वापेक्षा च' यो सूत्र गर्छ निश्चित शंसन ॥९६॥

आश्रमकर्ममा लाग्ने विद्यामा छैन कामना ।
अज्ञानीकन सो कर्म हो अनुष्ठेय ? होइन ? ॥९७॥

विद्या, आश्रमका लागि भिन्नाभिन्नै गरीकन ।
अनुष्ठान दुई गर्ने ? अथवा एक ? हो कुन ? ॥९८॥

सन्देह यसमा आयो आश्रम कर्म हो जुन ।
अमुमुक्षु छ जो त्यस्तो हो अनुष्ठेय ? होइन ? ॥९९॥

वादीले यसमा भन्छन् [४४]'तमेतम्' श्रुति लीकन ।
आश्रमी कर्म विद्याको हो अनुष्ठेय साधन ॥१००॥

प्रयोजन भए भेद हुन्छ भेद प्रयोगमा ।
पृथक् पृथक् अनुष्ठान गर्नुपर्छ यथार्थमा ॥१०१॥

विद्या नचाहने जो छ जो चाहन्छ फलान्तर ।
त्यसले नित्य कर्मै त्यो अननुष्ठेय हो तर ॥१०२॥

गुरुजी ! अब आज्ञा होस् वादीको मत मान्य हो ?
मान्य हैन भनेदेखिन् ? सिद्धान्त कुन मान्य हो ? ॥१०३॥

---

४३. सर्वापेक्षा च यज्ञादिश्रुतेरश्ववत् । – ब्रह्मसूत्र ३।४।६।२६

४४. तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसानाशकेनैतमेव विदित्वा मुनिर्भवति । – बृहदारण्यकोपनिषद् ४।४।२२

गुरु–

आश्रममात्रमा निष्ठा अमुमुक्षु कुनै पनि ।
हो नित्य कर्म कर्तव्य भन्दछ [४५]श्रुतिले पनि ।।१०४।।

विद्याका सहकारी हुन् यज्ञादि कर्म वेदतः ।
आश्रमी कर्म हुन् त्यस्तै विद्यासाधन [४६]सूत्रतः ।।१०५।।

विद्या विधेय नै हैन प्रयाजादिकका सरी ।
अन्य साधन विद्यामा [४७]अपेक्षा हुन्न सो परी ।।१०६।।

दुवै नै पक्षका लागि आश्रमी कर्म शास्त्रतः ।
अग्निहोत्रादि ती धर्म हुन् अनुष्ठेय वस्तुतः ।।१०७।।

ब्रह्मचर्यादिका द्वारा सदात्मा प्राप्त बन्दछ ।
आश्रमी कर्म विद्याका हेतु हुन् [४८]श्रुति भन्दछ ।।१०८।।

कर्मको त्यो अनुष्ठान पर्याप्त एक पल्ट छ ।
जस्तै भोजनले श्राद्ध हुन्छ र तृप्ति मिल्दछ ।।१०९।।

त्यस्तै नै कर्म जो हो त्यो विद्यानिम्ति अनुष्ठित ।
हुन्छ आश्रमका लागि पनि कर्म सुनिश्चित ।।११०।।

श्रुतिका बलले कर्म एकै दुई त बन्दछ ।
जस्तै [४९]'खादिर' मा कर्म नित्यकाम्यत्व बन्दछ ।।१११।।

अतः कर्म-अनुष्ठान यौटैले पनि पुग्दछ ।
दुई पटक पर्दैन गर्नु नै श्रुति भन्दछ ।।११२।।

४५. यावज्जीवमग्नि होत्रं जुहोति । – श्रुतिः
४६. सर्वापेक्षा च यज्ञादिश्रुतेरश्ववत् ।– ब्रह्मसूत्र ३।४।६।२६
४७. अत एव चाग्नीन्धनाद्यनपेक्षा ।– ब्रह्मसूत्र ३।४।५।२५
४८. एष ह्यात्मा न पश्यति यै ब्रह्मचर्येणानुविन्दते । – छान्दोग्योपनिषद् ८।५।३
४९. खादिरो यूपो भवति, खादिरं वीर्यकामस्य यूपं कुर्वीत । – श्रुतिः

यसमा [50]सूत्र छन् चार सबैको मत एक छ।
एकै पटक नै मात्र गरेमा कर्म पुग्दछ ॥११३॥



## ९. विधुराधिकरण (ब्रह्मसूत्र ३।४।९।३६–३९)

शिष्य–

अनाश्रमीहरूसाथै विधुरादिहरू सब।
हुन् ती विद्याधिकारी ? वा हैनन् ? सन्देह भो अब ॥११४॥

यसमा पूर्वपक्षी ती अनाश्रमीहरू सब।
विद्याधिकार राख्तैनन् तिनले भन्दछन् तब ॥११५॥

आश्रमकर्म हो हेतु विद्याका निम्तिमा भने।
अनाश्रमीहरूलाई अधिकार कहाँ हुने ? ॥११६॥

खयसमा पूर्वपक्षी ती अनाश्रमीहरूकन।
विद्याधिकार नै छैन भन्छन् प्रमाण दीकन ॥११७॥

यसमा गुरुजी ! भन्नोस् अनाश्रमीहरूकन।
विद्याधिकार के छैन ? यद्वा छ ? सुन्न भो मन ॥११८॥

गुरु–

श्रुतिस्मृतिहरूबाट अनाश्रमीहरू पनि।
विद्याधिकार ती राख्छन् गार्गी रैक्वहरू पनि ॥११९॥

रैक्व वाचक्नवी गार्गी अनाश्रमी भए पनि।
छान्दोग्य बृ.उ. सम्झन्छन् ब्रह्मज्ञानीहरू भनी ॥१२०॥

---

५०. विहितत्वाच्चाश्रमकर्मापि। – ब्रह्मसूत्र ३।४।८।३२–३५

त्यस्तै संवर्त इत्यादि अनाश्रमी थिए तर ।
महायोगी थिए भन्छ इतिहास सधैँभर ॥१२१॥

अनाश्रमी थिए रैक्व ज्ञानहेतु गरी जप ।
विद्याधिकार पाएथे स्मृतिले भन्छ नै तब ॥१२२॥

[51]अतीत जन्ममा सिद्ध आश्रमकर्मले पनि ।
विद्याप्राप्ति हुने भन्छन् अन्यान्य शास्त्रले पनि ॥१२३॥

त्यसै गरेर अन्यान्य विधुरादिहरू पनि ।
विद्याधिकृत ती हुन्छन् भन्दछ [52]भाष्यले पनि ॥१२४॥

[53]अनाश्रमीहरूभन्दा आश्रमीकन तत्त्वतः ।
विद्याप्राप्त हुने गर्छ श्रुतिले भन्छ कण्ठतः ॥१२५॥

[54]अनाश्रमी भई बस्नुहुन्न ब्राह्मणले कुनै ।
एक वर्ष बसे पर्छ कृच्छ्र गर्नु अवश्य नै ॥१२६॥

यसमा [55]सूत्र छन् चार सबैको एउटै मत ।
अनाश्रमी हुने गर्छन् विद्याधिकृत तत्त्वतः ॥१२७॥



---

५१. क. जप्येनैव तु संसिद्ध्येद् ब्राह्मणो नात्र संशयः ।
कुर्यादन्यत्र वा कुर्यान्मैत्रो ब्राह्मण उच्यते ॥ – स्मृतिः
ख. अनेकजन्मसंसिद्धस्ततो याति पराङ्गतिम् । – गीता ६।४५
५२. तस्माद् विधुरादीनामप्यधिकारो न विरुध्यते । –शाङ्करभाष्य, ब्रह्मसूत्र ३।४।९।३८
५३. तेनैति ब्रह्मवित्पुण्यकृत्तैजश्च । –बृहदारण्यकोपनिषद् ४।४।९
५४. अनाश्रमी न तिष्ठेत दिनमेकमपि द्विजः ।
संवत्सरमनाश्रमी स्थित्वा कृच्छ्रमेकञ्चरेत् ॥
इति च स्मृतिलिङ्गात् ॥ – ब्रह्मसूत्रभाष्य ३।४।९।३९
५५. अन्तरा चापि तु तद्दृष्टेः । – ब्रह्मसूत्र ३।४।९।३६–३९

## १०. तद्भूताधिकरण (ब्रह्मसूत्र ३।४।१०।४०)

शिष्य–

सन्न्यासाश्रमबाटै के हुन्छ प्रच्च्युति ? हुन्न ? वा ।
सन्देह हुन गो हुन्छ ? हुँदैन ? अवरोह वा ।।१२८।।

पूर्व आश्रमका याग आदिमा राग भै अति ।
वादीले भन्दछन् हुन्छ सन्न्यासबाट नै च्युति ।।१२९।।

गुरुजी ! यसमा भन्नोस् सन्न्यासबाट नै च्युति ।
हुन्छ ? वा हुन्न ? सन्न्यासबाट पतनको स्थिति ।।१३०।।

गुरु–

जसमा ऊर्ध्वरेताको भाव प्राप्त छ वस्तुतः ।
उसबाट अतद्भाव हुन सक्तैन तत्त्वतः ।।१३१।।

माथिका श्रुतिका साथै स्मृति शास्त्रादिले पनि ।
आश्रमी हुन सक्तैन भन्छन् पतन नै भनी ।।१३२।।

आश्रमी वनमा जाओस् नफर्कोस् घरमा भनी ।
[५६]मुनि जैमिनिले भन्छन् देखिन्छ नियमै पनि ।।१३३।।

[५७]आचार्य कुलमा शिक्षा पाई नियममा रहोस् ।
अनुज्ञा गुरुको पाई यौटा आश्रममा बसोस् ।।१३४।।

---

५६. अरण्यमियादिति पदं ततो न पुनरेयात् । अत्यन्तमात्मानमाचार्यकुलेऽवसादयन् ।
– छान्दोग्योपनिषद् २।२३।१

५७. आचार्येणाभ्यनुज्ञातश्चतुर्णामेकमाश्रमम् ।
आविमोक्षाच्छरीरस्य सोऽनुतिष्ठेद्यथाविधि ।। – स्मृतिः

[58]ब्रह्मचर्य सकी छात्र गृहस्थाश्रममा पसोस् ।
यद्वा वटु त्यहीँबाटै सन्न्यासाश्रममा पसोस् ॥१३५॥

वैराग्य जहिले हुन्छ जुनै आश्रममा पनि ।
श्रुतिले भन्छ तत्कालै जाओस् सन्न्यासमा भनी ॥१३६॥

आरोहरूपमात्रै नै देखिन्छन् वाक्य शास्त्रतः ।
अवरोहण देखिन्न शास्त्रमा वाक्य वस्तुतः ॥१३७॥

जो छन् प्रत्यवरोही ती अशिष्ट स्मृति भन्दछ ।
[59]गीताले पनि आफ्नू नै श्रेष्ठ आश्रम गन्दछ ॥१३८॥

आरोहमात्र देखिन्छ सन्न्यासाश्रममा सदा ।
अवरोहण देखिन्न हो अशास्त्रीय सर्वदा ॥१३९॥

यसमा [60]सूत्र यौटै छ उद्घोष यसले गर्‍यो ॥
अवरोहण मानिन्न सन्न्यासाश्रममा भन्यो ॥१४०॥



## ११. अधिकाराधिकरण (ब्रह्मसूत्र ३।४।११।४१–४२)

शिष्य–

ऊर्ध्वरेता छ जो शिष्य ब्रह्मचारी छ नैष्ठिक ।
आफ्नो आश्रमदेखि त्यो भएमा भ्रष्ट बेठिक ॥१४१॥

---

५८. ब्रह्मचर्यं समाप्य गृही भवेत्, ब्रह्मचर्यादेव प्रव्रजेत्, यद्वा यदहरेव विरजेत् तदहरेव प्रव्रजेत् । – जाबालोपनिषद् ४

५९. श्रेयान्स्वधर्मो विगुणः परधर्मात्स्वनुष्ठितात् ।
स्वधर्मे निधनं श्रेयः परधर्मो भयावहः ॥ – श्रीमद्भगवद्गीता ३।३५

६०. तद्भूतस्य तु नातद्भावो जैमिनेरपि नियमातद्रूपाभावेभ्यः ।
– ब्रह्मसूत्र ३।४।१०।४०

प्रायश्चित्त छ ? वा छैन ? शास्त्रमा यसको भनी ।
भयो सन्देह उत्पन्न जिज्ञासा गहिरो बनी ॥१४२॥

यसमा पूर्वपक्षी ती भन्दछन् ब्रह्मनिष्ठको ।
प्रायश्चित्त छँदै छैन मात्रै छ उपकुर्वको ॥१४३॥

[६१]'अवकीर्णिपशुश्चादि' सूत्र र [६२]स्मृति ली अनि ।
प्रायश्चित छँदै छैन नैष्ठिको भन्दछन् पनि ॥१४४॥

उपकुर्वाणको हुन्छ प्रायश्चित्त भनीकन ।
वादीले राख्तछन् आफ्नू मत शास्त्र लिईकन ॥१४५॥

यसमा गुरुजी ! भन्नोस् वादीको मत युक्त हो ?
यदि हैन भने युक्त ? कुन सिद्धान्त युक्त हो ? ॥१४६॥

गुरु–

प्रायश्चित्त अवश्यै नै हुन सक्तछ शास्त्रतः ।
महापतक यो हैन उपपातक वस्तुतः ॥१४७॥

उपकुर्वाण नामाख्य ब्रह्मचारी छ जो जन ।
उसले मधुमांसादि गरेमा यदि भक्षण ॥१४८॥

उपपातक मानिन्छ त्यसै गरेर यो पनि ।
महापातक मानिन्न उपपातक हो अनि ॥१४९॥

नैष्ठिक ब्रह्मचारी ती व्रतबाट भए च्युत ।
प्रायश्चित हुने गर्छ [६३]'समा विप्रतिपत्तितः' ॥१५०॥

---

६१. अवकीर्णिपशुश्च तद्वदाधानस्याऽप्राप्तकालत्वात् । – जैमिनिसूत्र ६।८।२१
६२. आरूढो नैष्ठिकं धर्मं यस्तु प्रच्यवते पुनः ।
प्रायश्चितं न पश्यामि येन शुद्ध्येत् स आत्महा । – स्मृतिः
६३. क. समा विप्रतिपत्तिः स्यात् ।–जैमिनिसूत्र १।३।८
ख. शास्त्रस्था वा तन्निमित्तत्वात् ।–जैमिनिसूत्र १।३।१९

प्रायश्चिताख्य संस्कारद्वारा त्यो शुद्ध बन्दछ ।
ठूलो प्रयत्नसंसाध्य शास्त्रले पनि भन्दछ ।।१५१।।

नैष्ठिक ब्रह्मचारीको यत्नतः शुद्धि सम्भव ।
[६४]वनस्थतुल्य देखिन्छ शुद्धि हैन असम्भव ।।१५२।।

प्रायश्चित्त छँदै छैन भन्ने मत अयुक्त हो ।
प्रायश्चित्त छ भन्ने नै वेदान्तमत युक्त हो ।।१५३।।

दुई छन् यसमा [६५]सूत्र दुवै नै एक बन्दछन् ।
नैष्ठिक ब्रह्मचारीको प्रायश्चित्त छ भन्दछन् ।।१५४।।



## १२. बहिरधिकरण (ब्रह्मसूत्र ३।४।१२।४३)

शिष्य–

प्रायश्चित्त गरी शुद्ध ब्रह्मचारीहरूकन ।
विद्वान् शिष्टहरू गर्छन् त्याग ? ग्रहण ? वा कुन ? ।।१५५।।

यस संशयमा वादी प्रायश्चित्त गरीकन ।
दोषनाश भएकाले भन्दछन् ग्राह्य हो जुन ।।१५६।।

यसमा गुरुजी ! भन्नोस् वादीको मत युक्त हो ?
युक्त हैन भनेदेखि सिद्धान्त कुन युक्त हो ? ।।१५७।।

---

६४. 'वानप्रस्था दीक्षाभेदे कृच्छ्रं द्वादशरात्रं चरित्वा महाकक्षं वर्धयेत् ।'
'भिक्षुर्वानप्रस्थवत्सोमवल्लिवर्जं स्वशास्त्र संस्काराच्च ।'
इत्वेवमादि प्रायश्चित्तस्मरणमनुस्मर्तव्यम् । – शाङ्करभाष्य, बह्मसूत्र ३।४।१२।४२

६५. न चाधिकारिकमपि पतनानुमानात्तदयोगात् । – ब्रह्मसूत्र ३।४।११।४१–४२

गुरु–

नैष्ठिकी [६६]ऊर्ध्वरेता त्यो भए प्रच्युत आश्रम ।
जस्तो पातक होस् हुन्छ शिष्टद्वारा बहिर्गम ॥१५८॥

जो हो नैष्ठिक आरूढ धर्ममा नै भई जब ।
भ्रष्ट हुन्छ भने आत्मघाती मानिन्छ नै तब ॥१५९॥

त्यस्ताको शुद्धि नै हुन्न प्रायश्चित्त छ दुस्तर ।
त्यो त्याज्य हो कसै हुन्न शिष्ट स्वीकार्य जे गर ॥१६०॥

परलोकनिमित्तै हो उसको शुद्धि शास्त्रतः ।
हुन्न यो लोकका निम्ति शास्त्रले भन्छ वस्तुतः ॥१६१॥

यसमा [६७]सूत्र यौटै छ स्मृति आचारले पनि ।
प्रायश्चित्त कसै हुन्न भन्दछ शास्त्रले अनि ॥१६२॥



## १३. स्वाम्यधिकरण (ब्रह्मसूत्र ३।४।१३।४४–४६)

शिष्य–

त्यो अङ्गोपासनाको नै अनुष्ठाता छ जो जन ।
यजमान कि ? वा ऋत्विक् ? यिनमा मुख्य हो कुन ? ॥१६३॥

यसमा हो अनुष्ठाता यजमान भनीकन ।
विभिन्न [६८]श्रुतिको गर्छन् वादी प्रमाणशंसन ॥१६४॥

---

६६. आरूढो नैष्ठिकं धर्मं यस्तु प्रच्यवते पुनः ।
प्रायश्चितं न पश्यामि येन शुध्येत्स आत्महा ॥
आरूढपतितं विप्रं मण्डलाच्च विनिःसृतम् ।
उद्बद्धं कृमिदष्टञ्च स्पृष्ठ्वा चान्द्रायणञ्चरेत् ॥ – स्मृतिः

६७. बहिस्तूभयथापि स्मृतेराचाराच्च । –ब्रह्मसूत्र ३।४।१२।४३

६८. वर्षति हास्मै वर्षयति ह य एतदेवं विद्वान् वृष्टौ पञ्चविधं सामोपास्ते । वर्षत्यस्मै य उपास्ते ।– छान्दोग्योपनिषद् २।३।२

तज्जन्य फलको प्राप्ति ध्याताले मुख्य पाउने ।
स्वामी त्यो यजमानै हो यही हो सुन्न आउने ॥१६५॥

त्यो अर्को [६९]श्रुतिले भन्छ लिई आगान कारण ।
ऋत्विक्‌ले पनि सम्प्राप्ति फलको गर्छ शंसन ॥१६६॥

आत्रेय भन्दछन् कर्ता स्वामी हो फलको जब ।
आज्ञा होस् गुरुजी ! कल्ले पाउने फल हो तब ॥१६७॥

गुरु !
वादीको मत बेठीक [७०]ती औडुलोमि भन्दछन् ।
यो अङ्गकर्मको कर्ता ऋत्विक् हो भनी मान्दछन् ॥१६८॥

दक्षिणा दिई कर्ताले ऋत्विक्‌बाट निखन्दछ ।
उद्‌गाता यसमै पर्छ श्रुतिले पनि भन्दछ ॥१६९॥

ऋत्विक्‌ले यज्ञमा कर्म यजमानार्थ गर्दछ ।
[७१]'यां वै काञ्चन यज्ञे' नै श्रुतिले स्पष्ट भन्दछ ॥१७०॥

यो [७२]जान्ने विज्ञ उद्‌गाता कर्ताको भाव बुझ्दछ ।
कामनाप्राप्तिका लागि गरौँ उद्‌गान ? सोध्दछ ॥१७१॥

ऋत्विक्कर्तृक विज्ञानद्वारा उद्‌भूत जो फल ।
यजमानार्थ नै हुन्छ श्रुतिले भन्छ निश्छल ॥१७२॥

---

६९. आत्मने वा यजमानाय वा यं कामं कामयते तमागायति ।
– बृहदारण्यकोपनिषद् १।३।२८

७०. आर्त्विज्यमित्यौडुलोमिस्तस्मै हि परिक्रियते । – ब्रह्मसूत्र ३।४।१३।४५

७१. यां वै काञ्चन यज्ञे ऋत्विज आशिषमाशासत इति
यजमानायैव तामाशासत इति होवाचेति । – छान्दोग्योपनिषद् १।७।८

७२. तस्मादु हैवंविदुद्‌गाता ब्रूयात्कं ते काममागायति । – छान्दोग्योपनिषद् १।७।८

ऋत्विक् हो यज्ञको कर्ता यजमान भने फल ।
सम्भागी श्रुतिले भन्छ यै हो सिद्धान्त निर्मल ॥१७३॥

[७३]तीन छन् यसमा सूत्र ऋत्विक् हो यज्ञकर्तृक ।
यज्ञका फलको स्वामी भन्दछन् हो उपासक ॥१७४॥



## १४. सहकार्यन्तरविध्यधिकरण (ब्रह्मसूत्र ३।४।१४।४७–४९)

शिष्य–
मौन [७४]सम्बन्धमा वेद स्पष्ट उल्लेख गर्दछ ।
विधान मौनको यद्वा छ ? छैन ? जान्नुपर्दछ ॥१७५॥

यस संशयमा वादी विधान छैन भन्दछन् ।
मौन पाण्डित्यभित्रै नै स्वतः पर्दछ भन्दछन् ॥१७६॥

अथ ब्राह्मणका साथै अथ मुनिः दुवै पनि ।
प्रशंसामात्र हो ? हैन ? विधान भन्दछन् तिनी ॥१७७॥

दुवै मौन र पाण्डित्य ज्ञानवाचक हुन् भनी ।
वादीको मत जो आयो विधान छैन नै भनी ॥१७८॥

यसमा भन्नुहोस् ब्रह्मन् ! विधान छैन ? मौनको ।
छ ? भने सुन्न चाहन्छु विधान के छ ? मौनको ॥१७९॥

७३. स्वामिनः फलश्रुतेरित्यात्रेयः । – ब्रह्मसूत्र ३।४।१३।४४–४६
७४. तस्माद्ब्राह्मणः पाण्डित्यं निर्विद्य बाल्येन निष्ठासेद् बाल्यञ्च पाण्डित्यञ्च निर्विद्याथ मुनिरमौनञ्च मौनञ्च निर्विद्याथ ब्राह्मणः ।
– बृहदारण्यकोपनिषद् ३।५।१

गुरु–

'सहकार्यान्तर-विधिः' भाष्यमा जो छ शंसन ।
त्यसलाई बुझ्े सौम्य ! गरेर सूक्ष्म चिन्तन ॥१८०॥

बाल्यपाण्डित्यका तुल्य विद्याका सहकार्य नै ।
मौनका विधि नै मान्नु शास्त्रसङ्गत हुन्छ नै ॥१८१॥

पाण्डित्यपछि आएको मुनिको छ प्रयोजन ।
सदैव ज्ञाननिष्ठाको अपूर्वविधि-शंसन ॥१८२॥

भाको छ जुन यो शब्द [७५]'तिष्ठासेत्' अनुवर्तन ।
विध्यर्थक भनी वेद यसको गर्छ सूचन ॥१८३॥

निरन्तर अविच्छिन्न सद्ज्ञान हुनुपर्दछ ।
सशक्त भेद संस्कार यसैले तोड्न सक्तछ ॥१८४॥

जो [७६]'दर्शपूर्णमासाभ्याम्' विधिको सहकार्य हो ।
विद्याका वाक्यमा त्यस्तै यो मौन विधि एक हो ॥१८५॥

श्रेष्ठ आश्रममा ज्ञान प्रधान श्रुतिगम्य हो ।
पाण्डित्यादि अपेक्षाले यो तेस्रो विधि मौन हो ॥१८६॥

बाल्यपाण्डित्यले तेस्रो ज्ञानातिशय मौन हो ।
निदिध्यासन यो मौन अवश्य नै विधेय हो ॥१८७॥

---

७५. तस्माद् ब्राह्मणः पाण्डित्यं निर्विद्य बाल्येन तिष्ठासेत् ।
– बृहदारण्यकोपनिषद् ३।५।१

७६. दर्शपूर्णमासाभ्यां स्वर्गकामो यजेत । – श्रुतिः

यसमा [77]तीन छन् सूत्र सबैको भन्नु एक हो ।
निदिध्यासनको रूप यो मौन नै विधेय हो ॥१८८॥



## १५. अनाविष्काराधिकरण (ब्रह्मसूत्र ३।४।१५।५०)

शिष्य–

'तस्माद्' यो श्रुतिमा 'बाल्य' आएको शब्द हो जुन ।
यसले वय ? वा लिन्छ बुद्धिको शुद्धि ? वा कुन ? ॥१८९॥

यसमा बालको भाव कर्म या बाल्य हो कुन ।
तद्धितप्रत्ययै यो हो वय पाइन्न नै लिन ॥ १९०॥

पुरीष-मूत्र-शौचादि छैन नियम नै जहाँ ।
यस्तो चरित हो बाल्य एकातर्फ भने त्यहाँ ॥१९१॥

अर्कातर्फ छ अत्यन्त भावशुद्धि चिरन्तन ।
दम्भदर्पादिले शून्य बाल्य यो पनि हो जुन ॥१९२॥

[78]'बाल्येन' श्रुतिमा व्यक्त बाल्य हो यिनमा कुन ?
भयो अत्यन्त सन्देह बाल्यको अर्थ हो कुन ? ॥१९३॥

वादीले यसमा भन्छन् इच्छानुसार भक्षण ।
हुन्छन् मूत्रपुरीषादि त्यै हो बाल्य भनीकन ॥१९४॥

परन्तु पतितत्वादिदोष-प्राप्ति हुने जहाँ ।
ती कामचारता हुन्न अवश्य लिनु नै तहाँ ॥१९५॥

---

७७. सहकार्यन्तरविधिः पक्षेण तृतीयं तद्वतो विध्यादिवत् ।
– ब्रह्मसूत्र ३।४।१४।४७–४९

७८. बाल्येन तिष्ठासेत् । – बृहदारण्यकोपनिषद् ३।५।१

यसमा भन्नुहोस् विद्वन् ! वादीको बाल्य युक्त हो ?
यदि हैन भने भन्नोस् कुन बाल्य सुयुक्त हो ? ॥१९६॥

गुरु–
बाल्यले वयको हैन बुद्धिशुद्धि बुझाउँछ ।
श्रवणादिकमा मौन विधेय हुन आउँछ ॥१९७॥

मनकै निम्तिमा हुन्छ भावशुद्धि अपेक्षित ।
नत्यागी द्वेषरागादि मन यो हुन्न निश्चित ॥१९८॥

कामचार-अवस्था ती लिँदैन बाल्यले तर ।
अयुक्त र विरोधी हुन् ती दुवै नै परस्पर ॥१९९॥

'अनाविष्कुर्व' ले आफ्नो ख्याति जो गोप्य राख्तछ ।
बालको आन्तरैभाव 'बाल्य' ग्रहण गर्दछ ॥२००॥

जो विद्वान् अन्यका साथ आफ्नू ज्ञानप्रकाशन ।
गर्दैन बाल्य हो सोही [७९]स्मृति गर्दछ शासन ॥२०१॥

यो बाल्य शब्दले लिन्छ बुद्धिको शुद्धि अन्ततः ।
कामचार अवस्था ती लिँदैन श्रुति तत्त्वतः ॥२०२॥

यसमा [८०]सूत्र यौटै छ यसले पनि भन्दछ ।
बाल्य हो बुद्धिको शुद्धि अवस्था हैन भन्दछ ॥२०३॥



७९. यं न सन्तं न चासन्तं नाश्रुतं न बहुश्रुतम् ।
न सुवृत्तं न दुर्वृत्तं वेद कश्चित् स ब्राह्मणः ॥
गूढधर्माश्रितो विद्वानज्ञातचरितं चरेत् ।
अन्धवज्जडवच्चापि मूकवच्च महीं चरेत् ॥
अव्यक्तलिङ्गोऽव्यक्ताचारः , इति चैवमादि ॥
८०. अनाविष्कुर्वन्नन्वयात् । – ब्रह्मसूत्र ३।४।१५।५०

## १६. ऐहिकाधिकरण (ब्रह्मसूत्र ३।४।१६।५१)

शिष्य –

[८१]'सर्वापेक्षा च' बाटै नै शुभारम्भ गरीकन ।
नाना प्रकारका गर्दै विद्याविचार-साधन ॥२०४॥

श्रवणादि-अनुष्ठान गरेर यस जन्ममा ।
विद्यासिद्धि हुने ? हो वा हुने हो ? अन्य जन्ममा ॥२०५॥

सन्देह यसरी आयो वादीले भन्दछन् अब ।
यस नै जन्ममा हुन्छ विद्यासिद्धि भनी तब ॥२०६॥

यही नै जन्ममा विद्या हओस् प्राप्त भनीकन ।
इच्छा राखेर नै हुन्छन् श्रवणादिक साधन ॥२०७॥

यज्ञ आदि सबै हुन्छन् हुन्छन् विविदिषा पनि ।
यही नै जन्ममा हुन्छ ज्ञानसम्प्राप्ति नै अनि ॥२०८॥

त्यसैकारणले विद्याजन्य ऐहिक हो भनी ।
वादीको मत यो आयो भयो सन्देह झन् अनि ॥२०९॥

आज्ञा होस् गुरुजी ! ज्ञानप्राप्ति त्यो कहिले हुने ?
यही नै जन्ममा ? यद्‌वा आगामी जन्ममा हुने ? ॥२१०॥

गुरु–

प्रतिबन्धक नै छैन भनेमा यस जन्ममा ।
विद्योत्पत्ति हुने गर्छ अन्यथा अन्य जन्ममा ॥२११॥

श्रवणादिकका द्वारा हुने ज्ञान निरन्तर ।
प्रतिबन्धकको नाश भए सम्भव यो तर ॥२१२॥

---

८१. सर्वापेक्षा च यज्ञादिश्रुतेरश्ववत् । – ब्रह्मसूत्र ३।४।६।२६

आत्मा दुर्ज्ञेय अत्यन्त श्रवणादिकले पनि ।
आत्मसात् सहजै हुन्न भन्दछ [82]श्रुतिले पनि ।।२१३।।

गर्भमा रहँदैखेरि वामदेवादि तत्क्षण ।
ब्रह्मभाव भयो प्राप्त [83]श्रुतिले गर्छ सूचन ।।२१४।।

पैलेकै जन्ममा राम्रा गरेका कर्मसञ्चय ।
द्वारा पनि हुने गर्छ ज्ञान यो [84]शास्त्र निश्चय ।।२१५।।

गर्भमा रहँदाखेरि हुन्नन् साधन नै अनि ।
पूर्वसञ्चितिले हुन्छ विद्या-उत्पत्ति तैपनि ।।२१६।।

पूर्वोक्त शास्त्रमा व्यक्त विद्योत्पत्ति भयो जब ।
प्रतिबन्ध जसै हट्छ ज्ञानी मुक्त हुने तब ।।२१७।।

यही नै जन्ममा यद्वा आगामी जन्ममा पनि ।
पापनाश भएपश्चात् जान्छ मुक्त सुधी बनी ।।२१८।।

श्रवणायापि इत्यादि शास्त्र र वामदेवको ।
दृष्टान्तबाट जानिन्छ उघ्रन्छ मार्ग मुक्तिको ।।२१९।।

---

८२. श्रवणायापि बहुभिर्यो न लभ्यः शृण्वन्तोऽपि बहवो यं न विद्युः ।
आश्चर्योऽस्य वक्ता कुशलोऽस्य लब्धाश्चर्यो ज्ञाता कुशलानुशिष्टः ।।
– कठोपनिषद् २।७

८३. तदुक्तमृषिणा गर्भे नु सन्... गर्भ एवैतच्छ्यानो वामदेव एवमुवाच ।
– ऐतरेयोपनिषद् २।१।५

८४. क. तं विद्याकर्मणी समन्वारभेते पूर्वप्रज्ञा च । – बृहदारण्यकोपनिषद् ४।४।२
ख. अप्राप्य योगसंसिद्धिं कां गतिं कृष्ण गच्छति ।
इत्यर्जुनेन पृष्ठो भगवान् वासुदेवः । – गीता ६।३७
ग. नहि कल्याणकृत्कश्चिद् दुर्गतिं तात गच्छति । – गीता ६।४०
घ. तत्र तं बुद्धिसंयोगं लभते पौर्वदेहिकम् ।–गीता ६।४३
ङ. अनेक जन्मसंसिद्धस्ततो याति पराङ्गतिम् । – गीता ६।४५

यसमा [85]सूत्र यौटै छ यसले भन्छ शास्त्रतः ।
यै जन्ममा कि अर्कोमा हुने छ ज्ञान तत्त्वतः ॥२२०॥



## १७. मुक्तिफलाधिकरण (ब्रह्मसूत्र ३।४।१७।५२)

शिष्य–
विद्यासाधन नै न्यून यद्वाधिक भईकन ।
यहाँ वा परको हुन्छ [86]फलमा नै विभाजन ॥२२१॥

यस्तै नियम उत्कर्ष अपकर्षादि नै पनि ।
मुक्तिमा छ कि ? वा छैन ? भयो संशय नै अनि ॥२२२॥

मुक्ति सातिशया हो ? वा सातिशया कि ! होइन ?
सन्देह यसमा आयो के हो ? र अनि होइन ? ॥२२३॥

वादीले यसमा भन्छन् स्वर्ग र ब्रह्मलोकझैँ ।
मनुष्यभेदले मोक्ष त्यो सातिशय हुन्छ नै ॥२२४॥

यसमा भन्नुहोस् ब्रह्मन् ! के सातिशय मुक्ति हो ?
यद्वा निरतिशायी हो ? दुईमा कुन एक हो ? ॥२२५॥

गुरु–
मुक्तिका फलमा होला विशेष नियमै भनी ।
आशङ्का नगरौँ यौटै सबै वेदान्तमा पनि ॥२२६॥

ब्रह्म नै मुक्त्यवस्था हो हुन्नन् आकार मुक्तिमा ।
यौटै स्वरूप देखिन्छ ब्रह्मको श्रुति शास्त्रमा ॥२२७॥

---

८५. ऐहिकमप्यप्रस्तुतप्रतिबन्धे तद्दर्शनात् । – ब्रह्मसूत्र ३।४।१६।५१

८६. कर्माधिक्यात् फलाधिक्यमिति नियमः ।

[87]'अस्थूलम्' [88]'यत्र नान्यत्' [89]'स एष नेति' [90]'स वा' [91]'इयम्' ।
[92]'यत्र त्वस्य' सबै मन्त्र भन्छन् [93]'ब्रह्मैव' केवलम् ॥२२८॥

इत्यादि श्रुतिकाद्वारा ब्रह्मस्वरूपवर्णन ।
सङ्क्षिप्तमा भयो यो हो मात्र ज्ञानार्थ सूचन ॥२२९॥

कैल्यै अतिशयाधान विद्या गर्दैन मुक्तिमा ।
विद्याको फल आधान कैल्यै हुँदैन मुक्तिमा ॥२३०॥

नित्यसिद्ध स्वभावै हो मुक्ति ता साध्य होइन ।
विद्याले प्राप्य हो ब्रह्म सम्पूर्ण श्रुतिशंसन ॥२३१॥

उत्कर्षात्मक होस् यद्वा निकर्षात्मक नै कुनै ।
हुन सक्तैन विद्यामा त्यस्तो अतिशयै कुनै ॥२३२॥

अतः निकृष्टमा हुन्न विद्यात्व कहिले पनि ।
किन्तु उत्कृष्टमा हुन्छ विद्यात्व जहिले पनि ॥२३३॥

होला उत्पन्न विद्यामा कतै अतिशयै पनि ।
मुक्तिमा सम्भवै हुन्न कैल्यै अतिशयै अनि ॥२३४॥

[94]ब्रह्मको ज्ञान जो गर्छ त्यो स्वयं ब्रह्म बन्दछ ।
पैले ब्रह्म थियो ज्ञानी फेरि त्यो ब्रह्म बन्दछ ॥२३५॥

---

८७. अस्थूलमनण्वह्रस्वमदीर्घम् । – बृहदारण्यकोपनिषद् ३।८।८
८८. यत्र नान्यत्पश्यति नान्यच्छृणोति । – छान्दोग्योपनिषद् ७।२४।१
८९. स एष नेति नेत्यात्मा । – बृहदारण्यकोपनिषद् ३।९।२६
९०. स वा एष महानज आत्माजरोऽमृतोऽमरोऽभयो ब्रह्म ।
– बृहदारण्यकोपनिषद् ४।४।२५
९१. इदं सर्वं यदयमात्मा । – बृहदारण्यकोपनिषद् २।४।६
९२. यत्र त्वस्य सर्वमात्मैवाभूत्तत्केन कं पश्येत् । – बृहदारण्यकोपनिषद् ४।५।१५
९३. ब्रह्मैवेदममृतं पुरस्तात् । – मुण्डकोपनिषद् २।२।११
९४. न तस्य प्राणा उत्क्रामन्ति ब्रह्मैव सन् ब्रह्माप्येति । – बृहदारण्यकोपनिषद् ४।४।६

स्वर्गादितुल्य यो हैन आगन्तुक कसै पनि ।
ज्ञानस्वरूप हो मुक्ति हैन सातिशयै अनि ॥२३६॥

ब्रह्म नै मुक्ति हो छैन ब्रह्म सातिशय श्रुतः ।
ब्रह्मा [९५]मनुष्यको मुक्ति एकै प्रकार तत्त्वतः ॥२३७॥

यसमा [९६]सूत्र यौटै छ यसले पनि अन्ततः ।
ब्रह्मज्ञ ब्रह्म नै हुन्छ [९७]श्रुतिले भन्छ तत्त्वतः ॥२३८॥

ब्रह्मसूत्रको तृतीय अध्यायको चतुर्थ पादको कारिका पूरा भयो ।



९५. ब्रह्मणा सह ते सर्वे सम्प्राप्ते प्रतिसञ्चरे ।
परस्यान्ते कृतात्मानः प्रविशन्ति परम्पदम् ॥ – कूर्मपुराणम् १।१२।२६९

९६. एवं मुक्तिफलानियमस्तदवस्थावधृतेस्तदवस्थावधृतेः । –ब्रह्मसूत्र ३।४।१७।५२

९७. ब्रह्मवेद ब्रह्मैव भवति । – मुण्डकोपनिषद् ३।२।९

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

# चतुर्थ फलाध्याय

चतुर्थे जीवतो मुक्तिरुत्क्रान्तेर्गतिरुत्तरा ।
ब्रह्मप्राप्तिब्रह्मलोकाविति पादार्थसंग्रहः ॥

## प्रथम पाद

(यस पादमा आवृत्तिदेखि इतरक्षपणसहित १४ अधिकरणहरू छन् । यी अधिकरणहरूमा जीवन्मुक्तिसम्बन्धी निरूपण गरिएको छ ।)

### १. आवृत्त्यधिकरण (ब्रह्मसूत्र ४।१।१।१–२)

शिष्य–

तेस्रो अध्यायमा आयो विद्यासाधन वस्तुतः ।
चारौँ अध्यायले भन्छ विद्याको फल तत्त्वतः ॥१॥

अरू विषयका साथै विभिन्न मार्गको पनि ।
विभिन्न पादमा होला विचार क्रमले अनि ॥२॥

केही साधनको हुन्छ विचार पहिले अब ।
[1]'आत्मा' [2]'तमेव' [3]'सोऽन्वेष्ट' मन्त्रले भन्दछन् सब ॥३॥

श्रुति श्रोतव्य, द्रष्टव्य, विज्ञाय भन्दछन् जुन ।
सकृत् श्रवण गर्ने हो ? यद्वा हो असकृत् कुन ? ॥४॥

यस सन्देहमा वादी सकृत् प्रत्यय भन्दछन् ।
प्रयाजादिसरी शास्त्र यल्ले कृतार्थ बन्दछन् ॥५॥

१. आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यः ।
– बृहदारण्यकोपनिषद् ४।५।६

२. तमेव धीरो विज्ञाय प्रज्ञां कुर्वीत ब्राह्मणः । – बृहदारण्यकोपनिषद् ४।४।२१

३. सोऽन्वेष्टव्यः स विजिज्ञासितव्यः । – छान्दोग्योपनिषद् ८।७।१

'श्रोतव्य' आदिमा छैन आवृत्ति उपदेशको ।
[४]सकृत् श्रवण गर्दा नै मान्यता हुन्छ शास्त्रको ॥६॥

आवृत्ति श्रुत नै छैन 'उपासीत' र 'वेद' छ ।
शास्त्रविरुद्ध यो हुन्छ आवृत्ति जब बन्दछ ॥७॥

वादीको यसरी आयो सकृत् प्रत्यय यो भनी ।
सकृत् हो ? गुरुजी ! भन्नोस् असकृत् ? कुन हो ? अनि ॥८॥

गुरु–

आवृत्ति गर्नु नै पर्छ सधैँ प्रत्ययको भनी ।
'श्रोतव्यः' आदिको गर्छ श्रुतिले उपदेश नि ॥९॥

[५]आवृत्ति गर्नु नै पर्छ त्यो साक्षात्कारका तक ।
जस्तै कुटिन्छ नै धान चामलै नहुँदातक ॥१०॥

[६]उपास् [७]विद् धातुका अर्थ वेदान्तमा समान ती ।
उपक्रम गरी विद्ले उपास्ले गर्छ संहृति ॥११॥

हुन्छ उपक्रम त्यस्तै [८]उपास्बाट कतै जब ।
उपसंहार नै गर्छ विद्ले नै अन्तमा तब ॥१२॥

सकृत्मा पनि आवृत्ति यसरी हुन आउँछ ।
असकृत्मा त आवृत्ति सूत्रले नै बताउँछ ॥१३॥

---

४. सकृत्कृते कृतः शास्त्रार्थः । सकृत्प्रत्ययः स्यात् प्रयाजादिवत्, तावता शास्त्रस्य कृतार्थत्वात् । – शाङ्करभाष्य, ब्रह्मसूत्र ४।१।१।१

५. दर्शनपर्यवसानानि हि श्रवणादीन्यावर्त्यमानानि दृष्टार्थानि भवन्ति, यथाऽवघातादीनि तण्डुलादिनिष्पत्ति पर्यवसानानि, तद्वत् ।
– शाङ्करभाष्य, ब्रह्मसूत्र ४।१।१।१

६. नु म एतां भगवो देवतां शाधि यां देवतामुपास्से । – छान्दोग्योपनिषद् ४।२।२

७. यस्तद्वेद यत्स वेद स मयैतदुक्तम् । – छान्दोग्योपनिषद् ४।१।४

अहङ्ग्रह उपास्ति र श्रवणादिकमा पनि ।
त्यो आवृत्ति हुने गर्छ भन्दछ [९]श्रुतिले पनि ॥१४॥

त्यसैकारण वादीका पूर्वोक्त उपदेशमा ।
आवृत्ति सिद्ध नै हुन्छ, जो प्रसिद्धै छ वेदमा ॥१५॥

समर्थनिम्ति आवृत्ति चाहिन्न, असमर्थमा ।
गरिएको छ नौपल्ट [१०]उपदेश छ वेदमा ॥१६॥

आत्मा निरंश हो जान्न अति मुश्किल पर्दछ ।
उपदेश त्यसैले नै असकृत् गर्नु युक्त छ ॥१७॥

[११]आत्मामा जो छ सन्तुष्ट आत्मामा जो रमाउँछ ।
त्यस्ता आत्मज्ञका लागि उपदेश निरर्थ छ ॥१८॥

दृष्ट फल जहाँ हुन्छ अदृष्टपरिकल्पना ।
गर्नु कैल्यै हुँदै हुन्न त्यो हुन्छ आत्मवञ्चना ॥१९॥

जो [१२]मन्दमति यद्वा जो प्रतिभाहीन शिष्य छ ।
उपदेश त्यसैनिम्ति आवृत्ति गर्नुपर्दछ ॥२०॥

---

८. मनो ब्रह्मेत्युपासीत । – छान्दोग्योपनिषद् ३।१८।१
९. क. भाति च तपति च कीर्त्या यशसा ब्रह्मवर्चसेन य एवं वेद ।
– छान्दोग्योपनिषद् ३।१८।३
ख. आदित्य उद्गीथः । रश्मींस्त्वं पर्यावर्तयात् । – छान्दोग्योपनिषद् १।५।१,२
१०. तत्त्वमसि श्वेतकेतो, भूय एव मा भगवान् विज्ञापयतु । – छान्दोग्योपनिषद् ६।८।७
११. क. यस्त्वात्मरतिरेव स्यादात्मतृप्तश्च मानवः ।
आत्मन्येव च सन्तुष्टस्तस्य कार्यं नविद्यते ॥– श्रीमद्भगवद्गीता ३।१७
ख. किं प्रजया करिष्यामो येषां नोऽयमात्मायं लोकः ।
– बृहदारण्यकोपनिषद् ४।४।२२
१२. यस्तु स्वयमेव मन्दमतिरप्रतिभानात् तं वाक्यार्थं जिहासेत् तस्यैतस्मिन्नेव वाक्यार्थे स्थिरीकार आवृत्त्यादिवाचोवाचोयुक्तयाऽभ्युपेयते, तस्मात् परब्रह्मविषयेऽपि प्रत्यये तदुपायोपदेशेष्वावृत्तिसिद्धः । – शाङ्करभाष्य, ब्रह्मसूत्र ४।१।१।२

असकृत् गर्नुपर्दैन उपदेश भनीकन।
वादीको मत जो आयो त्यसको हुन्छ खण्डन ॥२०॥

त्यसैकारणले साक्षात् ब्रह्मसम्बद्ध बोधमा।
आवृत्ति गर्नु नै पर्छ भन्ने भो सिद्ध अन्तमा ॥२१॥

दुई छन् यसमा [१३]सूत्र दुवै सूत्रानुसारतः।
आवृत्तिरसकृत् भन्छन् श्रुतिका अनुसारतः ॥२२॥



## २. आत्मत्वोपासनाधिकरण (ब्रह्मसूत्र ४।१।२।३)

शिष्य –

श्रुतिले ब्रह्मको ज्ञान गर्नू भन्दछ नै जुन।
आत्मत्वेन ? पृथक्त्वेन ? गर्ने हो ? यिनमा कुन ? ॥२३॥

सन्देह यसमा आयो वादीले तर भन्दछन्।
ब्रह्मज्ञान पृथक्त्वेन गर्नु नै युक्त मान्दछन् ॥२४॥

ब्रह्म मै हुँ भनी जान्दा अयोग्य हुन सक्तछ।
पाप्मादिदोषयुक्तात्मा कसरी ब्रह्म बन्दछ ॥२५॥

प्रतिमा आदिमा साक्षात् विष्णुदर्शनझैँ गरी।
अहं ब्रह्म भनी गर्नु भावना हो त्यसैसरी ॥२६॥

अतः जीव र आत्माको एकत्व छैन सम्भव।
यसरी पूर्वपक्षीले भन्दछन् छैन सम्भव ॥२७॥

आज्ञा होस् गुरुजी ! ब्रह्म जीवैकत्व कसै पनि।
कहिल्यै हुन सक्तैन ? श्रुतिले भन्छ के अनि ? ॥२८॥

---

१३. आवृत्तिरसकृदुपदेशात्। – ब्रह्मसूत्र ४।१।१।१–२

गुरु–

म [१४]ब्रह्म हुँ भनी गर्नू भावना शास्त्रसम्मत ।
तिमी म [१५]म तिमी भन्नु यही हो श्रुतिको मत ॥२९॥

वेदान्तवाक्यले गर्छन् ती आत्मैकत्ववर्णन ।
[१६]आत्मा सर्वान्तरै नै हो [१७]तिमी सत् चित् सनातन ॥२९॥

विष्णुप्रतीकको न्याय यो गौणत्वप्रसङ्ग हो ।
त्यो ! [१८]'मनो ब्रह्म' इत्यादि उपासनार्थ मात्र हो ॥३०॥

तिमी म म तिमी भन्ने यही अभेददृष्टि हो ।
तिमी भिन्न [१९]म भिन्नै हुँ भन्ने यो भेददृष्टि हो ॥३१॥

ब्रह्मविद् यसरी कोही भेदको दृष्टि गर्दछ ।
[२०]मर्ने परम्परा त्यल्ले सधैँ अक्षुण्ण राख्तछ ॥३२॥

[२१]आत्मादेखि सबै भिन्न भनेर जुन मान्दछ ।
त्यो श्रेयोमार्गका देखि सर्वदा भ्रष्ट बन्दछ ॥३३॥

प्रबोधपूर्व जीवात्मा प्रपञ्च द्वैत मान्दछ ।
[२२]आत्मै आत्मा जसै देख्छ कल्ले को अनि देख्तछ ? ॥३४॥

---

१४. अहं ब्रह्मास्मि । – बृहदारण्यकोपनिषद् १।४।११
१५. त्वं वा अहमस्मि भगवो देवतेऽहं वै त्वमसि भगवो देवते, इति । – जाबालोपनिषद्
१६. एष त आत्मा सर्वान्तरः । – बृहदारण्यकोपनिषद् ३।४।१
१७. तत्सत्यं स आत्मा तत्त्वमसि । – छान्दोग्योपनिषद् ६।८।७
१८. मनो ब्रह्म, आदित्यो ब्रह्म । – छान्दोग्योपनिषद् ३।१८।१
१९. अथ योऽन्यां देवतामुपास्तेऽन्योऽसावन्योऽहमस्मीति न स वेद ।
– बृहदारण्यकोपनिषद् १।४।१०
२०. मनसैवानुद्रष्टव्यं नेह नानास्ति किञ्चन ।
मृत्योः स मृत्युमाप्नोति य इह नानेव पश्यति ॥ – बृहदारण्यकोपनिषद् ४।४।१९
२१. सर्वं तं परादाद्योऽन्यत्रात्मनः सर्वं वेद । – बृहदारण्यकोपनिषद् ४।५।७
२२. यत्र त्वस्य सर्वमात्मैवाभूत्तत्केन कं पश्येत् । – बृहदारण्यकोपनिषद् २।४।१४

प्रपञ्च दृश्य संसार सारा बाध भई जब ।
अभाव श्रुतिको हुन्छ भन्छौ हो इष्ट नै तब ॥३५॥

[२३]सुषुप्तिमा पिता हुन्नन् माता हुन्नन् भनीकन ।
अन्तमा श्रुतिले वेदा अवेदा गर्छ शंसन ॥३६॥

अज्ञानवश यो हुन्छ भन्छौ यो पनि युक्त हो ।
तिम्रै अज्ञानले हुन्छ बुझ्नु यो उपयुक्त हो ॥३७॥

अहं [२४]ब्रह्मास्मिको भाव राखे अज्ञान हट्तछ ।
पैले ब्रह्म थियो ज्ञानी फेरि त्यो ब्रह्म बन्दछ ॥३८॥

अतः [२५]आत्मत्वरूपेण ब्रह्म नै ग्राह्य हो भनी ।
अन्ततः श्रुतिले गर्छ यही निश्चय नै अनि ॥३९॥

यसमा [२६]सूत्र यौटै छ अन्तमा यसले पनि ।
आत्मा नै ब्रह्म हो भन्दै भन्छ 'तत्वमसि' अनि ॥४०॥



---

२३. अत्र पिताऽपिता भवति मातामाता लोका अलोका देवा अदेवा वेदा अवेदाः ।
— बृहदारण्यकोपनिषद् ४।३।२२

२४. अहं ब्रह्मास्मि । — बृहदारण्यकोपनिषद् १।४।१०

२५. न तस्य प्राणा उत्क्रामन्त्यत्रैव समवलीयन्ते ब्रह्म सन् ब्रह्माप्येति ।
— नृसिंहोत्तरतापनीयोपनिषद् ५

२६. आत्मेति तूपगच्छन्ति ग्राहयन्ति च । — ब्रह्मसूत्र ४।१।३।३

## ३. प्रतीकाधिकरण (ब्रह्मसूत्र ४।१।३।४)

शिष्य–

[२७]'मनो ब्रह्म' र [२८]'आदित्यो ब्रह्म' आदि भनीकन ।
प्रतीकोपासनानिम्ति श्रुतिले भन्छ यो जुन ॥४१॥

सन्देह यसमा आयो ती सबैमा गईकन ।
गर्नु ग्रहण आत्माको हुन्छ ? हुन्न ? भनीकन ॥४२॥

यसमा भन्दछन् वादी आत्मग्रहण युक्त छ ।
किनकि श्रुतिमा ब्रह्म आत्मत्वेन प्रसिद्ध छ ॥४३॥

प्रतीक पनि हो खास विकार ब्रह्मको जब ।
ब्रह्मत्व त्यसमा हुन्छ आत्मबुद्धि छ सम्भव ॥४४॥

यसमा भन्नुहोस् ब्रह्मन् ! वादीको मत युक्त हो ?
यदि हैन भने भन्नोस् कुन सिद्धान्त युक्त हो ? ॥४५॥

गुरु–

प्रतीकमा कसै गर्न आत्मबुद्धि असम्भव ।
व्यस्त प्रतीक सारामा कसरी हुन्छ ? सम्भव ॥४६॥

ब्रह्मवैकार्य भाकाले प्रतीक ब्रह्म हो अनि ।
प्रतीक जब भो ब्रह्म आत्मा ब्रह्म स्वयं भनी ॥४७॥

वादीको मत सर्वांश बुझ सौम्य ! अयुक्त हो ।
यो ता प्रतीकको सोझै अभावको प्रसङ्ग हो ॥४८॥

---

२७. मनो ब्रह्मेत्युपासीतेत्यध्यात्ममथाधिदैवतमाकाशो ब्रह्मेति ।
– छान्दोग्योपनिषद् ३।१८।१

२८. आदित्यो ब्रह्मेत्यादेशः । स यो नाम ब्रह्मेत्युपास्ते ।
– छान्दोग्योपनिषद् ३।१९।१, ७।१।५

विकारनाशका पश्चात् नामादि ब्रह्म हो तर ।
नामादिनाशका पश्चात् प्रतीकत्व रहन्छ र ? ॥४९॥

त्यसैकारणले हुन्न आत्मदृष्टि प्रतीकमा ।
ब्रह्म आत्मा हुँदा हुन्न आत्मदृष्टिप्रकल्पन ॥५०॥

नत्र कर्तृत्व भोक्तृत्व हट्न मुश्किल ती सब ।
कर्तृत्वादि हटेपश्चात् ब्रह्मै आत्मा छ सम्भव ॥५१॥

हटे विकार मायाका ब्रह्म आत्मा भनीकन ।
उपदेश हुने गर्छ उपास्ति हुन्न शंसन ॥५२॥

अतः प्रतीकका साथ समानता भयो जब ।
प्रतीकमा कबै हुन्न आत्मग्रहण सम्भव ॥५३॥

भिन्न रुचक हो स्वर्ण भिन्न स्वस्तिक हो सुन ।
सुवर्णात्मक दोटै हुन् त्यसैले एक हुन् जुन ॥५४॥

त्यस्तै प्रतीक फेरि त्यो उपासक दुवै जब ।
बनेमा ब्रह्म, नासिन्छ प्रतीक अन्तमा तब ॥५५॥

त्यसैकारणले हुन्न आत्मदृष्टि प्रतीकमा ।
भयो अद्वैतसिद्धान्त गई स्थापित अन्तमा ॥५६॥

[२९]यसमा सूत्र यौटै छ यसले भन्छ अन्ततः ।
ब्रह्मदृष्टि प्रतीकैमा हुन सक्तैन तत्त्वतः ॥५७॥



२९. न प्रतीके न हि सः । –ब्रह्मसूत्र ४।१।३।४

## ४. ब्रह्मदृष्ट्यधिकरण (ब्रह्मसूत्र ४।१।४।५)

शिष्य–

आदित्य आदि दृष्टिको गर्नू अध्यास ब्रह्ममा।
हुन्छ ? या ब्रह्मदृष्टिको अध्यासादित्य आदिमा ? ॥५८॥

सन्देह यसमा आयो कहाँ ? के कुन दृष्टिको ?
अध्यास गर्नु हो युक्त ? यद्वा नगर्नु युक्त हो ? ॥५९॥

यसमा भन्दछन् वादी नियमै छैन शास्त्रमा।
आदित्यादिकको दृष्टि गर्नुपर्दछ ब्रह्ममा ॥६०॥

आदित्यदृष्टिले हुन्छ सत् चित् ब्रह्म उपासित।
प्रयोजनवती हुन्छ उपास्ति शास्त्रसम्मत ॥६१॥

वादीको यसरी आयो दोधारे रूपको मत।
अद्वैतमत हे ब्रह्मन् ! सुन्न पाऊँ म तत्त्वतः ॥६२॥

गुरु–

आदित्यमा ब्रह्मदृष्टि गर्नु उत्कर्ष बन्दछ।
उत्कृष्ट दृष्टि गर्दा नै त्यस्मा अध्यास बन्दछ ॥६३॥

लोकमा पनि देखिन्छ यस्तो चलन गैकन।
सिपाहीकन साहेब भन्नुजस्तै भईकन ॥६३॥

सिपीमा रजतैतुल्य आदित्य ब्रह्मरूप हुन्।
वाक्यशेष द्वितीया भै व्याप्त आदित्य आदि हुन् ॥६४॥

उपासनार्थ अध्यास 'यो [३०]वाचम्' [३१]'स य' [३२]'यः' सब ।
आदित्यब्रह्म सम्झेर गर्ने उपासना तब ॥६५॥

यो ब्रह्मोपासना हैन आदित्यको उपास्ति हो ।
ब्रह्म हो फलको दाता सर्वाध्यक्ष त ब्रह्म हो ॥६६॥

पैलेकै [३३]सूत्रमा सौम्य ! यसको सूक्ष्म वर्णन ।
भएको छ र सोको नै यहाँ भो मात्र सूचन ॥६७॥

यहाँ हो ब्रह्मको जो त्यो उपास्यत्व छ शंसन ।
प्रतिमा आदिमा जस्तै विष्ण्वादि अधिरोपण ॥६८॥

प्रतिमा आदिमा जस्तै विष्ण्वादि अधिरोपण ।
अध्यारोपण हो त्यस्तै ब्रह्मदृष्टि प्रतीकमा ॥६९॥

यसमा [३४]सूत्र यौटै छ यसले पनि भन्दछ ।
त्यो अब्रह्म प्रतीकैमा ब्रह्मधी गर्नुपर्दछ ॥७०॥



३०. यो वाचं ब्रह्मेत्युपास्ते । –छान्दोग्योपनिषद् ७।२।२
३१. स य एतमेव विद्वानादित्यं ब्रह्मेत्युपास्ते । – छान्दोग्योपनिषद् ३।१९।४
३२. यः सङ्कल्पं ब्रह्मेत्युपास्ते । – छान्दोग्योपनिषद् ७।४।३
३३. फलमत उपपत्ते । – ब्रह्मसूत्र ३।२।८।३८
३४. ब्रह्मदृष्टिरुत्कर्षात् । – ब्रह्मसूत्र ४।१।४।५

## ५. आदित्यादिमत्यधिकरण (ब्रह्मसूत्र ४।१।५।६)

शिष्य–

[३५]'य एव' [३६]'वाचि' [३७]'लोकेषु' [३८]'इयमेव' भनीकन ।
आको आदित्य आदिमा हो अङ्गदृष्टि वा कुन ? ॥७१॥

अङ्गादिमा कि गर्ने हो ? आदित्यदृष्टि वा ? भनी ।
आयो सन्देह पैलो यो जिज्ञासा अति नै बनी ॥७२॥

वादीले यसमा भन्छन् कोही छैन नियामक ।
साक्षात् नियमका साथै यसको छैन कारण ॥७३॥

दुवै प्रतीकमा खास छैन वैशिष्ट्य नै कुनै ।
यथाभिमतको दृष्टि सकिन्छ गर्न जो कुनै ॥७४॥

वादीको मत हे ब्रह्मन् ! युक्त हो वा अयुक्त हो ?
भन्नुहोस् कुन सिद्धान्त स्वीकार्य उपयुक्त हो ? ॥७५॥

गुरु–

वादीको मत देखिन्न युक्त तस्मात् अयुक्त हो ।
अद्वैतमत हो युक्त त्यही सिद्धान्त युक्त हो ॥७६॥

आदित्यादिक दृष्टिले अङ्गसंस्कार भैकन ।
कर्मका फलमा हुन्छ त्यो अतिशय गैकन ॥७७॥

फलप्राप्ति हुँदै हुन्न यस्को उल्टो भयो भने ।
कर्माङ्गबाट आदित्य द्यौता संस्कार भो भने ॥७८॥

३५. य एवासौ तपति तमुद्गीथमुपासीत । – छान्दोग्योपनिषद् १।३।१
३६. वाचि सप्तविधं सामोपासीत । – छान्दोग्योपनिषद् २।८।१
३७. लोकेषु पञ्चविधं सामोपासीत । – छान्दोग्योपनिषद् २।२।१
३८. इयमेवर्गग्निः साम । – छान्दोग्योपनिषद् १।६।१

फल साधक नै हुन्नन् अक्रियात्मक देवता ।
यज्ञ गर्ने नगर्नेले समान फल पाउला ।।७९।।

अतः ती अङ्ग सारामा आदित्य आदि दृष्टिको ।
आधान हुनु नै पर्छ यही सिद्धान्त हो निको ।।८०।।

अतः अनङ्ग आश्रित्य आदित्य आदि बुद्धिको ।
उद्गीथ आदि अङ्गैमा गर्ने सिद्धान्त हो निको ।।८१।।

यसमा [३९]सूत्रले भन्छ उद्गीथ कर्म अङ्गमा ।
आदित्य आदि सद्बुद्धि कर्मसंवृद्धि निम्तिमा ।।८२।।



## ६. आसीनाधिकरण (ब्रह्मसूत्र ४।१।६।७–१०)

शिष्य–

कर्मका अङ्गका साथ जो छन् उपासनाहरू ।
कर्माधीन हुँदा हुन्नन् आसनादि कुनै अरू ।।८३।।

यस्को विचार नै छैन सम्यग्दर्शनमा पनि ।
अर्थात् विज्ञान वस्तुका हुनन् अधीनमा अनि ।।८४।।

के त्यो उपासना गर्दा बसी, उठी कि ! वा सुती ।
कुनै नियम नै छैन ? यद्वा छ ? कि ! कुनै स्थिति ।।८५।।

भन्छन् उपासनावादी त्यो मानसिक कार्य हो ।
शारीरस्थिति चाहिन्न विनानियम कार्य हो ।। ८६।।

---

३९. आदित्यादिमतयश्चाङ्ग उपपत्तेः । –ब्रह्मसूत्र ४।१।५।६

गुरु–

बसेर गर्नु नै पर्छ सधैँभरि उपासना ।
एकै प्रत्ययको गर्नु प्रवाह हो उपासना ॥८७॥

हिँडे र वा कि ! दौडेर हुन सक्तैन सम्भव ।
गतिले चित्तविक्षेप गर्छ ध्यान असम्भव ॥८८॥

[40]'ध्यायतीव' भनी आयो श्रुतिमा जुन शंसन ।
स्थिरताका अपेक्षाले आसीन हो उपासना ॥८९॥

[41]'शुचौ देशे' भनेको छ स्मृतिले स्थिर आसन ।
पद्मकादिक नै गर्नू योगले भन्छ आसन ॥९०॥

ध्यानोपासन ती गर्दा बसेर गर्नुपर्दछ ।
आयास गर्नुपर्दैन स्थिरत्व पनि बन्दछ ॥९१॥

परिशेषत्वले गर्दा बसेर नै उपासना ।
गर्नुपर्दछ, वादीको मतको हुन्छ खण्डन ॥९२॥

चार छन् यसमा [42]सूत्र सबैको एउटै मतः ।
स्थिर आसन हो गर्ने यही हो शास्त्रसम्मत ॥९३॥



## ७. एकाग्रताधिकरण (ब्रह्मसूत्र ४।१।७।११)

शिष्य–

के त्यो उपासना गर्दा दिक् देश काल आदिको ।
कुनै नियम चाहिन्छ ? यद्वा चाहिन्न ? ती कुनै ॥९४॥

---

४०. ध्यायतीव पृथिवी । –बृहदारण्यकोपनिषद् ७।६।१
४१. शुचौ देशे प्रतिष्ठाप्य स्थिरमासनमात्मनः । –गीता ६।११
४२. आसीनः सम्भवात् । – ब्रह्मसूत्र ४।१।६।७–१०

सन्देह यसमा आयो वादीले भन्दछन् तब ।
श्रौत्रादि कर्ममा हामी देख्छौँ नियम यी सब ॥९५॥

अतः वैदिकबाहेक सामान्य कर्ममा पनि ।
दिगादि नियमै सारा लागू हुन्छन् त्यहाँ अनि ॥९६॥

यसरी पूर्वपक्षीको आयो नियममा मत ।
भन्नुहोस् मत वादीको के हो त्यो ? शास्त्रसम्मत ॥९७॥

गुरु–
सामान्यरूपमा हुन्छ ऐकाग्र्य नै उपास्तिमा ।
दिगादिनियमै छैन सम्पूर्ण [४३]श्रौत कर्ममा ॥९८॥

यस्तो नियम देखिन्छ तथापि यो विशेषमा ।
कुनै नियम नै छैन भन्छन् [४४]आचार्य अन्तमा ॥९९॥

खासै नियम नै छैन मन एकाग्र हो जहाँ ।
उपासना त्यहीँ गर्नू भन्दछ [४५]श्रुतिले त्यहाँ ॥१००॥

यसमा [४६]सूत्र यौटै छ त्यसले भन्छ नै यही ।
एकाग्रमन जाँ हुन्छ गर्नु उपासना त्यहीँ ॥१०१॥



४३. समे शुचौ शर्करावह्निवालुका विवर्जिते शब्दजालाश्रयादिभिः ।
– श्वेताश्वतरोपनिषद् २।१०

४४. सति त्वेतस्मिंस्तद्गतेषु विशेषेष्वनियम इति सुहृद् भूत्वाऽऽचार्य आचष्टे ।
– शाङ्करभाष्य, ब्रह्मसूत्र ४।१।७।११

४५. 'मनोऽनुकूले' इति चैषा श्रुतिर्यत्रैकाग्रतां तत्रैवेत्येतदेव दर्शयति ।
– शाङ्करभाष्य, ब्रह्मसूत्र ४।१।७।११

४६. यत्रैकाग्रता तत्राविशेषात् । – ब्रह्मसूत्र ४।१।७।११

## ८. आप्रायाणाधिकरण (ब्रह्मसूत्र ४।१।८।१२)

शिष्य–

गर्ने उपास्ति आवृत्ति ? यद्वा इच्छानुसारले ?
यद्वा मरणपर्यन्त गर्ने हो कि ! मनुष्यले ॥१०२॥

सन्देह यसरी आयो वादीले भन्दछन् तर ।
केही समय आवृत्ति गरेर छोड्नु सुन्दर ॥१०३॥

गर्नुपर्दैन आवृत्ति मृत्युसम्म भनीकन ।
वादीको मत आयो त्यो अभ्र सङ्कित भो मन ॥१०४॥

आज्ञा होस् गुरुजी ! गर्ने आवृत्ति के उपासना ?
इच्छानुसार गर्ने वा ? आमृत्यु वा ? उपासना ? ॥१०५॥

गुरु–

मृत्युपर्यन्त नै गर्नू आवृत्ति त्यो उपासना ।
अन्त प्रत्ययबाटै नै अदृष्ट फल पाउला ॥१०६॥

अन्यान्य जन्ममा भोग्य उत्पन्न फलको गरी ।
भावनाप्रोत [४७]विज्ञान फल पाइन्छ जो मरी ॥१०७॥

मर्ने समयमा [४८]जस्तो चित्त बन्छ त्यसैगरी ।
त्यल्ले इन्द्रियका साथ सत्प्राणवृत्ति पाउला ॥१०८॥

इत्यादि श्रुतिका साथै तृणजलूक-दृष्टिले ।
मृत्युपर्यन्त आवृत्ति गर्नुपर्छ मनुष्यले ॥१०९॥

---

४७. सविज्ञानो भवति सविज्ञानमेवान्वक्रमति । – श्रुतिः

४८. यच्चित्तस्तेनैष प्राणमायाति, प्राणस्तेजसा युक्तः सहात्मना यथासङ्कल्पितं लोकं नयति इति चैवमादिश्रुतिभ्यः । –ब्रह्मसूत्र, शाङ्करभाष्य

[४९]'स यावत्' श्रुतिका साथै [५०]'यं यं वा' स्मृतिले पनि ।
मर्दामा भाव जस्तो छ त्यस्तै नै पाउला भनी ॥११०॥

[५१]प्रयाणकालमा मान्छे अचल मन लीकन ।
गरोस् स्मरण यी [५२]तीन अति शान्त भईकन ॥१११॥

'सदा तद्भाव' इत्यादि प्रमाणले गरीकन ।
अन्त प्रत्ययले हुन्छ भावी जन्म गईकन ॥११२॥

यसैले त्यसकै लागि आवृत्ति मृत्यु नै तक ।
गर्नुपर्छ भनी सिद्ध भयो सिद्धान्त वैदिक ॥११३॥

यसमा [५३]सूत्र यौटै छ यसले पनि भन्दछ ।
आवृत्ति मृत्युपर्यन्त गर्नुपर्दछ भन्दछ ॥११४॥



## ९. तदधिगमाधिकरण (ब्रह्मसूत्र ४।१।९।१३)

शिष्य–

ब्रह्मज्ञान भएपश्चात् दुरितादिहरू क्षय ।
हुन्छन् ? वा अथवा हुन्नन् ? हुन गो अति संशय ॥११५॥

---

४९. स यावत्क्रतुरयमस्माल्लोकात्प्रैति ।

५०. यं यं वाऽपि स्मरन् भावं त्यजत्यन्ते कलेवरम् ।
तं तमेवैति कौन्तेय सदा तद्भावभावितः ॥ – श्रीमद्भगवद्गीता ८।६

५१. प्रयाणकाले मनसाऽचलेन । – श्रीमद्भगवद्गीता ८।१०

५२. सोऽन्तवेलायामेतत्त्रयं (अक्षितमसि, अच्युतमसि, प्राणसंशितमसि) । – श्रुतिः

५३. आ प्रायणात्तत्रापि हि दृष्टम् । – ब्रह्मसूत्र ४।१।८।१२

वादीले भन्दछन् कर्म नभोगीकन सङ्क्षय ।
ज्ञानीका हुन सक्तैनन् यही हो [५४]शास्त्रनिश्चय ॥११६॥

देशकालनिमित्तादि-अपेक्षा मोक्ष राख्तछ ।
ब्रह्मप्राप्ति हुँदैमा नै हुँदैन पापको क्षय ॥११७॥

गुरु–
[५५]ब्रह्मज्ञान जसै हुन्छ पैलेका पाप ती सब ।
नासिन्छन्, आउने पाप अश्लेष बन्दछन् तब ॥११८॥

[५६]पद्मका पातमा पानी टाँसिन्न जसरी जब ।
ज्ञानीका चित्तमा त्यस्तै टाँसिन्नन् पाप ती तब ॥११९॥

[५७]जसरी मुञ्जको तूल आगामा पूर्ण जल्दछ ।
त्यस्तै ब्रह्मज्ञको पाप ज्ञानले भस्म बन्दछ ॥१२०॥

[५८]सम्पूर्ण कर्म नासिन्छन् हृदयग्रन्थी फुट्नतछन् ।
ब्रह्मज्ञान जसै हुन्छ सारा संशय छुट्नतछन् ॥१२१॥

'नहि कर्माणि क्षीयन्ते' यो औत्सर्गिक हो स्मृति ।
[५९]प्रायश्चित्तादिले हुन्छ सम्पूर्ण कर्मको क्षति ॥१२२॥

---

५४. नहि कर्माणि क्षीयन्ते । नाभुक्तं क्षीयते कर्म कल्पकोटिशतैरपि ।
– महाभारत, शान्तिपर्व २४२।७
५५. एवमेवं विदि पापं कर्म न श्लिष्यते । – छान्दोग्योपनिषद् ४।१४।३
५६. यथा पुष्करपलाश आपो न श्लिष्यन्ते । – छान्दोग्योपनिषद् ४।१४।३
५७. तद्यथेषीकातूलमग्नौ प्रोतं प्रदूयेतैवं हास्य सर्वे पाप्मानः प्रदूयन्ते ।
– छान्दोग्योपनिषद् ५।२४।३
५८. भिद्यते हृदय ग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ।
क्षीयन्ते चास्य कर्माणि तस्मिन् दृष्टे परावरे ॥ – मुण्डकोपनिषद् २।२।८
५९. सर्वं पाप्मानं तरति, तरति ब्रह्महत्यां योऽश्वमेधेन यजते य उ चैनमेवं वेद । – श्रुतिः

ब्रह्मज्ञान जसै हुन्छ पापादि नष्ट बन्दछन् ।
श्रुतिस्मृति पुराणादि यै हो सिद्धान्त भन्दछन् ॥१२३॥

यसमा [६०]सूत्र यौटै छ यसले भन्छ शास्त्रतः ।
ब्रह्मज्ञान जसै हुन्छ नासिन्छन् पाप अन्ततः ॥१२४॥



## १०. इतरासंश्लेषाधिकरण (ब्रह्मसूत्र ४।१।१०।१४)

शिष्य–

पुण्यले हुन्छ ? वा हुन्न ? ज्ञानी लिप्त भनीकन ।
उत्पन्न हुन गो शङ्का जिज्ञासायुक्त भो मन ॥१२५॥

वादीले भन्दछन् ज्ञानी पुण्यले लिप्त बन्छ जो ।
श्रौत्रादि पुण्यका साथ विरोध हैन बोधको ॥१२६॥

वादीको मत हो युक्त ? अथवा त्यो अयुक्त हो ?
आज्ञा होस् गुरुजी ! स्पष्ट कुन सिद्धान्त युक्त हो ? ॥१२७॥

पूर्वाधिकरणन्यायद्वारातिदेश लीकन ।
त्यसमा गुरुले गर्छन् अद्वैतमतशंसन ॥१२८॥

गुरु–

ज्ञानीका पुण्यकर्मादि पापजस्तै गरीकन ।
विनाश अनि अश्लेष बन्दछन् सब तत्क्षण ॥१२९॥

सुकृतादिक साराको नाश हुन्छ भनीकन ।
जो [६१]'उ हैवैष' का द्वारा श्रुतिले गर्छ सूचन ॥१३०॥

६०. तदधिगम उत्तरपूर्वाघयोरश्लेष विनाशौ तद्व्यपदेशात् । – ब्रह्मसूत्र ४।१।१०।१३
६१. उ हैवैष एते तरति । – बृहदारण्यकोपनिषद् ४।४।२२

आत्मा शुद्ध अकर्ता हो भन्ने बोध भयो जब ।
पुण्यपापहरू सारा जान्छन् नाश भई तब ॥१३१॥

त्यो पापशब्दले पुण्यसमेत लिनुपर्दछ ।
'हैवैष' श्रुतिले सोझै सोही सङ्केत गर्दछ ॥१३२॥

विद्यासामर्थ्यले गर्दा बन्धका हेतु छन् जुन ।
अधर्म धर्मको हुन्छ अश्लेष नाश तत्क्षण ॥१३३॥

देह [62]पात जसै हुन्छ ज्ञानी मुक्त भईकन ।
जान्छन् ती श्रुतिले भन्छ बनी ब्रह्म सनातन ॥१३४॥

यसमा [63]सूत्र यौटै छ यसले भन्छ अन्ततः ।
ज्ञानीका पुण्यपापादि बन्दैनन् लिप्त तत्त्वतः ॥१३५॥



## ११. अनारब्धाधिकरण (ब्रह्मसूत्र ४।१।११।१५)

शिष्य–

ज्ञानीका पुण्यपापादि नष्ट हुन्छन् भनीकन ।
माथि नै भनियो आयो सन्देह यसमा पुनः ॥१३६॥

कार्यारम्भ भयो जस्को भएको छैन जो अनि ।
ती दुवै पुण्यपापादि हुन्छन् नाश ? कि ! हुन्न ? नि ॥१३७॥

वादीले यसमा भन्छन् समानरूपले गरी ।
अनारब्ध र आरब्ध नाशिन्छन् ती दुवैथरी ॥१३८॥

---

६२. आचार्यवान् पुरुषो वेद । तस्य तावदेव चिरं यावन्न विमोक्ष्येऽथसम्पत्स्य इति ।
– छान्दोग्योपनिषद् ६।१४।२

६३. इतरस्याप्येवमश्लेषः पाते तु । ब्रह्मसूत्र –४।१।१०।१४

[64]'उभे उ' श्रुतिले भन्छ पुण्यादि कर्म लक्षण ।
ज्ञानीले दुइटै तर्छ जान्छ मुक्त भईकन ॥१३९॥

यसमा भन्नुहोस् ब्रह्मन् ! अनारब्धक कर्मको ।
नाश हो ? अथवा नाश हुन्न आरब्ध कर्मको ? ॥१४०॥

गुरु –
पूर्वसञ्चितिका साथै ज्ञान-उत्पत्ति-पूर्वको ।
कर्म, प्रारब्धबाहेक हुन्छ नाश समस्तको ॥१४१॥

पुण्यपापादिले सृष्ट आधार ब्रह्मज्ञानको ।
फलभोग नभै नाश हुन्न प्रारब्ध कर्मको ॥१४२॥

[65]ज्ञानीको त्यति नै सम्म विलम्ब हुन्छ मुक्तिको ।
प्रारब्धलब्ध तज्जन्य हुँदैन पात देहको ॥१४३॥

प्रारब्धकर्मको वेग प्रक्षीण न भएतक ।
प्रारब्ध भोग नै हुन्छ मोक्षको प्रतिबन्धक ॥१४४॥

प्रारब्धकर्मले प्राप्त आयु भोगादि ती सब ।
भोगेर मात्र नै हुन्छ ज्ञानीको मुक्ति सम्भव ॥१४५॥

यसमा [66]सूत्र यौटै छ त्यसले पनि भन्दछ ।
त्यो अनारब्ध कर्मैको ज्ञानले भस्म गर्दछ ॥१४६॥



---

६४. उभे उ हैवेष एते तरति । – बृहदारण्यकोपनिषद् ४।४।२२

६५. आचार्यवान् पुरुषो वेद । तस्य तावदेव चिरं यावन्न विमोक्ष्येऽथ सम्पत्स्ये ।
– छान्दोग्योपनिषद् ६।१४।२

६६. अनारब्ध कार्ये एव तु पूर्वे तदवधेः । – ब्रह्मसूत्र ६।१।११।१५

## १२. अग्निहोत्राद्यधिकरण (ब्रह्मसूत्र ४।१।१२।१६–१७)

शिष्य –

अग्निहोत्रादि जो जो छन् नित्यकर्महरू सब ।
सञ्चितकर्मजस्तै नै ज्ञानले डढ्दछन् ? सब ॥१४७॥

वादीले यसमा नित्य अग्निहोत्रादि कर्म ती ।
नासिन्छन् भन्दछन् जस्तै गरेका काम्य कर्म ती ॥१४८॥

यसमा गुरुजी ! भन्नोस् अग्निहोत्रादि कर्म ती ।
नासिन्नन् ? कि ! त नासिन्छन् ? जस्तै सञ्चित कर्म ती ॥१४९॥

गुरु –

केही अंश हुनन् नाश सर्वांशमा भने सब ।
नासिन्नन्, बन्दछन् केही चित्त शुद्ध्यर्थ नै तब ॥१५०॥

सूत्रमा 'तु' छ जो आको आशङ्का हो हटाउन ।
अग्निहोत्रादि हुन् कर्म ब्रह्मज्ञानार्थ साधन ॥१५१॥

ज्ञानको जुन हो कार्य यिनको पनि हो उही ।
[६७]वेदाध्ययन साराले पाउने पनि हो उही ॥१५२॥

इत्यादि श्रुतिमा आयो कर्म साधन हो भनी ।
ज्ञान र कर्ममा किन्तु देखिन्छ भिन्नता पनि ॥१५३॥

हुन्न सगुण विद्यामा कर्तृत्वको निवर्तनै ।
सगुण ज्ञानका पश्चात् अग्निहोत्रादि हुन्छ नै ॥१५४॥

---

६७. तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसानाशकेन ।
– बृहदारण्यकोपनिषद् ४।४।२२

काण्वमा अग्निहोत्रादि हुन्छन् स्वर्गार्थ साधन ।
क्रिया अभीष्ट हो भन्छन् जैमिनि बादरायण ॥१५५॥

तथापि यिनको हुन्छ नाश ज्ञान भएपछि ।
विनाश अनि अश्लेष हुन्छन् ज्ञान भएपछि ॥१५६॥

दुई छन् यसमा [६८]सूत्र यिनले पनि भन्दछन् ।
अग्निहोत्रादिका कर्म ज्ञानसाधन बन्दछन् ॥१५७॥



## १३. विद्याज्ञानसाधनाधिकरण (ब्रह्मसूत्र ४।१।१३।१८)

शिष्य –

उपासनाविशिष्टै जो नित्यकर्महरू पनि ।
विद्यामा उपयोगी ती हुन्छन् ? हुन्नन् ? कि ! वा तिनी ॥१५८॥

यस सन्देहमा वादी उपासनाविशिष्ट नै ।
विद्याका उपयोगी हुन् भन्दछन् नित्यकर्म नै ॥१५९॥

यसमा भन्नुहोस् ब्रह्मन् ! वादीको मत युक्त हो ?
युक्त हैन भने यद्वा सिद्धान्त कुन युक्त हो ? ॥१६०॥

गुरु –

[६९]'यदेव' श्रुतिले भन्छ विद्यायुक्त भईकन ।
श्रद्धा र योगले युक्त भई जो कर्म गर्दछन् ॥१६१॥

अविद्वत्कर्मभन्दा हो यही नै वीर्यवत्तर ।
तथापि हीन विद्याले हो अग्निहोत्र साधन ॥१६२॥

---

६८. अग्निहोत्रादि तु तत्कार्यायैव तद्दर्शनात् । – ब्रह्मसूत्र ४।१।१२।१६–१७

६९. यदेव विद्यया करोति श्रद्धयोपनिषदा तदेव वीर्यवत्तरं भवति ।
– छान्दोग्योपनिषद् १।१।१०

[70]आत्मा उपनिषद्‌द्वारा मात्र त्यो गम्य बन्दछ।
अग्निहोत्रादि विद्याका हेतु हुन् श्रुति भन्दछ ॥१६३॥

विद्यासंयुक्त यद्वा ती विद्याविहीन कर्म हुन्।
दुवै नै मोक्षका निम्ति अग्निहोत्रादि कर्म हुन् ॥१६४॥

ज्ञान-उत्पत्तिका निम्ति ज्ञान-उत्पत्ति-पूर्व जो।
जन्ममा कृत कर्मादिबाट सञ्चित पाप जो ॥१६५॥

ती ब्रह्मज्ञानका हुन्छन् प्रतिबन्धक निश्चय।
अग्निहोत्रादिले हुन्छन् दुरितादिक सङ्क्षय ॥१६६॥

दुरितादि जसै हट्छन् श्रवणादि गरीकन।
तात्पर्य आदि ली श्रौत ती आभ्यन्तर कारण ॥१६७॥

ती सोपासनका साथै कर्म ती निरुपासन।
तारतम्य गरी हुन्छन् विद्याका सब साधन ॥१६८॥

यसमा [71]सूत्र यौटै छ यसले पनि भन्दछ।
त्यो सोपासन सत्कर्म ज्ञानसाधन बन्दछ ॥१६९॥



## १४. इतरक्षपणाधिकरण (ब्रह्मसूत्र ४।१।१४।१९)

शिष्य –

अनेक जन्मको दाता प्रारब्ध कर्मले युत।
कुनै पुरुषको मुक्ति हुन्छ ? वा हुन्न ? शास्त्रतः ॥१७०॥

---

७०. तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन।
– बृहदारण्यकोपनिषद् ४।४।२२

७१. यदेव विद्ययेति हि। – ब्रह्मसूत्र ४।१।१३।१८

वादी –

प्रारब्ध कर्म त्यो हुन्छ फलोन्मुख गई जब ।
विद्यालोप भई हुन्न ज्ञानीको मुक्ति सम्भव ॥१७१॥

यसमा गुरुजी भन्नोस् वादीको मत युक्त हो ?
यदि हैन भने ब्रह्मन् ! कुन सिद्धान्त युक्त हो ? ॥१७२॥

गुरु –

अनारब्धक जो कर्म ज्ञानले नष्ट बन्दछ ।
आरब्ध कर्मको भोग गरेरै नाश बन्दछ ॥१७३॥

[७२]ज्ञानीको त्यति नै सम्म ढिलो हुन्छ गईकन ।
देहपातपछि ज्ञानी जान्छ ब्रह्म भईकन ॥१७४॥

सम्यग्ज्ञान जसै हुन्छ त्यो मिथ्या ज्ञान डढ्दछ ।
प्रारब्ध कर्म भै नाश विद्वान् कैवल्य बन्दछ ॥१७५॥

यसमा [७३]सूत्र यौटै छ यसले पनि भन्दछ ।
भोगी प्रारब्ध नासेर ज्ञानी त्यो मुक्त बन्दछ ॥१७६॥



ब्रह्मसूत्रको चतुर्थ अध्यायको प्रथम पादको कारिका पूरा भयो ।

---

७२. तस्य तावदेव चिरं यावन्न विमोक्ष्येऽथ सम्पत्स्ये ।– छान्दोग्योपनिषद् ६।१४।२
७३. भोगेन त्वितरे क्षपयित्वा सम्पद्यते । – ब्रह्मसूत्र ४।१।१४।१९

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

## चतुर्थ अध्याय

## दोस्रो पाद

(यस पादमा वाक्‌देखि दक्षिणायनसहित ११ अधिकरणहरू छन् । यी अधिकरणहरूमा उत्क्रान्तिगतिको निरूपण गरिएको छ ।)

### १. वागधिकरण (ब्रह्मसूत्र ४।२।१।१–२)

शिष्य –

मरणोन्मुख मान्छेका वागादि इन्द्रियै सब ।
[1]श्रुतिले मनमा मिल्छन् भन्दछ स्पष्ट नै तब ॥१॥

सर्वप्रथम वागादि मनमा मिल्दछन् भई ।
अन्तमा मिल्दछन् सारा परम देवमा गई ॥२॥

मिल्छन् स्वरूपले ? यद्वा मिल्दछन् वृत्तिमात्र वा ?
सन्देह यसमा आयो स्वरूप ? वृत्ति मात्र वा ? ॥३॥

पूर्वपक्षीहरू भन्छन् स्वरूपलय बन्दछ ।
श्रुति 'वाङ्मनसि' भन्दै वृत्तिको हैन भन्दछ ॥४॥

यसमा गुरुजी ! भन्नोस् वादीको मत युक्त हो ?
यदि हैन भने चाहिँ कुन सिद्धान्त युक्त हो ? ॥५॥

गुरु–

वाणीका वृत्तिको हुन्छ गएर मनमा लय ।
वाणी मिल्दा सिधै हुन्छ कार्यकारण-सङ्क्षय ॥६॥

---

१. अस्य सोम्य पुरुषस्य प्रयतो वाङ्मनसि सम्पद्यते मनः
प्राणे प्राणस्तेजसि तेजः परस्यां देवतायाम् । – छान्दोग्योपनिषद् ६।८।६

वाणीको मन नै हैन त्यो उपादानकारण ।
उत्पत्ति हुन्छ जोबाट त्यहीँ मिल्छ गईकन ॥७॥

जसरी घटको हुन्छ मृत्तिकामा गई लय ।
त्यस्तै नै हुन्छ वाणीको आफ्नै कारणमा लय ॥८॥

मनबाट भयो सृष्टि वाणीको सिर्जना भनी ।
भन्दैन श्रुतिले स्पष्ट मिल्छ कारणमै अनि ॥९॥

वाणीको मनमा हैन वाणीको वृत्तिको लय ।
मनमा हुन्छ भन्ने नै श्रौततात्पर्यनिर्णय ॥१०॥

दुई छन् [२]सूत्र यी भन्छन् गरी अन्तिम निश्चय ।
वाणीको मनमा हुन्छ वृत्तिमात्रै गई लय ॥११॥



## २. मनोधिकरण (ब्रह्मसूत्र ४।२।२।३)

शिष्य–

प्राणमा मनको हुन्छ स्वरूपलय ? वृत्ति नै ?
यसमा भन्दछन् वादी स्वरूपलय हुन्छ नै ॥१२॥

[३]पानी र अन्नका द्वारा मनको प्राण हेतु हो ।
अतः स्वरूपले नै त्यो प्राणमा मन मिल्नु हो ॥१३॥

यसमा गुरुजी ! भन्नोस् प्राणमा मन गैकन ।
मिल्छ स्वरूपले ? यद्वा मिल्छ वृत्ति गईकन ॥१४॥

---

२. वाङ्मनसि दर्शनाच्छब्दाच्च । – ब्रह्मसूत्र ४।२।१।२
३. अन्नमयं हि सोम्य मन आपोमयः प्राणः । –छान्दोग्योपनिषद् ६।५।४

गुरु–

जसले बाह्य सम्पूर्ण इन्द्रियवृत्ति लीकन ।
आफूमा उपसंहार गर्ने हो सौम्य ! सो मन ॥१५॥

त्यस्ता ती मनका वृत्ति प्राणमा बन्दछन् लय ।
यस्तो उत्तर वाक्यैले पर्छ सम्झनु निश्चय ॥१६॥

सुषुप्सु र मुमूर्षुका प्राणका चलनात्मकै ।
वृत्ति ती रहँदै हुन्छन् मनका वृत्ति शान्त गै ॥१७॥

अतः स्वरूपले हुन्न प्राणमा लीन गै मन ।
मनको हुन सक्तैन त्यो उपादानकारण ॥१८॥

स्वरूपलीन नै हुन्न गएर प्राणमा मन ।
मनका मिल्दछन् वृत्ति प्राणमा मात्र गैकन ॥१९॥

यसमा [४]सूत्र यौटै छ यसले पनि भन्दछ ।
प्राणमा मनका वृत्ति मिल्नु शास्त्रतः बन्दछ ॥२०॥



## ३. अध्यक्षाधिकरण (ब्रह्मसूत्र ४।२।३।४–६)

शिष्य–

प्राणको जीवमा हुन्छ लय ? यद्वा कि ! भूतमा ?
वादीले यसमा भन्छन् मिल्दछन् प्राण भूतमा ॥२१॥

[५]‘प्राणस्तेजसि’ यो जो छ श्रुतिप्रमाण लीकन ।
तेजमा प्राण गै मिल्छ वादी भन्छन् कथञ्चन ॥२२॥

---

४. तन्मनः प्राण उत्तरात् । – ब्रह्मसूत्र ४।२।२।३
५. प्राणस्तेजसि । – श्रुतिः

किनकि ! श्रुतिमा प्राण गएर मिल्छ जीवमा ।
भन्ने देखिन्न तस्मात् नै प्राण मिल्द छ भूतमा ॥२३॥

यसमा भन्नुहोस् ब्रह्मन् ! प्राण मिल्छ कि ! भूतमा ?
अथवा जीवमा मिल्छ ? के छ ? उल्लेख वेदमा ॥२४॥

गुरु–
विद्या र [६]कर्मका साथै पूर्वप्रज्ञा भईकन ।
विज्ञानरूप आत्मामा प्राण मिल्छ गईकन ॥२५॥

[७]'एवमेवेम' ले भन्छ वागादि मृत्युकालमा ।
ऊर्द्धर्वोच्छ्वास भई मिल्छन् आत्मामा अन्तकालमा ॥२६॥

[८]परलोक जसै लाग्छ जीवात्मा त्यसकै पछि ।
त्यसैमा मिल्दछन् प्राण वागादि इन्द्रियादिक ॥२७॥

[९]विज्ञानयुक्त जीवात्मा अन्तर्विज्ञानले युत ।
त्यसैमा मिल्दछन् प्राण वागादि इन्द्रियादिक ॥२८॥

त्यसैले पहिले प्राण जीवमा लीन बन्दछ ।
तत्पश्चात् जीवका द्वारा भूतमा प्राण मिल्दछ ॥२९॥

---

६ शरीरदेशेभ्यस्तमुत्क्रामन्तं प्राणोऽनूत्क्रामति प्राणमनुत्क्रामन्तं सर्वे प्राणा अनूक्रामन्ति सविज्ञानो भवति सविज्ञानमेवान्ववक्रामति तं विद्याकर्मणी समन्वारभेते पूर्वप्रज्ञा च ।
– बृहदारण्यकोपनिषद् ४।४।२

७. एवमेवेममात्मानमन्तकाले सर्वे प्राणा अभिसमायन्ति यत्रैतदूर्ध्वोच्छ्वसी भवति ।
– श्रुतिः

८. तमुक्रान्तं प्राणोऽनूत्क्रामति । – बृहदारण्यकोपनिषद् ४।४

९. सविज्ञानो भवति ।– बृहदारण्यकोपनिषद् ४।४।२

यसमा [10]सूत्र छन् तीन भन्दछन् तिनले पनि ।
जीवमा मिल्दछन् प्राण त्यैद्वारा भूतमा अनि ॥३०॥



## ४. आसृत्युपक्रमाधिकरण (ब्रह्मसूत्र ४।२।४।७)

शिष्य–

विद्वान् अनि अविद्वान्को के उत्क्रान्ति समान हो ?
उत्क्रान्ति यिनको यद्‌वा दुवैको असमान हो ? ॥३१॥

वादी–

पुनः उत्पत्तिका लागि अविद्वान् भूत आश्रित ।
हुन्छ, विद्वान् भने जान्छ भई अमृत[11] शाश्वत ॥३२॥

समान हैन उत्क्रान्ति दुवैका छन् पृथक् तर ।
यौटाको फल संसार अर्काको मोक्ष सुन्दर ॥३३॥

ज्ञानीको प्राण निस्कन्न यहीँ नै लीन बन्दछ ।
[12]'न तस्य' श्रुति सोझै नै ज्ञानीको मुक्ति भन्दछ ॥३४॥

वादीको मत यो आयो गुरुजी ! भन्नुहोस् अब ।
उत्क्रान्तिमा छ पार्थक्य ? अथवा छैन ? लौ तब ॥३५॥

---

१०. सोऽध्यक्षे तदुपगमादिभ्यः ।– ब्रह्मसूत्र ४।२।३।४

११. अमृतत्वं हि विद्वानश्नुते । – श्रुतिः

१२. न तस्य प्राणा उत्क्रामन्त्यत्रैव समवलीयन्ते ब्रह्म सन् ब्रह्माप्येति ।
– नृसिंहोत्तरतापनीयोपनिषद् ५

गुरु–

श्रुति 'वाङ्मनसि' ज्ञानी अज्ञानी नरको पनि ।
उत्क्रान्ति [१३]मार्गका सम्म हो भन्छ एउटै अनि ।।३६।।

देखिन्छ श्रुतिमा सोम्य ! श्रवणै अविशेष नै ।
देवयानादिका सम्म उत्क्रान्ति हो समान नै ।।३७।।

तत्पश्चात् अर्चि इत्यादि देवयान भईकन ।
विद्वान् मुक्त भई जान्छ ब्रह्मलोक गईकन ।। ३८।।

यसमा [१४]सूत्र यौटै छ यसले पनि भन्दछ ।
अविद्या क्लेश नाशेर मुमुक्षु मुक्त बन्दछ ।।३९।।



## ५. संसारव्यपदेशाधिकरण (ब्रह्मसूत्र ४।२।५।८–११)

शिष्य–

भूतको परमात्मामा हुन्छ स्वरूपले लय ?
अथवा परमात्मामा के हुन्छ ? वृत्तिले लय ।।४०।।

वादीले यसमा भन्छन् हुन्छ स्वरूपले लय ।
अन्ततः परमात्मा नै हो उपादान निश्चय ।।४१।।

यसमा गुरुजी ! भन्नोस् वादीको मत युक्त हो ?
यदि हैन भने ब्रह्मन् ! सिद्धान्त कुन युक्त हो ? ।।४२।।

---

१३. क. देवायानस्य वा पथः प्रतिपदं पितृयाणस्य वेति दक्षिणोत्तरमार्गः ।
– बृहदारण्यकोपनिषद् ६।२।१६। शाङ्करभाष्य

ख. शुक्लकृष्णे गती ह्येते जगतः शाश्वते मते ।
एकया यात्यनावृत्तिमन्ययावर्तते पुनः ।। – श्रीमद्भगवद्गीता ८।२६

१४. समाना चासृत्युपक्रमादमृतत्वं चानुपोष्य । – ब्रह्मसूत्र ४।२।४।७

गुरु–

हुन् तेज आदि ती सूक्ष्म भूत इन्द्रिय आश्रय।
सम्यग् ज्ञान हुँदा सम्म रहन्छन् सब निश्चय ॥४३॥

[१५]अविद्यायुक्तका जीव विभिन्न योनिमा पसी।
शरीरधारणा गर्छन् अज्ञानाच्छन्न भै बसी ॥४४॥

अत्यन्त मूढ अज्ञानी जान्छ स्थावर भावमा।
यथा श्रुत यथा कर्म देखिन्छ श्रुति आदिमा ॥४५॥

भएमा भूतको सूक्ष्म ऊष्मा स्वरूपतः लय।
मर्दैमा ब्रह्म भै जाला होलान् शास्त्रादि सङ्क्षय ॥४६॥

मिथ्या-संज्ञान-संसृष्ट जो छ संसारबन्धन।
सम्यग्ज्ञानविना कैल्यै टुट्तैन कर्मबन्धन ॥४७॥

परदेवत्वको नै त्यो भए प्रकृति नै पनि।
सुषुप्तिकालमा जस्तै बीजभाव रहन्छ नि ॥४८॥

यथोक्त जो छ सो तेज प्रमाण र स्वरूपले।
सूक्ष्म हो र नसाद्वारा निस्कन्छ भन्छ वेदले ॥४९॥

तेज सूक्ष्म भएकाले स्थूल देह डढे पनि।
त्यो सूक्ष्म देह डढ्दैन भन्दछ श्रुतिले पनि ॥५०॥

त्यो स्थूल देहको [१६]ऊष्मा त्यै सूक्ष्म तेज धर्म हो।
त्यो रहे जीव बाँच्ने हो नरहे मृत जीव हो ॥५१॥

---

१५. योनिमन्ये प्रपद्यन्ते शरीरत्वाय देहिनः।
स्थाणुमन्येऽनुसंयन्ति यथा कर्म यथाश्रुतम् ॥ –कठोपनिषद् ५।७

१६. उष्ण एव जीविष्यञ्शीतो मरिष्यन्। – श्रुतिः

ज्ञानीका भूतको हुन्छ भलै स्वरूपतः लय ।
अज्ञानीको भने हुन्छ भूतमा वृत्तिको लय ॥५२॥

यदि यस्तो नमानेमा त्यो जन्मान्तर जीवको ।
हुन सक्तैन भन्ने हो मत सिद्धान्तपक्षको ॥५३॥

यसमा [17]सूत्र छन् चार भन्दछन् यिनले पनि ।
शास्त्रानुसार ज्ञानीका भूत हुन्छन् लयै भनी ॥५४॥



## ६. प्रतिषेधाधिकरण (ब्रह्मसूत्र ४।२।६।१२–१४)

शिष्य–

न तस्य श्रुतिले गर्ने प्राणोत्क्रान्तिनिषेध हो ।
शरीर ? अथवा जीव ? कसबाट निषेध हो ? ॥५५॥

यस सन्देहमा वादी भन्दछन् प्राण निस्कने ।
शरीरबाट निस्कन्छ जीवबाट ननिस्कने ॥५६॥

अन्यथा सर्वदा देह हुने छ अजरामर ।
वादीको मत देखिन्छ भन्नुहोस् स्पष्ट उत्तर ॥५७॥

गुरु–

जे भनून् पूर्वपक्षीले ज्ञानीका प्राण निश्चय ।
[18]निस्कन्नन् तर ती प्राण यहीँ नै बन्दछन् लय ॥५८॥

तातो फलाममा जस्तै जलबिन्दु पर्‍यो भने ।
विलीन हुन्छ त्यस्तै नै विलीन प्राण ती हुने ॥५९॥

---

१७. तदापीतेः संसारव्यपदेशात् । – ब्रह्मसूत्र ४।२।५।८।११

१८. न तस्य प्राणा उत्क्रामन्ति ब्रह्मैव सन् ब्रह्माप्येति । – बृहदारण्यकोपनिषद् ४।४।६

ज्ञानीको गति उत्क्रान्ति हुँदैन शास्त्र भन्दछ ।
अज्ञका गति उत्क्रान्ति हुन्छन् नै श्रुति भन्दछ ॥६०॥

[१९]मूर्धा वा चक्षु वा अन्य अङ्गबाट सिधै तर ।
प्राण इन्द्रियका साथ जीव निस्कन्छ बाहिर ॥६१॥

[२०]कामनायुक्त त्यो जीव गएर फेरि झर्दछ ।
मर्ने र जन्मने काम अनन्तसम्म गर्दछ ॥६२॥

[२१]कामनाहीन विद्वान्का निस्कन्नन् प्राण बाहिर ।
यहीँ ती ब्रह्म नै हुन्छन् प्राण मिल्छन् यहीँ तर ॥६३॥

[२२]ज्ञानीको गति नै हुन्न देख्तैनन् देवता पनि ।
गति उत्क्रान्तिमा भन्छ महाभारतले पनि ॥६४॥

हुँदैनन् ब्रह्मवेत्ताका गति उत्क्रान्ति नै पनि ।
ब्रह्म भै ब्रह्म नै हुन्छ [२३]भन्दछ श्रुतिले पनि ॥६५॥

यसमा [२४]तीन छन् सूत्र पूर्वोत्तर गरीकन ।
ज्ञानीका गति उत्क्रान्ति हुन्नन् भन्छन् गईकन ॥६६॥



---

१९. चक्षुष्टो वा मूर्ध्नो वाऽन्येभ्यो वा शरीरदेशेभ्यस्तमुत्क्रामन्तं प्राणोऽनूत्क्रामति प्राणमनूत्क्रामन्तं सर्वे प्राणा अनुत्क्रामन्ति । –बृहदारण्यकोपनिषद् ४।४।२
२०. इति नु कामयमानः । – बृहदारण्यकोपनिषद् ४।४।६
२१. अथाकामयमानः । – बृहदारण्यकोपनिषद् ४।४।६
२२. सर्वभूतात्मभूतस्य सम्यग्भूतानि पश्यतः ।
देवा अपि मार्गे मुह्यन्त्यपदस्य पदैषिणः ॥ – महाभारत
२३. क. ब्रह्मैव सन् ब्रह्माप्येति । – बृहदारण्यकोपनिषद् ४।४।६
ख. न तस्य प्राणा उत्क्रामन्त्यत्रैव समवलीयन्ते ब्रह्मैव सन् ब्रह्माप्येति ।
– नृसिंहोत्तरतापनीयोपनिषद् ५
ग. ब्रह्मवेद ब्रह्मैव भवति । – मुण्डकोपनिषद् ५
घ. ब्रह्मविदाप्नोति परम् । – तैत्तिरीयोपनिषद् २।१।१
२४. प्रतिषेधादिति चेन्न शारीरात् । –४।२।६।१२–१४

## ७. वागादिलयाधिकरण (ब्रह्मसूत्र ४।२।७।१५)

शिष्य–

वागादि तत्त्वज्ञानीका सारा इन्द्रिय वस्तुतः ।
आफ्ना कारणमा मिल्छन् ? अथवा ब्रह्ममा कि ? त ॥ ६७॥

वादीले यसमा भन्छन् [२५]'गताः कलाः' लिईकन ।
वागादि अग्निमा मिल्छन् जो उपादानकारण ॥६८॥

कलाशब्दाख्य प्राणादि प्रतिष्ठाशब्द कारण ।
आफ्नै कारणमा मिल्छन् ब्रह्ममा तर होइन ॥६९॥

वादीको यसरी आयो गुरुजी ? भन्नुहोस् मत ।
अग्निमा मिल्दछन् प्राण ? अथवा ब्रह्ममा कि ! त ? ॥७०॥

गुरु –

ज्ञानीका प्राणशब्दाख्य इन्द्रियादिहरू सब ।
भूतादि पनि आत्मामा यहीँ नै मिल्दछन् तब ॥७१॥

[२६]नदी सकल नै जस्तै मिल्छन् समुद्रमा गई ।
त्यस्तै सोह्र कला मिल्छन् ब्रह्म कारणमा गई ॥७२॥

देहारम्भक वागादि आफ्ना कारणमा सबै ।
मिल्छन् यो मत वादीको हो सत्य र झुठो दुवै ॥७३॥

व्यवहार अपेक्षाले श्रुतिको मत निश्चय ।
जस्तै घटादि गै मिल्छन् पृथिवीमा भई क्षय ॥७४॥

---

२५. गताः कलाः पञ्चदश प्रतिष्ठाः । – मुण्डकोपनिषद् ६।५

२६. एवमेवास्य परिद्रष्टुरिमाः षोडश कलाः पुरुषायणाऽपुरुषं प्राप्यास्तं गच्छन्ति ।
– प्रश्नोपनिषद् ६।५

ब्रह्मज्ञका कला सारा ब्रह्ममा नै गईकन ।
अन्तमा मिल्दछन् सारा एकाकार भईकन ।।७५।।

अज्ञानीका कला मिल्छन् अग्न्यादि हेतुमा गई ।
किन्तु ब्रह्मज्ञका मिल्छन् कला ती ब्रह्ममै गई ।।७६।।

यसमा [२७]सूत्र यौटै छ यसले भन्छ तत्त्वतः ।
ब्रह्मज्ञका कला मिल्छन् ब्रह्ममै सब शास्त्रतः ।।७७।।



## ८. अविभागाधिकरण (ब्रह्मसूत्र ४।२।८।१६)

शिष्य –

वागादि सब आत्मामा गएर जुन मिल्दछन् ।
सावशेष कि ? वागादि विना विशेष मिल्दछन् ।।७८।।

सन्देह यसमा वादी सावशेष गईकन ।
मिल्दछन् अज्ञका भन्छन् अनुमान गरीकन ।।७९।।

यसमा गुरुजी ! भन्नोस् वादीको युक्त हो ? मत ।
यदि हैन भनेदेखि कुन हो युक्त शास्त्रतः ।।८०।।

गुरु –

अविभाग कला सारा नामरूपादि [२८]शास्त्रतः ।
नाश हुन्छन् र जीवात्मा रहन्छ ब्रह्म भै स्वतः ।।८१।।

त्यही पुरुष हो भन्छन् ज्ञानी ब्रह्मज्ञ तत्त्वतः ।
त्यही अमृत हो ब्रह्म कलारहित वस्तुतः ।।८२।।

---

२७. तानि परे तथा ह्याह । – ब्रह्मसूत्र ४।२।७।१५

२८. भिद्येते तासां नामरूपे इत्येवं प्रोच्यते स एषोऽकलोऽमृतो भवति । – प्रश्नोपनिषद् ६।५

अविद्याबाट उत्पन्न कला वागादि ती सब ।
ज्ञानाग्निमा परी डढ्छन् ज्ञानीका तत्क्षणै तब ॥८३॥

अज्ञानीका कला जान्छन् सविशेष भईकन ।
फेरि ऊ जन्मनैपर्छ नाना योनि लिईकन ॥८४॥

यसमा [२९]सूत्र यौटै छ यसले पनि भन्दछ ।
ज्ञानीका नाम वागादि डढ्छन् ऊ ब्रह्म बन्दछ ॥८५॥



## ९. तदोकोऽधिकरण (ब्रह्मसूत्र ४।२।९।१७)

शिष्य –

सकियो परविद्याको प्रसङ्ग अब सुस्तरी ।
चल्यो अपरविद्याको फेरि प्रसङ्ग यो घरी ॥८६॥

अविद्वान् अनि विद्वान्को उत्क्रान्ति मार्गका तक ।
एकसमान देखिन्छ भनियो त्यो त्यहीँतक ॥८७॥

तत्पश्चात् अनि उत्क्रान्ति उपासक र अन्यको ।
समानै हुन्छ ? या हुन्न ? भयो सन्देह यो निको ॥८८॥

वादीले यसमा भन्छन् हृत्प्रत्योदन लीकनै ।
विद्वान् र अन्यको हुन्छ उत्क्रान्ति त्यो समान नै ॥८९॥

अविद्वान् अनि विद्वान्को के उत्क्रान्ति समान हो ?
यदि हैन भने भन्नोस् कसरी असमान हो ? ॥९०॥

---

२९. अविभागो वचनात् – ब्रह्मसूत्र ४।२।८।१६

शिष्य –

अविद्वान् अनि विद्वान्का [30]हृदयै नाडिको शिर ।
प्रद्योतन हुने गर्छ प्रकाशित भई तर ॥९१॥

मूर्धाबाट सिधै जान्छ विद्वान् मुक्त भईकन ।
अविद्वान् जान्छ निस्केर अन्य स्थान भईकन ॥९२॥

हुन्छन् [31]हृदयमा नाडी एक सौ एक मुख्यतः ।
अरू अनन्त छन् नाडी शरीरभित्र वस्तुतः ॥९३॥

तीमध्ये एउटा नाडी मूर्धामा जान्छ शास्त्रतः ।
त्यैद्वारा निस्किई जान्छ विद्वान् अमृत भै स्वतः ॥९४॥

[32]अन्य नाडीहरूद्वारा निस्कन्छन् अज्ञ बाहिर ।
त्यस्ता संसृतिमा घुम्छन् हुन्नन् अमृत ती तर ॥९५॥

अतः उत्क्रान्ति विद्वान्को विशिष्ट अति बन्दछ ।
अरूभन्दा विशिष्टै हो श्रुतिले पनि भन्दछ ॥९६॥

यसमा [33]सूत्रले भन्छ ज्ञानी अमृत बन्दछ ।
मूर्धाको द्वार भै जान्छ श्रुतिले पनि भन्दछ ॥९७॥



---

३०. तस्य हैतस्य हृदयस्याग्रं प्रद्योतते तेन प्रद्योतेनैष आत्मा निष्क्रामति चक्षुष्टो वा मूर्ध्नो वाऽन्येभ्यो वा शरीरदेशेभ्यः । – बृहदारण्यकोपनिषद् ४।४।२

३१. शतञ्चैका च हृदयस्य नाड्यस्तासां मूर्धानमभिनिःसृतैका । तयोर्ध्वमायन्नमृतत्वमेति । – छान्दोग्योपनिषद् ८।६।६

३२. विष्वङ्ङन्या उत्क्रमणे भवन्ति । – छान्दोग्योपनिषद् ८।६।६

३३. तदोकोग्रज्वलनं तत्प्रकाशितद्वारो विद्यासामर्थ्यात्तच्छेषगत्यनुस्मृतियोगाच्च हार्दानुगृहीतः शताधिकया । – ब्रह्मसूत्र ४।२।९।१७

## १०. रश्म्यधिकरण (ब्रह्मसूत्र ४।२।१०।१८–१९)

शिष्य –

[३४]‘अथ या’ श्रुतिका साथै अर्को त्यो [३५]‘अथ यद्’ श्रुति ।
[३६]‘अथ यत्र’ [३७]‘तयोः’ आदि लिई उपनिषद् श्रुति ॥९८॥

सबैको सार ली हेर्दा समान रीतिले गरी ।
रात या दिनमा जान्छ रश्मिका रथमा मरी ॥९९॥

मर्दामा दिनमा मात्र सूर्यको रश्मि भै अनि ।
प्रयाण जीवले गर्छ ? अथवा रातमा पनि ? ॥१००॥

सन्देह जब यो आयो पूर्वपक्षीहरू तिनी ।
रात्रिमा सूर्यको रश्मि हुँदैन भन्दछन् अनि ॥१०१॥

मुमुक्षु दिनमा मर्दा प्राप्त बन्दछ रश्मिमा ।
अन्यथा रातमा मर्दा हुँदैन प्राप्त रश्मिमा ॥१०२॥

नाडी र रश्मिसम्बन्ध दिनमा नै छ सम्भव ।
नाडी र रश्मिसम्बन्ध रातमा छ असम्भव ॥१०३॥

वादीको यसरी आयो पूर्वपक्ष गुरो मत ।
ठीक ? बेठिक ? के भन्नोस् श्रुतिप्रमाणका सित ॥१०४ ॥

---

३४. अथ या एता हृदयस्य नाड्यः । – छान्दोग्योपनिष ८।६।१

३५. अथ यदिदमस्मिन् ब्रह्मपुरे दहरं पुण्डरीकं वेश्म । – छान्दोग्योपनिषद् ८।१।१

३६. अथ यत्रैदस्माच्छरीरादुत्क्रामत्यथैतैरेव रश्मिभिरूर्ध्वमाक्रमते ।
– छान्दोग्योपनिषद् ८।६।५

३७. तयोर्ध्वमायन्नमृतत्वमेति । – छान्दोग्योपनिषद् ८।६।६

गुरु–

नाडी र रश्मिसम्बन्ध हुँदैन दिनमा भनी ।
वादीको मत जो आयो त्यो अस्वीकार्य हो पनि ॥१०४ ॥

नाडी र रश्मिसम्बन्ध रहन्छ पूर्ण जीवनी ।
अभाव कहिल्यै हुन्न रश्मिको रातमा पनि ॥१०५॥

[३८]'अमुष्मात्' मन्त्रले गर्छ पूर्ण वर्णन रश्मिको ।
जाडो होस् अथवा गर्मी अभाव हुन्न रश्मिको ॥१०६॥

[३९]सूर्य नै दिनको ताप गर्छन् धारण रातमा ।
नाडी र रश्मि सम्बन्ध रहन्छ सर्वकालमा ॥१०७॥

[४०]ऊर्ध्व उत्क्रान्तिमा मुक्त विलम्ब नगरिकन ।
मनका वेगले जान्छ आदित्य भेट्छ तत्क्षण ॥१०८॥

दिन या रात होस् ज्ञानी मरेमा अविशेषतः ।
रश्मिमा नै हुने प्राप्त श्रुतिले भन्छ शब्दतः ॥१०९॥

दुई छन् यसमा [४१]सूत्र भन्छन् श्रुति लिईकन ।
दिन या रातमा मर्ने ज्ञ जान्छ रश्मि भैकन ॥११० ॥



३८. अमुष्मादादित्यात्प्रतायन्ते ता आसु नाडीषु सृप्ता आभ्यो नाडीभ्यः प्रतायन्ते तेऽमुष्मिन्नादित्ये सृप्ताः । – छान्दोग्योपनिषद् ८।६।२

३९. अहरेवैतद्रात्रौ दधाति । – श्रुतिः

४०. स यावत्क्षिप्येन्मनस्तावदादित्यं गच्छति । – छान्दोग्योपनिषद् ८।६।५

४१. रश्म्यनुसारी । – ब्रह्मसूत्र ४।२।१०।१८–१९

## ११. दक्षिणायनाधिकरण (ब्रह्मसूत्र ४।२।११।२०–२१)

शिष्य –

दक्षिणायनमा मर्ने ब्रह्मज्ञ जो छ निर्भ्रम ।
ब्रह्म बन्छ ? कि बन्दैन ? भयो सन्देह भो भ्रम ॥१११॥

वादीले भन्दछन् मर्छ उत्तरायणमा जुन ।
[४२]श्रुति [४३]स्मृतिहरू भन्छन् जान्छ ब्रह्म भईकन ॥११२॥

उत्तरायण नै पर्खे मर्न ती भीष्मले जुन ।
दक्षिणायनमा मर्ने सक्तैन ? मोक्ष पाउन ॥११३॥

यस सन्देहमा ब्रह्मन् मोक्षार्थ उत्तरायण ।
आवश्यक छ वा ? छैन ? भन्नोस् प्रमाण दीकन ॥११४॥

गुरु–

उत्तरायण होस् यद्वा दक्षिणायन काल होस् ।
ज्ञानीका लागि प्राशस्त्य सबै नै काल एक हो ॥११५॥

दिनादि काल उल्लेख स्मार्तोपासक निम्ति हो ।
श्रौतोपासकका निम्ति कालनियम व्यर्थ हो ॥११६॥

त्यसैकारणले विद्वान् मर्दा जो कालमा पनि ।
पाउला फल विद्याको जाला ब्रह्म स्वयं बनी ॥११७॥

ती [४४]'अग्निर्ज्योतिः' इत्यादि योगसाङ्ख्योक्त वाक्य हुन् ।
श्रुतिका वाक्य ती हैनन् ज्ञानीनिम्ति उपेक्ष्य हुन् ॥११८॥

---

४२. आपूर्यमाणपक्षाद्यान् षडुदङ्ङेति मासांस्तान् । – छान्दोग्योपनिषद् ४।१५।५

४३. यत्र काले त्वनावृत्तिमावृत्तिञ्चैव योगिनः ।
प्रयाता यान्ति तं कालं वक्ष्यामि भरतर्षभ ॥ – श्रीमद्भगवद्गीता ८।२३

४४. अग्निर्ज्योतिरहः शुक्लः षण्मासा उत्तरायणम् ।
धूमो रात्रिस्तथा कृष्णः षण्मासा दक्षिणायनम् ॥ – गीता ८।२४,२५

पिताका ख्यातिका लागि भीष्मप्रसङ्ग हो जुन ।
मुक्तिका निम्तिमा हैन भीष्मको कालशंसन ॥११९॥

उत्तरायण हो काल आतिवाहिक देवता ।
[45]'आतिवाहिकास्तल्लिङ्गात्' बाट खुल्छ यथार्थता ॥१२०॥

आतिवाहिक यो शब्द स्मृतिमा पनि आउँछ ।
लोकान्तर लिई जाने देवता नै जनाउँछ ॥१२१॥

श्रुति र स्मृतिमा छैन विरोध यसमा अतः ।
विद्याको फल हो सौम्य ब्रह्मको प्राप्ति तत्त्वतः ॥१२२॥

दुइटा यसमा [46]सूत्र दुवैको एउटै मत ।
विद्याको फल हो मुक्ति भन्दछन् स्पष्ट तत्त्वतः ॥१२३॥

ब्रह्मसूत्रको चतुर्थ अध्यायको द्वितीय पादको कारिका पूरा भयो ।



४५. आतिवाहिकास्तल्लिङ्गात् । – ब्रह्मसूत्र ४।३।४।४
४६. अतश्चायनेऽपि दक्षिणे । – ब्रह्मसूत्र ४।२।११।२०,२१

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

# ब्रह्मसूत्र

## चतुर्थ अध्याय

## तृतीय पाद

(यस पादमा अर्चिरादिदेखि अप्रतीकालम्बनसहित ६ अधिकरणहरू छन् । यी अधिकरणहरूमा सगुणोपासकको उत्तरगतिको वर्णन गरिएको छ ।)

### १. अर्चिराद्यधिरण (ब्रह्मसूत्र ४।३।१।१)

शिष्य –

उपक्रमतकै मार्ग ती उत्क्रान्तिसमान छन् ।
परन्तु मार्ग धेरै नै विभिन्न श्रुति भन्दछन् ॥१॥

[1]'अथैतेः' [2]'तेऽर्चिषम्' [3]'सूर्य' [4]'स एतम्' र [5]'यदा' गरी ।
विभिन्न मार्ग उल्लेख गर्छन् श्रुति थरी थरी ॥२॥

सन्देह हुन गो मार्ग के परस्पर भिन्न हुन् ?
अथवा सब ती मार्ग एकै हुन् र अभिन्न हुन् ? ॥३॥

वादीले यसमा भन्छन् बाटाहरू विभिन्न हुन् ।
भिन्न प्रकरणै भिन्न उपासनार्थ अङ्ग हुन् ॥४॥

---

१. अथैतैरेव रश्मिभिरूर्ध्वं आक्रमते । – छान्दोग्योपनिषद् ८।६।५
२. तेऽर्चिषमभिसम्भवन्त्यर्चिषोऽहः । – बृहदारण्यकोपनिषद् ६।२।१५
३. सूर्यद्वारेण ते विरजाः प्रयान्ति । – मुण्डकोपनिषद् १।२।११
४. स एतं देवयानं पन्थानमासाद्याग्निलोकमागच्छति । – कौषीतकिब्राह्मणोपनिषद् १३
५. यदा वै पुरुषोऽस्माल्लोकात्प्रैति स वायुमागच्छति । – बृहदारण्यकोपनिषद् ५।१८।१

‘[६]अथैतैः’ मन्त्रको साथै [७]‘स यावत्’ श्रुति लीकन ।
विभिन्न मार्ग हुन् भन्छन् त्वरावचन लीकन ॥५॥

गुरु-

ब्रह्मप्रेप्सुहरू जान्छन् अर्चिरादि भईकन ।
जो छ पञ्चाग्निविद्यामा [८]‘ये चामी’ श्रुतिशंसन ॥६॥

विशेषणहरू धेरै भए तापनि अन्ततः ।
ब्रह्माको लोक लैजाने मार्ग यौटै छ शास्त्रतः ॥७॥

विद्याप्रकरणै आदि भिन्न भिन्न भए पनि ।
गत्येकदेशको सौम्य ! प्रत्यभिज्ञान ली अनि ॥८॥

छैन गन्तव्यमा भेद त्यस्तै नै गतिमा पनि ।
हुँदैन भेद यै भन्छ [९]‘तेषु’ यो श्रुतिले पनि ॥९॥

ब्रह्मलोक पुगी धेरै कल्पसम्म बसीकन ।
ब्रह्मा मुक्त हुँदा जान्छन् साथै मुक्त भईकन ॥१०॥

पृथ्वीमा फेरि फर्कन्न जान्छ ब्रह्म स्वयं बनी ।
ज्ञानीको मुक्ति यै नै हो भन्दछ श्रुतिले पनि ॥११॥

अर्चिरादि-अपेक्षाले गन्तव्य पुग्न सर्वथा ।
क्षिप्रतानिम्ति आएको त्वरा हो हुन्न अन्यथा ॥१२॥

---

६. अथैतैरेव रश्मिभिः । – छान्दोग्योपनिषद् ८।१८।१
७. स यावात्क्षिप्येन्मनस्तावदादित्यं गच्छति । – छान्दोग्योपनिषद् ८।६।५
८. येऽचामी अरण्ये श्रद्धां सत्यमुपासते । – बृहदारण्यकोपनिषद् ६।२।१५
९. क. तेषु ब्रह्मलोकेषु पराःपरावतो वसन्ति । – बृहदारण्यकोपनिषद् ६।२।१५
ख. तस्मिन् वसन्ति शाश्वतीःसमाः । – बृहदारण्यकोपनिषद्
ग. न च पुनरावर्तते । – छान्दोग्योपनिषद् ८।१५।१
घ. तेषां न पुनरावृत्तिः । – बृहदारण्यकोपनिषद् ६।२।१५

[10]ब्रह्माका सरहै हुन्छ सर्वत्र उसको जय ।
[11]ब्रह्मचारी सिधै जान्छ ब्रह्माको लोक निर्भय ॥१३॥

उत्क्रान्तिका दुई मार्ग अर्चि [12]धूम गरीकन ।
यीबाट जुन जाँदैनन् तेस्रो स्थान छ शंसन ॥१४॥

अर्चिरादिकमा वेद मार्ग पर्व अनेकशः
गर्छ वर्णन अन्यत्र छैनन् मार्ग अनेकशः ॥१५॥

'भूयसां चानुगुण्येन अल्पीयसां' गरीकन ।
लिँदा नै न्याय हो भन्ने भाष्यले गर्छ सूचन ॥१६॥

यसको [13]सूत्रले भन्छ मार्ग त्यो ब्रह्मप्राप्तिको ।
छैनन् अनेक यौटै हो प्रसिद्ध अर्चिआदिको ॥१७॥



## २. वाय्वधिकरण (ब्रह्मसूत्र ४।३।२।२)

शिष्य –
'[14]स एतम्' श्रुतिले गर्छ त्यो वायुलोकशंसन ।
[15]'ते ऽर्चिषम्' श्रुति गर्दैन हावाको सन्निवेशन ॥१८॥

---

१०. सा या ब्रह्मणो जितिर्या व्युष्टिस्तां जितिं जयति तां व्युष्टिं व्यश्नुते ।
– कौषीतकिब्राह्मणोपनिषद् १।४

११. तद्य एवैतं ब्रह्मलोकं ब्रह्मचर्येणानुविन्दति । – छान्दोग्योपनिषद् २।४।३

१२. अथैतयोः पथोर्न कतरेण च न तानीमानि क्षुद्राण्यसकृदावर्तीनि भूतानि भवन्ति जायस्व म्रियस्वेत्येत्तृतीयं स्थानम् । – छान्दोग्योपनिषद् ५।१०।८

१३. अर्चिरादिना तत्प्रथितेः । – ब्रह्मसूत्र ४।३।१।१

१४. स एतं देवयानं पन्थानमापद्याग्निलोकमागच्छति स वायुलोकं स वरुणलोकं इन्द्रलोकं स प्रजापतिलोकं स ब्रह्मलोकम् । – कौषीतकिब्राह्मणोपनिषद् १।३

१५. तेऽर्चिषमेवाभिसम्भवन्त्यर्चिषोऽहरह्न आपूर्यमाणपक्षमापूर्यमाणपक्षाद्यान्षडुङ्ङेति मासांस्तान् मासेभ्यः संवत्सरं संवत्सरादादित्यम् । – छान्दोग्योपनिषद् ५।१०।१,२

[16]'यदा वै' श्रुतिले गर्छ उल्लेख वायुको पनि ।
विभिन्न श्रुतिमा आयो भिन्नता यसरी अनि ॥१९॥

अर्चिरादिक बाटोमा यसरी वायुको क्रम ।
कहीँ देखिन्छ, देखिन्न कहीँ, उत्पन्न भो भ्रम ॥२०॥

अर्चिरादिकमा वायु हुन्छ के सन्निवेशन ?
अथवा हुन सक्तैन ? अति सन्दिग्ध भो मन ॥२१॥

वादीले यसमा भन्छन् वायुको लोकको क्रम ।
श्रुतिमा स्पष्ट देखिन्छ अभाव वायुको क्रम ॥२२॥

त्यसैकारणले हुन्न अर्चिमा वायुको क्रम ।
विरुद्ध श्रुतिको हुन्छ मिल्न सक्तैन सो क्रम ॥२३॥

यसमा भन्नुहोस् ब्रह्मन् ! वायुको अर्चिरादिमा ।
सन्निवेश गुरो ! हुन्छ ? हुँदैन ? वायुमार्गमा ॥२४॥

गुरु–
त्यो अर्चिरादि पन्थामा वायुको सन्निवेशन ।
'यदा वै' श्रुतिले गर्छ स्पष्टतासाथ शंसन ॥२५॥

वायुका छिद्रकाद्वारा निस्केर जीव वस्तुतः ।
जान्छ आदित्यमा भन्ने देखिन्छ श्रुतिको मत ॥२६॥

'स एतम्' श्रुतिले भन्छ त्यो देवयानमार्गमा ।
अग्नि, वायु हुँदै जान्छ ज्ञानी वरुणलोकमा ॥२७॥

---

१६. यदा वै पुरुषोऽस्माल्लोकात्प्रैति स वायुमागच्छति तस्मै स तत्र विजिहीते यथा रथचक्रस्य खं तेन स ऊर्ध्वमाक्रमते स आदित्यमागच्छति ।
–बृहदारण्यकोपनिषद् ५।१०।१

पौर्वापर्य विचार्दामा क्रमवाचक शब्दको ।
उल्लेख श्रुतिमा छैन आवस्थित्य छ पाठको ॥२८॥

वायुप्रदत्त जो त्यो छ रथचक्रसमानको ।
छिद्रबाट उठी जान्छ आदित्यमा छ जो निको ॥२९॥

यही नै क्रम सम्झेर त्यो अर्को श्रुति भन्दछ ।
अविशेषकले यस्मा विशेष क्रम बन्दछ ॥३०॥

भन्छन् [१७]वाजसनेयीले देवका लोक मासले ।
आदित्यमा उठी जान्छन् ब्रह्मविद् अर्चिरादिले ॥३१॥

[१८]संवत्सर हुँदै ज्ञानी वायुमा पुग्छ नै भनी ।
छान्दोग्यश्रुतिले भन्छ देखिन्छ क्रम यो पनि ॥३२॥

छान्दोग्यश्रुतिमा छैन उल्लेख देवलोकको ।
संवत्सर भनी छैन उल्लेख बृ.उ.मा निको ॥३३॥

संवत्सर लिई पैले पछाडि देवलोकको ।
सन्निवेश हुँदा मिल्छ क्रम त्यो अर्चिरादिको ॥३४॥

विवेक यसरी गर्दा वायुको अर्चिरादिमा ।
सन्निवेश हुने गर्छ मार्ग त्यो अर्चिरादिमा ॥३५॥

यसमा [१९]सूत्र यौटै छ यसले पनि भन्दछ ।
त्यो वायुलोकका पश्चात् देवलोक छ भन्दछ ॥३६॥



१७. मासेभ्यो देवलोकं देवलोकादादित्यम् । – बृहदारण्यकोपनिषद् ६।२।१५

१८. वायुमब्दात् । – छान्दोग्योपनिषद्

१९. वायुमब्दादविशेषविशेषाभ्याम् । – ब्रह्मसूत्र ४।३।२।२

## ३. तडिदधिकरण (ब्रह्मसूत्र ४।३।३।३)

शिष्य –

अर्चिरादिक पन्थामा वरुणै सन्निवेशन ।
हुँदैन ? हुन्छ ? सन्देह भयो उत्पन्न तत्क्षण ॥३७॥

वायुसमान देखिन्न यसमा श्रुतिशंसन ।
त्यसैले भन्दछन् वादी वरुण हुन्न वेशन ॥३८॥

यसमा गुरुजी ! भन्नोस् अर्चिरादिक मार्गमा ।
होला वरुणको स्थान ? के छ ? वेदादि शास्त्रमा ॥३९॥

गुरु–

[२०]आदित्य चन्द्रमा-पश्चात् विद्युत्को क्रमसूचन ।
अर्चिरादिक बाटाको श्रुतिले गर्छ वर्णन ॥४०॥

विद्युत्सम्बद्ध वर्षाका ती हुन् वरुणदेवता ।
अर्चिरादिकमा हुन्छ उनको सन्निविष्टता ॥४१॥

विद्युतैबाट ब्रह्मज्ञ जाला वरुणलोकमा ।
यस्तो वरुणसम्बन्ध देखिन्छ अर्चिरादिमा ॥४२॥

[२१]विजुली जब चम्कन्छ मेघ गर्जन्छ घर्घर ।
आकाशबाट पृथ्वीमा वर्सन्छ वृष्टि झर्झर ॥४३॥

यसरी वृष्टिका द्यौता भनी वरुण हुन् जब ।
वरुणोपरि इन्द्रादि श्रुति नै भन्दछन् तब ॥४४॥

---

२०. आदित्याच्चन्द्रमसम् । – छान्दोग्योपनिषद् ४।१५।५
२१. विद्योतते स्तनयति वर्षिष्यति वा । – छान्दोग्योपनिषद् ७।११।१

वरुणनिम्ति देखिन्न अर्को स्थान कुनै जब ।
आगन्तुक भएकाले स्थान अन्तिम हो तब ॥४५॥

श्रुतिको यसरी गर्दा परिशीलन उत्तम ।
अर्चिरादिक पन्थामा विद्युत्को स्थान अन्तिम ॥४६॥

यसमा [२२]सूत्र यौटै छ यसले भन्छ सूत्रमा ।
अर्चिका क्रममा विद्युत्भन्दा वरुण अन्तमा ॥४७॥



## ४. आतिवाहिकाधिकरण (ब्रह्मसूत्र ४।३।४।४–६)

शिष्य –

के अर्चिरादि हुन् चिह्न मार्गका ? भोगभूमि वा ?
अथवा ब्रह्मको लोक लैजाने नेतृ हुन् कि ! वा ? ॥४८॥

यसमा भन्दछन् वादी अर्चिः ती मार्गचिह्न हुन् ।
ग्रामग्रामान्तरैतुल्य सबै ती उपदिष्ट हुन् ॥४९॥

अर्चिबाट उठी जान्छ दिनमा, शुक्ल पक्षमा ।
इत्यादि क्रमले नेता लैजान्छ ब्रह्मलोकमा ॥५०॥

भोगभूमि कि ! हुन् ? अर्चिः [२३]अग्न्यादिलोक ती सबै ।
आतिवाहिक नेता ती हैनन् अचेतनै कबै ॥५१॥

वादीको यसरी आयो मत भन्नोस् गुरो ! अब ।
आतिवाहिक हुन् ? हैनन् ? अर्चिरादिक ती सब ॥५२॥

---

२२. तडितोऽधि वरुणः सम्बन्धात् । – ब्रह्मसूत्र ४।३।३।३
२३. क. अग्निलोकमागच्छति । – कौषीतकिब्राह्मणोपनिषद् १।३
ख. मनुष्यलोकः पितृलोको देवलोकः । – बृहदारण्यकोपनिषद् १।५।१६

गुरु –

आतिवाहिक हुन् द्यौता अर्चिरादिक ती सब ।
ज्ञानीलाई लिई जान्छन् ब्रह्माका लोकमा तब ॥५३॥

अर्चिरादिक भै जाने ज्ञानी छन् सब मूर्च्छित ।
अर्चिरादिक मानिन्छन् ती अचेतन वस्तुतः ॥५४॥

त्यसैकारणले जो छन् देवता आभिमानिक ।
तिनैले नै लिइजान्छन् भएर आतिवाहिक ॥५५॥

मार्गचिह्न तिनी हैनन् ती [२४]अहोरात्र लभ्य छन् ।
भोगभूमि तिनी हैनन् भोग्न ती असमर्थ छन् ॥५६॥

विद्युत्का लोक नै सम्म लैजान्छन् देवता सब ।
[२५]पुं अमानव आएर लान्छन् वरुणमा तब ॥५७॥

त्यहाँबाट [२६]उनैले नै लैजान्छन् ब्रह्मलोकमा ।
हुन् अमानव नै नेता यही उल्लेख वेदमा ॥५८॥

अर्चिरादिक हुन् सारा आतिवाहिक देवता ।
भन्ने सिद्धान्त भो सिद्ध यै हो श्रौत यथार्थता ॥५९॥

यसमा तीन छन् [२७]सूत्र गएर यिनले स्वतः ।
आतिवाहिक द्यौता हुन् भन्दछन् सूत्र अन्ततः ॥६०॥



२४. अहोरात्रेषु ते लोकेषु सज्जन्ते । – शतपथब्राह्मण

२५. चन्द्रमसो विद्युतं तत्पुरुषोऽमानवः स एतान्ब्रह्म गमयति ।
– छान्दोग्योपनिषद् ४।१५।५

२६. स एतान् ब्रह्म गमयति । – छान्दोग्योपनिषद् ४।१५।६

२७. आतिवाहिकस्तल्लिङ्गात् । – ब्रह्मसूत्र ४।३।४।४–६

## ५. कार्याधिकरण (ब्रह्मसूत्र ४।३।५।७–१४)

शिष्य –

अर्चिरादि भई जाने हुन् ज्ञानी ब्रह्मविद् जुन ।
अपरब्रह्ममा जान्छन् ? वा परब्रह्ममा ? कुन ? ॥६१॥

यस संशयमा वादी गति शब्द लिईकन ।
अपरब्रह्ममा जान्छन् भन्छन् बादरि तत्क्षण ॥६२॥

वादी अर्का थरी भन्छन् अर्चिरादि भईकन ।
त्यो सच्चित् ब्रह्मकै प्राप्ति हुन्छ अन्तिम गैकन ॥६३॥

किनकि ! ब्रह्म हो शब्द सत्परब्रह्मवाचक ।
यसमा भन्नुहोस् विद्वन् ! कुन यो ब्रह्मवाचक ? ॥६४॥

गुरु–

[28]'ब्रह्मलोकान्' भनी आयो गतियुक्त विशेषण ।
अपरब्रह्ममा जान्छ ब्रह्ममा तर होइन ॥६५॥

[29]महाप्रलयमा जैले ब्रह्माजी मुक्त बन्दछन् ।
ब्रह्माका साथ नै तैले ब्रह्मविद् मुक्त बन्दछन् ॥६६॥

ब्रह्ममा गति पुग्दैन अवाङ्मनसगोचर ।
अस्थूल [30]श्रुतिले गर्छ निषेध सब ती तर ॥६७॥

---

२८. स एतान्ब्रह्म गमयति । – छान्दोग्योपनिषद् ४।१५।५

२९. ब्रह्मणा सह ते सर्वे सम्प्राप्ते प्रतिसञ्चरे ।
परस्यान्ते कृतात्मानः प्रविशन्ति परम्पदम् ॥ – कूर्मपुराण १।१२।२६९

३०. अस्थूलमनन्वह्रस्वमदीर्घम् । – बृहदारण्यकोपनिषद् ३।८।८

त्यो [३१]कार्यब्रह्मको प्राप्ति हुने हो श्रुति भन्दछ।
मायाविकार नै कार्यब्रह्ममा गति बन्दछ ॥६८॥

[३२]निर्गुणब्रह्ममा नामरूपादि गतिशून्य छन्।
[३३]आकाशतुल्य सर्वत्र व्याप्त हो श्रुति भन्दछन् ॥६९॥

समीप नै भएकाले ब्रह्माजी पनि ब्रह्म हुन्।
अन्यथा अज सामान्य मनुष्य सरि जीव हुन् ॥७०॥

हुन् व्यापक परब्रह्म ज्ञानी सर्वत्र पाउँछन्।
ती कार्यब्रह्मका द्वारा अन्तमा मुक्त बन्दछन् ॥७१॥

आठोटै [३४]सूत्रले भन्छन् पूर्वोत्तर गरीकन।
ब्रह्मै पुग्दछन् ज्ञानी कार्यब्रह्म भईकन ॥७२॥



## ६. अप्रतीकालम्बनाधिकरण (ब्रह्मसूत्र ४।३।६।१५–१६)

शिष्य –
ब्रह्मसम्म गति हुन्छ ब्रह्ममा गति हुन्न नै।
भन्ने सिद्ध भयो, सोध्छु प्रतीकोपसनाकनै ॥७३॥

---

३१. प्रजापतेः सभां वेश्म प्रपद्ये। – छान्दोग्योपनिषद् ८।१४।१
३२. नामरूपयोर्निर्वहिता ते यदन्तरा तद्ब्रह्म। – छान्दोग्योपनिषद् ८।११
३३. क. आकाशवत्सर्वगतश्चनित्यः। – श्रुतिः
ख. यत्साक्षादपरोक्षाद्ब्रह्म। – बृहदारण्यकोपनिषद् ३।४।१
ग. य आत्मा सर्वान्तरः। – बृहदारण्यकोपनिषद् ३।४।१
घ. आत्मैवेदं सर्वम्। – छान्दोग्योपनिषद् ७।२५।२
ङ. ब्रह्मैवेदं विश्वमिदं वरिष्ठम्। – मुण्डकोपनिषद् २।२।११
३४. कार्यं बादरिरस्य गत्युपपत्तेः। – ब्रह्मसूत्र ४।३।५।७–१४

प्रतीकोपासकैलाई पुरुषाख्य अमानव ।
ब्रह्माको लोक लैजान्छन् ? सन्देह हुनगो अब ॥७४॥

वादी भन्छन् उपासीको कार्यब्रह्मतकै गति ।
हुन्छ, भन्दछ [३५]'सर्वासाम्' सूत्रले बुझ्नु सम्प्रति ॥७५॥

सूत्रानुसार सामान्य विद्याका जो उपासक ।
ब्रह्मलोक सिधै जान्छन् भै अमानव वाहक ॥७६॥

यसमा गुरुजी ! भन्नोस् ती प्रतीकउपासक ?
के अर्चिरादि भै जान्छन् ? ब्रह्माका लोक नै तक ॥७७॥

गुरु–

प्रतिकोपासकैलाई पुं अमानवले पनि ।
लैजान्नन् ब्रह्मलोकैमा [३६]'तं यथा' न्यायले पनि ॥७८॥

जो ब्रह्मभावनारूप क्रतु हो बह्मप्राप्तिको ।
त्यही नै हेतु हो मुख्य ज्ञानीको ब्रह्मप्राप्तिको ॥७९॥

प्रतीकोपासकै जो हुन् ती ब्रह्मक्रतु होइनन् ।
ब्रह्मको लोक जानेमा ती योग्य पात्र होइनन् ॥८०॥

तर पञ्चाग्निविद्याका उपासकहरूकन ।
आतिवाहिक लैजान्छ [३७]श्रुतिले गर्छ शंसन ॥८१॥

---

३५. अनियमः सर्वासामविरोधः शब्दानुमानाभ्याम् । – ब्रह्मसूत्र ३।३।१८।३१

३६. तं यथा यथोपासते तदेव भवति । – न्यायः

३७. स एनान् ब्रह्म गमयति । – छान्दोग्योपनिषद् ४।१५।५

विभिन्न [३८]श्रुतिका वाक्य लिई प्रमाणसाधक ।
गर्दा विचार जाँदैनन् ब्रह्मलोक उपासक ॥८२॥

उपासकहरू जस्तो भोग्छन् उपासनाफल ।
प्रतीकोपासकी त्यस्तै भोग्छन् उपास्तिको फल ॥८३॥

दुइटै [३९]सूत्रले भन्छन् प्रतीकोपासकैहरू ।
जाँदैनन् ब्रह्मको लोक, जान्छन् ती ब्रह्मविद्हरू ॥८४॥

ब्रह्मसूत्रको चतुर्थ अध्यायको तृतीय पादको कारिका पूरा भयो ।



---

३८. क. यावन्नाम्नो गतं तत्रास्य यथाकामचारो भवति । – छान्दोग्योपनिषद् ७।१।५
ख. वाग्वाव नाम्नो भूयसी । – छान्दोग्योपनिषद् ७।२।१
ग. यावद्वाचो गतं तत्राऽस्य यथाकामचारो भवति । – छान्दोग्योपनिषद् ७।२।२
घ. मनो वाव वाचो भूयः । – छान्दोग्योपनिषद् ७।३।१

३९. अप्रतीकालम्बनान्नयतीति बादरायण उभयथादोषात्तत्क्रतुश्च ।
– ब्रह्मसूत्र ४।३।६।१५–१६

॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥

ब्रह्मसूत्र

# चतुर्थ अध्याय
# चतुर्थ पाद

(यस पादमा सम्पद्याविर्भावदेखि जगद्व्यापारसहितका ७ अधिकरणहरू छन् । यी अधिकरणहरूमा ब्रह्मप्राप्ति र ब्रह्मलोकको स्थितिको निरूपण गरिएको छ ।)

## १. सम्पद्याविर्भावाधिकरण (ब्रह्मसूत्र ४।४।१।१–३)

शिष्य–

[1]ज्ञानी जीव जसै गर्छ प्रस्थान देहबाट यो ।
देहात्मभाव छोडेर स्वयं नै ब्रह्म बन्छ यो ॥१॥

मुक्तिस्वरूप हो ? यद्वा स्वर्गभैँ प्राप्य काम्य हो ?
सन्देह हुनगो मुक्ति प्राचीन वा नवीन हो ? ॥२॥

वादी सन्देहमा भन्छन् अभिनिष्पत्ति लीकन ।
उत्पत्तियुक्त हो मुक्ति देखिन्छ फलशंसन ॥३॥

गुरु–

आत्मस्वरूपले मात्र त्यो आविर्भूत बन्दछ ।
त्यो अन्य धर्मले हैन श्रुतिले स्पष्ट भन्दछ ॥४॥

'स्वेन रूपेण' मा आयो 'स्व' शब्द जुन वस्तुतः ।
मुक्ति प्राचीन हो, हैन नवीन बुझ तत्त्वतः ॥५॥

---

१. एवमेवैष सम्प्रसादोऽस्माच्छरीरात् समुत्थाय परं ज्योतिरुपसम्पद्य स्वेनरूपेणाऽभिनिष्पद्यते । – छान्दोग्योपनिषद् ८।१२।३

अभिनिष्पत्तिको अर्थ हो आविर्भाव शब्दतः ।
अज्ञाननाशका पश्चात् मुक्ति हो फल नै स्वतः ॥६॥

[२]शरीरहीन आत्मा त्यो प्रियाप्रियादिले छुन ।
सक्तैनन्, [३]पापनिर्मुक्त आत्मा हो श्रुतिशंसन ॥७॥

अभिनिष्पत्ति उत्पत्ति हुन् ती पर्यायवाचक ।
पूर्वावस्था-अपेक्षाले यी हुन् शब्दार्थवाहक ॥८॥

सारा रोग हटी मान्छे निरोगी जब बन्दछ ।
त्यस्तै पाप्मादि भै नष्ट मुमुक्षु मुक्त बन्दछ ॥९॥

यहाँ प्रकरणले प्राप्त आत्मा नै ज्योति बन्दछ ।
[४]'तद्देवा' श्रुतिले आत्मा ज्योतिको ज्योति भन्दछ ॥१०॥

भौतिक ज्योति यो हैन [५]प्रकृत हानि बन्दछ ।
आई अप्रकृतै सोझै अर्थ नै व्यर्थ गर्दछ ॥११॥

नवीन हैन सन्मुक्ति सिद्धवस्तु सनातन ।
अस्थायी स्वर्गजस्तो यो हैन मुक्ति निरञ्जन ॥१२॥

तीन छन् यसमा [६]सूत्र सबैको एउटै मत ।
मुक्ति प्राचीन हो, हैन नवीन स्वर्गतुल्य त ॥१३॥



२. अशरीरं वाव सन्तं न प्रियाप्रिये स्पृशतः । – छान्दोग्योपनिषद् ८।१२।१
३. य आत्माऽपहतपाप्मा । – छान्दोग्योपनिषद् ८।७।१
४. क. परं ज्योतिरुपसम्पद्य । – छान्दोग्योपनिषद् ८।१२।३
ख. तद्देवा ज्योतिषां ज्योतिः । – बृहदारण्यकोपनिषद् ४।४।१६
५. प्रकृतहान्यप्रकृतप्रक्रियाप्रसङ्गात् । – शाङ्करभाष्य, ब्रह्मसूत्र ४।४।१।३
६. सम्पद्याविर्भावः स्वेनशब्दात् । – ब्रह्मसूत्र ४।४।१।१–२

## २. अविभागेनदृष्टत्वाधिकरण (ब्रह्मसूत्र ४।४।२।४)

शिष्य–

परज्योति गरी प्राप्त स्वरूपोत्पत्तिका पछि।
ब्रह्मविद् ब्रह्मदेखिन् वा पृथक् रहन्छ ? वा पछि ? ॥१४॥

अविभागेन यद्वा त्यो परमात्मस्वरूपले।
रहन्छ वा ? भनी आयो सन्देह यस रूपले ॥१५॥

यसमा पूर्वपक्षीले [७]'स तत्र' श्रुति लीकन।
स्वात्मामा नै सरी बस्छ द्वैतभावत्व लीकन ॥१६॥

अधिकारणका साथै अधिकर्तव्य भावको।
निर्देशन भएकाले [८]ज्योति सम्प्राप्त गर्दछ ॥१७॥

यसमा कर्मकर्ताको श्रुति निर्देश गर्दछ।
अतः आत्मा पृथक् जीव स्व अवस्थान गर्दछ ॥१८॥

यसरी गुरुजी आयो आत्मा जीव पृथक् भनी।
आज्ञा होस् जीव साँच्चै हो ? आत्मादेखि पृथक् अनि ॥१९॥

गुरु –

मुक्तात्मा परमात्मामा भई एकत्व बन्दछन्।
[९]तिमी ब्रह्म [१०]तिमी आत्मा यही नै श्रुति भन्दछन् ॥२०॥

---

७. स तत्र पर्येति। – छान्दोग्योपनिषद् ८।१२।३

८. ज्योतिरुपसम्पद्य। – छान्दोग्योपनिषद् ८।१२।३

९. अभयं वै जनक प्राप्तोऽसि। – बृहदारण्यकोपनिषद् ४।२।४

१०. तत्त्वमसि। – छान्दोग्योपनिषद् ६।८।७

जब [११]ब्रह्म भई बस्छ ऊ [१२]देख्तैन अरू अनि ।
त्यहाँ दोस्रो कुनै छैन बस्छ [१३]अद्वैत नै बनी ॥२१॥

जसरी [१४]शुद्ध पानीमा मिसाए शुद्ध नै जल ।
एकरूप भई मिल्छ भएर स्वच्छ निर्मल ॥२३॥

विज्ञानी मुनिको आत्मा त्यस्तै एक भईकन ।
रहन्छ, श्रुतिले भन्छ नाना दृष्टान्त दीकन ॥२४॥

भेदनिर्देश जो आयो अभेद नै रहीकन ।
औपचारिक हो भेद साँचो अभेददर्शन ॥२५॥

सोधे नारदले [१५]ब्रह्म कसमा छ प्रतिष्ठित ?
भने कुमारले आफ्नै महिमामा प्रतिष्ठित ॥२६॥

स्वमा [१६]रमण जो गर्छ आत्माका साथ खेल्दछ ।
भन्ने यो श्रुतिको वाक्य भेदोपचारनिम्ति छ ॥२७॥

यसमा [१७]सूत्र यौटै छ त्यसले पनि भन्दछ ।
भेदोपचारमात्रै हो अभेद श्रुति भन्दछ ॥२८॥



---

११. अहं ब्रह्मास्मि । – बृहदारण्यकोपनिषद् १।४।१०
१२. यत्र नान्यत्पश्यति । – छान्दोग्योपनिषद् ७।२४।१
१३. न तु तद्द्वितीयमस्ति ततोऽन्यद्विभक्तं यत्पश्येत् । – बृहदारण्यकोपनिषद् ४।३।२३
१४. यथोदकं शुद्धे शुद्धमसिक्तं तादृगेव भवति ।
एवं मुनेर्विजानत आत्मा भवति गौतम ॥ – कठोपनिषद् ४।१५
१५. स भगवः कस्मिन् प्रतिष्ठित इति स्वे महिम्नि । – छान्दोग्योपनिषद् ७।२४।१
१६. आत्मरतिरात्मक्रीडः । – छान्दोग्योपनिषद् ७।२५।२
१७. अविभागेन दृष्टत्वात् । – ब्रह्मसूत्र ४।४।२।४

## ३. ब्रह्माधिकरण (ब्रह्मसूत्र ४।४।३।५–७)

शिष्य–

[18]‘स्वेन रूपेण’ ले भन्छ आत्मा त्यो आफ्नु रूपमा ।
रहन्छ हुनगो सिद्ध रहन्न अन्य रूपमा ॥२९॥

पाप्मादिदोषले शून्य आत्मा त्यो ब्रह्मरूप हो ।
सत्यकामादिले युक्त आत्मा नै बोधरूप हो ॥३०॥

यसरी श्रुति केहीले गर्छन् निर्गुणवर्णन ।
[19]‘स तत्र’ श्रुति केहीले गर्छन् सगुणवर्णन ॥३१॥

मुक्तात्माले दुवैलाई एकै समयमा कि ! ती ?
क्रमैले गर्दछन् प्राप्त ? सन्देह हुनगो अति ? ॥३२॥

वादीले यसमा भन्छन् दुवै सगुण निर्गुण ।
परस्पर विरोधी हुन् हुँदैनन् प्राप्त तत्क्षण ॥३३॥

त्यसैकारणले प्राप्त हुन्छन् ती क्रमले गुण ।
एकै समयमा हैन वादीले भन्दछन् जुन ॥३४॥

यसमा भन्नुहोस् ब्रह्मन् ! के पूर्वपक्ष युक्त हो ?
यदि हैन भने श्रौत कुन सिद्धान्त युक्त हो ? ॥३५॥

गुरु–

जो छन् [20]अपहतत्वादि धर्म ती भेदकारक ।
विकल्प शब्दले नै हुन् आत्माका भेदकल्पक ॥३६॥

---

१८. स्वेन रूपेणाऽभिनिष्पद्यते स उत्तमः पुरुषः । – छान्दोग्योपनिषद् ८।१२।३

१९. स तत्र पर्येति जक्षन् क्रीडन् रममाणः । – छान्दोग्योपनिषद् ८।१२।३

२०. य आत्माऽपहतपाप्मा । – छान्दोग्योपनिष ८।७।१

निवृत्ति पापका पश्चात् आत्मा निष्पाप बन्दछ।
आत्मस्वरूप हो सत् चित् सदाविर्भाव बन्दछ ॥३७॥

[२१]प्रज्ञानघन हो आत्मा त्यसैकारणले पनि।
[२२]सत्यकामत्व धर्मादि रहन्छन् चिति नै बनी ॥३८॥

अनेकाकारता हुन्न ब्रह्ममा [२३]सूत्र भन्दछ।
बोधस्वरूपले आत्मा सदाविर्भूत बन्दछ ॥३९॥

मुक्तात्मामा कसै हुन्नन् सर्वज्ञत्वादि ती गुण।
अज्ञाननाश बन्नाले रहन्नन् उनमा गुण ॥४०॥

प्रमातृभेदले गर्दा एउटै कालमा पनि।
सविशेषादिका धर्म सक्तछन् रहनै अनि ॥४१॥

[२४]तीन छन् यसमा सूत्र यिनले पनि भन्दछन्।
प्रमातृभेदले गर्दा साथै रहन सक्तछन् ॥४२॥



## ४. सङ्कल्पाधिकरण (ब्रह्मसूत्र ४।४।४।८–९)

शिष्य–

[२५]सङ्कल्पमात्रले ज्ञानी पितादि पितृ भेट्‌तछ।
भनेर श्रुतिमा आयो किन्तु संशय उठ्‌तछ ॥४३॥

---

२१. एवं वा अरेऽयमात्मानन्तरोऽबाह्यः कृत्स्नः प्रज्ञानघन एव।
– बृहदारण्यकोपनिषद् ४।५।१३

२२. सत्यकामः सत्यसङ्कल्पः। – छान्दोग्योपनिषद् ८।७।१

२३. न स्थानतोऽपि परस्योभयलिङ्गम्। – ब्रह्मसूत्र ३।२।११

२४. ब्राह्मेण जैमिनिरुपन्यासादिभ्यः। – ब्रह्मसूत्र ४।४।३।५

२५. स यदि पितृलोककामो भवति सङ्कल्पादेवाऽस्यपितरः समुत्तिष्ठन्ति।
– छान्दोग्योपनिषद् ८।२।१

खाली सङ्कल्प हो हेतु ? यद्वा निमित्तकारण ।
सङ्कल्पसाथ अरू छन् ? आयो संशय भैकन ॥४४॥

पितृ सङ्कल्पमात्रैले उपस्थित भए पनि ।
निमित्तहेतु चाहिन्छ लौकिकी कामभैँ अनि ॥४५॥

सङ्कल्पमात्र मानेमा हुँदैन भोग पुष्कल ।
आशामोदकभैँ बन्छ बन्ने छ भोग निष्फल ॥४६॥

यसमा भन्नुहोस् ब्रह्मन् ! वादीको मत युक्त हो ?
यदि हैन भनेदेखिन् कुन सिद्धान्त युक्त हो ? ॥४७॥

गुरु–

पितृ सङ्कल्पले हुन्छन् समुत्थित भनीकन ।
श्रुतिमा स्पष्ट नै आयो 'समुत्तिष्ठन्ति' शंसन ॥४८॥

अरू निमित्त मानेमा श्रुतिबाधित बन्दछ ।
ज्ञानी र अज्ञसङ्कल्प-बीच यै छ विलक्षण ॥४९॥

अबन्ध्यरूप सङ्कल्प भएकाले सुनिश्चित ।
अनन्याधिप नै बन्छ विद्वान् यो श्रुतिनिश्चित ॥५०॥

[२६]जसरी लोकमा राजा त्यो कामाचार बन्दछ ।
त्यस्तै सर्वत्र नै विद्वान् सङ्कल्पैबाट पुग्दछ ॥५१॥

दुई छन् यसमा [२७]सूत्र दुवैले स्पष्ट भन्दछन् ।
सङ्कल्पैबाट मुक्तात्मा लोकादि प्राप्त गर्दछन् ॥५२॥



२६. अथ य इहात्मानमनुविद्य व्रजन्त्येतांश्च सत्यान् कामांस्तेषां सर्वेषु लोकेषु कामचारो भवति । – छान्दोग्योपनिषद् ८।१।६

२७. सङ्कल्पादेव तु तच्छ्रुते । – ब्रह्मसूत्र ४।४।४।७

## ५. अभावाधिकरण (ब्रह्मसूत्र ४।४।५।१०–१४)

शिष्य–

[२८]सङ्कल्पबाट नै सारा उठ्तछन् पितृ ती सब।
भन्ने सिद्ध भयो माथि श्रुतिवाक्य लिई तब ॥५३॥

ब्रह्माका लोकमा देह [२९]अभाव [३०]भाव बन्दछ।
दुई आचार्यका साथै श्रुतिले पनि भन्दछ ॥५४॥

विद्वान्‌ले प्राप्त गर्ने हो ऐश्वर्यादिक नै जुन।
आयो सन्देह देहादि हुन्छन् ? हुन्नन् ? भनीकन ॥५५॥

वादीले भन्दछन् देह यौटै पुरुषमा तब।
सद्भाव र असद्भाव हुन सक्तैन सम्भव ॥५६॥

अतः पुरुषको भेद भएमा हुन्छ सम्भव।
एकै समय यौटैमा दुवै हुन असम्भव ॥५७॥

यसमा अब आज्ञा होस् वादीको मत युक्त हो ?
यदि हैन भनेदेखिन् सिद्धान्त कुन युक्त हो ? ॥५८॥

गुरु –

सशरीरत्वसङ्कल्प मुक्तात्मा जब गर्दछ।
शरीर उसको हुन्छ सङ्कल्प सत्य बन्दछ ॥५९॥

शरीर जब चाहन्नन् शरीरहीन बन्दछ।
सत्य सङ्कल्पले गर्दा स्थिति विचित्र बन्दछ ॥

---

२८. सङ्कल्पादेवास्य पितरः समुत्तिष्ठन्ति। – छान्दोग्योपनिषद् ७।२।१
२९. क. मनसैतान् कामान् पश्यन् रमते। – छान्दोग्योपनिषद् ८।१२।५
ख. य एते ब्रह्मलोके। – छान्दोग्योपनिषद् ८।१३।१
३०. स एकधा भवति त्रिधा भवति। – छान्दोग्योपनिषद् ७।२६।२

त्यही दशाह यौटै नै अहीन सत्र बन्दछ।
त्यही शरीरको भाव अभाव पनि बन्दछ ॥६१॥

स्वप्नमा जसरी देह इन्द्रियादि नभै पनि।
पित्र्यादि बन्दछन् लभ्य त्यस्तै नै मोक्षमा पनि ॥६२॥

जाग्रद्मा जसरी हुन्छन् पित्र्यादिकाम सम्भव।
त्यस्तै नै मोक्षमा हुन्छन् पित्र्यादि प्राप्त नै सब ॥६३॥

विरोध यसमा छैन जाग्रत्-स्वप्न-समान नै।
मुक्तले पाउँछन् भोग भावाभाव भईकनै ॥६४॥

यसमा पाँच छन् [३१]सूत्र यिनले पनि भन्दछन्।
ज्ञानी सङ्कल्पमात्रैले पित्र्यादि सब पाउँछन् ॥६५॥



## ६. प्रदीपाधिकरण (ब्रह्मसूत्र ४।४।६।१५–१६)

शिष्य –
सन्देह हुन्छ मुक्तात्मा भन्छन् आचार्य जैमुनि।
हुन्छन् निरात्मकै ? यद्वा हुन्छन् सात्मक ? नै तिनी ॥६६॥

वादीले भन्दछन् हुन्नन् शरीर सब सात्मक।
आत्मा र मन बन्दैनन् अनेक बहु-आत्मक ॥६७॥

त्यसैले मुक्त आत्मा ती रहन्छन् एक देहमा।
अनेक बन्न सक्तैनन् यो मिल्दैन यथार्थमा ॥६८॥

---

३१. अभावं वादरिराह ह्येवम्। – ब्रह्मसूत्र ४।४।५।१०–१४

गुरुजी ! यसमा भन्नोस् बन्छन् मुक्त अनेकन ?
बन्दछन् ? बन्न सक्तैनन् ? भन्नोस् प्रमाण दीकन ।।६९।।

गुरु –
विकारशक्तिले युक्त यौटै दीपक नै पनि ।
अनेकरूप देखिन्छ त्यस्तै त्यो मुक्त नै पनि ।।७०।।

सङ्कल्पशक्तिका द्वारा अनेक मन बन्दछन् ।
मनले युक्त भै आत्मा अनेक बन्न सक्तछन् ।।७१।।

अनेक देह सिर्जेर उपाधिभेदले गरी ।
आत्मा प्रवेश गर्ने छ अनेक देहमा सरी ।।७२।।

योगशास्त्रादिले भन्छन् योगी अनेक बन्दछन् ।
त्यस्तै गरेर मुक्तात्मा [३२]श्रुतितः बहु बन्दछन् ।।७३।।

वादीले गर्दछन् शङ्का [३३]श्रुतिले स्पष्ट भन्दछ ।
अद्वैत परमात्मा त्यो कसरी द्वैत बन्दछ ? ।।७४।।

सिद्धान्ती यसमा भन्छन् [३४]श्रुतिसिद्धान्त लीकन ।
दिन्छन् सुषुप्ति दृष्टान्त 'स्वमपीतो' भनीकन ।।७५।।

जो हो सम्पत्ति कैवल्य [३५]ब्रह्म भै ब्रह्म बन्दछ ।
कहिले श्रुति कैवल्य कैले सुषुप्ति भन्दछ ।।७६।।

---

३२. स एकधा भवति त्रिधा भवति पञ्चधा सप्तधा नवधा ।– छान्दोग्योपनिषद् ७।२६।२
३३.क. तत् केन कं विजानीयात् । – बृहदारण्यकोपनिषद् ४।५।१५
ख. न तु तद् द्वितीयमस्ति ततोऽन्यदविभक्तं यद्विजानीयात् ।
– बृहदारण्यकोपनिषद् ४।३।३०
ग. सलिल एको द्रष्टाऽद्वैतो भवति । – बृहदारण्यकोपनिषद् ४।३।३२
३४. स्वमपीतो भवति तस्मादेनं स्वपितीत्याचक्षते । – छान्दोग्योपनिषद् ६।८।१
३५. ब्रह्मैव सन् ब्रह्माप्येति । – बृहदारण्यकोपनिषद् ४।४।६

मुक्तात्मा कहिले लिन्छ उपाधि धेर बन्दछ।
उपाधि सब छोडेर कैले केवल बन्दछ ॥७७॥

दुई छन् यसमा [३६]सूत्र श्रुत्यनुसार भन्दछन्।
मुक्तात्मा कहिले एक कहिले धेर बन्दछन् ॥७८॥



## ७. जगद्व्यापाराधिकरण (ब्रह्मसूत्र ४।४।७।१७–२२)

शिष्य –

सगुण ब्रह्मका जो छन् उपासकहरू सब।
मनका साथ नै जान्छन् सोझै सायुज्यमा जब ॥७९॥

तिनको जो छ ऐश्वर्य साङ्कुश ? कि ! निरङ्कुश ?
सन्देह यसमा आयो वादी भन्छन् निरङ्कुश ॥८०॥

[३७]'आप्नोति' आदिका केही श्रुतिप्रमाण दीकन।
सर्वत्र कामचारी हो भन्छन् प्रमाण लीकन ॥८१॥

यसमा भन्नुहोस् ब्रह्मन् ! वादीको मत युक्त हो ?
यदि हैन भनेदेखिन् कुन सिद्धान्त युक्त हो ? ॥८२॥

गुरु –

[३८]जगद्व्यापार छोडेर ऐश्वर्य आणिमादिक –
प्राप्त गर्दछ मुक्तात्मा, ईश हो सृष्टिसर्जक ॥८३॥

---

३६. प्रदीपवदावेशस्तथा हि दर्शयति। – ब्रह्मसूत्र ४।४।६।१५–१६

३७. आप्नोति स्वाराज्यम्। – तैत्तरेयोपनिषद् १।६।२

३८. जगद्व्यापारवर्जं प्रकरणादसन्निहितत्वाच्च। – ब्रह्मसूत्र ४।४।७।१७

ईशबाहेक साराले सृष्टिसंहार नै गरे ।
अव्यवस्था भई हुन्छ संसृष्टिनाश नै अरे ॥८४॥

प्राप्ति गर्दछ 'स्वाराज्यम्' यो सातिशयशंसन ।
ज्ञानीको यो प्रशंसा हो ठूलो ऐश्वर्यसूचन ॥८५॥

ब्रह्मका [३९]दुईटा रूप श्रुतिले गर्छ वर्णन ।
निरङ्कुश र साङ्कुश रहन्छ मुक्त तत्क्षण ॥८६॥

ब्रह्मज्योति स्वयंज्योति त्यो ज्योति [४०]स्वप्रकाश हो ।
सूर्यादि सबले ज्योति पाउने ब्रह्मबाट हो ॥८७॥

ब्रह्माका लोक जाने ती उपासकहरूकन ।
[४१]हिरण्यगर्भले भन्छन् मभैँ भोग तिमी जल ॥८८॥

[४२]उनको जसले गर्छन् पूजा ती पूज्य बन्दछन् ।
यी सबै श्रुतिका मन्त्र अर्थवादार्थ भन्दछन् ॥८९॥

[४३]प्राणात्मप्रतिरूपत्व व्रतका योगले सब ।
सायुज्य एकस्थानत्व पाउँछन् साम्य वैभव ॥९०॥

भोगका दृष्टिले साम्य देखिन्छ ईशका सित ।
जगत्सर्जनले हैन मुक्तको बुभ्क शास्त्रतः ॥९१॥

---

३९. तावानस्य महिमा ततो ज्यायांश्च पूरुषः ।
पादोऽस्य सर्वा भूतानि, त्रिपादस्यामृतं दिवि । – छान्दोग्योपनिषद् ३।११।६

४०. क. न तत्र सूर्यो भाति न चन्द्रतारकं नेमा विद्युतो भान्ति कुतोऽयमग्निः । तमेव भान्तमनुभाति सर्वं तस्य भासा सर्वमिदं विभाति । – कठोपनिषद् ५।५
ख. न तद्भासयते सूर्यो न शशाङ्को न पावकः । – गीता १५।६

४१. तमाहापो वै खलु मीयन्ते लोकोऽसौ । – श्रुतिः

४२. स यथैतां देवतां सर्वाणि भूतान्यवन्त्येव हैवंविदं सर्वाणि भूतान्यवन्ति । – श्रुतिः

४३. तेनो एतस्यै देवताय सायुज्यं सलोकतां जयति । – बृहदारण्यकोपनिषद् १।५।२३

शिष्य –

ती निरङ्कुश ऐश्वर्य पाउँदैनन् भने जब ।
पृथ्वीमै फर्कने हुन् ? वा फर्कंदैनन् गुरो तब ॥९२॥

गुरु –

ब्रह्माका लोकको भोग अर्थवाद लिईकन ।
गर्छन् वर्णन केहीले न देऊ त्यसमा मन ॥९३॥

हिरण्यगर्भका भक्त कर्मठे भक्त नै सरी ।
त्यहींको भोग भोगेर पृथ्वीमै आउँछन् झरी ॥९४॥

ऐश्वर्य नाशवान् नै हो फर्कन्न फेरि जो अनि ।
[४४]'कार्यात्यये' त्यसै भन्छ फर्कन्नन् मुक्त ती भनी ॥९५॥

सम्यग्दर्शनले जस्को अज्ञान ध्वस्त भैकन ।
नित्यनिर्वाणमा हुन्छ निमग्न ब्रह्म भैकन ॥९६॥

फर्कन्नन् फेरि मुक्तात्मा उनको मुक्ति सिद्ध हो ।
त्यस्तै सगुण विद्याका ज्ञानीको मुक्ति सिद्ध हो ॥९७॥

कण्ठतः [४५]श्रुतिले भन्छन् अनावृत्ति भनीकन ।
मुक्तात्मा ब्रह्म नै हुन्छन् फर्कन्न फेरि जन्मन ॥९८॥

६ ओटा यसमा [४६]सूत्र सबैको एउटै मत ।
ब्रह्मज्ञ फेरि फर्कन्नन् जान्छन् ब्रह्म भई स्वतः ॥९९॥

ब्रह्मसूत्रको चतुर्थ अध्यायको चतुर्थ पादको कारिका पूरा भयो ।



---

४४. कार्यात्यये तदध्यक्षेण सहातः परमभिधानात् । – ब्रह्मसूत्र ४।३।५।१०

४५. क. तेषां न पुनरावृत्तिः । – बृहदारण्यकोपनिषद् ६।२।१५
ख. एतेन प्रतिपाद्यमाना इमं मानवमावर्तं नावर्तन्ते । – छान्दोग्योपनिषद् ४।१५।१
ग. ब्रह्मलोकमभिसम्पद्यते । – छान्दोग्योपनिषद् ८।१५।१
घ. न च पुनरावर्तते । – छान्दोग्योपनिषद् ८।१५।१

४६. जगद्व्यापारवर्जं प्रकरणादसंनिहितत्वाच्च । – ब्रह्मसूत्र ४।४।७।१७–२२

अनुसूची (क)

ॐ

॥ तत्सद्ब्रह्मणे नमः ॥

## ब्रह्मसूत्रमा भएका सूत्रहरूको नेपालीमा सङ्क्षिप्त अनुवाद

### प्रथम अध्याय

### प्रथम पाद

१. अथातो ब्रह्मजिज्ञासा (अ.१ मा.१ अधि. १ सू. १)

साधनचतुष्टयले सम्पन्न भएपछि कर्मफललाई अनित्य सम्झेर र ज्ञानफल अर्थात् मोक्षलाई नित्य सम्झेर मोक्षको अभिलाषा गर्ने भएका पुरुषले ज्ञानप्राप्तिका निमित्त वेदान्तवाक्यहरूको अर्थात् ब्रह्मको जिज्ञासा गर्नुपर्दछ।

२. जन्माद्यस्य यतः (अ.१ पा.१ अधि.२ सू.२)

यस जगत्को उत्पत्ति, स्थिति र लय जसबाट हुन्छ, त्यो नै ब्रह्म हो।

३. शास्त्रयोनित्वात् (अ.१ पा.१ अधि. ३ सू.३)

ऋग्वेद आदि शास्त्रहरूको कारण भएको हुँदा ब्रह्म सर्वज्ञ हो।

४. तत्तु समन्वयात् (अ.१ पा.१ अधि. ४ सू.४)

कर्ता र देवताका प्रतिपादनद्वारा कर्म अथवा उपासनाको अङ्ग भएर ज्ञान गराउने नभएर वेदान्तवाक्यहरू त्यस ब्रह्मलाई स्वतन्त्ररूपमा बोध अर्थात् ज्ञान गराउँदछन्।

५. ईक्षतेर्नाशब्दम् (अ.१ पा.१ अधि.५ सू.५)

प्रधान जगत्को कारण होइन। किनभने त्यसलाई श्रुतिले प्रतिपादन गरेको छैन। तदैक्षत भनेर श्रुतिले जगत्को कारण ईक्षणको कर्ता ईश्वरलाई मानेको छ, जड प्रधानमा ईक्षण गर्ने शक्ति छैन।

६. गौणश्चेन्नात्मशब्दात् (अ.१ पा.१ अधि.५ सू.६)

श्रुतिमा उक्त ईक्षतिशब्द लाक्षणिक हो भनेर कुनै पनि हालतमा भन्न सकिँदैन। किनभने श्रुतिले जगत्कारणमा आत्मशब्दको प्रयोग गरेको छ। अतः सत् चेतन नै जगत्को कारण हो, अचेतन प्रधान होइन। त्यसैकारणले ईक्षतिशब्द गौण नभएर मुख्य नै हो।

७. तन्निष्ठस्य मोक्षोपदेशात् (अ.१ पा.१ अधि.५ सू.७)

जगत्को कारण ब्रह्मको ज्ञानबाट मोक्षप्राप्ति हुन्छ। अचेतन प्रधानको ज्ञानबाट मुमुक्षुले मोक्षप्राप्त गर्न सक्तैन।

८. हेयत्वावचनाच्च (अ.१ पा.१ अधि.५ सू.८)

जड प्रधानको ध्यानबाट मोक्ष नहुने कुरा भनिएको भए तापनि त्यसको निषेध

भने गरिएको होइन तापनि स्थूलाऽरुन्धती न्यायबाट चाहिँ प्रधान सत्शब्दवाच्य भने हुन सक्तैन।

९. स्वाप्ययात् (अ.१ पा. १ अधि. ५ सू.९)

सुषुप्ति अवस्थामा जीव आफ्नू अधिष्ठान ब्रह्ममा लीन हुन्छ भनेर श्रुतिले भनेको छ। यसैकारण पनि सत्शब्दवाच्य चेतन ब्रह्म नै हो, अचेतन प्रधान होइन। किनभने चेतन जीव अचेतन प्रधानमा लीन हुन कुनै हालतमा पनि सक्तैन।

१०. गतिसामान्यात् (अ.१ पा.१ अधि.५ सू.१०)

सबै वेदान्तहरूबाट प्राप्त हुने ज्ञान एउटै हो। किनभने सबै वेदान्तहरूले चेतनलाई जगत्को कारण भनेका छन्। अतः अचेतन प्रधान जगत्को कारण हुन सक्तैन।

११. श्रुतत्वाच्च (अ.१ पा.१ अधि.५ सू.११)

'स कारणम्' इत्यादि श्रुतिहरूमा जगत्को कारणलाई सर्वज्ञ भनिएको छ। अतः ब्रह्म नै जगत्को कारण हो, अचेतन प्रधान जगत्को कारण होइन।

१२. आनन्दमयोऽभ्यासात् (अ.१ पा.१ अधि.६ सू.१२)

'अन्योऽन्तर आत्माऽऽनन्दमयः' भन्ने श्रुतिमा आएको 'आनन्दमय' शब्दले परमात्मालाई बुझाएको छ, जीवलाई होइन। किनभने अनेकौं श्रुतिहरूमा ब्रह्मका लागि नै आनन्द शब्दको प्रयोग भएको देखिन्छ।

१३. विकारशब्दान्नेति चेन्न प्राचुर्यात् (अ.१ पा.१ अधि.६ सू.१३)

मयट् प्रत्यय विकाररूप अर्थको मात्र वाचक हो भन्नु ठीक होइन। किनभने प्राचुर्यरूप अर्थमा पनि मयट् प्रत्ययको विधान छ। अतः आनन्दमय परमात्मा नै हो।

१४. तद्धेतुव्यपदेशाच्च (अ.१ पा.१ अधि.६ सू.१४)

'को ह्येवान्यात्' भन्ने श्रुतिले सबै प्राणीहरूको आनन्दको कारण ब्रह्मलाई नै भनेको छ। यसकारणले पनि आनन्दमय परमात्मा नै हो।

१५. मान्त्रवर्णिकमेव च गीयते (अ.१ पा.१ अधि.६ सू.१५)

'सत्यं ज्ञानमनन्तं ब्रह्म' भन्ने मन्त्रमा निर्धारित ब्रह्मलाई नै 'अन्योऽन्तर आत्मानन्दमयः' भन्ने वाक्यमा पनि भनिएको छ। किनभने यो आनन्दमयको प्रकरण हो। अतः आनन्दमय परमात्मा नै हो।

१६. नेतरोऽनुपपत्तेः (अ.१ पा.१ अधि.६ सू.१६)

जीव आनन्दमय हुन सक्तैन। किनभने 'सोऽकामयत' भन्ने श्रुतिमा भनिएका कामयितृत्व आदि गुणहरू अर्थात् धर्महरू जीवमा हुन सम्भव छैन। अतः आनन्दमय परमात्मा नै हो।

१७. भेदव्यपदेशाच्च (अ.१ पा.१ अधि. ६ सू.१७)

'रसं ह्येवायं' भन्ने श्रुतिले आनन्दमय जीवभन्दा भिन्नै भएको कुरा बताएको छ। यसकारणले पनि आनन्दमय जीव नभएर ब्रह्म नै भएको प्रमाणित हुन्छ।

१८. कामाच्च नानुमानापेक्षा (अ.१ पा.१ अधि.६ सू.१८)

'सोऽकामयत' यस श्रुतिमा आनन्दमयलाई इच्छा गर्ने भनिएको छ । यसकारण अनुमानबाट जानिने प्रधान आनन्दमय हुन सक्तैन। किनभने जड प्रधानबाट इच्छा सम्भव छैन।

१९. अस्मिन्नस्य च तद्योगं शास्ति (अ.१ पा.१ अधि.६ सू.१९)

'यदा ह्येवैष' इत्यादि श्रुतिहरू आनन्दमयको ध्यानमा आसक्त मुमुक्षु र आनन्दमयका बीचमा अभेदप्रतिपादन गर्दछन् । अतः अचेतन प्रधान आनन्दमय हुन सक्तैन । किनभने अचेतनका साथ चेतनको अभेद हुन सक्तैन। यसकारणले पनि आनन्दमय परमात्मा नै हो।

२०. अन्तस्तद्धर्मोपदेशात् (अ.१ पा.१ अधि.७ सू.२०)

'अथ य एषो' भन्ने श्रुतिमा भनिएको आदित्यमण्डलका भित्र रहने हिरण्यमय पुरुष सूर्य होइन। किनभने पापशून्यत्व आदि धर्म ब्रह्मका भनिएका हुँदा ती धर्म सूर्यका हुन सक्तैनन्। अतः त्यो पुरुष परमेश्वर नै हो।

२१. भेदव्यपदेशाच्चान्यः (अ.१ पा.१ अधि.७ सू.२१)

'य आदित्ये' भन्ने श्रुतिमा सूर्य नियम्य हो र ब्रह्म नियामक हो भनेर दुईका बीचमा भेद देखाइएको छ। यसकारण उक्त पुरुष सूर्यभन्दा भिन्नै हो। किनभने उक्त अर्को 'अथ यः' भन्ने श्रुतिमा समेत आदित्यका अन्तवर्ती पुरुषको उपदेश गरिएको छ।

२२. आकाशस्तल्लिङ्गात् (अ.१ पा.१ अधि.८ सू.२२)

'आकाश इति' यस श्रुतिमा वर्णित आकाश ब्रह्म नै हो । भूताकाश होइन । किनभने आकाशबाट नै सबै भूतहरूको उत्पत्ति हुने र अन्तमा त्यसै आकाशमा लय हुने भनिएको भए तापनि सबै भूतहरूको सृष्टि गर्नु र तिनको नाश गर्नु ब्रह्मको लिङ्ग हो। भूताकाशबाट सबै भूतप्राणीको उत्पत्ति र लय हुन सक्तैन। अतः आकाशशब्दले ब्रह्मलाई जनाउँछ।

२३. अत एव प्राणः (अ.१ पा.१ अधि. ९ सू.२३)

'प्रस्तोतर्या' भन्ने श्रुतिमा वर्णित प्राणशब्दवाच्य परमात्मा नै हो, प्राणवायु होइन। सृष्टि, स्थिति र लय ब्रह्मले मात्र गर्न सक्तछ, प्राणवायुले गर्न सक्तैन।

२४. ज्योतिश्चरणाभिधानात् (अ.१ पा.१ अधि.१० सू.२४)

'अथ यादतः' श्रुतिले 'ज्योतिः' शब्दबाट परमात्मालाई नै भनेको हो, सूर्य आदि

ज्योतिलाई भनेको होइन । किनभने 'पादोऽस्य' यस मन्त्रमा ब्रह्मका ३ पाद भनिएको छ । यहाँ ज्योतिर्वाक्यमा द्युलोकका सम्बन्धबाट उसै ब्रह्मको नै प्रत्यभिज्ञा गरिएको छ ।

२५. छन्दोऽभिधानान्नेति चेन्न तथा चेतोर्पणनिगदात्तथा हि दर्शनम् (अ.१ पा.१ अधि.१० सू.२५)

'गायत्री वा.' भन्ने यस श्रुतिमा गायत्री छन्दको उपक्रम आएको छ । यसकारण गायत्रीलाई नै त्रिपाद भनिएको हो तर ब्रह्मलाई त्रिपाद भनिएको होइन भन्न मिल्दैन । किनभने श्रुतिमा गायत्री छन्दद्वारा गायत्रीमा अनुगत ब्रह्ममा चित्तलाई एकाग्र गर्नुपर्दछ भन्ने उपदेश गरिएको हो । अतः ब्रह्मलाई नै त्रिपाद भनिएको हो । 'एतं ह्येवं' इत्यादि मन्त्रमा पनि विकारद्वारा नै ब्रह्मको उपासनाको दर्शन हुन्छ ।

२६. भूतादिपादव्यपदेशोपपत्तेश्चैवम् (अ.१ पा.१ अधि.१० सू.२६)

'गायत्री वा' यस श्रुतिमा भूत, पृथिवी, शरीर र हृदयलाई पाद भनिएको भएता पनि यो भनाई ब्रह्ममा नै उपपन्न हुन सक्तछ । यस भनाइले पनि गायत्री छन्दद्वारा गायत्रीमा अनुगत ब्रह्मको नै बोध हुन्छ ।

२७. उपदेशभेदान्नेति चेन्नोभयस्मिन्नप्यविरोधात् (अ.१ पा.१ अधि.१० सू.२७)

'त्रिपादस्य' यस गायन्त्री मन्त्रले ब्रह्म ब्रह्माण्डको अन्तवर्ती हो भनेको छ । 'अथ यदतः' यस ज्योतिर्वाक्यले ब्रह्म ब्रह्माण्डका माथि छ भनेको छ । यसरी परस्पर विरुद्ध अर्थमा आएका दुवै श्रुतिवाक्यहरूलाई प्रमाणका रूपमा लिन पाइँदैन भन्न मिल्दैन । किनभने मन्त्रमा आएको 'दिवि' यस सप्तमी विभक्तिले लक्षणाद्वारा पञ्चमी विभक्तिको बोध गराउँदछ । अतः कुनै विरोध नभएको कारण दुवै प्रमाणका रूपमा प्रस्तुत हुन सक्तछन् । ज्योतिर्वाक्यमा आएको ज्योतिः शब्दले ब्रह्मलाई नै बुझाउने कुरा प्रमाणित हुन्छ ।

२८. प्राणस्तथानुगमात् (अ.१ पा.१ अधि. ११ सू.२८)

'प्राणोऽस्मि' भन्ने यस श्रुतिले प्राण भनेको परमात्मा नै प्राणवायु होइन भनेको छ । किनभने 'प्राण एव प्रज्ञात्मा' भन्ने श्रुतिले आनन्दत्व, अमरत्व, अमृतत्व आदिलाई ब्रह्मको लिङ्ग भनेको छ ।

२९. न वक्तुरात्मोपदेशादिति चेदध्यात्मसम्बन्धभूमा ह्यस्मिन् (अ.१ पा.१ अधि.११ सू.२९)

इन्द्रले प्रतर्दनलाई 'मामेव विजानीहि' भनेर यसरी आफ्नू आत्मविशिष्ट शरीरलाई नै ज्ञेय भनेका छन् । यसकारण 'प्राणोऽस्मि' भन्ने यस श्रुतिमा इन्द्रलाई नै उपास्य भन्नु ठीक हो भन्न मिल्दैन । किनभने 'प्राण एव प्रज्ञात्मा' भन्ने वाक्यमा ब्रह्मलाई नै आनन्दत्व, अमृतत्व आदि धर्मले युक्त भनिएको छ । अतः ब्रह्म नै उपास्य हो, इन्द्र उपास्य होइन ।

३०. शास्त्रदृष्ट्या तूपदेशो वामदेववत् (अ.१ पा.१ अधि. ११ सू.३०)

वामदेव, शुक आदिका सरह इन्द्र पनि ब्रह्मज्ञानी थिए । अर्थात् इन्द्रलाई 'अहं ब्रह्मास्मि' म ब्रह्म हुँ भन्ने ज्ञान भएको थियो । त्यसै ब्रह्मदृष्टि गर्दा नै इन्द्रले 'मामेव विजानीहि' अर्थात् मलाई नै जान भनेर प्रतर्दनलाई उपदेश गरेका थिए । अतः 'प्राणोऽस्मि' भन्ने श्रुतिमा आएको प्राण परमात्मा हो, इन्द्र होइन ।

३१. जीवमुख्यप्राणलिङ्गान्नेति चेन्नोपासात्रैविध्यादाश्रितत्वादिह तद्योगात् (अ.१ पा.१ अधि.११ सू.३१)

श्रुतिमा 'वक्तारम्' भनेर जीवलिङ्ग र 'इदं शरीरम्' भनेको हुँदा केवल ब्रह्मको मात्र नभएर जीव र मुख्य प्राणको पनि बोध हुन्छ भनेर भन्नु ठीक होइन । किनभने यसो भन्दा तीन उपासना मान्नु पर्ने हुन्छ । अतः श्रुतिमा आएका ब्रह्मबोधक लिङ्गहरूबाट प्राणशब्दले ब्रह्म नै बुझ्नुपर्दछ, जीव र मुख्य प्राणलाई होइन ।



## प्रथम अध्याय

## द्वितीय पाद

३२. सर्वत्रप्रसिद्धोपदेशात् (अ.१ पा.२ अधि.१ सू.१)

सबै वेदान्तहरूमा प्रसिद्ध र 'सर्वं खल्विदं ब्रह्म' इत्यादि श्रुतिमा उपक्रान्त जगत्कारण ब्रह्मलाई नै 'मनोमय' भन्ने मन्त्रहरूबाट उपदेश गरिएको छ। अतः मनोमय ब्रह्म नै हो, मनोमय जीव होइन।

३३. विवक्षितगुणोपपत्तेश्च (अ.१ पा.२ अधि.१ सू.२)

उपासनाका लागि उपदिष्ट सत्यसङ्कल्पत्व, भारूपत्व आदि गुणहरूको ब्रह्ममा नै समन्वय हुन सक्तछ। अतः मनोमय ब्रह्म नै हो, जीव होइन।

३४. अनुपपत्तेस्तु न शारीरः (अ.१ पा.२ अधि १ सू.३)

उपासनाका लागि विवक्षित सत्यसङ्कल्पत्व आदि गुणहरूको जीवमा समन्वय हुन सक्तैन। अतः जीव उपर्युक्त गुणहरूबाट उपास्य होइन, ती गुणहरूबाट उपास्य ब्रह्म नै हो।

३५. कर्मकर्तृव्यपदेशाच्च (अ.१ पा.२ अधि.१ सू.४)

'एतमितः प्रेत्या' भन्ने यस श्रुतिमा 'एतं' यस पदबाट पूर्व प्रकृत ब्रह्म नै प्राप्य भनिएको छ। 'अभिसम्भवितास्मि' यसबाट चाहिँ जीवलाई प्राप्तिकर्ता भनिएको छ। अतः जीव उपास्य होइन किन्तु मनोमयत्व आदि गुणहरूबाट ब्रह्म नै उपास्य हो।

३६. शब्दविशेषात् (अ.१ पा.२ अधि.१ सू.५)

'यथा व्रीहिर्वा.... अन्तरात्मन् पुरुषो' भन्ने यस श्रुतिमा सप्तमीविभक्त्यन्त ' अन्तरात्मन्' शब्द जीववाचक हो र प्रथमान्त 'पुरुष' शब्द परमात्मावाचक हो। यसरी विभक्तिभेदबाट शब्दभेद हुन्छ। अतः यी शब्दहरूबाट प्रतिपाद्य जीव र ब्रह्म पनि भिन्नाभिन्नै हुन्। यसकारण जीव उपास्य होइन, ब्रह्म नै उपास्य हो।

३७. स्मृतेश्च (अ.१ पा.२ अधि.१ सू.६)

'ईश्वरः सर्वभूतानाम्' भन्ने यस स्मृतिमा जीव र ब्रह्मका बीचमा भेद देखाइएको छ। यसबाट जीव उपास्य होइन।

३८. अर्भकौकस्त्वात्तद्व्यपदेशाच्च नेति चेन्न निचारयत्वादेवं व्योमवच्च (अ.१ पा.२ अधि. १ सू.७)

अल्पस्थान अर्थात् हृदयमा स्थिति र 'अणीयान्' शब्दबाट परमसूक्ष्मता भनिएको छ। अतः जीव नै उपास्य हो, परमात्मा उपास्य होइन। यो भनाइ ठीक होइन। किनभने अर्भकौकस्त्व, अणीयस्त्व आदि धर्महरूबाट परमात्मा नै उपास्य हो। जसरी आकाश

सर्वगत भएर पनि त्यसलाई सियाका छिद्रबाट परिच्छिन्न भएर अर्भकौक र अणीयान अर्थात् परमसूक्ष्म भनिन्छ। त्यसैगरेर ब्रह्म पनि उपाधिसंसर्गबाट अर्भकौक, परम सूक्ष्म भनिन्छ। यसबाट ब्रह्म नै उपास्य भएको सिद्ध हुन्छ।

३९. सम्भोगप्राप्तिरिति चेन्न वैशेष्यात् (अ.१ पा.२ अधि.१ सू.८)

परमात्मा यदि सर्वगत हो भने चेतन भएका कारण जीवकै सरह सुखदुःखको अनुभव गर्ने हुन्छ। यस्तो कुरा भन्नु ठीक होइन। किनभने जीव भोक्ता हो, परमेश्वर भोक्ता होइन। यसप्रकारका भेदहरूबाट जीव र ब्रह्म भिन्नाभिन्नै हुन्। अतः जीवका भोगबाट ब्रह्मले भोग गर्ने प्रसङ्ग आउन सक्तैन। यसबाट मनोमयत्व आदि गुणहरू विशिष्ट परमात्मा नै उपास्य हो।

४०. अत्ता अराचरग्रहणात् (अ.१ पा.२ अधि.२ सू. ९)

'यस्य ब्रह्म च क्षत्रं च' भन्ने यस श्रुतिमा प्रतीयमान भक्षक परमात्मा नै हो, अग्नि अथवा जीव होइन। किनभने माथिको मन्त्रमा ब्रह्मपद र क्षत्रपदको लक्षणबाट स्थावर र जङ्गमरूप सम्पूर्ण जगत्को भक्ष्यरूपबाट ज्ञान हुन्छ। सर्वसंहारक परमात्माबाहेक अरू कुनै पनि सम्पूर्ण जगत्को भक्षक हुन सक्तैन।

४१. प्रकरणाच्च (अ.१ पा. २ अधि. ३ सू.१०)

'न जायते म्रियते' इत्यादि श्रुतिहरूबाट ब्रह्म नै प्रस्तुत गरिएको छ। 'क इत्था वेद' भनेर दुर्ज्ञेयत्वस्वरूप ब्रह्मको लिङ्गको पनि वर्णन गरिएको छ। अतः अत्तृवाक्यमा आएको उक्त भक्षक परमात्मा नै हो।

४२. गुहां प्रविष्टावात्मानौ हि तद्दर्शनात् (अ.१पा.२ अधि. ३ सू.११)

'ऋतं पिबन्तौ.' यस मन्त्रमा जीव र परमात्मालाई नै गुहाप्रविष्ट भनिएको हो, बुद्धि र जीवलाई होइन। अतः 'पिबन्तौ' बाट जीवात्मा र परमात्मा दुवैलाई लिएको देखिन्छ। दुवै चेतन भएकाले सजातीय हुन्, तर बुद्धि भने हुन सक्तैन, किनभने बुद्धि चेतन होइन। अतः बुद्धि चेतनत्वरूपबाट जीवात्माको सजातीय होइन।

४३. विशेषणाच्च (अ.१ पा.२ अधि.३ सू.१२)

'सोऽध्वनः पर.' 'अध्यात्मयोगाधि.' यी श्रुतिहरूमा जीव गमनकर्ता हो, परमात्मा गन्तव्यस्थान हो, जीव मननकर्ता हो र ईश्वर मन्तव्य हो भनेर यसप्रकारका विशेषणहरू दिइएका छन्। यी विशेषणहरूबाट पनि गुहाप्रविष्ट जीवात्मा र परमात्मा नै हुन्।

४४. अन्तर उपपत्तेः (अ.१ पा.२ अधि.४ सू. १३)

'ए एषोऽक्षिणि.' यस श्रुतिबाट प्रतीयमान नेत्राभ्यन्तरगत पुरुष परमात्मा नै हो, छायात्मा होइन। किनभने उक्त श्रुतिमा कथित आत्मत्व, अमृतत्व, अभयत्व आदि

धर्महरू परमात्मामा नै उपपन्न हुन्छन्, छायात्मामा उपपन्न हुँदैनन् । अतः आँखाभित्र निवास गर्ने पुरुष परमात्मा हो, छायात्मा होइन ।

४५. स्थानादिव्यपदेशाच्च (अ.१ पा.२ अधि.४ सू.१४)

'यश्चक्षुषि.' 'तस्योदिति.' 'हिरण्य.' आदि श्रुतिहरूमा स्थान, नाम र रूप समेतको वर्णन गरिएको छ। अतः यहाँ पनि परमात्मा आँखामा छन् भन्नु ठीक होइन। किनभने 'य एषोऽक्षिणि.' भन्ने श्रुतिमा परमात्मा नै आन्तरपुरुष भनिएको छ।

४६. सुखविशिष्टाभिधानादेव च (अ.१ पा.२ अधि. ४ सू.१५)

'प्राणो ब्रह्म कं ब्रह्म खं ब्रह्म.' भनेर श्रुतिले सुखविशिष्ट ब्रह्मको नै यहाँ अभिधान गरेको छ। यसबाट पनि आँखाका नानीमा रहने पुरुष परमात्मा नै भएको सिद्ध हुन्छ।

४७. श्रुतोपनिषत्कगत्यभिधानाच्च (अ.१ पा.२ अधि.४ सू.१६)

तत्त्वज्ञानीहरूका लागि जुन देवयानरूप मार्ग श्रुति र स्मृतिमा बताइएको छ, त्यही नै मार्ग यहाँ 'आदित्या.' इत्यादि वाक्यमा आँखाका अभ्यन्तरवर्ती पुरुषलाई जान्नेका लागि भनिएको छ। यसबाट पनि चक्षुःस्थ पुरुष ब्रह्म नै भएको सिद्ध हुन्छ।

४८. अनवस्थितेरसम्भवाच्च नेतरः (अ.१ पा.२ अधि.४ सू.१७)

उपासकका नेत्रमा छाया पार्ने अर्थात् प्रतिबिम्ब पार्ने अर्को पुरुष सधैँ सँगै बस्तैन। न बसेपछि प्रतिबिम्ब पर्न सम्भव हुँदैन । सम्भव भए पनि अमृतत्व, अभयत्व आदि गुणहरू त्यसमा हुन सक्तैनन् । अतः ब्रह्मबाहेक छायात्मा आदिको नेत्ररूप स्थानमा उपदेश भएको होइन, यहाँ ब्रह्मको नै उपदेश हो ।

४९. अन्तर्याम्यधिदैवादिषु तद्धर्मव्यपदेशात् (अ.१ पा.२अधि.५ सू.१८)

'यः पृथिव्यां तिष्ठन्.' इत्यादि श्रुतिमा प्रतीयमान् नियमनकर्ता अन्तर्यामी परमात्मा नै हुन्। किनभने श्रुतिमा आत्मत्व, अमृतत्व आदि परमात्माका धर्महरूको नै वर्णन गरिएको छ।

५०. न च स्मार्तमतद्धर्माभिलापात् (अ.१ पा.२ अधि. ५ सू.१९)

साङ्ख्यशास्त्रमा कल्पित प्रधान अन्तर्यामी हुन सक्तैन। किनभने श्रुतिले प्रधानभन्दा भिन्नै चेतनमा द्रष्टृत्व, श्रोतृत्व आदि धर्म रहने भनेको छ।

५१. शारीरश्चोभयेऽपि हि भेदेनैनमधीयते (अ.१ पा.२अधि.५ सू.२०)

जीव पनि अन्तर्यामी होइन, किनभने काण्व र माध्यन्दिन शाखा भएकाहरू अन्तर्यामीबाट नियम्य भएका कारण जीवलाई अन्तर्यामीभन्दा भिन्नै हो भन्दछन्। अतः अधिदेवादि श्रुतिमा प्रतीयमान अन्तर्यामी परमात्मा नै भएको कुरा सिद्ध हुन्छ।

५२. अदृश्यत्वादिगुणको धर्मोक्तेः (अ.१ पा.२ अधि. ६ सू.२१)

'एत्तदद्रेश्य.' इत्यादि श्रुतिमा आएको अदृश्यत्व आदि गुण भएको भूतयोनि

परमात्मा नै हो, किनभने 'यः सर्वज्ञः.' इत्यादि श्रुतिमा सर्वज्ञत्व आदि परमेश्वरका धर्म भएको कुरा निर्देश भएको छ। अतः यी धर्महरू प्रधान अथवा जीवमा रहँदैनन् ।

५३. विशेषणभेदव्यपदेशाभ्यां च नेतरौ (अ.१ पा.२ अधि.६ सू.२२)

'दिव्यो ह्यमूर्तः पुरुषः.' इत्यादि श्रुतिमा आएका दिव्यत्व, अपरिच्छिन्नत्व, सर्वव्यापकत्व आदि विशेषणहरू भूतयोनिका लागि हुन् । यसकारण जीव भूतयोनि होइन। 'अक्षरात्परतः परः.' यस श्रुतिमा अक्षर र परमात्मामा भेद देखाइएको छ। अतः प्रधान भूतयोनि नभएर परमात्मा नै भूतयोनि हो।

५४. रूपोपन्यासाच्च (अ.१ पा.२ अधि.६ सू.२३)

'अग्निर्मूर्धा चक्षुषी.' इत्यादि श्रुतिले भूतयोनि सर्वात्म हो भनेको छ। यसबाट पनि भूतयोनि परमात्मा नै भएको सिद्ध हुन्छ।

५५. वैश्वानरः साधारणशब्दविशेषात् (अ.१ पा.२ अधि.७ सू.२४)

'यस्त्वेतमेवं.' भन्ने श्रुतिमा प्रतीयमान वैश्वानर परमात्मा नै हो । किनभने यद्यपि वैश्वानरशब्द जठराग्नि, भूताग्नि र सूर्यको प्रतिपादक हो । आत्मशब्द जीव र ब्रह्मको पादक हो तापनि 'मूर्धैव सुतेजाः' भन्ने विशेषण पनि परमात्मामा नै मिल्दछ।

५६. स्मर्यमाणमनुमानं स्यादिति (अ. १ पा. २ अधि.७ सू.२५)

'यस्याग्निरास्यम्.' इत्यादि स्मृतिद्वारा प्रतिपादित त्रैलोक्यात्मकरूप आफ्नो मूलभूत श्रुतिद्वारा अनुमान गर्नु परमात्मा नै हो।

५७. शब्दादिभ्योऽन्तः प्रतिष्ठानाच्च नेति चेन्न तथादृष्ट्युपदेशाद-सम्भवात् पुरुषमपि चैनमधीयते (अ.१ पा.२ अधि.७ सू.२६)

जाठराग्नि आदि अग्निमा वैश्वानरशब्द रूढ छ। त्यसको हृदय गार्हपत्य हो । यसरी ३ थरी अग्निहरूको परिकल्पना गरिएको छ । त्यसलाई प्राणाहुतिको आधार र शरीरका भित्र रहने भनेर श्रुतिले भनेको छ । यसकारणले पनि वैश्वानर परमात्मा हुन सक्तैन भनेर पूर्वपक्षीले भनेपछि त्यसलाई स्वीकार गर्दै उत्तरपक्षी जाठर अग्निमा परमात्मदृष्टिको उपदेश हो । त्यसको द्युलोक मस्तक र सूर्य नेत्र हुन सक्तैन । अतः वाजसनेयीहरू वैश्वानरलाई पुरुष मान्दछन् । त्यसैकारण वैश्वानर परमात्मा हो।

५८. अत एव न देवता भूतं च (अ. १ पा.२ अधि.७ सू.२७)

भूताग्नि अथवा अग्नि अभिमानी देवता वैश्वानरवाच्य हुन सक्तैनन् । किनभने द्यूमूर्धत्व आदि धर्महरू यिनीहरूमा रहन सम्भव छैन। अतः जाठराग्नि उपाधिक परमात्मा नै वैश्वानरशब्दवाच्य भएको सिद्ध हुन्छ।

५९. साक्षादप्यविरोधं जैमिनिः (अ.१ पा.२ अधि.७ सू.२८)

ब्रह्ममा जठराग्निरूप उपाधि नभए पनि वैश्वानर शब्दको विरोध हुँदैन अर्थात् वैश्वानरशब्द साक्षात् नै ब्रह्मवाचक हो भनेर महर्षि जैमिनि भन्दछन् ।

६०. अभिव्यक्तेरित्याश्मरथ्यः (अ.१ पा.२ अधि.७ सू.२९)

परमेश्वर उपासकहरूको कल्याण गर्न हृदय आदि स्थानहरूमा प्रादेशमात्रपरिमाणमा अभिव्यक्त हुन्छन् भनेर आचार्य आश्मरथ्य भन्दछन् । किनभने परमेश्वरलाई प्रादेशमात्र भन्ने श्रुतिहरू पाइन्छन् ।

६१. अनुस्मृतेर्बादरिः (अ.१ पा.२ अधि.७ सू.३०)

प्रादेशमात्र परिमाण भएको हृदयमा रहेको मनले ध्यान गरिने अथवा प्रादेशमात्र हृदयमा स्थित मनको ध्येय भएको हुँदा परमेश्वरलाई प्रादेशमात्र भनिन्छ ।

६२. सम्पत्तेरिति जैमिनिस्तथाहि दर्शयति (अ.१ पा.२अधि.७ सू.३१)

टाउकादेखि लिएर चिउँडासम्मलाई प्रादेशमात्र भनिन्छ, त्यसै स्थानमा सम्पत् उपासनाका रूपमा वैश्वानर उपास्य भएको हुँदा परमेश्वरलाई प्रादेशमात्र भनिएको हो भनेर आचार्य जैमिनि भन्दछन् । वाजसनेयी ब्राह्मण पनि मस्तक आदिबाट चिउँडासम्मका स्थानमा वैश्वानर सम्पत्तिको प्रतिपादन गर्दछन् ।

६३. आमनन्ति चैनमस्मिन् (अ.१ पा.२ अधि. ७ सू.३२)

मस्तक र चिउँडाका बीचभागमा परमेश्वरको उपासना गर्नुपर्दछ भनेर जाबालहरूले भनेका छन् ।



## प्रथम अध्याय

### तृतीय पाद

६४. द्युभ्वाद्यायतनं स्वशब्दात् (अ.१ पा.३ अधि.१ सू.१)

'यस्मिन् द्यौः पृथिवी.' इत्यादि श्रुतिमा प्रतीयमान द्युलोक, भूलोक आदिका आश्रय परब्रह्म परमेश्वर हुन् । किनभने ब्रह्मवाचक आत्मशब्द श्रुतिमा छ ।

६५. मुक्तोपसृप्यव्यपदेशात् (अ.१ पा.३ अधि. १ सू.२)

'तथा विद्वान्.' भन्ने श्रुतिमा ब्रह्मलाई मुक्तात्माहरूले मात्र प्राप्त गर्न सक्तछन् भनेको छ। अतः द्यु, भू आदिको अधिष्ठान ब्रह्म नै हो ।

६६. नानुमानमतच्छब्दात् (अ.१ पा.३ अधि.१ सू.३)

साङ्ख्यशास्त्रमा कल्पित प्रधान द्यु, भू आदिको अधिष्ठान होइन । किनभने ' यस्मिन द्यौ.' इत्यादि श्रुतिहरूमा प्रधानवाचक शब्द पाइँदैन ।

६७. प्राणभृच्च (अ.१ पा.३ अधि.१ सू.४)

जीवात्मा पनि द्यु, भू आदिको आश्रय होइन । किनभने 'यस्मिन् द्यौ.' इत्यादि श्रुतिमा जीवको प्रतिपादक शब्द विद्यमान छैन ।

६८. भेदव्यपदेशात् (अ.१ पा.३ अधि.१ सू.५)

'तमेवैकं जानथ आत्मानम्' भन्ने श्रुतिमा ज्ञाता र ज्ञेयरूपले जीव र परमात्माका बीचमा फरक देखाइएको छ। अतः द्यु, भू आदिको आश्रय जीव होइन ।

६९. प्रकरणात् (अ.१ पा.३ अधि.१ सू.६)

'कस्मिन्नु भगवो विज्ञाते सर्वमिदं विज्ञातं भवति' भनेर प्रकरण शुरु भएको हुँदा यो प्रकरण ब्रह्मको हो । यसकारण द्यु, भू आदिको आश्रय जीवात्मा होइन ।

७०. स्थित्यदनाभ्यांच (अ.१ पा.३ अधि.१ सू.७)

'द्वा सुपर्णा सयुजा सखाया.' भन्ने यस मन्त्रमा ईश्वर र जीवका बीचको भेद देखाइएको छ। अतः द्यु, भू. आदिको आश्रय जीवात्मा नभएर ब्रह्म नै हो ।

७१. भूमा सम्प्रसादादध्युपदेशात् (अ.१ पा.३ अधि.३ सू.८)

'भूमा त्वेव विजिज्ञासितव्य' भन्ने यस श्रुतिमा आएको भूमा परमात्मा नै हो । किनभने प्राणको उपदेशपछि भूमाको उपदेश श्रुतिमा आएको छ ।

७२. धर्मोपपत्तेश्च (अ.१ पा.३ अधि.२ सू.९)

'यत्र नान्यत्पश्यति.' इत्यादि श्रुतिमा भनिएको दर्शन, श्रवण आदि सर्वव्यवहाराभावरूप भूमाधर्म परमात्मामा नै मिल्न आउँछ। यसबाट भूमा नै परमात्मा हो भन्ने सिद्ध हुन्छ ।

७३. अक्षरमम्बरान्तधृतेः (अ.१ पा.३ अधि.३ सू.१०)

'एतद्वै तदक्षरम्.' भन्ने श्रुतिमा व्यक्त अक्षर ब्रह्म नै हो। किनभने पृथिवीदेखि लिएर आकाशसम्मका सम्पूर्ण भौतिक वस्तुलाई जसले धारण गर्दछ।

७४. सा च प्रशासनात् (अ.१ पा.३ अधि.३ सू.११)

'एतस्य वा अक्षरस्य.' भन्ने श्रुतिमा सूर्य, चन्द्रमा आदि सम्पूर्ण पदार्थलाई त्यसै परमात्माले धारणा गर्दछ र नियमन अर्थात् शासनसमेत गर्दछ भनिएको छ।

७५. अन्यथाभावव्यावृत्तेश्च (अ.१ पा.३ अधि.३ सू.१२)

अक्षर चेतन तत्त्व हो, अक्षरमा अचेतनत्व आदि प्रधानका धर्म रहन सक्तैनन्। यसबाट पनि अक्षर प्रधान होइन, अक्षर ब्रह्म नै हो।

७६. ईक्षतिकर्मव्यपदेशात् (अ.१ पा.३ अधि.४ सू.१३)

'यः पुनरेतं त्रिमात्रेण.' यस श्रुतिमा ध्येयरूपबाट उपदिष्ट परब्रह्म नै हो, अपरब्रह होइन। किनभने 'परात्परं पुरिशयं पुरुषमीक्षते' भन्ने वाक्यशेषमा ध्येय र दर्शनीय भनिएको छ। केवल कल्पित पदार्थ दृष्टिगोचर हुन सक्तैन।

७७. दहर उत्तरेभ्यः (अ.१ पा.३ अधि.५ सू.१४)

'अथ यदिदस्मिन्.' इत्यादि श्रुतिमा प्रतीत हुने भएको दहराकाश परमात्मा नै हो। किनभने वाक्यशेषमा आकाश उपमेय हुनु, द्युलोक र पृथिवीको अधिष्ठान हुनु, आत्मा हुनु र सकलपापशून्य हुनु आदि ब्रह्मका लिङ्ग हुन्।

७८. गतिशब्दाभ्यां तथा हि दृष्टं लिङ्गञ्च (अ.१पा.३अधि.५ सू.१५)

'इमाः सर्वाः प्रजा अहरहर्गच्छन्त्य.' भन्ने यस दहरवाक्यका शेषमा कथित प्रतिदिन गमन र ब्रह्मलोकशब्दबाट दहर ब्रह्म नै हो भन्ने थाहा हुन्छ। फेरि अर्को श्रुतिमा पनि जीवगम्यलाई ब्रह्म भनिएको छ। तर ब्रह्म नै लोक यस्तो सामानाधिकरण्य हो, किनभने प्रतिदिन गमन श्रुतिमा प्रतिपादित छ। हिरण्यगर्भका लोकमा जीव प्रतिदिन जान सक्तैन।

७९. धृतेश्च महिम्नोऽस्यास्मिन्नुपलब्धेः (अ.१ पा.३ अधि.५ सू.१६)

'अथ य आत्मा.' इत्यादि श्रुतिमा भनिएको धृतिरूप कारणबाट पनि दहर परमात्मा नै भएको थाहा हुन्छ। सम्पूर्ण संसारलाई धारण गर्नु, 'एष भूतपाल एष सेतुर्विधारणः' भन्ने अर्को श्रुतिबाट पनि परमात्मा नै भएको प्रमाणित हुन्छ। अतः यहाँ पनि धृति परमात्मा नै हो।

८०. प्रसिद्धेश्च (अ.१ पा.३ अधि.५ सू.१७)

'आकाशो नाम नामरूपयोर्निर्वहिता' इत्यादि श्रुतिमा आएको आकाशशब्द परमात्मामा नै रूढ छ। यसबाट पनि दहराकाश परमात्मा भएको सिद्ध हुन्छ।

८१. इतरपरामर्शात् स इति चेन्नासम्भवात् (अ.१पा.३अधि.५सू.१८)

'अथ य एष सम्प्रसादः.' भन्ने यस श्रुतिमा सम्प्रसाद शब्दबाट जीवको परामर्श हुन्छ। यसकारण जीव दहराकाश हो भन्नु ठीक होइन। किनभने आकाश उपमेय हुनु र पापरहित हुनु आदि गुण जीवमा रहन सक्तैनन् परमात्मामा मात्रै रहन सक्तछन्।

८२. उत्तराच्चेदाविर्भूतस्वरूपस्तु (अ.१ पा.३ अधि.५ सू.१९)

'य एषोऽक्षिणि पुरुषः.' इत्यादि श्रुतिको अग्रिम प्रजापतिवाक्यले जीवमा अपहतपाप्मत्व आदि धर्म भएको कुरा भनेको छ। यसकारण जीव नै दहराकाश हो भन्नु युक्तियुक्त देखिँदैन। किनभने त्यस वाक्यमा परमार्थस्वरूप अर्थात् ब्रह्मभूत जीवलाई विवक्षित गरिएको हो, जीवत्वधर्मविशिष्ट जीवलाई होइन। अतः जीव दहराकाश नभएर ब्रह्म नै दहराकाश हो।

८३. अन्यार्थश्च परामर्शः (अ.१ पा.३ अधि.५ सू.२०)

श्रुतिमा 'सम्प्रसाद' शब्दबाट जुन जीवको परामर्श भएको छ, त्यो परमात्माको प्रतिपादक हो, जीवको प्रतिपादक होइन।

८४. अल्पश्रुतेरिति चेत्तदुक्तम् (अ.१ पा.३ अधि.५ सू.२१)

'दहरोऽस्मिन्नन्तराकाशः' यस श्रुतिमा दहर भनिएको अल्प अर्थात् जीव हो तर परमात्मा होइन भन्नु उचित होइन। किनभने दहर भनेको परमात्मा नै हो। यस बारेमा 'अर्भकौकस्त्वात्' ब्र.सू.१।२।७ मा भनिसकिएको छ।

८५. अनुकृतेस्तस्य च (अ.१ पा.३ अधि.६ सू.२२)

'न तत्र सूर्यो भाति न चन्द्र तारकम्.' इत्यादि श्रुतमा वर्णित वस्तु कुनै तेजोविशेष वस्तु नभएर ब्रह्म नै हो। किनभने त्यसै ब्रह्मका प्रकाशले नै सबै प्रकाशित हुन्छन् भनेर श्रुतिले स्पष्ट रूपमा भनेको छ।

८६. अपि च स्मर्यते (अ.१ पा.३ अधि.६ सू.२३)

'न तद् भासयते सूर्यः.' 'यदादित्यगतं तेजो जगद्भासयतेऽखिलम्' भनेर गीताले पनि भनेको हुँदा सर्वभासक ब्रह्म नै हो।

८७. शब्दादेव प्रमितः (अ.१ पा.३ अधि.७ सू.२४)

'अङ्गुष्ठमात्रः पुरुषः.' इत्यादि प्रमितवाक्यबाट प्रतिपाद्य अङ्गुष्ठमात्र जीव परमात्मा नै हो। किनभने श्रुतिमा ईशान भन्ने शब्द आएको छ। ईशान भनेको सर्वशासक हो। सर्वशासक परमात्मामात्रै हुन सक्तछ, परमात्मा बाहेक अरू कोही हुन सक्तैन।

८८. हृद्यपेक्षया तु मनुष्याधिकारत्वात् (अ.१ पा.३ अधि.७ सू.२५)

शास्त्रले मान्छेमात्रै अधिकृत हो भनेको छ। मान्छेको हृदय बूढी औँलोबराबर

छ। त्यसै अङ्गुष्ठ बराबरको हृदयमा बस्ने भएको हुँदा त्यसै अपेक्षाले परमेश्वरलाई अङ्गुष्ठमात्र भनेर श्रुतिले भनेको हो।

८९. तदुपर्यपि बादरायणः सम्भवात् (अ.१ पा.३ अधि.८ सू.२६)

मान्छेभन्दा श्रेष्ठ देवता आदि अर्थित्व, सामर्थ्य आदिका कारणले भएका हुन् र ती ब्रह्मज्ञानका अधिकारी पनि हुन् भनेर आचार्य बादरायण भन्दछन्।

९०. विरोधः कर्मणीति चेन्नानेकप्रतिपत्तेर्दर्शनात् (अ.१ पा.३ अधि.८ सू.२७)

इन्द्र आदि देवताहरू एकै पटक सबै ठाउँमा पुग्न सक्तैनन्। अतः यसबाट कर्ममा असम्भाव्यता हुन्छ भन्नु ठीक होइन। किनभने 'स एकधा.' इत्यादि श्रुतिमा एकै समयमा एउटै देवताले अनेक शरीर धारणा गरेको देखिन्छ। अतः इन्द्र आदि देवताहरू पनि अनेक स्थानमा हविग्रहण गर्न पुग्नसक्ने देखिन्छन्।

९१. शब्द इति चेन्नातः प्रभावात् प्रत्यक्षानुमानाभ्याम् (अ.१ पा.३ अधि.८ सू.२८)

वेदवाक्यमा विरोध छ भन्नु ठीक होइन। किनभने वेदशब्दबाट नै देवता लगायत जगत्को उत्पत्ति हुनेगर्दछ। यो कुरा 'एत इति वै.' र 'वेदशब्देभ्य.' भन्ने श्रुतिहरू र स्मृति समेतबाट यो कुरा थाहा हुन्छ।

९२. अत एव च नित्यम् (अ.१ पा.३ अधि.८ सू.२९)

देवता आदि सम्पूर्ण जगत् वेदबाट उत्पन्न हुन्छन्। यसकारण नै वेद नित्य हो।

९३. समाननामरूपत्वाच्चावृत्तावप्यविरोधो दर्शनात् स्मृतेश्च (अ.१ पा.३ अधि.८ सू.३०)

सृष्टि र प्रलयको प्रवाहपरम्परा चलिरहे पनि प्रत्येक कल्पको उत्तर कल्पको समान नै नाम, रूप आदि हुने भएको हुँदा शब्द र अर्थका सम्बन्धमा अनित्यतारूप विरोध हुन सक्तैन। प्रत्येक सृष्टि समान नाम र रूपयुक्त हुन्छ। 'धाता यथापूर्वमकल्पयत्.' भनेर ऋक्श्रुतिले पनि भनेको छ। यसैगरेर 'यथर्तुष्वृतुलिङ्गानि नानारूपाणि पर्यये' भनेर स्मृतिले पनि भनेको छ।

९४. मध्वादिष्वसम्भवादनधिकारं जैमिनिः (अ.१पा.३अधि.८सू.३१)

मानिसमात्रै ब्रह्म विद्याको अधिकारी हुन्छ, जस्तै – 'असौ वा आदित्यो देवमधु.' र 'आदित्यो ब्रह्मेत्यादेशः' इत्यादि श्रुतिहरूमा भनिएको हुँदा गरिएको छ। अतः आदित्यमा मधु र ब्रह्मको अध्यास आदित्यको उपासना आदिमा फेरि तिनै आदित्य आदिको अधिकार हुन सक्तैन। त्यसकारण ब्रह्म विद्यामा देवताहरूको अधिकार हुँदैन भनेर जैमिनि आचार्य भन्दछन्।

९५. ज्योतिषि भावाच्च (अ.१ पा.३ अधि.८ सू.३२)

दृश्यमान ज्योतिर्मण्डलमा वैदिक आदित्य शब्दको प्रयोग र आदित्यको प्रतीति

हुन्छ। तर त्यो मण्डल अचेतन हो। त्यसभन्दा भिन्नै शरीर आदिले युक्त चेतन प्रत्यक्ष आदि प्रमाणहरूबाट थाहा भएको छैन। अतः आदित्य आदि देवताहरूका शरीरलाई प्रतिपादन गर्ने जुन मन्त्रहरू छन्, ती अन्यपरक हुन्। तिनको आफ्नै अर्थमा प्रमाण लाग्दैन। देवताको शरीर नहुने हुँदा तिनको ब्रह्मविद्यामा अधिकार हुँदैन।

९६. भावं तु बादरायणोऽस्ति हि (अ.१ पा.३ अधि.८ सू.३३)

बादरायण आचार्य भने देवताहरूको पनि निर्गुणब्रह्मविद्यामा अधिकार भएको कुरा मान्दछन्। किनभने देवताहरूको शरीरप्रतिपादक मन्त्रहरूको अरू प्रमाणहरूबाट विरोध देखिँदैन। अतः शरीरी देवताहरूको ब्रह्मविद्यामा अधिकार छ।

९७. शुगस्य तदनादरश्रवणात्तदाद्रवणात् सूच्यते हि (अ.१ पा.३ अधि.९ सू.३४)

हाँसहरूबाट आफ्नू अनादरवाक्य सुनेर जानश्रुतिलाई शोक उत्पन्न भएको थियो। यसै शोकलाई शूद्रशब्दबाट सूचित गरिएको छ। त्यसै शोकको कारण जानश्रुति ज्ञानी गाडावाल रैक्वका समक्ष गएका थिए। यसैकारण जानश्रुतिलाई शूद्र भनिएको थियो।

९८. क्षत्रियत्वगतेश्चोत्तरत्र चैत्ररथेन लिङ्गात् (अ.१पा.३अधि.९सू.३५)

जानश्रुति क्षत्रिय भएको तथ्य श्रुतिको प्रसङ्गबाट थाहा हुन्छ। त्यसकारण जानश्रुति मुख्य अर्थात् जातिगत शूद्र होइनन्। उनी क्षत्रिय भएको कुरा संवर्गविद्याको वाक्यशेषमा आएको चित्ररथका वंशमा उत्पन्न भएका अभिप्रतारीनामक क्षत्रियका साथ भएको उनको कथनबाट ज्ञात हुन्छ।

९९. संस्कारपरामर्शात्तदभावाभिलापाच्च (अ.१पा.३अधि.९सू.३६)

'तं होपनिन्ये.' 'अधीहि भगव इति होपससाद' इत्यादि विद्याप्रकरणहरूमा उपनयन आदि संस्कारहरूको परामर्श गरिएको छ। 'न शूद्रे पातकम्' भनेर शूद्रको उपनयन आदि संस्कारको निषेध गरिएको छ। यसकारण शूद्रलाई विद्याको अधिकार भएको देखिँदैन।

१००. तदभावनिर्धारणे च प्रवृत्तेः (अ.१ पा.३ अधि.९ सू.३७)

सत्य वचनबाट जाबाल शूद्र नभएको निश्चय भएपछिमात्रै गुरु गौतमले जाबाललाई विद्याको उपदेश गरेका थिए। यसबाट पनि शूद्रलाई विद्याको अधिकार नभएको सिद्ध हुन्छ।

१०१. श्रवणाध्ययनार्थप्रतिषेधात् स्मृतेश्च (अ.१ पा.३ अधि.९ सू.३८)

'यथास्य वेद.' 'तस्माच्छूद्र.' 'न शूद्राय.' 'द्विजातीनाम्.' इत्यादि स्मृतिहरूबाट पनि शूद्रका लागि वेदको श्रवण, अध्ययन, अर्थज्ञान र अनुष्ठान समेतको निषेध गरिएको छ। यसबाट पनि शूद्रलाई ब्रह्मविद्यामा अधिकार भएको देखिँदैन।

१०२. कम्पनात् (अ.१ पा.३ अधि.१० सू.३९)

'यदिदं किञ्च जगत्सर्वं प्राण एजति.' भन्ने श्रुतिमा प्रतीयमान प्राण परब्रह्म नै हो। किनभने वायुसहित सम्पूर्ण जगत् र जीवनको चेष्टाको मुख्य कारण परम ब्रह्म नै हो।

१०३. ज्योतिर्दर्शनात् (अ.१ पा.३ अधि.११ सू.४०)

'एष सम्प्रसादोऽस्माच्छरीरात् समुत्थाय.' यस श्रुतिमा व्यक्त ज्योतिःशब्दले ब्रह्मलाई नै बुझाउँछ। किनभने 'य आत्माऽपहतपाप्मा.' भन्ने उपक्रमवाक्यको पर्यालोचनबाट ब्रह्मको नै प्रतिपाद्यरूपबाट अनुवृत्ति भएको देखिन्छ।

१०४. आकाशोऽर्थान्तरत्वादिव्यपदेशात् (अ.१पा.३ अधि.१२ सू.४१)

'आकाशो वै नाम नामरूपयोर्निर्वहिता.' इत्यादि श्रुतिमा आकाशशब्दबाट प्रतिपाद्य ब्रह्म नै हो, किनभने त्यसै श्रुतिमा नै 'ते यदन्तरा तद् ब्रह्म तदमृतं स आत्मा' भनेर आकाशको नाम र रूप भेदले ब्रह्मको नै व्यपदेश गरिएको छ।

१०५. सषुप्त्युत्क्रान्त्योर्भेदेन (अ.१ पा.३ अधि.१३ सू.४२)

'कतम आत्मेति योऽयं विज्ञान.' इत्यादि श्रुतिमा प्रतिपाद्यमान पुरुष परमात्मा नै हो, किनभने 'प्राज्ञेनात्मना.' अर्को श्रुतिद्वारा सुषुप्ति र उत्क्रान्तिका अवस्थामा जीवदेखि फरकरूपमा प्राज्ञशब्दबाट परमात्माको अभिधान गरिएको छ।

१०६. पत्यादिशब्देभ्यः (अ.१ पा.३ अधि.१३ सू.४३)

'योऽयं विज्ञानमयः प्राणेषु' भनेर यस पूर्व वाक्यमा पठित पति आदि संसारीशब्द 'सर्वस्य वशी सर्वस्येशानः' भनेर यहाँ सांसारिकताको निषेध गरिएको छ। अतः उक्त 'योऽयं' श्रुतिमा प्रतिपादित पतिशब्द पनि असंसारी परमात्माको नै प्रतिपादक भएको सिद्ध हुन्छ।



प्रथम अध्याय

चतुर्थ पाद

१०७. आनुमानिकमप्येकेषामिति चेन्न शरीररूपकविन्यस्तगृहीतेर्दर्शयति च (अ.१ पा.४ अधि.१ सू.१)

कुनै कुनै शाखाध्यायीहरू 'महतः परमव्यक्तम्.' भनेर प्रधानलाई पनि अगाडि ल्याउँछन् । तर यो ठीक होइन । किनभने 'शरीरं रथमेव तु.' भनेर पूर्व वाक्यमा आएको शरीर नै अव्यक्तशब्दवाच्य हो, प्रधान होइन ।

१०८. सूक्ष्मं तु तदर्हत्वात् (अ.१ पा.४ अधि.१ सू.२)

स्थूलशरीरका आरम्भक पञ्चभूतहरूका सूक्ष्म भागलाई नै सूक्ष्म शरीर भनिन्छ । त्यसै सूक्ष्म शरीरलाई नै यहाँ अव्यक्त भनिएको हो । किनभने सूक्ष्म पदार्थ नै अव्यक्तशब्दवाच्य हो ।

१०९. तदधीनत्वादर्थवत् (अ.१ पा.४ अधि.१ सू.३)

अव्यक्त ईश्वरका अधीन भएको हुँदा स्वतन्त्र छैन । जगत्का सृष्टिमा अव्यक्त ईश्वरको सहायक हुनुमा नै उसको सार्थकता छ ।

११०. ज्ञेयत्वावचनाच्च (अ.१ पा.४ अधि.१ सू.४)

यस प्रकरणमा अव्यक्तलाई ज्ञेय भनिएको छैन । यसकारण पनि श्रुतिमा उक्त अव्यक्तशब्द प्रधानको वाचक होइन ।

१११. वदतीति चेन्न प्राज्ञो हि प्रकरणात् (अ.१ पा.४ अधि.१ सू.५)

'महतः परं ध्रुवं निचारय' यस वाक्यले प्रधानलाई बुझाउँछ भन्नु पनि ठीक होइन । किनभने 'पुरुषान्न परं किञ्चित्' भनेर श्रुतिको भनाइ भएको र यो आत्माको प्रकरण पनि भएको हुँदा परमात्मा नै ज्ञेय हो, प्रधान होइन ।

११२. त्रयाणामेव चैवमुपन्यासः प्रश्नश्च (अ.१ पा.४ अधि.१ सू.६)

पूर्व र उत्तरवाक्यको पर्यालोचन समेतबाट अग्नि, जीव र परमात्मालाई नै वक्तव्यरूपबाट श्रुतिले निर्देश गरेको देखिन्छ । श्रुतिमा प्रश्न पनि यिनै तीनको गरेको देखिन्छ । अतः श्रुतिमा आएको प्रधान अव्यक्तशब्दवाच्य होइन ।

११३. महद्वच्च (अ.१ पा.४ अधि. १ सू.७)

'बुद्धेरात्मा महान् परः' भनेर श्रुतिमा पठित महत् शब्द साङ्ख्यले भनेको प्रधान वाचक होइन ।

११४. चमसवदविशेषात् (अ.१ पा.४ अधि.२ सू.८)

जसरी 'अर्वाग्बिलश्चमसः' भन्ने श्रुतिमा आएको चमसशब्दले यही चमस हो

भनेर विशेषरूपले बुझाउँदैन, त्यसैगरेर 'अजामेकां लोहितशुक्लकृष्णाम्.' भन्ने वाक्यले प्रधानलाई स्पष्टरूपमा बुझाउँदैन । यसकारणले पनि प्रधान वेदप्रतिपादित होइन ।

११५. ज्योतिरुपक्रमा तु तथा ह्यधीयत एके (अ.१पा.४अधि.२सू.९)

तेज जसको आरम्भमा छ, त्यसै तेज, जल र अन्नरूप प्रकृतिलाई नै अजाशब्दबाट निश्चय गर्नु उचित हुन्छ। यसबाट प्रधानलाई लिन मिल्दैन, यही कुरा छान्दोग्य उपनिषद्‌ले भनेको छ।

११६. कल्पनोपदेशाच्च मध्यादिवदविरोधः (अ.१ पा.४अधि.२ सू.१०)

तेज, जल र अन्नरूप प्रकृतिको समानता देखाउनका लागि कल्पना गरेर अजात्वको उपदेश गरिएको हो । जसरी मधुभिन्न आदित्यमा मधुत्वको उपदेश गरिएको छ, त्यसैगरेर अजाभिन्न प्रकृतिमा अजात्वको उपदेश हुनु विरोध देखिँदैन । यसबाट प्रधान श्रुतिप्रतिपादित देखिँदैन।

११७. न सङ्ख्योपसङ्ग्रहादपि नानाभावादतिरेकाच्च (अ.१ पा.४ अधि.३ सू.११)

'यस्मिन् पञ्च पञ्चजनाः.' यस मन्त्रमा श्रूयमाण सङ्ख्या-वाचकपदबाट पञ्चविंशति सङ्ख्यालाई ग्रहण गर्दाखेरि पनि पञ्चविंशतितत्त्वग्रहणबाट प्रधान श्रुतिप्रतिपादित हुन सक्तैन । किनभने यसमा आत्मा र आकाशलाई समेत लिँदा सप्तविंशति तत्त्व हुन्छन् । यो मान्दा अपसिद्धान्त हुन्छ। अतः प्रधान आदि तत्त्वहरूको ग्रहण उचित हुँदैन।

११८. प्राणादयो वाक्यशेषात् (अ.१ पा.४ अधि.३ सू.१२)

माथिल्लो ११४ सूत्रमा आएको श्रुतिमा वर्णित पञ्चजनशब्दले प्राण, चक्षु, श्रोत्र, अन्न र मनलाई लिएको छ । किनभने 'प्राणस्य प्राण' इत्यादि वाक्यशेषमा यिनैको उल्लेख भएको छ।

११९. ज्योतिषैकेषामसत्यन्ने (अ.१ पा.४ अधि.३ सू.१३)

काण्व पाठमा पूर्वोक्ति प्राण आदि पाँचमा अन्न नपरेको हुँदा पूर्ववाक्यमा रहेको ज्योतिबाट पञ्चसङ्ख्याको पूर्ति गर्नुपर्दछ।

१२०. कारणत्वेन चाऽऽकादिषु यथाव्यपदिष्टोक्तेः(अ.१ पा.४अधि.४सू.१४)

ब्रह्मलाई जगत्को कारण हुनबाट कसैले पनि रोक्न सक्तैन, यसमा कसैको पनि विरोध छैन। उपनिषद्‌ले आकाशादिको समस्त सृष्टिमा कारणत्वेन ब्रह्मको वर्णन गरेको छ।

१२१. समाकर्षात् (अ.१ पा.४ अधि.४ सू.१५)

'असद्वा इदमग्र आसीत्' यस श्रुतिमा नाम र रूप पहिले अनभिव्यक्त थियो भन्ने

कुराबाट पनि असत्‌शब्दले सत्‌को नै आकर्षण हुन्छ। अतः असत् जगत्‌को कारण हुन सक्तैन।

१२२. जगद्वाचित्वात् (अ.१ पा.४ अधि.५ सू.१६)

'यो ह वै बालाक एतेषाम्.' यस श्रुतिमा कर्मशब्दबाट समस्त जगत्‌को बोध हुने भएका कारण जगत्‌को कर्ता परमात्मा नै हो।

१२३. जीवमुख्य प्राणलिङ्गान्नेति चेत्तद्व्याख्यातम् (अ.१पा.४अधि.५सू.१७)

जीव र प्राण वायुका लिङ्ग हुन् र यस सम्बन्धमा आएको श्रुति ब्रह्मपरक होइन भन्ने कुरा ठीक होइन भन्नु ठीक होइन। किनभने 'नेपासात्रैविध्या.' भन्ने प्रतर्दनाधिकरणमा आएको उक्त सूत्रमा श्रुति ब्रह्मपरक भएको कुरा भनिएको छ। यस सूत्रमा ' उपासात्रैविध्यादाश्रितत्वादिह तद्योगात्' भन्ने यस अंशमा भनिएको कुरा नै त्यसको उत्तर हो।

१२४. अन्यार्थं तु जैमिनिः प्रश्नव्याख्यानाभ्यामपि चैवमेके (अ.१ पा.४ अधि. ५ सू.१८)

यस प्रकरणमा 'क्वैष एतद्‌बालाके पुरुषोऽशयिष्ट क्व वा एतदभूत् कुत एतदागात्' यस प्रकारको प्रश्न र 'यदा सुप्तः स्वप्न न कञ्चन पश्यत्यथास्मिन् प्राण एवैकधा भवति' यसप्रकारको उत्तर आएको हुँदा जीवपरामर्श ब्रह्मज्ञानका लागि आएको हो भनेर आचार्य जैमिनि मान्दछन्। 'य एष विज्ञानमयः पुरुषः क्वैष तदाऽभूत् कुत एतदागात्' भनेर प्रश्न आएको र 'य एषोऽन्तर्हृदय आकाशस्तस्मिञ्शेते' भनेर उत्तर आएको हुँदा विज्ञानात्मा परमात्माभन्दा भिन्नै हो भनेर वाजसनेयिशाखीहरू भन्दछन्।

१२५. वाक्यान्वयात् (अ.१ पा.४ अधि.६ सू.१९)

'आत्मा वा अरे' यस श्रुतिमा द्रष्टव्य आदिरूपबाट उपदिष्ट आत्मा परमात्मा नै हो। किनभने उपक्रम समेतका पर्यालोचनबाट ब्रह्ममा नै वाक्यको अन्वय भएको देखिन्छ।

१२६. प्रतिज्ञासिद्धेर्लिङ्गमाश्मरथ्यः (अ.१ पा.४ अधि.६ सू.२०)

'आत्मनि विज्ञाते सर्वमिदं विज्ञातं भवति' भनेर श्रुतिले प्रतिज्ञा गरेको छ। त्यस प्रतिज्ञाका सिद्धिका लागि जीव र ब्रह्मको अभेदांशलाई लिएर जीवको उपक्रम गर्नु नै यहाँ लिङ्ग भएको कुरा आचार्य आश्मरथ्य भन्दछन्।

१२७. उत्क्रमिष्यत एम्भा नावादित्यौडुलोमिः (अ.१पा.४अधि.६सू.२१)

'अहं ब्रह्मास्मि' यस्तो साक्षात्कार भएपछि देह र इन्द्रिय समूहमा रहेको अभिमानलाई त्याग गरेर जीवको परमात्माका साथमा ऐक्य हुन्छ। यसप्रकारले भविष्यत्कालीन अभेदलाई लिएर जीवको उपक्रम भएको हो भनेर आचार्य औडुलोमि भन्दछन्।

१२८. अवस्थितेरिति काशकृत्स्नः (अ.१ पा.४ अधि. ६ सू.२२)

अविद्याकल्पित भेदले गर्दा ब्रह्म नै जीवका रूपमा देखापर्दछ भनेर आचार्य काशकृत्स्न भन्दछन् ।

१२९. प्रकृतिश्च प्रतिज्ञादृष्टान्तानुपरोधात् (अ.१पा.४अधि.७सू.२३)

ब्रह्म उपादानकारण हो र निमित्तकारण पनि हो । किनभने श्रुतिले 'येनाश्रुतं श्रुतं भवति' इत्यादि कुरा भनेको छ । यसबाट एक विज्ञानबाट सर्वविज्ञानको दृष्टान्तमा सामञ्जस्य देखिन्छ ।

१३०. अभिध्योपदेशाच्च (अ.१ पा.४ अधि.७ सू.२४)

श्रुतिमा 'सोऽकामयत' भनेर ध्यानको उपदेश भएको हुँदा आत्मा कर्ता अर्थात् निमित्तकारण हो । 'बहुस्याम्' भनेर यसरी ध्यानको उपदेश भएको हुँदा प्रकृति अर्थात् उपादानकारण हो ।

१३१. साक्षाच्चोभयाम्नानात् (अ.१ पा.४ अधि.७ सू.२५)

'सर्वाणि ह वा इमानि भूतानि.' भनेर श्रुतिले यसरी आकाशशब्दबाट ब्रह्मलाई ग्रहण गरेर साक्षात्रूपमा नै जगत्को उत्पत्ति र प्रलय हुने कुरा भनेको छ। अतः जगत्को उत्पत्तिमा ब्रह्म नै निमित्तकारण र उपादानकारण पनि हो ।

१३२. आत्मकृतेः परिणामात् (अ.१ पा.४ अधि.७ सू.२६)

'तदात्मानं स्वयमकुरुत' यस श्रुतिमा आत्मसम्बन्धिनी कृति भनिएको छ । ब्रह्म निमित्तकारण र उपादानकारण दुवै हो । सिद्ध वस्तु पनि विवर्तरूपबाट साध्य हुन सक्तछ। अतः ब्रह्म कृतिको कर्म अर्थात् विषय हुन सक्तछ।

१३३. योनिश्च हि गीयते (अ. १ पा.४ अधि.७ सू.२७)

'यद्भूतयोनिं परिपश्यन्ति धीराः' भनेर यस श्रुतिमा प्रकृतिवाचक योनिशब्दबाट आत्मा भनिएको छ। अतः ब्रह्म उपादानकारण पनि हो ।

१३४. एतेन सर्वे व्याख्याता व्याख्याताः (अ.१ पा.४अधि.२८ सू.२८)

प्रधानकारणवादका निराकरणबाट अणु, असत्, स्वभाव आदिलाई कारण मान्नेहरूका मतको पनि निराकृत भएको सम्झनुपर्दछ । 'व्याख्याताः' शब्दको द्विरुक्ति अध्याय परिसमाप्तिको परिचायक हो ।



## ब्रह्मसूत्र

## द्वितीय अध्याय

### प्रथम पाद

१३५.स्मृत्यनवकाशदोषप्रसङ्ग इति चेन्नान्यस्मृत्यनवकाश-दोषप्रसङ्गात् (अ.२ पा.१ अधि.१ सू.१)

प्रधानलाई जगत्को कारण मान्ने सारा स्मृतिहरू व्यर्थ हुन्छन् र यसबाट वेदान्तको ब्रह्ममा समन्वय हुन पनि सक्तैन भनेर भन्न मिल्दैन। किनभने यसकारणले समन्वयमा कुनै विरोध पर्दैन। अचेतन प्रधानलाई जगत्को कारण मानेमा चेतनलाई जगत्को कारण मान्ने शास्त्र अर्थात् स्मृतिहरू निरर्थक हुन्छन्। अतः श्रुतिमूलक स्मृतिहरू विरुद्ध भएको कारण साङ्ख्यस्मृति अप्रमाणित हुन्छ।

१३६.इतरेषां चानुपलब्धेः (अ.२ पा.१ अधि. १ सू.२)

साङ्ख्यस्मृतिमा प्रसिद्ध प्रधानदेखि भिन्न महत् आदि तत्त्वहरूको लोक र वेदमा समेत प्रसिद्धि नभएको कारण साङ्ख्यस्मृतिलाई अप्रमाण मान्नुमा कुनै दोष देखिँदैन।

१३७.एतेन योगः प्रत्युक्तः (अ.२ पा.१ अधि.१ सू.३)

यस सन्दर्भमा साङ्ख्यस्मृतिका निराकरणबाट योगस्मृतिको पनि निराकरण भएको सम्झनु पर्दछ।

१३८. न विलक्षणत्वादस्य तथात्वं च शब्दात् (अ.२पा.१अधि.१सू.४)

यो जगत् चेतनप्रकृतिक अर्थात् चेतन उपादानकारण भएको मान्न मिल्दैन। किनभने अचेतन जगत् चेतन ब्रह्मभन्दा विलक्षण छ। यो कुरा 'विज्ञानं चाविज्ञानं च' भन्ने श्रुतिबाट बुझ्न सकिन्छ।

१३९. अभिमानिव्यपदेशस्तु विशेषानुगतिभ्याम् (अ.२पा.१अधि.३सू.५)

'ते हेमे प्राणा अहं श्रेयसे विवदमानाः' इत्यादि श्रुतिमा केवल प्राणको कथनमात्र छैन, बरु प्राणादि अभिमानी देवताहरूको कथन छ। किनभने 'एता ह वै देवता' यसप्रकार चेतनवाचक देवताशब्दबाट प्राण विशेषित छ। यसमा 'अग्निर्वाग्भूत्वा' इत्यादि मन्त्र र अर्थवादमा सबै ठाउँमा प्राणादि अभिमानी देवताहरूको अनुगमन भनिएको छ। यसबाट अचेतन जगत् चेतनबाट विलक्षण भएको कारण चेतनप्रकृतिक होइन।

१४०.दृश्यते तु (अ.२ पा.१ अधि. ३ सू.६)

चेतनबाट चेतनविलक्षण अचेतन पदार्थ र अचेतनबाट तद्विलक्षण चेतनपदार्थको उत्पत्ति भएको देखिन्छ। अतः अचेतन जगत् चेतन ब्रह्मबाट उतपत्ति हुन सक्तछ।

१४१.असदिति चेन्न प्रतिषेधमात्रत्वात् (अ.२ पा.१ अधि.३ सू.७)

उत्पत्तिपूर्व यो जगत् असत् थियो भन्नु ठीक होइन। किनभने ‘असत् स्यात्’ भन्नु केवल प्रतिषेधमात्रै हो। अतः स्थितिकालमा जस्तै उत्पत्तिपूर्व पनि यो जगत् ब्रह्मरूप नै थियो, असत् थिएन।

१४२.अपीतौ तद्वत्प्रसङ्गादसमञ्जसम् (अ.२ पा.१ अधि. ३ सू.८)

शुद्धत्व आदि गुणहरू भएको ब्रह्म जगत्को कारण हो भन्नु ठीक होइन, किनभने प्रलयका समयमा कार्य जस्तै कारण ब्रह्म पनि अशुद्ध धर्मले युक्त भएको होला।

१४३.न तु दृष्टान्ताभावात् (अ.२ पा.१ अधि.३ सू.९)

अघिल्लो सूत्रमा भनिएको कुराको सामञ्जस्य छैन। किनभने कारणमा लीन भएका कार्यले कारणलाई दूषित गर्न सक्तैन। यस विषयमा थुप्रै दृष्टान्त पाउन सकिन्छ।

१४४. स्वपक्ष दोषाच्च (अ.२ पा.१ अधि. ३ सू.१०)

साङ्ख्यले जुन दोष देखाएको छ, त्यो दोष साङ्ख्यमतमा पनि देखिन्छ। अतः दोष र दोषको परिहार दुवै मतमा समान नै छन्।

१४५. तर्काप्रतिष्ठानादप्यन्यथानुमेयमिति चेदेवमप्यविमोक्षप्रसङ्गः (अ.२ पा.१ अधि.३ सू.११)

केवल तर्कको मात्रै प्रतिष्ठा नहुने हुँदा पनि ब्रह्ममा वेदान्तवाक्यहरूको समन्वयमा कुनै विरोध छैन। कुनै एक तर्क अप्रतिष्ठित भए पनि अरू नै उपाय अर्थात् प्रतिष्ठित तर्कबाट वेदान्तसमन्वयमा विरोध हुने कुराको अनुमान गर्न सकिन्छ भन्नु पनि ठीक होइन। किनभने केही तर्कहरू प्रतिष्ठित भए पनि प्रकृत विषयमा तर्क अप्रतिष्ठितत्वरूप दोषबाट मुक्त हुन सक्तैन। अथवा कपिल, कणाद आदिका परस्पर विरुद्ध तर्कहरूबाट तत्त्वनिर्णय हुन सक्तैन। अतः यसबाट अर्थात् अप्रतिष्ठित तर्कबाट कहिल्यै पनि मुक्ति हुन सक्तैन।

१४६. एतेन शिष्टापरिग्रहा अपि व्याख्याताः (अ.२पा.१अधि.४सू.१२)

देवल आदि शिष्टहरूका केही अंशमा परिगृहीत प्रधानकारणबाट शिष्टहरूद्वारा कुनै अंशमा अपरिगृहीत अणु आदि कारणवादको पनि निराकरण भएको सम्झनु पर्दछ।

१४७. भोक्त्रापत्तेरविभागश्चेत्स्याल्लोकवत् (अ.२पा.१अधि.५सू.१३)

अद्वितीय ब्रह्म यदि जगत्को उपादानकारण हो भने ता सम्पूर्ण उपभोग्य सामाग्री पनि ब्रह्मदेखि अभिन्न नै हुने भए। विषय र विषयको भोक्ता दुवै एकै भए। यसबाट भोक्ता र भोग्यका बीचमा भेद हुने भएन भन्न पनि मिल्दैन। किनभने पारमार्थिकरूपमा माटाबाट बनेको घटमा र माटोमा अभिन्नता छ तापनि व्यवहारमा भिन्नता देखिन्छ। त्यसैगरेर कारणबाट अभेद भए पनि भोक्ता, भोग्य र भोग गरेर प्रपञ्चमा भने परस्पर विभाग देखिन्छ।

१४८.तदनन्यत्वमारम्भणशब्दादिभ्यः (अ.२ पा.१ अधि.६ सू.१४)

कारण ब्रह्मभन्दा भिन्नै जगत्को पृथक् सत्ता छैन। किनभने 'वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम्', 'ऐतदात्म्यमिदं सर्वं तत् सत्यं स आत्मा' र 'ब्रह्मैवेदं सर्वम्' इत्यादि श्रुतिवचनहरूबाट यस्तै नै प्रतीत हुन्छ।

१४९.भावे चोपलब्धे (अ.२ पा.१ अधि.६, सू.१५)

कारण रहँदा नै कार्यको उपलब्धि हुन्छ भन्ने यस भनाइबाट पनि कार्य कारणभन्दा भिन्नै होइन भन्ने सिद्ध हुन्छ।

१५०.सत्त्वाच्चावरस्य (अ.२ पा.१ अधि.६ सू.१६)

'सदेव सोम्येदमग्र आसीत्' र 'आत्मा वा इदमेक एवाग्र आसीत्' इत्यादि श्रुतिहरूबाट उत्पत्तिभन्दा पहिलेदेखि नै कारणमा कार्यको अस्तित्व थियो भन्ने देखिन्छ। यसबाट पनि कार्यको सत्ता कारणभन्दा पृथक् नभएको सिद्ध हुन्छ।

१५१. असद्व्यपदेशान्नेति चेन्न धर्मान्तरेण वाक्यशेषात् (अ.२ पा.१ अधि.६ सू.१७)

'असद्वा इदमग्र आसीत्' र 'असदेवेदमग्र आसीत्' इत्यादि श्रुतिहरूबाट सृष्टि हुनुभन्दा पहिले यो जगत् असत् थियो। यसकारण कार्यको सत्ता कारणमा रहँदैन भनेर भन्नु ठीक छैन। किनभने यो असत्त्वकथन अव्याकृतत्त्व अर्थात् नाम र रूप बाहिर नदेखिनु र अर्कै धर्मबाट रहनु भनेको हो, हुँदै नहुनु अर्थात् शून्य हुनु भनेको भने होइन। किनभने 'तत्सदासीत्' इत्यादि वाक्यशेषमा यो जगत् सृष्टि हुनुभन्दा पूर्व अर्थात् यसको उत्पत्तिभन्दा पहिले सत् नै थियो भनिएको छ। यसबाट पनि कार्यको सत्ता कारणबाट पृथक् थिएन भन्न सकिन्छ।

१५२.युक्तेः शब्दान्तराच्च (अ.२ पा.१ अधि.६ सू.१८)

उत्पत्ति हुनुभन्दा पहिले घट मृत्तिकारूपले नभएको भए घडा बनाउने इच्छा गर्ने व्यक्तिले मृत्तिका अर्थात् माटोलाई नै नलिएर अरू नै पदार्थ लिने थियो होला। किनभने घडाको सत्ता त्यसको उत्पत्तिभन्दा पहिले नमान्ने हो भने माटो र अरू पदार्थमा कुनै फरक नपर्ने देखिन्छ। 'सदेव सोम्येदमग्र आसीत्' आदि श्रुतिमा विद्यमान 'सत्' शब्दबाट कार्यको सत्ता कारणबाट पृथक् छैन भन्ने कुरा सिद्ध हुन्छ। अतः उत्पत्तिभन्दा पहिले कार्य कारणमा विद्यमान छ भन्ने कुरा युक्ति र श्रुतिवाक्यबाट पनि प्रमाणित हुन्छ।

१५३.पटवच्च (अ.२ पा.१ अधि.६ सू.१९)

जसरी पट्याएको र फुकाएको एउटै कपडामा त्यस त्यस समयमा विलक्षण जस्तो देखिए तापनि कपडामा भने कुनै प्रकारको भेद देखिँदैन। त्यसैगरेर माटो र घडामा पनि भेद देखिँदैन।

१५४. यथा च प्राणादिः (अ.२ पा.१ अधि.६ सू.२०)

जसरी प्राणायाम आदिबाट निरुद्ध प्राण, अपान आदि केवल जीवनरूप कार्यलाई सम्पन्न गर्दछन्, अनिरुद्ध भएर तिनै प्राणहरू आकुञ्चन, प्रसारण आदि कार्य गर्दछन्, तर ती प्राणहरूमा कुनै भेद हुँदैन। त्यसरी नै काममा भेद भएर पनि कारणका एकतामा भने कुनै विरोध आउँदैन।

१५५. इतरव्यपदेशासिद्धताकरणादिदोषप्रसक्तिः (अ.२ पा.१ अधि.७ सू.२१)

श्रुतिमा 'तत्त्वमसि' इत्यादि महावाक्यहरूद्वारा जीवलाई ब्रह्म भनिएको छ। अथवा 'अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरवाणि' इत्यादि श्रुतिहरूबाट ब्रह्मलाई नै जीव भनिएको छ। यसकारण ब्रह्म स्रष्टा हो भने जीव पनि स्रष्टा हुने नै भयो। यसबाट ब्रह्मलाई आफ्नू अहित अर्थात् जरा, मरण आदि अनेक अनर्थकरणरूप दोषहरू आइलाग्ने देखिन्छन्। यसकारणले गर्दा चेतन ब्रह्म जगत्को कारण हुन सक्तैन।

१५६.अधिकं तु भेदनिर्देशात् (अ.पा.१ अधि.७ सू.२२)

जीवदेखि भिन्नै सर्वज्ञ, सर्वशक्तिमान् ब्रह्मलाई हामीहरू जगत्को स्रष्टा मान्दछौँ। यसकारण ब्रह्मलाई हिताकरण आदि दोष लाग्दैन। जीव र ब्रह्मका बीचको भेद श्रवण, मनन आदिका लागि कल्पित भेदमात्र हो। अतः नित्यमुक्त ब्रह्मलाई हिताहितकरणको दोष लाग्न सक्तैन।

१५७.अश्मादिवच्च तदनपपत्तिः (अ.२ पा.१ अधि.७ सू.२३)

जसरी एउटै पृथ्वीबाट उत्पन्न भएका ढुङ्गामा पनि वज्र, वैदूर्य आदि भेदले गर्दा विचित्रता देखिन्छ भने त्यसैगरेर ब्रह्मका कार्यमा पनि स्वरूप वैचित्र्य देखिनु युक्त नै छ। अतः ब्रह्ममा कल्पित दोष लाग्नु स्वाभाविक ठहर्दैन।

१५८.उपसंहारदर्शनान्नेति चेन्न क्षरवद्धि (अ.२पा.अधि.८ सू.२४)

संसारमा घडा आदिको कर्ता कुमालेले घडा बनाउँन चक्र, दण्ड, डोरी आदि विभिन्न साधनहरू जम्मा गरेको देखिन्छ तर ब्रह्मसँग कुनै साधन देखिँदैनन् , अतः ब्रह्म जगत्को निमित्तकारण र उपादानकारण पनि दुवै हुन सक्तैन भन्नु ठीक होइन। किनभने जसरी दूध अरू साधन नभए पनि स्वतः नै दहीमा परिणत हुन्छ। त्यसैगरेर ब्रह्म पनि अरू कुनै साधनको अपेक्षा नगरीकनै जगत्को सृष्टि गर्दछ, अर्थात् आफैँ जगत्को रूपमा परिणत वा विवर्तित हुन्छ।

१५९.देवादिवदपि लोके (अ.२ पा.१ अधि.८ सू.२५)

जस्तै मन्त्र, अर्थवाद, इतिहास आदिमा चेतन देवता, पितृगण, ऋषि आदि बाह्य साधनविना पनि सङ्कल्पमात्रैले नानाथरीका कामहरू सम्पादन गर्दछन्। त्यस्तै ब्रह्म पनि

विनासाधन नै सम्पूर्ण जगत्को रचना गर्दछ।

१६०. कृत्स्नप्रसक्तिर्निरवयबत्वशब्दकोपो वा (अ.२पा.२अधि.९सू.२६)

यदि निरवयव ब्रह्मको परिणाम हुने हो भने ब्रह्म नै कार्यरूपले परिणत होला। होइन एक अंशमात्रै परिणत हुन्छ भन्ने हो भने ब्रह्म सावयव हुन्छ र 'निष्कलं निष्क्रियं शान्तम्' भन्ने श्रुतिवाक्य निरर्थक हुन्छ। यसरी दुवै दृष्टिले हेर्दा ब्रह्म अनित्य हुने देखिन्छ। अतः ब्रह्म जगत्को उपादान र निमित्त कारण हुन सक्तैन।

१६१. श्रुतेस्तु शब्दमूलत्वात् (अ.२ पा.१ अधि.९ सू.२७)

यस सूत्रमा आएको तु शब्द पूर्वपक्षको निराकरणका लागि हो। श्रुतिमा ब्रह्मलाई जगत्को उपादानकारण मानिएको छ। 'एतावानस्य महिमा' इत्यादि श्रुतिहरूमा ब्रह्मलाई कार्यभन्दा पृथक्सत्तायुक्त मानिएको छ। अतः ब्रह्म सर्वात्मना कार्यमा परिणत हुँदैन। यसबाट श्रुतिको बाध पनि हुँदैन। किनभने ब्रह्म श्रुतिमूलक हो। यसरी विचार गर्दा ब्रह्म जगत्को उपादान कारण भएर पनि जगत्देखि पृथक् रहँदा कुनै विरोध पर्दैन।

१६२. आत्मनि चैवं विचित्राश्च हि (अ.२ पा.१ अधि.९ सू.२८)

'न तत्र रथा न रथयोगाः' इत्यादि श्रुतिमा स्वप्नद्रष्टा एक आत्मा अनेक प्रकारका सृष्टिहरू गर्दछ भनिएको छ। संसारमा चटकी पनि विनासाधन नाना सृष्टि गर्दछ। त्यसैगरेर एउटै ब्रह्ममा नाना सृष्टि हुनुमा कुनै विरोध देखिँदैन।

१६३. स्वपक्षदोषाच्च (अ.२ पा.१ अधि.९ सू.२९)

त्यसैगरेर साङ्ख्य आदिका पक्षमा पनि यसैप्रकारका दोष देखिन्छन्। हाम्रा पक्षमा मात्रै दोषारोपण गर्नु ठीक होइन। अतः ब्रह्मकारणतावाद उपपन्न हुन आउँछ।

१६४.सर्वोपेता च तद्दर्शनात् (अ.२ पा.१ अधि.१० सू.३०)

परा देवता सर्वशक्तियुक्त हुन्छन्। किनभने 'सर्वकर्मा सर्वकामः' यस श्रुतिमा परा देवताको सर्वशक्तियोग देखिन्छ।

१६५.विकरणत्वान्नेति चेत्तदुक्तम् (अ.२ पा.१ अधि.१० सू.३१)

'अचक्षुष्कमश्रोत्रमवागमन' इत्यादि श्रुतिमा वर्णित ब्रह्मका इन्द्रिय आदि नहुने भएको हुँदा कर्ता हुन सक्तैन भन्न पनि मिल्दैन। यस सम्बन्धमा देवादिवदपि लोके (ब्र.सू.अ.२ पा.१ अधि.८ सू.२५) मा भनिसकिएको छ।

१६६. न प्रयोजनवत्त्वात् (अ.२ पा.१ अधि.११ सू.३२)

ब्रह्मबाट जगत्कर्तृत्व सम्भव छैन। किनभने ब्रह्म नित्य तृप्त भएको हुँदा उसलाई कुनै प्रकारको प्रयोजन छैन। विवेकीहरूको प्रवृत्ति प्रयोजन युक्त हुन्छ। अतः ब्रह्मबाट जगत्को सृष्टि प्रतिपादन गर्ने श्रुतिहरूमा समन्वय हुन सक्तैन।

१६७.लोकवत्तु लीलाकैवल्यम् (अ.२ पा.१ अधि.११ सू.३३)

यहाँ तुशब्द आएको पूर्वपक्षको आक्षेपलाई निषेध गर्नका लागि हो । जसरी संसारमा राजा र मन्त्रीहरू कुनै विशेष प्रयोजन नभए पनि क्रीडा आदिमा प्रवृत्त हुन्छन् । त्यसैगरेर श्वासोच्छ्वास स्वभावतः हुन्छ । त्यसै अनुरूप ब्रह्मको विचित्रकार्यरचना केवल लीलामात्रै हो । त्यस लीलाबाट कुनै फल प्राप्त हुँदैन । अतः समन्वयमा कुनै विरोध पर्ने देखिँदैन ।

१६८. वैषम्यनैर्घृण्ये न सापेक्षत्वात्तथाहि दर्शयति (अ.२ पा.१ अधि.१२ सू.३४)

ब्रह्मलाई विषमता र निष्करुणताको दोष पनि लाग्दैन । किनभने प्राणीहरू मध्ये कसै कसैले दुःखै दुःख प्राप्त गर्दछन् कसै कसैले सुखै सुख प्राप्त गर्दछन्, ती सबै उनीहरूका पूर्वजन्मका कर्म अनुसार प्राप्त हुन्छन् । कर्मका आधारमा नै प्राणीहरूलाई ब्रह्म सुख र दुःख प्रदान गर्दछ। यस विषयमा 'एष ह्येव साधु कर्म कारयति' भनेर श्रुतिले भनेको छ।

१६९. न कर्माविभागादिति चेन्नानादित्वात् (अ.२पा.१अधि.१२सू.३५)

'सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम्' इत्यादि श्रुतिहरूमा सृष्टिभन्दा पहिले भेदको अभाव थियो, अर्थात् अद्वैतमात्र थियो द्वैत थिएन। त्यस समयमा कर्मको अभाव थियो। कर्मको अभाव भएको हुँदा कर्मका आधारमा हुने सृष्टि हुन नसक्ने भन्न मिल्दैन। किनभने सृष्टि अनादि भएको हुँदा सृष्टि र कर्मको सम्बन्ध बीज र अङ्कुरजस्तै कार्यकारणभावयुक्त छ। अतः कर्मका आधारमा नै सृष्टि हुने कुरा सिद्ध हुन्छ।

१७०.उपपद्यते चाप्युपलभ्यते (अ.२ पा.१ अधि.१२ सू.३६)

संसारको अनादिता सिद्ध भयो । यदि सृष्टिलाई अनादि नमान्ने हो भने मुक्त पुरुषहरूको पनि पुनर्जन्म हुने समस्या पैदा हुन सक्तछ। श्रुति र स्मृतिहरूमा संसारलाई अनादि भनिएको छ। किनभने 'धाता यथापूर्वमकल्पयत्' भनेर श्रुतिले र 'न रूपमस्येह तथोपलभ्यते' भनेर स्मृतिले पनि भनेको छ।

१७१. सर्वधर्मोपपत्तेश्च (अ.१ पा.१ अधि.१३ सू.३७)

जगत्कारणत्व, सर्वज्ञत्व आदि माथिका सूत्रहरूमा भनिए अनुसारका सम्पूर्ण धर्महरू ब्रह्ममा रहने भएका हुँदा निर्गुण ब्रह्म पनि जगत्को कारण हुनसक्ने कुरा सिद्ध भयो ।



## द्वितीय अध्याय
## द्वितीय पाद

१७२.रचनानुपपत्तेश्च नानुमानम् (अ.२ पा.२ अधि.१ सू.१)

जगत् सुखदुःख मोहात्मक वस्तुहरूले बनेको छ । यसकारण यो मृत्तिकायुक्त घडा जस्तो छ । यस अनुमानबाट अचेतन प्रधान जगत्को उपादानकारण हुनसक्ने देखिँदैन । किनभने स्रष्टव्य ज्ञान नभएको जड प्रधानले यो विचित्रको संसारको रचना गर्न सक्तैन । सुखःदुख आदि आभ्यन्तर हुन् । तिनको बाहिर सम्बन्ध हुन सक्तैन । अतः साङ्ख्यसिद्धान्त प्रामाणिक हुन सक्तैन ।

१७३.प्रवृत्तेश्च (अ.२ पा.२ अधि.१ सू.२)

अचेतन प्रधानको साम्यावस्थाप्रच्युतिरूप प्रवृत्ति चेतनका अभावमा उपपन्न हुन सक्तैन । यसकारण पनि अचेतन प्रधान जगत्को कारण हुन सक्तैन ।

१७४. पयोऽम्बुवच्चेत्तत्रापि (अ.२ पा.२ अधि.१ सू.३)

जसरी दूध बाछाका पोषणका लागि स्वतः प्रवृत्त हुन्छ, पानी स्वयं बग्दछ भनेर पनि प्रधानलाई जगत्को कर्ता भन्न सकिँदैन, किनभने पानीका भित्र पनि परमात्मा नै बसेको हुन्छ। जस्तै 'योऽप्सु तिष्ठन्' भनेर श्रुतिले भनेको छ। अतः प्रधान जगत्को कर्ता होइन।

१७५.व्यतिरेकानवस्थितेश्चानपेक्षत्वात् (अ.२ पा.२ अधि.१ सू.४)

साङ्ख्यशास्त्रमा गुणहरूको साम्यावस्था नै प्रधान हो । यस बाहेक जसका अरू कुनै कर्महरू सहकारी छैनन् र पुरुष उदासीन छ । यसकारण प्रधान कुनै काममा पनि प्रवृत्त हुनै सक्तैन । अतः प्रधान जगत्को कर्ता हुन सक्तैन ।

१७६.अन्यत्राभावाच्च न तृणादिवत् (अ.२ पा.२ अधि.१ सू.५)

जसरी घाँसबाट बाहिरी निमित्तविना पनि दूध पैदा हुन्छ, त्यसैगरेर विनासहकारी प्रधान पनि जगत्को कारण किन नहुने ? भन्न मिल्दैन । किनभने घाँसबाट त्यसै दूध आउँदैन, गाईले खाएपछि मात्रै दूध आउँछ । अतः जड प्रधान जगत्को कर्ता हुन सक्तैन ।

१७७.अभ्युपगमेऽप्यर्थाभावात् (अ.२ पा.२ अधि.१ सू.६)

प्रधानलाई स्वतः प्रवृत्तियुक्त माने पनि त्यसको कुनै प्रयोजन छैन । दोष जस्ताको त्यस्तै छ । अतः प्रधान जगत्को कर्ता हुन सक्तैन ।

१७८.पुरुषाश्मवदिति चेत्तथापि (अ.२ पा.२ अधि.१ सू.७)

जसरी संसारमा लँगडो अन्धाको सहयोग लिएर कर्ममा प्रवृत्त हुन्छ, चुम्बकद्वारा

फलाम प्रवृत्त हुन्छ, त्यसैगरेर पुरुषद्वारा प्रधान प्रवृत्त हुन्छ भनेर पनि भन्न मिल्दैन । किनभने यदि प्रधान पुरुषबाट सञ्चालित हुने हो भने प्रधानको स्वतन्त्रतामा हानि हुन्छ र पुरुषको असङ्गतामा पनि विचलन आउँछ। अतः प्रधान जगत्को कारण हुन सक्तैन।

१७९. अङ्गित्वानुपपत्तेश्च (अ.२ पा.२ अधि.१ सू.८)

परस्परमा सहयोगको अपेक्षा नराख्ने गुणहरूको साम्यावस्थाको नाश नभईकन अङ्गाङ्गिभाव उपपन्न हुन सक्तैन। यो नभईकन प्रधान सृष्टिमा प्रवृत्त हुन सक्तैन। अतः प्रधान जगत्को कर्ता हुन सक्तैन।

१८०. अन्यथानुमितौ च ज्ञशक्तिवियोगात् (अ.२ पा.२ अधि.१ सू.९)

हामीहरू अनपेक्ष गुणहरूको अनुमान गर्दैनौँ तर प्रकारान्तरबाट परस्पर सापेक्ष गुणहरूको अनुमान गर्दछौँ । यस्तो अनुमान गर्दा पूर्वोक्त दोष आउँदैन भन्न सक्ने देखिँदैन । किनभने त्यस्तो अनुमान गर्दा पनि गुणहरूमा ज्ञानशक्तिको अभावले गर्दा स्वतः साम्यावस्थाबाट मुक्ति पाउन सकिन्न। त्यसो नभएमा परस्पर अङ्गाङ्गिभाव हुन सक्तै न। यस अवस्थामा कार्यको उत्पत्ति हुन सक्तैन। अतः पूर्वोक्त दोष यथावत् रहिरहन्छ।

१८१. विप्रतिषेधाच्चासमञ्जसम् (अ.२ पा.२ अधि.१ सू.१०)

साङ्ख्यमताबलम्बीहरू कहीँ महत्तत्वबाट पञ्चतन्मात्राको सृष्टि हुने कुरा गर्दछन्। कहीँ अहङ्कारबाट, कहीँ दश इन्द्रिय र कहीँ ज्ञानेन्द्रियहरूलाई त्वगिन्द्रियमा अन्तर्भाव गरेर सात इन्द्रियहरूको कुरा गर्दछन्। यसरी आफैँमा कुरा बाझिएको साङ्ख्यमत युक्तिसङ्गत देखिँदैन। अतः साङ्ख्यमत भ्रान्तिमूलक भएको सिद्ध हुन्छ।

१८२. महद्दीर्घवद्वा ह्रस्वपरिमण्डलाभ्याम् (अ.२ पा.२अधि.२ सू.११)

द्व्यणुक र परमाणुबाट महत् र दीर्घ अर्थात् त्र्यणुक तथा ह्रस्व अर्थात् द्व्यणुकका सरह चेतन ब्रह्मबाट अचेतन जगत्को उत्पत्ति हुन्छ । वैशेषिकको न्यायाभासबाट वेदान्तसमन्वयमा कुनै विरोध उत्पन्न हुँदैन।

१८३. उभयथापि न कर्मातस्तदभावः (अ.२ पा.२ अधि.३ सू.१२)

वैशेषिक सृष्टिभन्दा पूर्व निश्चल परमाणुहरूको कर्मद्वारा संयोग हुन्छ र द्व्यणुकको उत्पत्ति हुन्छ भन्छन् । त्यस कर्मलाई निमित्त मान्ने ? अथवा नमान्ने ? पहिलो कुरा कर्मलाई निमित्त मान्ने हो भने जीव अर्थात् प्राणीबाट मात्रै अभिघातादि कर्म हुन सक्तछ, सो कुरा सृष्टिभन्दा पूर्व सम्भावना नै छैन। दोस्रो कुरा कर्मको उत्पत्ति नभएमा परमाणुहरूमा चेष्टा उत्पन्न हुन सक्तैन। अदृष्ट अचेतन भएको हुँदा त्यसले पनि कर्मतर्फ प्रवृत्त गराउनसक्तैन। अतः कुनै पनि अवस्थामा कर्म नहुने भएपछि वैशेषिकका मतमा द्व्यणुकादिक्रमले सृष्टि हुन सक्तैन।

१८४.समवायाभ्युपगमाच्च साम्यादनवस्थितेः (अ.२पा.२अधि.३सू.१३)

जसरी अणुभन्दा अत्यन्त भिन्न द्व्यणुक समवायसम्बन्धबाट अर्कोसँग सम्बद्ध हुन्छ। त्यसैगरेर समवाय पनि समवायीहरूका साथ अत्यन्त भिन्न भएर पनि अन्य समवायको सम्बन्धद्वारा सम्बद्ध हुन्छ। किनभने अत्यन्त भेद दुवैमा समान छ। यस्तो परिस्थितिमा त्यस समवाय सम्बन्धका लागि अरू अरू धेरै समवायहरूको कल्पना गर्नुपर्ने हुनआउँछ। यसरी अनवस्था भएपछि द्व्यणुकादिक्रमबाट सृष्टि हुनसक्ने देखिँदैन।

१८५.नित्यमेव च भावात् (अ.२ पा.२ अधि.३ सू.१४)

यदि परमाणुहरूलाई प्रवृत्तिस्वभाव भएका मान्ने हो भने प्रवृत्ति नित्य भएको हुँदा प्रलयको सम्भावना नै रहने भएन। यदि निवृत्ति स्वभाव भएको मान्ने हो भने निवृत्ति नित्य भएकोले सृष्टि नै असम्भव हुने प्रसङ्ग उत्पन्न हुने भयो। यसबाट पनि परमाणुकारणवाद अनुपपन्न देखिन्छ।

१८६. रूपादिमत्त्वाच्च विपर्ययो दर्शनात् (अ.२ पा.२अधि.३ सू.१५)

त्यसैगरेर वैशेषिकका मतमा परमाणुहरूमा रूप आदि रहने हुँनाले तिनीहरूमा निरवयवत्व, नित्यत्व र अणुत्व आदिका विपरीत सावयवत्व आदिको प्रसङ्ग आउने देखिन्छ। किनभने संसारमा रूप आदिले युक्त घडामा त्यस्तै कुरा देखिन्छ।

१८७.उभयथा च दोषात् (अ.२ पा.२ अधि.३ सू.१६)

पृथिवी आदिका परमाणुहरू अधिक गुणयुक्त र न्यून गुणयुक्त मानिन्छन् ? अथवा मानिँदैनन् ? पहिलो पक्षमा अणुत्वको हानि हुन्छ, किनभने अधिक र न्यून गुणयुक्त पृथिवी आदिका स्वरूपको उपचय देखिन्छ। दोस्रो पक्षमा परमाणुबाट उत्पन्न भएका पृथिवी आदिमा रूप आदिको अभावको प्रसङ्ग आउन सक्तछ। यसरी दुवै पक्षमा परमाणुकारणवाद सङ्गत देखिँदैन।

१८८. अपरिग्रहाच्चात्यन्तमनपेक्षा (अ.२ पा.२ अधि.३ सू.१७)

मनु आदि शिष्टजनहरूले कुनै पनि अंशमा परमाणु कारणवादलाई स्वीकार नगरेका हुँदा पनि त्यसमा कल्याणार्थी पुरुषहरूले अत्यन्त हेयबुद्धि गर्नुपर्दछ।

१८९. समुदाय उभयहेतुकेऽपि तदप्राप्तिः (अ.२ पा.२अधि.४ सू.१८)

परमाणुहेतुका बाह्यसमुदाय र स्कन्धहेतुक आध्यात्मिक समुदायमा पनि समुदायको प्राप्ति हुँदैन। किनभने अचेतन परमाणु र स्कन्धमा आफैँ स्वतः समुदाय हुन सक्तैन। यसमा अरू कुनै स्थिर चेतन सङ्घातकर्ताको विद्यमानता देखिँदैन। अतः वैशेषिक मत भ्रान्तिमूलक देखिन्छ।

१९०. इतरेतरप्रत्ययत्वादिति चेन्नोत्पत्तिमात्रनिमित्तत्वात् (अ.२ पा.२ अधि.४ सू.१९)

अविद्या आदि परस्पर कारण भएका हुँदा घडीयन्त्र जस्तै अविद्या आदि सधैँ घुमिरहने भएपछि आक्षिप्त सङ्घात उत्पत्ति हुन्छ भनेर पनि भन्न मिल्दैन । किनभने अविद्या आदि परस्परमा एकअर्काका कारण भएर पनि ती केवल उत्पत्तिमा निमित्त हुन्छन्, यसमा बौद्धवादीको अभिमत हेतुका अधीन र कारण समुदायका अधीन कार्योपत्ति हुन सक्तैन । किनभने बौद्धका मतमा सङ्घातकर्ता स्थायी चेतन मानिएको छैन ।

१९१. उत्तरोत्पादे च पूर्वनिरोधात् (अ.२ पा.२ अधि.४ सू.२०)

क्षणभङ्गवादी बौद्धका मतमा उत्तर क्षण उत्पन्न भएपछि पूर्वक्षण नाश हुन्छ भनेर माने पनि उत्तर उत्तरको उत्पत्तिमा पूर्वपूर्व निमित्त हुने भनेर मानेको भने पाइँदैन ।

१९२. असति प्रतिज्ञोपरोधो यौगपद्यमन्यथा (अ.२पा.२अधि.४सू.२१)

कारण नभएर पनि कार्य उत्पत्ति हुन्छ भनेर मान्ने हो भने क्षणभङ्गवादी वौधले ज्ञान, चक्षु, प्रकाश र विष नभए पनि नीलपीतादिको ज्ञान हुन्छ भनेर मानेको मान्यताको बाध हुनजान्छ । अथवा कार्य सहेतुक हो भन्ने स्वीकार गरेर कार्यपर्यन्त हेतु विद्यमान रहन्छ भनेर स्वीकार गर्दाखेरि हेतु अर्थात् कारण र कार्यको एककालमा नै स्थिति रहने हुन्छ । अतः यसप्रकार क्षणिकत्व-प्रतिज्ञाको हानि हुने देखिन्छ ।

१९३.प्रतिसङ्ख्याऽप्रतिसङ्ख्यानिरोधाप्राप्तिरविच्छेदात् (अ.२ पा.२ अधि.४ सू.२२)

वैनाशिकहरूले मानेजस्तो प्रतिसङ्ख्यानिरोध अर्थात् भावको बुद्धिपूर्वक विनाश र त्यसको विपरीत अप्रतिसङ्ख्यानिरोध अर्थात् अबुद्धिपूर्वक नाश दुवै हुन सक्तैन । किनभने सन्तान र सन्तानीहरूको विच्छेद हुन सक्तैन । अतः यसबाट निरोधद्वय अर्थात् नाशद्वयको उपपत्ति हुन सक्तैन ।

१९४.उभयथा च दोषात् (अ.२ पा.२ अधि.४ सू.२३)

अविद्याका सम्यग् ज्ञानले प्रतिसङ्ख्याको नाश हुन्छ ? अथवा स्वतः नाश हुन्छ ? प्रथम पक्ष मान्ने हो भन्ने निर्हेतुक नाश हुन्छ भन्ने वैनाशिकहरूको प्रतिज्ञाको हानि हुने भयो । दोस्रो पक्ष मान्ने हो भने ज्ञानोपदेश निष्फल हुने भयो । यहाँ ज्ञानोपदेश भन्नाले चारथरी भावनालाई भनिन्छ । जस्तै सबै क्षणिक हो, सबै दुःख हो, सबै स्वलक्षण हो र सबै शून्य हो । यसरी विचार गर्दा सौगत अर्थात् वैनाशिकको मत असङ्गत देखिन्छ ।

१९५.आकाशे चाविशेषात् (अ.२ पा.२ अधि.४ सू.२४)

'आत्मन आकाशः सम्भूतः' यस श्रुति अनुसार आकाशको उत्पत्ति हुने यसमा शब्दगुण रहने हुँदा यो पनि पृथिवी आदि जस्तै द्रव्य वा वस्तु हो । अतः आकाश निरुपाख्य होइन ।

१९६. अनुस्मृतेश्च (अ.२ पा.२ अधि.४ सू.२५)

अनुभव भएपछि सम्झना हुनु नै स्मृति हो। यसबाट पनि आत्मालाई क्षणिक भन्न मिल्दैन। किनभने आत्माले अनुभव गर्दछ, त्यसैबाट स्मृति हुन्छ। अतः आत्मालाई क्षणिक भन्न मिल्दैन।

१९७.नासतोऽदृष्टत्वात् (अ.२ पा.२ अधि.४ सू.२६)

अभावबाट कार्यको उत्पत्ति हुन सक्तैन। किनभने नरशृङ्ग अथवा शशशृङ्ग आदिबाट कार्यको उत्पत्ति हुन सक्तैन।

१९८. उदासीनानामपि चैवं सिद्धिः (अ.२ पा.२ अधि.४ सू.२७)

अभावबाट भावको उत्पत्ति मान्ने हो भने कुनै काममा प्रवृत्त नभएका व्यक्तिको पनि काम हुनेभयो। जुन सम्भव छैन। अतः वैभाषिक र सौत्रान्तिक बुद्धमार्गीहरूको मत भ्रान्तिमूलक हो।

१९९. नाभाव उपलब्धेः (अ.२ पा.२ अधि.५ सू.२८)

कहीँ पनि पदार्थहरूको अभाव हुँदैन। विज्ञानका अतिरिक्त अन्य पदार्थ यो घट हो, यो पट हो भन्ने अनुभव हुन्छ।

२००.वैधर्म्याच्च न स्वप्नादिवत् (अ.२ पा.२ अधि.५ सू.२९)

जाग्रत् अवस्थाको ज्ञान र स्वप्नावस्थाको ज्ञान क्रमशः अबाधित र बाधित हुन्छन्। यसबाट पनि जाग्रत्‌को ज्ञान निराधार हुन सक्तैन।

२०१. न भावोऽनुपलब्धेः (अ.२ पा.२ अधि.५ सू.३०)

वासनाहरूको सद्भाव हुन सक्तैन। किनभने बौद्धमतमा बाह्यपदार्थहरू उपलब्ध हुँदैनन्। बाह्य पदार्थको ज्ञान वासनाले हुनेगर्दछ। अनुभव वा वासनाका अभावमा कार्यको पनि अभाव हुन्छ।

२०२.क्षणिकत्वाच्च (अ.२ पा.२ अधि.५ सू.३१)

विज्ञानवादी बौद्धको अभिमत आलयविज्ञान क्षणिक भएको हुँदा त्यो पनि वासनाको आश्रय हुन सक्तैन।

२०३.सर्वथाऽनुपपत्तेश्च (अ.२ पा.२ अधि.५ सू.३२)

बौद्धमतका ग्रन्थ र अर्थसमेत असङ्गत भएका हुँदा पनि कल्याण चाहने मुमुक्षुहरूले यसप्रकारको भ्रान्तिमूलक मतमा आस्था राख्नु श्रेयस्कर हुँदैन।

२०४. नैकस्मिन्नसम्भवात् (अ.२ पा.२ अधि.६ सू.३३)

एउटै परमार्थरूप वस्तुमा विरुद्ध धर्महरू रहन सम्भव नहुने हुँदा विभिन्न सात पदार्थहरू र जीवस्तिकाय आदि पनि रहने देखिँदैन। अतः जैनका मतमा अनेकरूपता असम्भव छ।

२०५. एवं चात्माऽकात्स्न्र्यम् (अ.२ पा.२ अधि.६ सू.३४)

जसरी जैनमतमा एउटै वस्तुमा विरुद्ध धर्महरूको असम्भवरूप दोष आइलागेको छ, त्यसैगरेर जीवको परिच्छिन्नरूप दोस्रो दोष पनि प्रसक्त छ। आत्मा परिच्छिन्न भएपछि घट आदि सरह आत्मा पनि अनित्य हुन्छ।

२०६. न च पर्यायादप्यविरोधो विकारादिभ्यः (अ.२पा.२अधि.६सू.३५)

क्रमशः अवयवहरू जाने र आउने भएपछि तत् तत् स्थूल र सूक्ष्मशरीरका आत्मामा कुनै विरोध आइलाग्दैन भनेर पनि जैनीहरूले भन्न मिल्ने देखिँदैन। किनभने आत्मा सावयव भएमा, तत् तत् शरीरमा वृद्धि र ह्रास अङ्गीकार गरेमा आत्मा विकारी हुन्छ। आत्मा विकारी भएपछि स्वीकृत बन्ध र मोक्ष बाधित हुन्छन्। अतः जैनमत ठीक छैन।

२०७. अन्तावस्थितेश्चोभयनित्यत्वादविशेषः (अ.२पा.२अधि.६ सू.३६)

मोक्षावस्थामा जीवपरिणामलाई व्यवस्थित मानेपछि आद्य र मध्यमकालको जीवपरिणामलाई पनि व्यवस्थित मान्नुपर्ने हुन्छ। होइन भने अन्त मोक्षावस्थाको जीवपरिणामलाई उत्पत्तिमत्व मान्नु पर्ने देखिन्छ। अन्ततः यसबाट जीवलाई अनित्य मान्नुपर्ने हुन्छ। अतः बौद्धमत जस्तै जैनमत पनि अप्रामाणिक ठहर्दछ।

२०८.पत्युरसामञ्जस्यात् (अ.२ पा.२ अधि.७ सू.३७)

जगत्को उपादानकारण भएका प्रधानसमेतका ईश्वर प्रेरक भएका हुँदा ईश्वरलाई जगत्को निमित्तकारण मान्न मिल्दैन, अर्थात् ईश्वर निमित्तकारण हुन सक्तैन। किनभने विषम जगत्का सृष्टिमा ईश्वर प्रवृत्त भएपछि राग, द्वेष आदि उत्पन्न हुन्छन्। यसबाट ईश्वरमा असामञ्जस्यत्व उपपन्न हुन्छ।

२०९.सम्बन्धानुपपत्तेश्च (अ.२ पा.२ अधि.७ सू.३८)

प्रेर्य प्रधान आदिका साथ प्रेरक ईश्वरको सम्बन्ध नै अनुपपन्न भएको हुँदा ईश्वर प्रेरक हुन सक्तैन।

२१०. अधिष्ठानानुपपत्तेश्च (अ.२ पा.२ अधि.७ सू.३९)

रूपादिहीन प्रधानको प्रेरक ईश्वर नभएको हुँदा अधिष्ठान पनि हुन सक्तैन।

२११. करणवच्चेन्न भोगादिभ्यः (अ.२ पा.२ अधि.७ सू.४०)

अप्रत्यक्ष भएर पनि जसरी इन्द्रियहरू जीवबाट प्रेरित हुन्छन्, त्यसैगरेर अप्रत्यक्ष प्रधान ईश्वरबाट प्रेरित हुन्छ भनेर पनि भन्न मिल्दैन। किनभने यस्तो मान्ने हो भने जसरी जीव भोगका लागि इन्द्रियहरूको प्रेरक हुन्छ, त्यसैगरेर ईश्वरलाई पनि प्रेरक मान्ने हो भने ईश्वरमा पनि भोगादि दोषको प्राप्ति होला।

२१२. अन्तवत्त्वमसर्वज्ञता वा (अ.२ पा.२ अधि.७ सू.४१)

प्रधान, जीव, आफ्नू सङ्ख्या र परिणामको निश्चय ईश्वरले गर्दछ ? अथवा गर्दैन ? यदि निश्चय गर्दछ भने परिच्छिन्न परिणाम र परिच्छिन्न सङ्ख्या हुने भएकाले ती तीनै थरी घटका समान विनाशशील होलान् । यदि निश्चय गर्दैन भने ईश्वरको असर्वज्ञता हुन्छ। अतः माहेश्वर सिद्धान्त भ्रान्तिमूलक हो ।

२१३. उत्पत्त्यसम्भवात् (अ.२ पा.२ अधि.८ सू.४२)

वासुदेवबाट जीवको उत्पत्ति हुन सक्तैन। यदि उत्पत्ति हुन्छ भनेर मानियो भने पनि जीव घट जस्तै अनित्य हुन्छ। यस अवस्थामा वैष्णवद्वारा मानिएको भगवत्प्राप्तिरूप मोक्ष कसले प्राप्त गर्ने ? अतः भागवतसिद्धान्त भ्रान्तिमूलक हो।

२१४. न च कर्तुः करणम् (अ.२ पा.२ अधि.८ सू.४३)

देवदत्त आदि कर्ताहरूबाट बञ्चरो आदि करणको उत्पत्ति हुन सक्तैन । अतः जीवबाट मनको उत्पत्ति हुन्छ भन्नु कत्ति पनि मिल्ने कुरा होइन।

२१५. विज्ञानादिभावे वा तदप्रतिषेधः (अ.२ पा.२ अधि.८ सू.४४)

वासुदेव आदि तीनै थरी वासुदेवजस्तै विज्ञान, ऐश्वर्य, शक्ति, बल, वीर्य र तेजःस्वरूप भएर पनि उत्पत्ति असम्भवरूप दोषको प्रतिषेध भने हुन सक्तैन।

२१६. विप्रतिषेधाच्च (अ.२ पा.२ अधि.८ सू.४५)

यस मतमा कतै वासुदेवका विज्ञान, ऐश्वर्य आदि गुणहरू हुन् र कतै भने ती गुणहरू नै वासुदेव हुन्। यसरी गुण र गुणीका भेद र अभेदका वर्णनबाट परस्परमा विरोध देखिन्छ। अतः भागवतमत प्रामाणिक होइन।



## द्वितीय अध्याय
## तृतीय पाद

२१७.न वियदश्रुतेः (अ.२ पा.३ अधि.१ सू.१)

आकाशको उत्पत्ति हुँदैन, किनभने आकाशको उत्पत्तिको प्रतिपादन गर्ने श्रुतिहरूको अभाव देखिन्छ।

२१८. अस्ति तु (अ.२ पा.३ अधि.(१ सू.२)

छान्दोग्यश्रुतिमा आकाशको उत्पत्तिको प्रतिपादन गर्ने मन्त्रहरू नभए पनि तैत्तरीयक उपनिषद्मा भने आकाशको उत्पत्तिको वर्णन गर्ने मन्त्र विद्यमान छ। अतः विरोध जस्ताको तस्तै विद्यमान छ।

२१९. गौण्यसम्भवात् (अ.२ पा.३ अधि.१ सू.३)

आकाशको उत्पत्तिको प्रतिपादन गर्ने श्रुति गौणी हुन्, मुख्य होइनन्। किनभने आकाशको उत्पत्तिमा समवायीकारण आदि सामग्रीको अभाव छ। व्यापक भएको हुँदा आकाश नित्य हो भन्न सकिन्छ। अतः आकाशको उत्पत्ति हुन सक्तैन।

२२०.शब्दाच्च (अ.२ पा.३ अधि.१ सू.४)

'वायुश्चान्तरिक्षं चैतदमृतम्' इत्यादि श्रुतिमा आकाशमा अमृतशब्दको प्रयोग देखिन्छ। यस कुराबाट आकाशको उत्पत्ति नहुने कुरा सिद्ध हुन्छ।

२२१. स्याच्चैकस्य ब्रह्मशब्दवत् (अ.२ पा.३ अधि.१ सू.५)

जसरी एउटै प्रकरणमा विषयभेदबाट 'अन्नं ब्रह्म' पनि आएको देखिन्छ। यहाँ ब्रह्मशब्द गौण हो। अनि अर्को 'आनन्दो ब्रह्म' चाहिँ मुख्य हो। यसैगरेर यहाँ पनि विषयका भेदले एउटै सम्भूतशब्द गौण र मुख्य हुन सक्तछ।

२२२.प्रतिज्ञाहानिरव्यतिरेकाच्छब्देभ्यः (अ.२ पा.३ अधि.१ सू.६)

उपनिषद्मा प्रतिपादित ब्रह्म सम्पूर्ण सृष्टिमा अभेदरूपले रहेको छ। यसैकारण एकको विज्ञानले सबैको ज्ञान हुने प्रतिज्ञा बाध हुँदैन। तर आकाशको उत्पत्ति नमान्ने हो भने उक्त प्रतिज्ञा बाधित हुन्छ। अतः उक्त प्रतिज्ञाका सिद्धिका लागि आकाशको उत्पत्तिलाई स्वीकार गर्नुपर्दछ। कार्य र कारणलाई अभेद भनेर प्रतिपादन गर्ने श्रुति 'सदेव सोम्येदमग्र आसीद्' 'ऐतदात्म्यमिदं सर्वम्' इत्यादि श्रुतिहरूबाट प्रतिज्ञाको सिद्धि भएको कुरा थाहा हुन्छ।

२२३.यावद्विकारं तु विभागो लोकवत् (अ.२पा.३अधि.१सू.७)

जति पनि विकार छन्, ती सबै घट, सुराही आदिका सरह विभक्त देखिन्छन् । अतः पृथिवी आदि जस्तै विभक्त भएका कारण आकाश ब्रह्मजन्य भएको कुरामा कुनै विवाद देखिँदैन ।

२२४. एतेन मातरिश्वा व्याख्यातः (अ.२ पा.३ अधि.२ सू.८)

'आकाशाद्वायु' भन्ने श्रुति भएको हुँदा आकाश पनि उत्पत्तिमान् भएको सिद्ध हुन्छ। आकाशभावमा प्राप्त भएको ब्रह्मबाट नै वायुको उत्पत्ति भएको हो ।

२२५. असम्भवस्तु सतोऽनुपपत्तेः (अ.२ पा.३ अधि.३ सू.९)

सत्स्वरूप ब्रह्मको उत्पत्ति सम्भव छैन । किनभने सत्सामान्यबाट सत्सामान्यको उत्पत्ति हुन सक्तैन । विशेष घट, सुराही आदिको उत्पत्ति मृत्तिका सामान्यबाट भएको लोकमा अर्थात् व्यवहारमा देखिन्छ।

२२६.तेजोऽतस्तथा ह्याह (अ.२ पा.३ अधि.४ सू.१०)

तेज ब्रह्मभावापन्न वायुबाट उत्पन्न हुन्छ। 'वायोरग्निः' भनेर श्रुतिले भनेको छ।

२२७.आपः (अ.२ पा.३ अधि.६ सू.११)

जल तेजबाट उत्पन्न हुन्छ। किनभने 'अग्नेरापः' भनेर श्रुतिले भनेको छ।

२२८.पृथिव्यधिकाररूपशब्दान्तरेभ्यः (अ.२ पा.३ अधि.६ सू.१२)

अन्नशब्दबाट यहाँ पृथ्वीलाई लिएको छ। यहाँ ओदनलाई लिएको छैन। किनभने 'तत्तेजोऽसृजत' 'तदपो'सृजत' भनेर यहाँ यसप्रकार महाभूतको उत्पत्तिको प्रकरण चलेको छ। 'यत्कृष्णं तदन्नस्य' भनेर यसरी पृथिवीलाई बुझाउँने कृष्णरूपको श्रवण छ। फेरि ' अद्भ्यः पृथिवी' भनेर जलबाट नै पृथिवीको उत्पत्ति देखाएको छ।

२२९. तदभिध्यानादेव तु तल्लिङ्गात् सः (अ.२पा.३ अधि.७सू.१३)

उही परमात्मा वायु आदि सबै विकारको मूल कारण हो । यो कुरा तत्तत् कार्यविषयक ईक्षणात्मक अभिध्यानरूप द्रष्टा परमात्मालाई उसका लिङ्गहरूबाट निश्चित गर्नसकिन्छ । उसलाई 'यः पृथिव्यां तिष्ठन्' भनेर श्रुतिले सर्वनियन्तृत्वका रूपमा वर्णन गरेको छ।

२३०.विपर्ययेण तु क्रमोऽत उपपद्यते च (अ.२पा.३अधि.८सू.१४)

प्रलयको क्रम भने उत्पत्तिक्रमका विपरीतक्रमले हुन्छ। किनभने आफ्नै कारणमा नै कार्यको लय भएको देखिन्छ। यसरी विपरीतक्रमबाट मात्रै लयक्रम पनि सम्भव छ। नभए कार्यमा कारणको लय हुने अनिष्टापत्ति आइलाग्दछ।

२३१. अन्तरा विज्ञानमनसी क्रमेण तल्लिङ्गादिति चेन्नाविशेषात् (अ.२ पा.३ अधि.९ सू.१५)

'एतस्मात् जायते प्राणः' इत्यादि श्रुतिहरूमा आएको लिङ्गद्वारा आत्मा र महाभूतहरूको बीचमा विज्ञान र मनका क्रमले उत्पत्ति हुने कुरा थाहा हुन्छ। यदि कसैले यसको विपरीत सम्झन्छ भने त्यो ठीक होइन। किनभने महाभूतहरूको उत्पत्तिबाट नै विज्ञान र मनको पनि उत्पत्ति सिद्ध हुन्छ। अतः यसमा कुनै अरू विशेष नभएकाले विज्ञान र मनको उत्पत्तिको क्रम विशेषरूपले श्रुतिले भिन्नै निरूपण गरेको छैन।

२३२.चराचरव्यपाश्रयस्तु स्यात्तद्व्यपदेशो भाक्तस्त'व-भावित्वात् (अ.२ पा.३ अधि.१० सू.१६)

जन्म र मरणको जुन यो लौकिक प्रवाद छ, त्यो स्थावर र जङ्गम देहमा मुख्यरूपमा लागू हुन्छ, जीवमा भने गौण हो। किनभने जन्ममरणको व्यपदेश देहको उत्पत्ति र नाशमा अन्वय र व्यतिरेकले अनुसरण गर्दछ। देहको प्रादुर्भाव हुँदाखेरि नै जातकर्म आदिको विधान गरिएको छ। अतः वेदान्त शास्त्रका साथ जीवको उत्पत्तिको प्रतिपादन गर्ने भएका शास्त्रहरूको कुनै विरोध छैन।

२३३.नात्माऽश्रुतेर्नित्यत्वाच्च (अ.२ पा.३ अधि.११ सू.१७)

जीवको उत्पत्ति हुँदैन। किनभने उत्पत्तिप्रकरमा जीवको उत्पत्ति सुनिँदैन। 'स वा एष महानज आत्मा' 'अजो नित्यः शाश्वतोऽयं पुराणः' इत्यादि श्रुतिबाट जीव नित्य देखिन्छ।

२३४. ज्ञोऽत एव (अ.२ पा.३ अधि.१२ सू.१८)

जीव स्वयं ज्योतिस्वरूप हो। किनभने जीवको उत्पत्ति हुँदैन।

२३५. उत्क्रान्तिगत्यागतीनाम् (अ.२ पा.३ अधि.१३ सू.१९)

'अस्माच्छरीरादुत्क्रामति' 'चन्द्रमसमेव ते सर्वे गच्छन्ति' 'तस्माल्लोकात्पुनरेति' यसप्रकार उत्क्रमण, गमन र आगमन श्रवणबाट जीव अणुपरिमाण हो। यसकारण जीवलाई सर्वव्यापक भन्ने श्रुतिहरूको जीवलाई परमाणु हो भन्ने श्रुतिसँग विरोध छ। (पूर्वपक्ष)

२३६.स्वात्मना चोत्तरयोः (अ.२ पा.३ अधि.१३ सू.२०)

उत्क्रमणपछि हुने गमन र आगमन आत्मा अणु भएमात्रै सम्भव छ, अन्यथा सम्भव छैन। (पूर्वपक्ष)

२३७. नाणुरतच्छ्रुतेरिति चेन्नेतराधिकारात् (अ.२पा.३अधि.१३सू.२१)

जीव अणुपरिमाण होइन। किनभने श्रुतिले जीवलाई सर्वगत भनेको छ भनेर पनि भन्न पाइदैन। किनकि सबै वेदान्तहरूमा जीवदेखि पृथक् ब्रह्मलाई ज्ञेयरूपले प्रतिपादन

गरिएको छ। अतः श्रुतिले सर्वगत भनेको ब्रह्मलाई हो जीवलाई होइन। (पूर्वपक्ष)

२३८.स्वशब्दोन्मानाभ्यां च (अ.२ पा.३ अधि.१३ सू.२२)

'एषोऽणुरात्मा' 'बालाग्रशतभागस्य' इत्यादि श्रुतिहरू जीवलाई अणु र स्यानो परिमाणको भनेर उल्लेख गर्दछन् । अतः अणुपरिमाणको जीव भनेर मान्नु पर्दछ । (पूर्वपक्ष)

२३९.अविरोधश्चन्दनवत् (अ.२ पा.३ अधि.१३ सू.२३)

जसरी शरीरका एक अवयवमा रहेको चन्दनबिन्दुले सारा शरीरलाई सुखको प्रतीति गराउँछ, त्यसैगरेर अणु जीव पनि शरीरव्यापी चेतना प्रदान गर्दछ। (पूर्वपक्ष)

२४०. अवस्थिति वैशेष्यादिति चेन्नाभ्युपगमाद् धृ दिहि (अ.२ पा.३ अधि.१३ सू.२४)

प्रत्यक्षरूपले चन्दनबिन्दु शरीरको एक छेउमा रहेको देखिन्छ। तर जीवको भने यस्तो अवस्थिति होइन। अतः समानता नभएको कारण चन्दन दृष्टान्त युक्त होइन भन्न मिल्दैन। किनभने जीवको अणुतालाई स्वीकार गरिएको छ। अतः दृष्टान्तमा विषमता छैन। (पूर्वपक्ष)

२४१.गुणाद्वा लोकवत् (अ.२ पा.३ अधि.१३ सू.२५)

अथवा जसरी लोकमा घरको माझमा रहेको बत्ती स्यानो भए पनि त्यसको प्रभारूप गुणले गर्दा घरभरि प्रकाश फैलिन्छ, त्यसैगरेर आत्मा अणु भए पनि आत्मामा रहेको चैतन्यरूप गुणलाई व्यापक मान्दाखेरि व्यापक गुणबाट व्यापी कार्य हुनुमा कुनै बाधा देखिँदैन। (पूर्वपक्ष)

२४२. व्यतिरेको गन्धवत् (अ.२ पा.३ अधि.१३ सू.२६)

गुण भए पनि गन्धको स्थिति गुणी द्रव्यभन्दा पृथक् हुन्छ। किनभने पुष्पवाटिकाका छेउछाउमा घुम्ने मान्छेलाई गन्धको उपलब्धि हुन्छ । अतः आत्माको गुणरूपी ज्ञान आत्माभन्दा पृथक् हुन सक्तछ। (पू.र्वपक्ष)

२४३. तथा च दर्शयति (अ.२ पा.३ अधि.१३ सू.२७)

'आ लोमभ्य आ नखाग्रेभ्यः' इत्यादि श्रुतिहरू आत्मालाई गुणरूपी ज्ञानद्वारा सम्पूर्ण शरीरमा व्याप्त भएका कुराको प्रतिपादन गर्दछन्। (पूर्वपक्ष)

२४४. पृथगुपदेशात् (अ.२ पा.३ अधि.१३ सू.२८)

'प्रज्ञया शरीरं समारुह्य' भन्ने श्रुतिबाट पनि आत्मालाई कर्ता र ज्ञानलाई करणका रूपमा पृथक् उपदेश गरिएको छ। अतः गुणद्वारा जीव शरीरव्यापी भएको ज्ञान हुन्छ।

२४५.तद्गुणसारत्वात्तु तद्व्यपदेशः प्राज्ञवत् (अ.२पा.३अधि.१३ सू.२९)

उपर्युक्त सम्बन्धमा जीवमा अणुत्व, उत्क्रमण, गमन, आगमन, सुख आदि बुद्धिका

गुण हुन् । जीवात्माका होइनन् । त्यसकारण जीवमा अणुत्वको व्यपदेशमात्रै हो । त्यो स्वाभाविक होइन । जसरी परमात्माको सगुणोपासनामा दहर आदि उपाधिका कारण नै परमात्मामा अणुत्व आदिको व्यपदेश गरिन्छ । यस सम्बन्धमा पनि सोही कुरा लागू हुन्छ । जीवात्मा अणुसमान होइन, विभु हो ।

२४६.यावदात्मभावित्वाच्च न दोषस्तद्दर्शनात् (अ.२पा.३अधि.१३सू.३०)

बुद्धिको संयोग जबसम्म आत्मज्ञानद्वारा संसारको निवृत्ति हुँदैन तबसम्म रहिरहन्छ । त्यसकारण पूर्वपक्षीले भनेको दोष लाग्दैन । किनभने देहसँग वियोग भइसकेपछि पनि आत्मासँग बुद्धिको संयोग भइरहन्छ । 'समानः सन्नुभौ लोकावनुसञ्चरति' भनेर श्रुतिले भनेको छ ।

२४७. पुंस्त्वादिवत्त्वस्य सतोऽभिव्यक्तियोगात् (अ.२पा.३अधि.१३सू.३१)

जसरी बाल्यावस्थामा विद्यमान पुंस्त्व आदि गुणहरू युवावस्थामा विकसित हुन्छन् । त्यसरी नै सुषुप्ति अवस्थामा सूक्ष्मरूपले विद्यमान बुद्धिसंयोगको अभिव्यक्ति हुन्छ । अतः जबसम्म बुद्धिको आत्मासँग सम्बन्ध रहिरहन्छ तबसम्म यस्तो भइरहन्छ ।

२४८.नित्योपलब्ध्यनुपलब्धि प्रसङ्गोऽन्यतरनियमो वाऽन्यथा (अ.२ पा.३ अधि.१३ सू.३२)

मनलाई निश्चय नै मान्नु पर्दछ । यदि मनलाई मानिएन भने विषयहरूको छुट्टाछुट्टै ज्ञान हुन सक्तैन । सामग्री भएर पनि ज्ञान सम्बन्ध हुन सक्तैन । आत्मामा बुद्धिको अध्यासद्वारा हुन्छ । धर्मशून्य आत्मामा शक्ति आदि गुणहरू रहँदैनन् । इच्छा आदि मनका धर्म हुन् । मनबाटै काम सङ्कल्प आदि उद्भव हुन्छन् । श्रुतिले भनेको छ 'काम सङ्कल्पो विचिकित्सा श्रद्धाऽश्रद्धाधृतिरधृतिर्ह्रीर्धीर्भीरित्येतत् सर्वं मन एव' । यसैकारण मनःयुक्त आत्मामा नै अणुत्वसँग श्रुतिको विरोध छैन ।

२४९. कर्ता शास्त्रार्थवत्त्वात् (अ.२ पा.३ अधि.१४ सू.३३)

आत्मा नै कर्ता हो, बुद्धि कर्ता होइन । किनभने कर्तालाई अपेक्षित सबै कुराको ज्ञान गराउने विधिशास्त्र सार्थक देखिन्छ । यदि बुद्धि कर्ता हो र फलको भोग गराउने आत्मा हो भन्ने हो भने विधिशास्त्र निरर्थक हुन्छ । अतः केवल बुद्धि कर्ता होइन, आत्मा नै कर्ता हो ।

२५०. विहारोपदेशात् (अ.२ पा.३ अधि.१४ सू.३४)

'स्वे शरीरे यथाकामं परिवर्तते' भनेर श्रुतिले जीवका प्रकरणमा स्वप्नावस्थामा शरीरमा आत्माको सञ्चरणको उपदेश गरेको छ । जुन कर्ता होइन, त्यसले सञ्चरण गर्दैन । अतः कर्ता आत्मा नै हो ।

२५१.उपादानात् (अ.२ पा.३ अधि.१४ सू.३५)

'प्राणानां विज्ञानेन विज्ञानमादाय' भनेर श्रुतिले आत्माद्वारा इन्द्रियहरूका शक्तिको ग्रहण गरेको कुरा बताएको छ। कर्ता नभएको भए आत्माले शक्तिको ग्रहण गर्ने थिएन। यसबाट आत्मा नै कर्ता भएको सिद्ध हुन्छ।

२५२. व्यपदेशाच्च क्रियायां न चेन्निर्देशविपर्ययः (अ.२ पा.३ अधि.१४ सू.३६)

'विज्ञानं यज्ञं तनुते' इत्यादि श्रुतिमा लौकिक र वैदिक क्रियामा समेत विज्ञानशब्दवाच्य आत्मालाई कर्ता भनिएको छ। यदि विज्ञान शब्दलाई बुद्धिपरक मान्ने र जीवपरक नमान्ने हो भने 'विज्ञानम्' यसप्रकार कर्तृनिर्देशका स्थानमा 'विज्ञानेन' यसरी करणनिर्देश भएर निर्देशविपर्यय हुनजाला। अतः बुद्धिभन्दा व्यतिरिक्त आत्मालाई नै कर्तृत्वका रूपमा लिँदा कुनै खालको विरोध पर्ने देखिँदैन।

२५३. उपलब्धिवदनियमः (अ.२ पा.३ अधि.१४ सू.३६)

जसरी उपलब्धिमा स्वतन्त्र भएर पनि आत्मा इष्ट र अनिष्ट दुवै प्राप्त गर्दछ। तर त्यसैगरेर इष्ट र अनिष्टको पनि सम्पादन आत्माले गर्दछ भन्नेमा कुनै नियम छैन।

२५४. शक्तिविपर्ययात् (अ.२ पा.३ अधि.१४ सू.३८)

बुद्धिलाई कर्ता मान्दा बुद्धिको करणशक्तिको विपर्यय हुन्छ। बुद्धिको करणशक्तिको नाश हुन्छ। अतः आत्मा नै कर्ता हो भन्ने कुरा सिद्ध हुन्छ। यदि बुद्धिलाई कर्ता मानियो भने अर्को करण मानुपर्ने हुन्छ। यसमा नाममात्रको विवाद देखिन्छ, अर्थमा कुनै भेद देखिँदैन।

२५५. समाध्यभावाच्च (अ.२ पा.३ अधि.१४ सू.३९)

आत्मालाई कर्ता नमान्ने हो भने 'आत्मा वा अरे द्रष्टव्यः.' इत्यादि श्रुतिमा विहित ब्रह्मसाक्षात्कारको साधन समाधिको अभाव हुनजान्छ। यसबाट पनि आत्मा नै कर्ता भएको कुरा सिद्ध हुन्छ।

२५६. यथा तक्षोभयथा (अ.२ पा.३ अधि.१५ सू.४०)

जसरी लोकमा कुनै सिकर्मीले बसिला, छिनु आदि उपकरणहरू युक्त भएमा कर्ता हुन्छ र ती उपकरणहरू नलिएमा ऊ अकर्ता हुन्छ। त्यसैगरेर जीवात्मा पनि मन आदि करणहरूले युक्त भएमा कर्ता हुन्छ र ती करणहरूले अयुक्त भएमा अकर्ता हुन्छ। यसरी जीवात्मा कर्ता र अकर्ता दुवै हुन सक्तछ। अतः वास्तविकरूपमा अकर्ता भएर पनि जीवात्मा गौणरूपमा कर्ता पनि हुन्छ। यसप्रकार कर्मशास्त्र र मोक्षशास्त्र दुवैको उपपन्नता सिद्ध हुन्छ।

२५७.	परात्तु तच्छ्रुतेः (अ.२ पा.३ अधि.१६ सू.४१)

जीवमा कर्तृत्व आदि स्वभावतः सिद्ध हुँदैन। तर अज्ञानद्वारा आच्छन्न जीवमा अध्यासका कारण कर्तृत्व आदि सांसारित्व सिद्ध हुन्छ। परमात्माको अनुग्रह भएमा ज्ञान प्राप्तिद्वारा मोक्ष पनि हुन्छ। किनभने 'एष ह्येव साधु कर्म कारयति' भनेर श्रुतिले ईश्वरको कर्तृत्वको प्रतिपादन गरेको छ।

२५८.कृतप्रयत्नापेक्षस्तु विहितप्रतिषिद्धावैयर्थ्यादिभ्यः (अ.२ पा.३ अधि.१६ सू.४२)

जीवद्वारा अनुष्ठित धर्म र अधर्मरूप कार्यलाई अपेक्षा गरेर नै ईश्वरले अर्को जन्ममा पनि धर्म आदि कृत्यहरू गराउँछ र तदनुसार सुख आदि फल पनि प्रदान गर्दछ। यसकारण ईश्वरलाई वैषम्य र अकारुण्यरूप दोष लाग्न सक्तैन। संसार अनादि भएको हुँदा पूर्व जन्ममा गरिएका धर्म र अधर्मको अपेक्षा हुनु उचित नै देखिन्छ। ईश्वरले धर्म र अधर्मको अपेक्षा राख्ने सम्बन्धमा 'ज्योतिष्टोमेन यजेत' 'स्वर्गकामो यजेत' 'ब्राह्मणो नहन्तव्य' इत्यादि विधि र निषेधपरक श्रुति सार्थक हुने देखिन्छ। अन्यथा विधिनिषेध शास्त्र व्यर्थ होलान्। यसरी जीवको कर्तृत्व ईश्वरका अधीनमा भएको देखिन्छ। अतः विधि आदि शास्त्रहरूसँग 'एष ह्येव साधु कर्म कारयति' भन्ने श्रुतिको विरोध पर्ने देखिँदैन।

२५९. अंशो नानाव्यपदेशादन्यथा चापि दाशकितवादित्वमधीयत एके (अ.२ पा.३ अधि.१ सू.४३)

'आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यः इत्यादि श्रुतिमा जीव र ब्रह्मको भेदरूपमा उल्लेख भएको छ। अर्कातर्फ तदन्यथारूपमा जीव र ब्रह्मको अभेदरूपमा पनि 'प्रज्ञानं ब्रह्म' 'अहं ब्रह्मास्मि' आदि श्रुतिहरूमा वर्णन हुनाले जीव ब्रह्मको अंश भएको थाहा हुन्छ। फेरि निकृष्ट मान्छेहरूको उदाहरण दिएर सबै जीवको ब्रह्मसँग एकता स्थापित गर्दै अथर्वशाखाका अध्येता पैप्पलादहरू 'ब्रह्म दाशा ब्रह्म दासा ब्रह्मेमे कितवा उत' इत्यादि मन्त्रहरू पढ्दछन्। यसरी जीवको ब्रह्मका साथ भेद र अभेद दुवै सम्बन्ध अवगत भएबाट जीव ब्रह्मकै अंश भएको सिद्ध हुन्छ।

२६०.मन्त्रवर्णाच्च (अ.२ पा.३ अधि.१७ सू.४४)

'पादोऽस्य विश्वाभूतानि' भन्ने श्रुति अनुसार भूतशब्दवाच्य जीव ईश्वरको अविद्याकल्पित अंश प्रतीत हुन्छ।

२६१.अपि च स्मर्यते (अ.२ पा.३ अधि.१७ सू.४५)

'ममैवांशो जीवलोके जीवभूतः सनातनः' भनेर भगवद्‌गीताले पनि परमेश्वरको अविद्याकल्पित अंश जीव हो भनेको छ।

२६२.प्रकाशादिवन्नैवं परः (अ.२ पा.३ अधि.१७ सू.४६)

जसरी जीव अविद्याका आवेशबाट देहात्मभावमा प्राप्त भएर देहजनित दुःखले गर्दा 'म दुःखी हुँ' भन्ने संझन्छ, तर परमात्मा भने दुःखी हुँदैन। सूर्य र चन्द्रमाको प्रकाश सम्पूर्ण आकाशलाई व्याप्त गरेर बस्तछ तापनि बाङ्गो काठ आदिका उपाधिका कारण उक्त प्रकाश बाङ्गो जस्तो प्रतीत हुन्छ तापनि प्रकाश बाङ्गो हुँदैन। तदनुरूप जीव पनि वस्तुतः दुःखित्वको अभिमानी हुँदैन।

२६३.स्मरन्ति च (अ.२ पा.३ अधि.१७ सू.४७

यत्र यः परमात्माऽसौ स नित्यो निर्गुणः स्मृतः।
न लिप्यते फलैश्चापि पद्मपत्रमिवाम्भसा ॥

इत्यादि स्मृतिहरूबाट पनि व्यास आदि परमर्षिहरू ईश्वरलाई सांसारिक दुःखले स्पर्श गर्दैन भन्दछन्।

२६४. अनुज्ञापरिहारौ देहसम्बन्धाज्ज्योतिरादिवत् (अ.२ पा.३ अधि.१७ सू.४८)

'मित्रमुपसेवितव्यम्' 'शत्रुःपरिहर्तव्यः' भनेर विधि र निषेध व्यवस्था सर्वत्र पाइन्छ। त्यसैगरी आगो एउटै भएर पनि श्मशानको आगो अग्राह्य छ र अरू आगो भने ग्राह्य छ।

२६५. असन्ततेश्चाव्यतिकरः (अ.२ पा.३ अधि.१७ सू.४९)

आत्मा एउटै भएको हुँदा कर्मफल सङ्कीर्ण हुँदैन। अर्थात् देहसम्बन्धरूप एउटा जीवको उपाधि अर्को जीवको उपाधिसँग मिसिन नसक्ने हुँदा प्रत्येक जीवका कर्मका फलहरू एक अर्कामा मिसिन सक्तैनन्। किनभने उपाधिद्वारा परिच्छिन्न एउटा आत्माको अर्को परिच्छिन्नका साथ सम्बन्ध हुन सक्तैन।

२६६.आभास एव च (अ.२ पा.३ अधि.१७ सू.५०)

सूर्यको प्रतिबिम्बजस्तै यो जीव पनि परमात्माको प्रतिबिम्ब हो। जसरी एउटा प्रतिबिम्ब हल्लँदा अर्को प्रतिबिम्ब हल्लँदैन, त्यस्तै गरेर एउटा जीवको उसका कर्मफलका साथ सम्बन्ध हुँदा पनि अर्को जीवको भने त्यस जीवका कर्मफलका साथ सम्बन्ध हुन सक्तैन। अतः सम्मिश्रणको परिहार सहजै हुन्छ।

२६७.अदृष्टानियमात् (अ.२ पा.३ अधि.१७ सू.५१)

आत्मा अनेक हुने कुरामा सहमति भए पनि साङ्ख्यमतमा आत्माको विभुत्व मानिएको हुँदा र अदृष्टजनक आत्ममनसंयोग पनि सर्वात्मसाधारण हुनेहुँदा अदृष्ट पनि सर्वात्मसाधारणरूपले उत्पन्न हुन्छ। यसो भएपछि अदृष्टबाट पनि जीवात्मविशेषमा कर्मफलविशेषको सम्बन्ध नियमित हुन सक्तैन। न्यायका मतमा पनि अदृष्टबाट उत्पन्न हुने भएको मनःसंयोग सबैसँग एक समान, एक छत्त हुने भएपछि यो यस जीवात्माको

अदृष्ट हो र यो यस जीवात्माको अदृष्ट हो भनेर नछुट्टिने हुन जान्छ। यसप्रकारले अदृष्टनियमको अभाव हुनाले फलसम्बन्धमा पनि अनियमितता देखिन आउँछ।

२६८.अभिसन्ध्यादिष्वपि चैवम् (अ.२ पा.३ अधि.१७ सू.५२)

साधारणमनःसंयोगबाट हुने सङ्कल्प आदि पनि अदृष्टनियमको हेतु हुन सक्तैन। अतः उक्त दोष यथावतै छ।

२६९.प्रदेशादिति चेन्नान्तर्भावात् (अ.२ पा.३ अधि.१७ सू.५३)

आत्मा विभु भएता पनि जुन शरीरावच्छिन्न आत्मप्रदेशमा मनःसंयोग हुन्छ त्यसै आत्मप्रदेशबाट अभिसन्ध्यादिको नियम हुन्छ भन्न मिल्दैन, किनभने आत्मामा विभुत्व साधारण हुने हुँदा सबै शरीरहरूमा त्यसको अन्तर्भाव हुन्छ। यसकारण 'यसको यो शरीर हो' भन्ने नियम नभएको हुँदा पहिलेको दोष यथावत् देखिन्छ।



द्वितीय अध्याय

चतुर्थ पाद

२७०.तथा प्राणाः (अ.२ पा.४ अधि.१ सू.१)

'एतस्माज्जायते प्राणो मनः' इत्यादि श्रुतिमा आकाशको उत्पत्ति जसरी देखिन्छ, त्यसरी नै प्राण, इन्द्रियादिको उत्पत्ति पनि देखिन्छ। किनभने उत्पत्तिप्रतिपादिका श्रुतिहरू सबैका लागि साधारण नै देखिन्छन्।

२७१.गौण्यसम्भवात् (अ.२ पा.४ अधि.१ सू.२)

इन्द्रियहरूको उत्पत्तिप्रतिपादन गर्ने श्रुतिहरू गौणी होइनन्। किनभने यसबाट एउटाको विज्ञानबाट सबैको ज्ञान हुन्छ भन्ने श्रुतिसँग विरोध पर्दछ। अतः प्राणहरू पनि आत्माबाटै उत्पन्न हुने कुरा सिद्ध हुन्छ।

२७२.तत्प्राक्श्रुतेश्च (अ.२ पा.४ अधि.१ सू.३)

'एतस्माज्जायते प्राणो मनः सर्वेन्द्रियाणि च। खं वायुर्ज्योतिरापः पृथिवी विश्वस्य धारिणी॥' यस श्रुतिमा प्राण शब्दभन्दा पहिले जायते पद सुनिएको हुँदा र आकाशादिमा अनुवृत्त त्यसै पदका आधारमा आकाशादिको जन्मको वियदधिकरणमा नै निर्णय भइसकेको हुँदा पनि प्राणका विषयमा पनि जायते यस पदलाई मुख्यजन्मप्रतिपादकता नै हो भनेर मान्नुपर्दछ। त्यसलाई गौणजन्म-प्रतिपादकता भन्न मिल्दैन।

२७३. तत्पूर्वत्वाद्वाचः (अ.२ पा.४ अधि.१ सू.४)

'अन्नमयं हि सोम्य मन आपोमयः' इत्यादि श्रुतिबाट मन र प्राण सहित वाणीमा ब्रह्मप्रकृतिकतेज, जल र अन्नसमेतको कथन छ। अतः सबै इन्द्रियहरूको उत्पत्ति पनि आत्माबाटै भएको कुरा श्रुतिसम्मत छ।

२७४. सप्त गतेर्विशेषितत्वाच्च (अ.२ पा.४ अधि.२ सू.५)

इन्द्रियहरू सातओटा छन्। किनभने श्रुतिबाट तिनको सप्तत्वको ज्ञान हुन्छ। 'सप्त प्राणाः प्रभवन्ति तस्मात्' 'सप्त वै शीर्षण्ढाः प्राणा द्वाववाञ्चौ' इत्यादि श्रुतिवर्णित शीर्षण्यत्वबाट इन्द्रियहरू विशेषित हुन्छन्।

२७५. हस्तादयस्तु स्थितेऽतो नैवम् (अ.२ पा.४ अधि.२ सू.६)

'हस्तो वै ग्रहः' इत्यादि श्रुतिमा माथिका भनिएका सात प्राणहरूका अतिरिक्त हस्तादि प्राणहरू पनि सुनिन्छन्। यसमा सप्तत्व सङ्ख्यामा एकादश सङ्ख्याको अन्तर्भाव हुन सक्तैन भने एकादश सङ्ख्यामा सप्तत्व सङ्ख्याको हुन सक्तछ। अतः सात नै इन्द्रियहरू हुन् भनेर भन्न मिल्दैन।

२७६.अणवश्च (अ.२ पा.४ अधि.३ सू.७)

इन्द्रियहरू व्यापक होइनन् । देहभित्रमात्रै ती इन्द्रियहरू सीमित हुन्छन्, बाहिर तिनको स्थिति रहँदैन । यसैकारण यी अणु हुन् । ती प्रत्यक्ष छैनन् । श्रुतिबाट तिनको उत्क्रान्ति सुनिन्छ ।

२७७. श्रेष्ठश्च (अ.२ पा.४ अधि.४ सू.८)

'एतस्माज्जायते प्राणः' इत्यादि श्रुतिमा मुख्य प्राणको उत्पत्ति विशेष रूपमा सुनिएको हुँदा इन्द्रियहरूसरह मुख्य प्राण पनि ब्रह्मबाटै उत्पन्न हुने देखिन्छ ।

२७८. न वायुक्रिये पृथगुपदेशात् (अ.२ पा.४ अधि.५ सू.९)

मुख्य प्राण वायु होइन र इन्द्रिय व्यापार पनि होइन । त्यो वायु विशेष हो । किनभने 'स वायुना ज्योतिषा भाति च तपति च' इत्यादि श्रुतिबाट र 'एतस्माज्जायते प्राणः' यस श्रुतिबाट पनि वायु र प्राणको पृथक् पृथक् उपदेश देखिन्छ । इन्द्रिय व्यापारको इन्द्रियभन्दा पृथक् उपदेश हुन सक्तैन । अतः अध्यात्मभावापन्न पञ्चवृत्ति नै प्राण हो ।

२७९. चक्षुरादिवत्तु तत्सहशिष्ट्यादिभ्यः (अ.२पा.४अधि.५ सू.१०)

प्राण जीवात्मा जस्तो स्वतन्त्र छैन । चक्षुरादिकरण जस्तै पराधीन छ । यो कुरा प्राणहरूको संवाद प्रकरणबाट थाहा हुन्छ र यसबाट प्राण अचेतन हो भन्ने कुरा पनि थाहा हुन्छ ।

२८०.अकरणत्वाच्च न दोषस्तथा हि दर्शयति (अ.२पा.४अधि.५सू.११)

प्राण ज्ञानको करण नभएको हुँदा चक्षु आदि सरह यसलाई विषय प्रसङ्ग दोष पनि लाग्दैन र यसको कुनै काम छैन भन्न पनि उपयुक्त हुने देखिँदैन भनेर यस्तो शङ्का गर्नु पनि उपयुक्त हुँदैन । किनभने 'तान् वरिष्ठः' इत्यादि श्रुतिले शरीर र इन्द्रियहरूको धारणा गर्ने रूपमा प्राणलाई लिएको देखिन्छ ।

२८१.पञ्चवृत्तिर्मनोवद्व्यपदिश्यते (अ.२ पा.४ अधि.५ सू.१२)

जसरी श्रोत्र आदि निमित्तले गर्दा अन्तःकरणका शब्द आदि विषयक पाँच वृत्तिहरू हुन्छन् । त्यसरी नै 'प्राणोऽपानो व्यान उदान समानः' इत्यादि श्रुतिमा प्राणका पनि प्राण आदिका भेदले पाँचओटा वृत्तिहरू भनिएका हुन् ।

२८२. अणुश्च (अ.२ पा.४ अधि.६ सू.१३)

पूर्व अधिकरणमा वर्णित मुख्य प्राण अणु अर्थात् परिच्छिन्न र सूक्ष्म पनि हो ।

२८३.ज्योतिराद्यधिष्ठानं तु तदामननात् (अ.२पा.४अधि.७ सू.१४)

चक्षु आदि इन्द्रियहरूको आदित्यादि देवताहरूका अधीनमा चेष्टा हुन्छ, अर्थात् तिनका अधिष्ठातृ देवता सूर्य आदि देवताहरू हुन् । किन कि 'आदित्यश्चक्षुः' इत्यादि श्रुतिहरूद्वारा त्यसको प्रतिपादन गरिएको छ ।

२८४.    प्राणवत्ता शब्दात् (अ.२ पा.४ अधि.७ सू.१५)

प्राणवान् जीवका साथ इन्द्रियहरूको स्वस्वामिभाव सम्बन्ध हुन्छ। यसकारण इन्द्रियहरूद्वारा गरिने भोगको भागी जीव हुन्छ, इन्द्रियहरूका अधिष्ठाता देवताहरू हुँदैनन्। यसको प्रमाण 'स चाक्षुषः पुरुषः' भन्ने श्रुति छ।

२८५.तस्य च नित्यत्वात् (अ.२ पा.४ अधि.७ सू.१६)

जीवात्माले आफ्नै कर्मद्वारा उपार्जन गरेको शरीरमा उसकै भोक्तृत्व रहन्छ, अधिष्ठातृ देवताहरूको रहँदैन।

२८६. त इन्द्रियाणि तद्व्यपदेशादन्यत्र श्रेष्ठात् (अ.२पा.४अधि.८सू.१७)

मुख्य प्राणदेखि बाहेक अरू वागादिलाई इन्द्रिय भनिन्छ, प्राण भनिँदैन। किनभने 'एतस्माज्जायते प्राणो मनः सर्वेन्द्रियाणि च' इत्यादि श्रुतिमा प्राणको भेद देखाइएको छ।

२८७.भेदश्रुतेः (अ.२ पा.४ अधि.८ सू.१८)

वाक् आदि इन्द्रियका प्रकरणको उपसंहार गर्दै 'अथ हेममासन्यं प्राणमूचुः' भन्ने श्रुतिमा इन्द्रियभन्दा पृथक् प्राणको श्रवण भएको छ। अतः इन्द्रियहरू प्रणका व्यापार होइनन्। ती अरू नै तत्त्व हुन्।

२८८.वैलक्षण्याच्च (अ.२ पा.४ अधि.८ सू.१९)

सुषुप्तिमा प्राणको स्थिति रहन्छ तर इन्द्रियको स्थिति रहँदैन, अर्थात् सुषुप्तिमा प्राणले काम गर्दछ तर इन्द्रियहरूले गर्दैनन्। अतः वैलक्षण्य भएको हुँदा इन्द्रियहरू भिन्नै तत्त्व हुन्।

२८९. संज्ञामूर्तिक्लृप्तिस्तु त्रिवृत्कुर्वत उपदेशात् (अ.२पा.४अधि.९सू.२०)

'तासां त्रिवृतमेकैकां करवाणीति' यस श्रुतिमा भनिएको त्रिवृत्कर्ता अर्थात् नाम र रूपको पृथक्कर्ता परमेश्वर हो, जीव होइन। किनभने 'सेयं देवतैक्षत'बाट आरम्भ गरेर 'व्याकरवाणि' मा उपसंहार गरिएको छ। यसबाट व्याक्रियाको कर्ता परमेश्वर नै भएको प्रमाणित हुन्छ।

२९०. मांसादि भौमं यथाशब्दमितरयोश्च (अ.२पा.४अधि.९सू.२१)

मांस, पुरीष आदि त्रिवृत्कृत अन्नात्मक भूमिका कार्य हुन् र यसरी नै मूत्र, रगत आदि जलका कार्य हुन्।

२९१. वैशेष्यात्तु तद्वादस्तद्वादः (अ.२ पा.४ अधि.९ सू.२२)

पृथिवी आदिको त्रिवृत्करण समान जस्तो देखिए तापनि पृथिवी आदिको अधिकताले गर्दा यो पृथ्वी हो, यो जल हो भनेर लोकमा व्यवहार हुन्छ। यस सूत्रमा ' तद्वादः' शब्दको द्विरुक्ति अध्याय परिसमाप्तिको परिचायक हो।



## ब्रह्मसूत्र
## तृतीय अध्याय
## प्रथम पाद

२९२. तदन्तरप्रतिपत्तौ रंहति सम्परिष्वक्तः प्रश्ननिरूपणाभ्याम् (अ.३ पा.१ अधि.१ सू.१)

अर्को शरीर प्राप्तिमा बीजभूत भूतसूक्ष्महरूबाट परिवेष्टित भएर नै जीव धूमादि मार्गद्वारा स्वर्गलोक जान्छ । किनभने 'वेत्थ यथा पञ्चम्यामाहुतावापः पुरुषवचसो भवन्ति' भनेर श्रुतिले भनेको छ।

२९३. त्र्यात्मकत्वात्तु भूयस्त्वात् (अ.३ पा.१ अधि.१ सू.२)

त्रिवृत्करण श्रुति अनुसार अरू दुई भूतहरूको मिलनबाट जल त्र्यात्मक हुन्छ । अतः जलभन्दा इतर भूतहरूको परिष्वङ्ग सिद्ध हुन्छ। कसैले श्रुतिमा जलको आधिक्यको कुरा अर्थात् 'जलभूयस्त्व' अनुपपन्न हो भन्दछन् भने त्यो उचित होइन, किनभने तेज आदिका तुलनामा शरीरमा पानीको मात्रा अत्यधिक हुन्छ।

२९४. प्राणगतेश्च (अ.३ पा.१ अधि.१ सू.३)

'तमुत्क्रान्तं प्राणोऽनूत्क्रामति प्राणमनूत्क्रामन्तं सर्वे प्राणा अनूत्क्रामन्ति' यस श्रुतिमा इन्द्रियहरूको जीवका साथ धूमादि मार्गबाट स्वर्गलोकमा गमन हुन्छ भनिएको हुँदा परिष्वङ्ग सिद्ध हुन्छ।

२९५. अग्न्यादिगतिश्रुतेरिति चेन्न भाक्तत्वात् (अ.३पा.१अधि.१ सू.४)

'यत्रास्य पुरुषस्य मृतस्याग्निं वागप्येति वातं प्राणः' इत्यादि श्रुतिमा मरणकालमा इन्द्रियहरू अग्नि आदि देवताहरूमा गएर मिल्ने सुनिएको हुँदा जीव इन्द्रियहरूका साथ परलोक जान्छ भन्नु ठीक होइन भन्न मिल्दैन । किनभने अर्को श्रुतिले 'तमुत्क्रामन्तं प्राणोऽनुत्क्रामति' भनेको छ । यसरी अरू श्रुतिहरूमा विरोध पर्ने भएको हुँदा अग्नि आदिमा गतिप्रतिपादक श्रुति गौण हुनजान्छ।

२९६. प्रथमेऽश्रवणादिति चेन्न ता एव ह्युपपत्तेः (अ.३पा.१अधि.१सू.५)

द्युलोक आदि पाँच अग्निहरूमा पहिलो द्युलोकनामक अग्निमा 'तस्मिन्नेतस्मिन्नग्नौ' आदि श्रुति अनुसार जलमा आहुति नभएर श्रद्धामा आहुति सुनिन्छ । अतः जलबाट पुरुषवचस्त्व अनुपपन्न हुने देखिन्छ भन्नु ठीक होइन । किनभने 'आपो हास्मै श्रद्धां संनमन्ते पुण्याय कर्मणे' इत्यादि श्रुतिमा आएको प्रश्न र प्रतिवचनका उपपत्तिबाट जल नै लक्षित हुन्छ।

२९७.अश्रुतत्वादिति चेन्नेष्टादिकारिणां प्रतीतेः (अ.३पा.१अधि.१सू.६)

श्रद्धाशब्दित जलमा पुरुषवचस्त्व भए पनि जलमा वेष्टित जीव जान्छ भन्नु ठीक होइन । किनभने जल आदिका सरह जीव श्रुत होइन भन्नु ठीक होइन । के कारणले भने 'अथ य इमे ग्राम इष्टापूर्ते' इत्यादि वाक्यशेषबाट इष्टापूर्तकर्म गर्नेहरूका लागि भन्ने प्रतीति हुन्छ ।

२९८. भाक्तं वानात्मवित्त्वात्तथाहि दर्शयति (अ.३पा.१अधि.१ सू.७)

इष्टादिकारीहरूमा अन्नत्व अप्रधान हो, मुख्य होइन । किनभने यसबाट स्वर्ग कामो यजेत' भन्ने श्रुतिको विरोध हुन्छ । आत्मज्ञान नहुँदा देवोपभोग्यरूप अन्नत्व नै यहाँ विवक्षित हुन्छ । किनभने 'अथ योऽन्याम्' आदि श्रुतिहरूबाट यही ज्ञात हुन्छ ।

२९९.कृतात्ययेऽनुशायवान्दृष्टस्मृतिभ्यां यथेतमनेवं च (अ.३ पा.१ अधि.२ सू.८)

स्वर्गका लागि गरिएका कर्मफलको उपभोग गरिसकेपछि बाँकी रहेको सञ्चित कर्म सहित जीव यस लोकमा नै फर्किएर आउँछ । किनभने यसमा 'तद्य इह रमणीयचरणा' र 'प्रेत्य कर्मफलमनुभूय' इत्यादि श्रुतिहरू र स्मृतिहरू पनि प्रमाण छन् । जुन धूमादि मार्गबाट जीव जान्छ र अभ्रादि मार्गसमेतबाट फेरि यस लोकमा फर्कन्छ ।

३००.चरणादिति चेन्नोपलक्षणार्थेति कार्ष्णाजिनिः (अ.३ पा.१ अधि.२ सू.९)

'रमणीयचरणा' इत्यादि श्रुतिमा उल्लिखित चरणशब्दबाट योनि विशेषको प्राप्ति भन्ने बुझिन्छ, कर्मको होइन । कर्मको र चरणको भेद श्रुतिले नै स्वीकार गरेको छ । यसकारण दृष्टश्रुतिका आधारमा कर्मान्तररूप अनुशययुक्त जीवको अवरोहण हुन्छ भन्नु उचित होइन भन्न मिल्ने देखिँदैन । किनभने आचार्य कार्ष्णाजिनि श्रुतिमा सुनिएको चरण शब्द कर्मान्तररूप अनुशयको उपलक्षण हो भन्दछन् ।

३०१.आनर्थक्यमिति चेन्न तदपेक्षत्वात् (अ.३ पा.१ अधि.२ सु.१०)

यदि चरणश्रुति आफ्नू मुख्य अर्थलाई छोडेर अनुशयरूप अर्थलाई बुझाउँछ भने त्यसमा आनर्थक्य प्रसक्त होला भन्नु ठीक होइन । किनभने इष्ट आदि कर्महरूको सत्ता आचारका अधीनमा हुनाले चरणशब्द सार्थक हो, निरर्थक होइन ।

३०२.सुकृतदुष्कृते एवेति तु बादरिः (अ.३ पा.२ अधि.२ सू.११)

बादरी नामक आचार्य चरणशब्दबाट पुण्यपापरूप कर्मको ग्रहण हुन्छ भन्दछन् । किनभने लोकमा 'धर्मं चरति' आदि प्रतीतिले कर्म र चरणको परस्पर अभेद प्रतीति हुन्छ । अतः चन्द्रलोकमा गएको इष्टादिकारीको अनुशय हुन्छ भन्ने कुरा सिद्ध हुन्छ ।

३०३.अनिष्टादिकारिणामपि च श्रुतम् (अ.३पा.१अधि.३ सू.१२)

यो पूर्वपक्षको सूत्र हो । 'ये वै के चास्माल्लोकात्प्रयन्ति' इत्यादि श्रुतिमा इष्टापूर्त

आदि कर्म नगर्नेहरू पनि चन्द्रलोक जान्छन् भन्ने सुनिन्छ। अतः धार्मिक पुरुष नै स्वर्ग जान्छ भन्नु अत्यन्त असङ्गत देखिन्छ।

२०४. संयमने त्वनुभूयेतरेषामारोहावरोहौ तद्गतिदर्शनात् (अ.३ पा.१ अधि.३ सू.१३)

यहाँ तु शब्दबाट पूर्वपक्षको निराकरण गरिएको छ । यमलोकमा यमराजको यातनाको भोग गरेर नै पापी पुरुष गमनागमन गर्दछ। किनभने 'अयं लोको नास्ति पर इति मानी पुनः पुनर्वशमापद्यते मे' आदि श्रुतिमा यमाधीनत्वरूप गमनागमनको वर्णन छ।

३०५. स्मरन्ति च (अ.३ पा.१ अधि.३ सू.१५)

मनु आदि स्मृतिकारहरूले पापीहरूले भोग्नुपर्ने नरकको भोगको वर्णन गरेका छन् । अतः इष्टादिकारी नै चन्द्रलोक जान्छन्, पापीहरू जाँदैनन् भन्ने यस सूत्रको अर्थ हो।

३०६.अपि च सप्त (अ.३ पा.१ अधि.३ सू.१५)

पौराणिकहरू रौरव आदि सात नरकहरू पापफल भोग्ने भूमि हुन् भन्दछन् । अतः धर्मात्माहरूमात्रै चन्द्रलोक जाने अधिकारी हुन्, पापीहरू होइनन् ।

३०७. तत्रापि च तद्व्यापारादविरोधः (अ.३ पा.१ अधि.३ सू.१६)

पापीहरूले यमराजको यातना भोग्दछन् भन्नु ठीक हो । किनभने यद्यपि विभिन्न नरकहरूमा यातना दिने चित्रगुप्तादि फरक फरक देखिन्छन् तापनि ती सबैका काममा जबाफदेही यमराज नै भएका हुँदा यमराजका सहयोगीले दिइने सबै थरी यातनालाई यमयातना भन्दा कुनै विरोध पर्ने देखिँदैन।

३०८. विद्याकर्मणोरिति तु प्रकृतत्वात् (अ.३ पा.१ अधि.३ सू.१७)

'यथैतयोः पथोर्न कतरेणचन' इत्यादि श्रुतिमा आएको 'एतयोः' शब्दबाट विद्या र कर्म यी दुवैको ग्रहण हुन्छ। किनभने विद्या र कर्मलाई क्रमशः देवयान र पितृयानरूप दुई मार्गका रूपमा श्रुतिले वर्णन गरेको छ। तु शब्दले 'चन्द्रमसमेव' मा आएको शङ्काको निराकरण गरेको छ।

३०९.न तृतीये तथोपलब्धे (अ.३ पा.१ अधि.३ सू.१८)

तेस्रो मार्गमा पसेका पापीहरू देह प्राप्तिका लागि आहुति सङ्ख्याका नियमले बाँधिदैनन्। किनभने 'जायस्व म्रियस्व' इत्यादि श्रुतिमा सङ्ख्या नियमको अपेक्षाविना नै देह प्राप्त गर्ने भनिएको छ। अतः आहुतिसङ्ख्याको नियम इष्टापूर्त आदि गर्नेका लागि हो अरूका लागि होइन भन्ने यस श्रुतिको भाव हो।

३१०.स्मर्यते च लोके (अ.३ पा.१ अधि.३ सू.१९)

महाभारत आदि ग्रन्थहरूमा द्रोण, धृष्टद्युम्न आदि अयोनिज देखिन्छन्, यो कुरा प्रसिद्ध छ । किनभने द्रोणको योषित् अर्थात् योषा अग्निमा आहुति भएको थिएन ।

धृष्टद्युम्न आदिको स्त्रीपुरुषविषयक आहुतिहरू भएका थिएनन् । यसकारण पनि आहुतिको नियम छैन।

३११. दर्शनाच्च (अ.३ पा.१ अधि.३०)

लोकमा जरायुज, अण्डज, स्वेदज र उद्भिज्ज गरेर चारथरी देहहरू मध्ये स्वेदज र उद्भिज्ज स्त्रीपुरुषको प्रसङ्गविना नै उत्पत्ति हुन्छ। अतः आहुति सङ्ख्याको नियम नभएको देखिन्छ।

३१२. तृतीयशब्दावरोधः संशोकजस्य (अ.३ पा.१ अधि.३ सू.२१)

स्वेदज अर्थात् संशोकज पनि उद्भिज्ज नै हो तापनि यो जङ्गम हो । यसलाई ऐतरेय श्रुतिले भिन्नै हो पनि भनेको छ। तर छान्दोग्य श्रुतिले उद्भिज्जमा नै गणना गरेको छ। यसको प्रसङ्ग अनुसार यहाँ उल्लेख गरिएको हो।

३१३. साभाव्यापत्तिरुपपत्ते : (अ.३ पा.१ अधि.४ सू.२२)

जीवहरूको आकाशादिका सरह अर्थात् आकाशजस्तै हुने सम्भावना देखिन्छ। यस सम्बन्धमा 'अथैतमेवाध्वानं पुनर्निवर्तन्ते' इत्यादिबाट चन्द्रलोकको अवरोहणमा जीवहरूको आकाशादिसँग सादृश्यको प्रतिपादन गरिएको छ।

३१४.नातिचिरेण विशेषात् (अ.३ पा.१ अधि.५ सू.२३)

जीव केही कालसम्ममात्र आकाश आदिका साथ समानरूपले रहेर वर्षाका पानीद्वारा पृथ्वीमा प्रवेश गर्दछ। पृथ्वीमा आएर ब्रीहि आदि भावमा परिणत भएपछि नै 'अतो वै खलु दुर्निष्प्रपतरम्' भनेर श्रुतिले भनेको छ। यसभन्दा पहिले होइन भन्ने यसको भाव हो।

३१५.अन्याधिष्ठितेषु पूर्ववदभिलापात् (अ.३ पा.१ अधि.६ सू.२४)

जीवअधिष्ठित ब्रीहि आदिमा अनुशयी जीवको संसर्गमात्रै हुन्छ। किनभने जसरी आकाशदेखि वर्षासम्म कुनै कर्मविना पनि जीव प्रवेश गर्दछ, त्यसैगरेर ब्रीहि आदिमा पनि कर्मपरामर्श अर्थात् कुनै कर्मको संसर्गविना पनि अनुशयी जीव प्रवेश गर्ने कुरा श्रुतिमा आएको छ। यसबाट कर्मको परामर्श नहुनाले ब्रीहि आदिमा अनुशयीलाई सुखदुःखादिको साक्षात्कार हुँदैन।

३१६. अशुद्धमिति चेन्न शब्दात् (अ.३ पा.१ अधि.६ सू.२५)

अग्निष्टोम आदि याग पशुहिंसाको कारण अशुद्ध भएको छ। यसैकारण नै त्यस्तो याग गर्नेहरू अनुशयी ब्रीहि आदि स्थावर योनिमा दुःख भोग्न जन्म लिने गर्दछन् भन्न मिल्दैन। किनभने विधिशास्त्र-अनुसार अग्निष्टोम गरिन्छ। यसले चित्त शुद्ध हुन्छ र परम्परया यो ज्ञानको साधन हुन्छ। अतः यसमा दुःखहेतुता छैन।

३१७. रेतः सिग्योगोऽथ (अ.३ पा.१ अधि.६ सू.२६)

व्रीह्यादिभाव भएपछि अनुशयीकोरेतसिग्भाव हुन्छ । अर्थात् व्रीह्यादि संसर्गपछि जीवको आफ्नो कर्म अनुसार प्राप्तव्य जन्म अनुकूलको योनिमा वीर्यसेचन गर्न समर्थ व्रीह्यादिभक्षी प्राणीसँग संसर्ग हुन्छ ।

३१८. योनेः शरीरम् (अ.३ पा.१ अधि.६ सू.२७)

योनिमा वीर्यको सेचनपछि त्यस योनिबाट सुखदुःखरूपी फल भोग गर्न सक्ने शरीर पैदा हुन्छ । किनभने 'रमणीयचरणा' इत्यादि श्रुतिले यो कुरा भनेको छ । यसैकारण ब्राह्मण आदि योनिमा नै अनुशयीको मुख्य जन्म हो । अन्यत्र होइन ।



## तृतीय अध्याय

## द्वितीय पाद

३१९. सन्ध्ये सृष्टिराह हि (अ.३ पा.२ अधि.१ सू.१)

जाग्रत् र सुषुप्तिका सन्धिमा हुने स्वप्नावस्था व्यावहारिक हो। किनभने 'न तत्र रथा न रथयोगा' इत्यादि श्रुतिबाट त्यो कुरा सिद्ध हुन्छ।

३२०. निर्मातारं चैके पुत्रादयश्च (अ.३ पा.२ अधि.१ सू.२)

केही वेदशाखाध्यायीहरू स्वप्नावस्थामा कर्मका निर्माताको प्रतिपादन गर्ने भएका वाक्यहरू पनि पढ्दछन्। त्यसमा कामशब्दबाट पुत्रादिलाई संभ्रनु पर्दछ। यसरी निर्माता र निर्मेय दुवैको श्रुतिमा श्रवण हुन्छ। यसबाट पनि स्वप्नावस्थामा सत्य कुरा नै सृष्टि हुने देखिन्छ।

३२१. मायामात्रं तु कात्स्न्र्येनानभिव्यक्तस्वरूपत्वात् (अ.३ पा.२ अधि.१ सू.३)

तु शब्द पूर्व पक्षको निराकरणका लागि हो। स्वप्नको सृष्टि शुक्तिरुप्य सरह हो। किनभने देश, काल आदि सम्पूर्ण कुराहरूबाट अभिव्यक्त भएको स्वरूप होइन। अतः स्वप्नप्रपञ्च प्रातिभासिक अर्थात् मायामात्रै हो।

३२२. सूचकश्च हि श्रुतेराचक्षते च तद्विदः (अ.३पा.२अधि.१सू.४)

सपनामा जायमान स्त्रीदर्शनादि सत्य हुन्। किनभने शुभाशुभ फलका ती सूचक हुन्। स्वप्नज्ञाताहरू यसलाई राम्रो भन्दछन्। कुनै कुनै सपना अशुभ हुन्छन्। शुक्तिरुप्यादिको ज्ञानजस्तै यो ज्ञान पनि हर्ष र विषादजनक हो। अतः स्वप्नदर्शनलाई शुभ र अशुभादिको सूचक मान्नमा कुनै बाधा पर्ने देखिँदैन।

३२३. पराभिध्यानात्तु तिरोहितं ततो ह्यस्य बन्धविपर्ययौ (अ.३ पा.२ अधि.१ सू.५)

यद्यपि वस्तुतः जीव पनि परमात्मादेखि अभिन्न हो। ईश्वरको जस्तै जीवको पनि सङ्कल्प सत्य हुनुपर्दछ भन्न सकिन्छ। हुन त जीवको अविद्या आदिद्वारा व्यवहित ऐश्वर्य परमात्माका ध्यानबाट अभिव्यक्त हुन सक्तछ। ईश्वरको ज्ञान नभएर नै जीव बन्धनमा पर्दछ र ज्ञान भएपछि मोक्ष हुन्छ, किनभने ज्ञात्वा देवं सर्वपाशापहानिः' भनेर श्रुतिले भनेको छ। यसरी जीव र ईश्वरमा ठूलो भेद नभए पनि जीवको ऐश्वर्य व्यवहित हुने भएबाट जीव सङ्कल्पमात्रले स्रष्टा हुन सक्तैन।

३२४. देहयोगाद्वा सोऽपि (अ.३. पा.२. अधि.१ सू.६)

जीवका ऐश्वर्य आदिको तिरोभाव हुने भनेको पनि जीवको देह आदिमा आत्मत्वाभिमानरूप अविद्याका कारणले नै हो।

३२५. तदभावो नाडीषु तच्छ्रुतेरात्मनि च (अ.३पा.२अधि.२सू.७)

नाडी र आत्मामा सुषुप्ति हुन्छ अर्थात् नाडी, पुरीतत् सबै ठाउँहरू समुच्चयरूपले

सुषुप्तिका स्थान हुन्, विकल्पले होइन । त्यो समुच्चय र दहर परमात्मामा मुख्यरूपमा हुन्छ र नाडी र पुरीतत्मा गौणरूपमा हुन्छ । सारांशमा नाडी, पुरीतत् र दहराकाशसमेत समुच्चयरूपमा सुषुप्तिका स्थान हुन् ।

३२६.अतः प्रबोधोऽस्मात् (अ.३ पा.२ अधि.२ सू.८)

मुख्यरूपमा परमात्मा अर्थात् दहराकाश नै सुषुप्तिस्थान हो । यसैकारणले नै परमात्माबाटै जीवको प्रबोध हुने भनेर श्रुतिको स्वापाधिकारमा 'सत आगम्य' बाट उपदेश गरिएको छ ।

३२७.स एव तु कर्मानुस्मृतिशब्दविधिभ्यः (अ.३पा.२अधि.३सू.९)

जुन जीव सुत्तछ, उही जीव नै उठ्तछ, किनभने कर्म, अनु, स्मृति, शब्द र विधिसमेत यी पाँच कारणहरूले गर्दा त्यस्तो हुने गर्दछ । यसमा कर्म भनेको आफूले थालेको काम अर्को दिन गर्ने भनेको हो । अनु भनेको प्रत्यभिज्ञा हो । स्मृति भनेको संस्कारजन्य ज्ञान हो । शब्द भनेको घटपटादिको बोध हुनु हो । विधि भनेको कर्मविधि र विद्याविधि हो । यदि सुतेको पुरुष उठेन भने यी माथि उल्लेख भएका पाँचैओटा हेतुहरू बाधित हुन्छन् । अतः सुतेको जीव नै फेरि उठ्ने कुरा निर्विवाद छ ।

३२८.मुग्धेऽर्धसम्पत्तिः परिशेषात् (अ.३ पा.२ अधि.४ सू.१०)

मूर्च्छालाई स्वप्न र जागरित अवस्था भन्न मिल्दैन । किनभने मूर्च्छा अवस्थामा विशेष ज्ञान रहँदैन । त्यसलाई मरण पनि भन्न मिल्दैन, किनभने मूर्च्छा अवस्थामा प्राण र तातोपन दुवै विद्यमान रहन्छन् । भयानक मुखसमेत हुने भएकाले सुषुप्ति पनि भन्न मिल्दैन । तर परिशेषबाट मूर्च्छावस्थामा हृत्पुण्डरीकावच्छिन्न ब्रह्ममा देहाद्यभिमानविशिष्ट जीवको अर्धलय हुन्छ । अतः उक्त तीनै अवस्थाभन्दा विलक्षण भएको हुँदा मूर्च्छा अर्थात् मुग्धावस्था विलक्षण हो ।

३२९.न स्थानतोऽपि परस्योभयलिङ्गं सर्वत्र हि (अ.३ पा.२ अधि.५ सू.११)

परब्रह्म परमात्मामा निर्विशेष र सविशेषरूप दुईथरी स्वभाव हुन सक्तैन । किनभने सत्य वस्तुमा दुईथरी धर्म रहने सम्भावना हुँदैन । रहेमा सत्य हुन सक्तैन । अतः निर्विशेष नै ब्रह्म हो, सविशेष होइन ।

३३०. न भेदादिति चेन्न प्रत्येकमतद्वचनात् (अ.३पा.२अधि.५ सू.१२)

'चतुष्पाद् ब्रह्म' इत्यादि श्रुतिमा भेदप्रतिपादित भएको हुँदा परब्रह्मको उभयलिङ्गस्वरूप अस्वीकार्य भएको कुरा मान्न सकिँदैन, यसप्रकारको भनाइ पनि ठीक होइन । किनभने 'यश्चायमस्यां पृथिव्याम्.' इत्यादि श्रुतिहरूमा प्रत्येक उपाधिभेदको प्रतिपादनमा अभेदको उल्लेख भएको पाइन्छ ।

३३१.अपि चैवमेके (अ.३ पा.२ अधि.५ सू.१३)

कुनै शाखाध्यायीहरू ‘मृत्योः स मृत्युमाप्नोति य इह नानेव पश्यति’ ‘नेह नानास्ति किञ्चन’ इत्यादि श्रुतिवाक्यहरूबाट भेदको निन्दा गर्दै ब्रह्ममा अभेदको नै प्रतिपादन गर्दछन् ।

३३२.अरूपवदेव हि तत्प्रधानत्वात् (अ.३ पा.२ अधि.५ सू.१४)

‘अस्थूलमनणु’ इत्यादि प्रतिषेधशास्त्रहरू निर्गुणब्रह्मलाई प्रतिपादन गर्नेगर्दछन् । यसकारण ब्रह्मको निर्धारण निर्विशेषरूपले नै गर्नुपर्दछ । सविशेषरूपले गर्नुहुँदैन ।

३३३.प्रकाशवच्चावैयर्थ्यम् (अ.३ पा.२ अधि.५ सू.१५)

जसरी सूर्य आदिको प्रकाश बाँस आदि बाङ्गा र सोझा उपाधिहरूमा परेर बाङ्गो र सोझोजस्तो आकार लिन्छ । त्यसैगरेर ब्रह्म पनि पृथिवी आदि विभिन्न उपाधिहरू प्राप्त गरेर त्यस्तै त्यस्तै रूप लिन्छ । अतः उपासना प्रकरणमा आएका श्रुतिहरू त्यसै सोपाधिक ब्रह्मलाई नै विषय गर्दछन् । त्यसकारण पनि श्रुति व्यर्थ छैनन् ।

३३४. आह च तन्मात्रम् (अ.३ पा.२ अधि.५ सू.१६)

यसैकारण भगवती श्रुतिले ‘स यथा सैन्धवघनः’ इत्यादि निर्विशेष चैतन्यमात्रको वोधन गरेको छ ।

३३५. दर्शयति चाथो अपिस्मर्यते (अ.३ पा.२ अधि.५ सू.१७)

‘अथात आदेशो नेति नेति’ इत्यादि श्रुतिहरू निषेधमुखबाट नै ब्रह्मको प्रतिपादन गर्दछन् । त्यसैगरेर श्रीमद्‌भगवद्‌गीतामा पनि अनादिमत्परं ब्रह्म’ इत्यादिबाट निषेधमुखले नै स्मरण गरिएको छ ।

३३६.अत एव चोपमा सूर्यकादिवत् (अ.३ पा.२ अधि.५ सू.१८)

जुन कारणले यो आत्मा चैतन्यैकरस परप्रतिषेधद्वारा उपदेष्टव्य हो । यसैबाट ‘ यथा ह्ययम्’ इत्यादि श्रुतिहरूबाट उपाधिकृत सविशेषत्वलाई लिएर नै जलगत सूर्यको प्रतिबिम्ब सरह नै यो जीव हो । यो केवल उदाहरणमात्रै हो । इत्यादि कुराहरूबाट पनि ब्रह्म सविशेष नभएर निर्विशेष नै हो भन्ने सिद्ध हुन्छ ।

३३७. अम्बुवदग्रहणात्तु न तथात्वम् (अ.३ पा.२ अधि.५ सू.१९)

जसरी सूर्यादि मूर्तिमान् पिण्डरूप बिम्बभन्दा अलग दूरदेशमा रहेको प्रतिबिम्बाधार मूर्त जल देखिन्छ, त्यसैगरेर आत्माभन्दा सर्वथा पृथक् रूपमा रहेको मूर्त उपाधिलाई भने हामीहरू देख्तैनौं । अतः आत्माको उपाधिलाई जलाशयमा प्रतिबिम्बित सूर्यादि प्रतिबिम्बसरह मान्न सकिँदैन ।

३३८.वृद्धिह्रासभाक्त्वमन्तर्भावादुभयसामञ्जस्यादेवम् (अ.३ पा.२ अधि.५ सू.२०)

जसरी जलान्तर्गत सूर्यबिम्ब जलगत वृद्धि र ह्रासको भागी वस्तुतः हुँदैन । त्यसैगरेर निर्विशेष परमात्मालाई देहादि उपाधिका ह्रास र वृद्धिबाट कुनै प्रभाव पर्दैन ।

यसै अंशलाई लिएर दृष्टान्त र दार्ष्टान्तिकको परस्पर सादृश्य अत्यन्त ठीक छ। अतः सूर्यादिको दृष्टान्त मिल्ने देखिन्छ। दृष्टान्त र दार्ष्टान्तिकको सर्वांशमा सादृश्य ब्रह्माजीले पनि गर्न सक्तैननन्। यदि सर्वांशमा सामान्य हुने हो भने तिनको दृष्टान्त र दार्ष्टान्तिकभाव नै समाप्त भएर जान्छ।

३३९.दर्शनाच्च (अ.३ पा.२ अधि.५ सू.२१)

प्रतिबिम्बभावरूप देहान्तरानुप्रवेश परब्रह्मलाई 'पुरश्चक्रे द्विपदः पुरश्चक्रे चतुष्पदः' इत्यादि श्र्रुतिमा देख्नसकिन्छ। अतः निर्विशेषरूप ब्रह्म सिद्ध हुन्छ।

३४०. प्रकृतैतावत्त्वं हि प्रतिषेधति ततो व्रबीति च भूयः (अ.३ पा.२ अधि.६ सू.२२)

ब्रह्मका सम्बन्धमा माथि प्रतिपादित मूर्त र अमूर्त आदि लौकिक विषयभूत वस्तुमात्रस्वरूपको 'अथात आदेशो नेति नेति' इत्यादि श्रुतिबाट निषेध हुन्छ। त्यसैगरेर 'अन्यत्परमस्ति' यस वाक्यबाट निषेधभएर अवशिष्ट, अधिष्ठानरूप, वाणी र मनभन्दा पर रहेको ब्रह्मको पारमार्थिकरूपलाई नै श्रुति प्रतिपादन गर्दछ।

३४१.तदव्यक्तमाह हि (अ.३ पा.२ अधि.६ सू.२३)

ब्रह्म इन्द्रियग्राह्य होइन। किनभने 'न चक्षुषा गृह्यते' इत्यादि श्रुतिले मात्र ब्रह्मको अव्यक्तरूपलाई बताउँन सक्तछ।

३४२. अपि च संराधने प्रत्यक्षानुमानाभ्याम् (अ.३पा.२अधि.६ सू.२४)

परब्रह्म परमात्मालाई कुनै धीरपुरुष समाधि दशामा जान्नसक्तछ। यो कुरा ' कश्चिद्धीरः' 'यं विनिद्रा जितश्वासाः' आदि श्रुति र स्मृतिहरूबाट जान्न सकिन्छ।

३४३. प्रकाशादिवच्चावैशेष्यं प्रकाशश्च कर्मण्यभ्यासात् (अ.३ पा.२ अधि.६ सू.२५)

जसरी सूर्यको प्रकाश औँला आदि उपधिले गर्दा भिन्नै जस्तो देखिन्छ। वस्तुतः त्यो एउटै हो। त्यसैगरेर परमात्मा पनि ध्यानादिमा भिन्नैजस्तो भान हुन्छ, वस्तुत त्यो एक रूप हो। किनभने 'तत्वमसि' आदि अभेद श्रुतिको अभ्यासबाट यही सिद्ध हुन्छ।

३४४. ततोऽनन्तेन तथा हि लिङ्गम् (अ.३ पा.२ अधि.६ सू.२६)

भेदको कारण उपाधि भएको हुँदा विद्याबाट भेदलाई नाश गरेर जीव ब्रह्मको एकरूपतामा प्राप्त हुन्छ। किनभने यस कुरालाई बुझाउने 'स यो ह वै तत् परमं ब्रह्म वेद ब्रह्मैव भवति' इत्यादि श्रुतिवाक्यहरू छन्।

३४५. उभयव्यपदेशात्त्वहिकुण्डलवत् (अ.३ पा.२ अधि.६ सू.२७)

जसरी सर्प र सर्पको कुण्डलीमा परस्पर सर्परूपबाट र कुण्डलरूपबाट भेद र अभेद छ। त्यसैगरेर जीव र ब्रह्ममा ध्यातृभाव र ध्येयभावबाट भेदाभेद छ। किनभने श्रुतिमा त्यसै कुराको कथन छ।

३४६. प्रकाशाश्रयवद्वा तेजस्त्वात् (अ.३ पा.२ अधि.६ सू.२८)

जसरी प्रकाश र प्रकाशको आश्रय अर्थात् सूर्यको प्रकाश र प्रकाशको आश्रय सूर्यमा फरक छ। किनभने यसमा व्यापकत्व र परिछिन्नत्वभावबाट भेद र अभेदको व्यपदेश गरिएको छ। त्यसैगरेर जीव र ईश्वर अर्थात् ब्रह्मको भेद र अभेद व्यपदेश गरिएको छ।

३४७. पूर्ववद्वा (अ.३ पा.२ अधि.६ सू.२९)

अथवा 'प्रकाशवच्चावैशेष्यम्' भन्ने यस सूत्रमा पहिले भेद काल्पनिक हो र अभेद पारमार्थिक हो भनिसकिएको छ। त्यसै सरह यहाँ पनि त्यसै सिद्धान्तलाई स्वीकार गर्नुपर्दछ।

३४८. प्रतिषेधाच्च (अ.३ पा.२ अधि.६ सू.३०)

'नान्योतोऽस्ति द्रष्टा' इत्यादि श्रुतिबाट र 'नेति नेति' समेतका श्रुतिबाट ब्रह्मका अतिरिक्त अर्थात् ब्रह्मबाहेक अरू सबै चेतन अचेतन प्रपञ्चको निषेध गरिएको हुँदा ' अद्वितीयं ब्रह्म' भन्ने कुरा सिद्ध हुन्छ।

३४९.परमतः सेतून्मानसम्बन्धभेदव्यपदेशेभ्यः (अ.३पा.२अधि.७ सू.३१)

ब्रह्मबाट नै अरू वस्तुहरू पनि उत्पन्न भएका हुन्। किनभने ब्रह्ममा सेतुत्व, उन्मानत्व, परिच्छिन्नत्व, सम्परिष्वक्तत्व र भेदसमेत देखिन्छ। जस्तै – 'अथ य आत्मा स सेतुः' 'ब्रह्म चतुष्पात्' 'प्राज्ञेनात्मना' 'य एषोऽन्तरक्षिणि' इत्यादि श्रुतिहरूबाट यो कुरा थाहा हुन्छ। अतः ब्रह्मबाहेकका अरू वस्तुको पनि सिद्धि हुन्छ। (पूर्वपक्ष)

३५०. सामान्यात्तु (अ.३ पा.२ अधि.७ सू.३२)

जसरी लोकप्रसिद्ध सेतुको काम जललाई धारणा गर्ने हुन्छ, त्यसैगरेर ब्रह्म पनि जगत्को मर्यादालाई धारणा गर्दछ। यसै विधारकत्वरूप सामान्य धर्मलाई लिएर ब्रह्मलाई सेतु भनिएको हो। अत एव ब्रह्मलाई सेतु भनेकै कारण ब्रह्मभन्दा बाहेक अरू वस्तुहरू पनि भएको सिद्ध हुन आउँदैन। (यो पूर्वपक्षलाई दिएको जबाफ हो।)

३५१.बुद्ध्यर्थ : पादवत् (अ.३ पा.२ अधि.७ सू.२३)

जसरी ब्रह्मप्रतीक मनको उपासनाका लागि वागादिको पादत्वेन कल्पना गरिएको हो 'चतुष्पाद ब्रह्म' इत्यादि श्रुतिमा उन्मान अर्थात् परिच्छिन्नत्वको कल्पना ब्रह्मको उपासनाका लागि गरिएको हो। वस्तुतः यो कुरा होइन, किनभने निर्विशेष ब्रह्म उपाधिका विना बुद्धिमा आरुढ हुन सक्तैन। अतः उन्मान मुख्य होइन।

३५२. स्थानविशेषात्प्रकाशादिवत् (अ.३ पा.२ अधि.७ सू.३४)

जसरी स्थानविशेषरूप उपाधिबाट नै प्रकाश आकाश इत्यादिमा सम्बन्ध र भेदको व्यपदेश अर्थात् व्यवहार गरिन्छ। त्यसैगरेर आदित्य, चक्षु, बुद्धि इत्यादि स्थानविशेषरूप उपाधिबाट नै परमात्माको औपाधिक सम्बन्ध र भेदको व्यपदेश हुन्छ। अतः ब्रह्मबाहेक अरू कुनै पनि वस्तुको पारमार्थिक रूपमा सत्ता सिद्ध हुँदैन।

३५३. उपपत्तेश्च (अ.३ पा.२ अधि.७ सू.३५)

सुषुप्तिमा जीव र परब्रह्मको सम्बन्ध मुख्य हुन सक्तैन। किनभने 'स्वमपीतो भवति' इत्यादि श्रुतिबाट स्वरूपको नै सम्बन्धरूपबाट व्यपदेश हुन्छ। श्रुति विरुद्ध भएकाले भेद मुख्य होइन।

३५४. तथाऽन्यप्रतिषेधात् (अ.३ पा.२ अधि.७ सू.३६)

जसरी सेतुत्वादिका व्यपदेशबाट अरू वस्तुको प्रतिपत्ति हुन सक्तैन, त्यसैगरेर ' आत्मैवाधस्तात्' इत्यादि वाक्यहरूबाट अरू वस्तुको निषेध हुनेहुँदा अद्वितीय ब्रह्ममात्रै शेष रहने कुरा सिद्ध हुन्छ।

३५५. अनेन सर्वगतत्वमायाशब्दादिभ्यः (अ.३ पा.२ अधि.७ सू.३७)

सेतुत्वादिको व्यपदेशमा मुख्यत्व र वस्त्वन्तरत्वको निषेधबाट ब्रह्म सर्वगत भएको कुरा सिद्ध हुन्छ। यसैगरेर 'आकाशवत् सर्वगतश्च नित्यः' इत्यादि व्यापकत्ववाचकशब्दादि हेतुहरूबाट पनि ब्रह्म सर्वगत सिद्ध हुन्छ। शब्दादिमा आदिशब्दबाट 'नित्यः सर्वगतः स्थाणुः' इत्यादिलाई ग्रहण गर्नुपर्दछ।

३५६. फलमत उपपत्तेः (अ.३ पा.२ अधि.८ सू.३८)

ईश्वरबाट नै सम्पूर्ण प्राणीहरूले फल प्राप्त गर्दछन्। किनभने कर्म क्षणिक हुनेहुँदा फल प्राप्त हुन असम्भव देखिन्छ। अतः ईश्वर नै कर्मको फलदाता भएको सिद्ध हुन्छ।

३५७. श्रुतत्वाच्च (अ.३ पा.२ अधि.८ सू.३९)

'स वा एष महानज आत्मान्नादो वसुदानः' इत्यादिबाट ईश्वर नै फलदाता भएको सिद्ध हुन्छ।

३५८. धर्मं जैमिनिरत एव (अ.३ पा.२ अधि.८ सू.४०)

जुन श्रुति र उपपत्तिबाट सिद्धान्ती ईश्वरलाई फलदाता मान्दछन्। त्यसै श्रुति र उपपत्तिबाट जैमिनि आचार्य धर्म अर्थात् यागादिलाई फलदाता मान्दछन्।

३५९. पूर्वं तु बादरायणो हेतुव्यपदेशात् (अ.३ पा.२अधि.८ सू.४१)

तुशब्द शङ्कानिवारणका लागि हो। आचार्य बादरायण ईश्वरलाई फलदाता मान्दछन्। किनभने 'एष ह्येव साधु कर्म कारयति' 'अन्नादो वसुदानः' 'लभते च ततः कामान्' इत्यादि श्रुति र स्मृतिहरूले ईश्वरलाई नै धर्म, अधर्म र तिनका फलमा साधनत्वेन वर्णन गरेका छन्।



## तृतीय अध्याय
## तृतीय पाद

३६०.सर्ववेदान्तप्रत्ययं चोदनाद्यविशेषात् (अ.३ पा.३ अधि.१सू.१)

चोदना, फलसंयोग, रूप र समाख्यामा भेद नभएको हुँदा सबै उपनिषद्हरूमा प्रत्यतव्य प्राणादि उपास्यहरूको रूप र प्राणादिविज्ञान पनि एउटै हो।

३६१. भेदान्नेति चेन्नैकस्यामपि (अ.३ पा.३ अधि.१ सू.२)

उपनिषद्हरूमा वर्णित पञ्चाग्निविद्यादि कतिपय विषयहरूमा देखिएका भेदहरूको कारण सबै उपनिषद्हरूमा प्रतिपादित प्राणोपासनादिमा पनि भेद हुन सक्ने भनेर भन्न मिल्दैन। किनभने विभिन्न उपनिषद्हरूमा प्रतिपादित एउटै विद्यामा पनि केही गुणभेद र एकत्र श्रुत ती गुणहरूको अन्यत्र उपसंहार पनि हुन सक्तछ।

३६२.स्वाध्यायस्य तथात्वेन हि समाचारेऽधिकाराच्च सववच्च तन्नियमः (अ.३ पा.३ अधि.१ सू.३)

आथर्वणिकहरूका स्वाध्यायाध्यनको नै शिरोव्रत अङ्ग भएको कुरा उनीहरूकै सदाचारबाट अवगत हुन्छ । यसका साथै 'नैतदचीर्णव्रतोऽधीयते' भन्ने श्रुतिको एतत्शब्दबाट र अध्ययनवाचक शब्दबाट पनि यो कुरा अवगत हुन्छ । जसरी आथर्वणोक्त सौर्यादि यज्ञहरूको आथर्वणिकहरूसँग नै सम्बन्ध हुन्छ र त्यसैगरेर शिरोव्रत पनि आथर्वणिकहरूसँग नै सम्बन्धित छ। यिनको ब्रह्मविद्यासँग कुनै सम्बन्ध छैन। अतः शिरोक्त व्रत विद्याभेदको निमित्त हुन सक्तैन।

३६३.दर्शयति च (अ.३ पा.३ अधि.१ सू.४)

'सर्वे वेदा यत् पदमामनन्ति' इत्यादि श्रुतिहरू सबै वेदहरूमा प्रतिपाद्य ब्रह्मतत्त्वलाई एकै हो भनेर बताउँछन्। यसबाट पनि सबै उपनिषद्हरूमा प्रतिपाद्य प्राणादिको उपासना पनि एकै हो भन्न सकिन्छ।

३६४. उपसंहारोऽर्थाभेदाद्विधिशेषवत्समाने च (अ.३पा.३अधि.२सू.५)

जसरी सर्वत्र अग्निहोत्र एकै हो र त्यसका शेष गुरुहरूको उपसंहार हुन्छ, त्यसैगरेर उपासनामा पनि गुणोपसंहार गर्नुपर्दछ। किनभने उपास्यका गुणहरूबाट प्राप्त उपासनारूप अर्थको सबै शाखाहरूमा समानता छ, अर्थात् भेद नभएको कुरा सिद्ध हुन्छ।

३६५. अन्यथात्वं शब्दादिति चेन्नाविशेषात् (अ.३पा.३अधि.३सू.६)

'त्वं न उद्गाथ.' 'तमुद्गीथमुपासाञ्चक्रिरे' इत्यादि श्रुतिहरूमा उद्गीथलाई कर्तारूपबाट र उद्गीथरूपबाट पनि प्राणको उपासनाको प्रतिपादन गर्ने गरी बताइएको

छ। यसबाट सजातीय उपासनामा भेद नै छ भन्न मिल्दैन। किनभने देवताहरू र असुर हरूको सङ्ग्रामको उपक्रम र असुरहरूको पराजय आदि दुइटै समान छन्। अतः यसबाट विद्यामा भेद छैन, विद्या एउटै हो भन्ने सिद्ध हुन्छ।

३६६.न वा प्रकरणभेदात्परोवरीयस्त्वादिवत् (अ.३पा.३अधि.३सू.७)

विद्या एक छैनन्, किनभने 'ओमित्येतदक्षरम्' यसबाट उद्गीथावयव ॐकारमा प्राणादि दृष्टि उपदिष्ट छ र अन्यत्र 'त्वं न उद्गाय' इत्यादि श्रुतिहरूमा सम्पूर्ण सामभक्ति प्राणरूपबाट नै भनिएको छ। अतः उपक्रमको भेद भए पनि 'एष परोवरीयानुद्गीथः' यस श्रुतिबाट विहित परोवरीयस्त्वादिविशिष्ट उद्गीथको उपासना चक्षु आदित्य आदिगत हिरण्यश्मश्रुत्वादिविशिष्ट उपासनाभन्दा भिन्नै हो। जसरी यस सन्दर्भमा विद्या भिन्नै हो त्यसरी नै यसको तात्पर्य बुझ्नुपर्दछ।

३६७. संज्ञातश्चेत्तदुक्तमसि तु तदपि (अ.३ पा.३ अधि.३ सू.८)

दुवै ठाउँमा 'उद्गीथविद्या' भनेर एउटै संज्ञा भएको हुँदा विद्यामा पनि भेद छैन भन्न मिल्दैन। यस सम्बन्धमा 'न वा प्रकरणभेदात्' भन्ने सूत्रमा सिद्धान्ततः उल्लेख भइसकेको छ। जुन भिन्नरूपबाट अग्निहोत्र प्रभृति प्रसिद्ध छन्, ती पनि काठक श्रुतिमा पठित छन्। यसैकारण यसलाई काठक संज्ञा दिइएको हो।

३६८.व्याप्तेश्च समञ्जसम् (अ.३ पा.३ अधि.४ सू.९)

ऋक्, यजु र साममा ॐकार व्याप्त छ। अब यिनमा कुन चाहिँ ॐकारको उपासना गर्ने हो ? भन्ने जिज्ञासा उत्पन्न हुन सक्तछ। यसमा 'उद्गीथावयव ॐकारको उपासना गर्नुपर्दछ। यसप्रकार ॐकार उद्गीथरूपबाट विशेषित हुन्छ। यसकारण उद्गीथ ॐकारको विशेषण नै हो। यस पक्षमा दोष छैन। चशब्द तु शब्दका अर्थमा आएको छ। अतः अध्यास, अपवाद र ऐक्यपक्षको पनि यसबाट खण्डन भएको छ।

३६९.सर्वाभेदादन्यत्रेमे (अ.३ पा.३ अधि.५ सू.१०)

वाजसनेयी र छान्दोग्य समेत दुवै शाखाहरूका उपनिषद्का प्राणविद्याहरूमा वाक् आदि प्राण वसिष्ठत्वादि गुणयुक्त सुनिएका छन्। कौषीतकी आदि शाखाहरूमा त्यसप्रकार सुनिएको छैन तापनि जुन ठाउँमा वसिष्ठत्वादि गुणहरूको श्रवण भएको छैन, त्यस ठाउँमा पनि वसिष्ठत्वादि गुणहरूको उपसंहार गर्नुपर्दछ। किनभने सबै शाखाहरूमा रहेको प्राणसंवादको प्राणविद्यासँग एकता छ। अतः सम्पूर्ण गुणहरूको सबै ठाउँमा उपसंहार गर्नुपर्ने कुरा सिद्ध हुन्छ।

३७०. आनन्दादयः प्रधानस्य (अ.३ पा.३ अधि.६ सू.११)

ब्रह्मका आनन्दस्वरूपत्व आदि धर्मलाई सबै ठाउँमा अर्थात् जहाँ आनन्दस्वरूपत्वादि

धर्महरूको श्रवण भएको छैन त्यहाँ पनि उपसंहार गर्नुपर्दछ। किनभने सबै शाखाहरूमा ज्ञेयब्रह्म एक भएको हुँदा विद्या पनि एकै भएको सिद्ध हुन्छ।

३७१. प्रियशिरस्त्वाद्यप्राप्तिरुपचयापचयौ हि भेदे (अ.३ पा.३ अधि.६ सू.१२)

एक ठाउँमा सुनिएको प्रियशिरस्त्व आदि धर्महरू सबै ठाउँमा प्राप्त हुँदैनन् । किनभने मोद, प्रमोद र आनन्दहरूको परस्परको अपेक्षाले गर्दा वृद्धि र ह्रास प्रतीत हुन्छ। ती ब्रह्मका भेद भए पनि स्वाभाविक हुन सक्तछन्, तर ब्रह्म भने अभिन्न एक हो। अतः ती सबै ब्रह्मका स्वाभाविक धर्म होइनन्, आध्यासिक धर्ममात्रै हुन्।

३७२. इतरे त्वर्थसामान्यात् (अ.३ पा.३ अधि.६ सू.१३)

उपास्य धर्मबाट भिन्न केवल ज्ञानप्रयोजन आनन्द आदि धर्महरूको सर्वत्र उपसंहार हुन्छ। किनभने सर्वत्र प्रतिपाद्य ब्रह्मको एकत्व छ।

३७३. आध्यानाय प्रयोजनाभावात् (अ.३ पा.३ अधि.७ सू.१४)

'इन्द्रियेभ्यः परा ह्यर्थाः' इत्यादि श्रुतिले अर्थादि पदार्थहरू इन्द्रियभन्दा पर भनेर प्रतिपादन गर्नु ध्यानका लागि कुनै प्रयोजन भएको देखिँदैन । त्यसकारण ध्यानपूर्वक सम्यक्दर्शनका लागि केवल पुरुषलाई सबै पदार्थहरूबाट पर भनेर श्रुतिले भनेको छ।

३७४. आत्मशब्दाच्च (अ.३ पा.३ अधि.७ सू.१५)

'एष सर्वेषु भूतेषु गूढोत्मा न प्रकाशते' भनेर पुरुषमा आत्मशब्दको श्रवण भएको हुँदा यो शब्द आत्मपरक नै भएको देखिन्छ । किनभने श्रुतिबाट त्यस आत्मामा मानान्तरावेद्यत्वरूप अपूर्वको प्रतिपादन हुन्छ।

३७५. आत्मगृहीतिरितरवदुत्तरात् (अ.३ पा.३ अधि.८ सू.१६)

'आत्मा वा इदमेक' इत्यादि सृष्टिवाक्यमा आत्मशब्दबाट परमात्माको नै ग्रहण हुन्छ । यसबाट हिरण्यगर्भ आदि अरूको ग्रहण हुँदैन । 'आत्मन आकाशः' इत्यादि अन्य सृष्टिवाक्यहरूमा आत्मशब्दबाट परमात्माको नै ग्रहण हुन्छ। त्यस्तै यहाँ पनि बुझ्नु पर्दछ । किनभने 'स ईक्षत लोकान्नु सृजा इति' र 'स इमांल्लोकान-सृजताम्भो मरीचीर्मरमापः' इत्यादि श्रुतिहरूमा आएको ईक्षणपूर्वक सृष्टिकर्तृत्वरूप विशेषण हो । यस विशेषणले अरू श्रुतिहरूमा पनि मुख्यरूपमा परमात्मालाई नै बुझाउँछ।

३७६ अन्वयादिति चेत्स्यादवधारणात् (अ.३ पा.३ अधि.८ सू.१७)

लोकसृष्टिवाक्यको समीक्षा गर्दा हिरण्यगर्भमा नै लोकसृष्टि-वाक्यको अन्वय हुने देखिन्छ। यसकारण यस सन्दर्भमा परमात्मालाई लिनु ठीक हुँदैन भनेर भन्नु ठीक होइन। किनभने 'आत्मा वा इदमेक एवाग्र आसीत्' भन्ने श्रुतिले परमात्मालाई नै लिएको छ। अतः यहाँ परमात्माको ग्रहण हुन्छ, हिरण्यगर्भको ग्रहण हुँदैन।

३७७. कार्याख्यानादपूर्वम् (अ.३ पा.३ अधि.९ सू.१८)

'तद्विद्वांसः श्रोत्रिया अशिष्यन्त' इत्यादि श्रुति अनग्नतासूचनलाई नै प्राणविद्याका अङ्गका रूपमा अपूर्वको विधान गर्दछ । किनभने 'द्विजो नित्यमुपस्पृशेत्' इत्यादि स्मार्तविधिबाट सम्पूर्ण अनुष्ठानाङ्गरूपले शुद्धिका लागि विधिप्राप्त आचमनको प्राणविद्यामा पनि अनग्नताका विधानका लागि अनुवाद हुन्छ ।

३७८.समान एवं चाभेदात् (अ.३ पा.३ अधि.१० सू.१९)

जसरी भिन्न शाखाहरूमा एउटै विद्या छ र गुणहरूको उपसंहार पनि हुन्छ । त्यसैगरेर समान शाखाहरूमा पनि उपसंहार हुन सक्तछ । किनभने मनोमयत्व आदि गुणयुक्त उपास्यको दुवै ठाउँमा अभिन्नरूपबाट प्रतीत हुन्छ ।

३७९. सम्बन्धादेवमन्यत्रापि (अ.३ पा.३ अधि.११ सू.२०)

एउटा शाखामा विभक्तरूपबाट अधीत शाण्डिल्य विद्यामा एकविद्यात्वसम्बन्धबाट परस्पर गुणोपसंहार हुने कुरा योभन्दा पूर्व पनि उल्लेख गरिसकिएको छ। त्यसैगरेर अरू ठाउँमा पनि सत्यविद्यामा एकविद्यात्वरूप सम्बन्धबाट परस्पर गुणोपसंहार हुन सक्तछ। (यो पूर्वपक्ष हो)

३८०.न वा विशेषात् (अ.३ पा.३ अधि.११ सू.२१)

दुवै ठाउँमा उपसंहार गर्नुहुँदैन । किनभने 'तस्याहः' 'तस्याहम्' यसप्रकार आयतन विशेषको आश्रयबाट नै दुवै उपनिषद्हरूमा विशेषको उपदेश गरिएको छ । अतः पूर्वसूत्रमा आएको पूर्वपक्षलाई मान्यता दिन मिल्दैन ।

३८१. दर्शयति च (अ.३ पा.३ अधि.११ सू.२२)

'तस्यैतस्य तदेवरूपम्' इत्यादि अतिदेश विद्यास्थलमा उपसंहार हुँदैन भनेर प्रतिपादन गर्दछ । होइन भने उक्त अतिदेश निरर्थक हुन सक्तछ । अतः माथि आएको उक्त श्रुतिले धर्म अर्थात् गुणको स्थानविशेषमा नियतत्व देखाउँछ ।

१८२. सम्भृतिद्युव्याप्त्यपि चातः (अ.३ पा.३ अधि.१२ सू.२३)

'ब्रह्मजेष्ठा वीर्या सम्भृतानि' श्रुतिबाट ज्ञान भएको जुन वीर्यसमृद्धि हो र 'ब्रह्माग्रे जेष्ठं दिवमाततान' यो जुन द्युलोक व्याप्ति हो, यिनको पनि उपसंहार गर्नुहुँदैन । किनभने नामका सरह नै व्यवस्थापक स्थानरूप प्रमाणविशेष विद्यमान रहेको छ ।

३८३.पुरुषविद्यायामिव चेतरेषामनाम्नात् (अ.३पा.३अधि.१३सू.२४)

पैङ्गिशाखामा पुरुषविद्यामा जसरी पुरुषलाई यज्ञरूपले कल्पना गरिएको छ र त्यस पुरुषको आयुलाई तीन विभाग गरेर तिनलाई सवनरूपबाट कल्पना गरिएको छ । त्यसैगरेर तैत्तिरीयकमा कथन नभएको कुनै गुणविशेषको समानता भएर पनि गुणभेदका

अधिकताबाट तैत्तिरीयकमा तिनका धर्मको उपसंहार गर्नुहुँदैन।

३८४. वेधाद्यर्थभेदात् (अ.३ पा.३ अधि.१४ सू.२५)

'सर्वं प्रविध्य.' इत्यादि मन्त्रहरूको र 'देवा ह वै सत्रं निषेधुः' इत्यादि प्रवर्ग्य कर्महरूलाई विद्याहरूमा उपसंहार गर्नुहुँदैन। किनभने 'सर्वं प्रविध्य' इत्यादि मन्त्रहरूबाट प्रकाशित आभिचारिक कर्ममा समवेत अर्थको भेद देखिन्छ, अर्थात् विद्यामा त्यस आभिचारिक कर्मको विनियोग हुन सक्तैन।

३८५. हानौ तूपायनशब्दशेषत्वात् कुशाछन्दः स्तुत्युपगानवत्तदुक्तम् (अ.३ पा.३ अधि.१५ सू.२६)

सूत्रमा आएको तुशब्द केवल अर्थका लागि हो। केवल हानिका श्रवणमा ताण्डि र आथर्वण दुवै वाक्यमा त्यक्त भए पनि पुण्य र पापको उपादान गर्नुपर्दछ। के कारणले गर्ने भन्दा 'तत्सुकृतदुष्कृते' इत्यादि कौषीतकी रहस्यमा हानका सन्निधिमा हानशब्दापेक्षित उपादानार्थक श्रूयमाण उपायनशब्द हानको अङ्ग भएको हुँदा उपादानका रूपमा लिनुपर्दछ। अश्वरोमका दृष्टान्तबाट विधूत पुण्य र पाप दुवै अन्यत्र अवस्थानापेक्ष हुने भएबाट अरू उपादान हुनुपर्छ। अरू शाखामा रहेका अपेक्षित धर्महरूको अन्यत्र उपसंहार गर्नुपर्दछ। यसमा कुशा आदिको दृष्टान्त दिइएको छ। जस्तै कुशका समान, छन्दका समान, स्तुत्युपगानका समान। यसमा 'तदुक्तम्' भनेर सम्मति दिन्छन्।

३८६.साम्पराये तर्तव्याभावात्तया ह्यन्ने (अ.३पा.३अधि.१६सू.२७)

देहत्याग गर्नुभन्दा पहिले नै परलोक गमनको साधन भएको विद्याका समयमा अर्थात् ज्ञानप्राप्तिका समयमा नै सम्पूर्ण कर्महरूको नाश हुने कुराको स्वीकार गर्नु युक्तियुक्त देखिन्छ। किनभने विरजा नदी तरिसकेपछि पुण्य र पापका अरू फल प्राप्त हुन सक्तैनन्। त्यसकारण ताण्ड्यादि अरू शाखा मान्नेहरू पनि जीवनकालमा नै 'अश्व इव रोमाणि' इत्यादि श्रुतिहरूबाट कर्महानिको प्रतिपादन गर्दछन्।

३८७.छन्दत उभयाविरोधात् (अ.३ पा.३ अधि.१६ सू.२८)

जीवित पुरुषले मात्रै आफनू इच्छा अनुसार विद्याको अनुष्ठान गर्नसक्तछ। यसबाट त्यसको कर्मक्षय पनि जीवनकालमा नै हुन्छ। किनभने कारण विद्यमान भएपछि कार्य तुरुन्तै हुने सम्भावना रहन्छ। विद्याको र कर्मक्षयको निमित्त नैमित्तिक भाव मान्नु उपयुक्त हुन्छ। यसो गर्दा कौषीतकी र ताण्डिशाखा अध्ययन गर्ने दुवै थरीको अर्थात् उभय श्रुतिहरूको विरोध हुँदैन।

३८८. गतेरर्थवत्त्वमुभयथाऽन्यथा हि विरोधः (अ.३पा.३अधि.१७सू.२९)

देवयानमार्गको सफलता दुई प्रकारले हुन सक्तैन। अर्थात् सगुण विद्यामा हुन्छ र

निर्गुण विद्यामा हुँदैन। यदि सर्वत्र उपसंहार गर्ने हो भने 'विद्वान् पुण्यपापे विधूय' इत्यादि श्रुतिका साथ विरोध पर्न जान्छ।

३८९. उपपन्नस्तल्लक्षणार्थोपलब्धेर्लोकवत् (अ.३पा.३अधि.१७सू.३०)

गतिलाई उभयथाभावसँग अर्थात् विभाग गरेर व्यवस्था गर्नु एकदम ठीक हो। किनभने गतिको फलीभूत अर्थ पर्यङ्कविद्यामा उपलब्ध हुन्छ। जसरी लोकमा सेतुवासीहरूलाई गङ्गामा पुग्नका लागि मार्गको अपेक्षा हुन्छ तर गङ्गामा बस्नेहरूलाई मार्गको अपेक्षा हुँदैन। सोही कुरा यस प्रसङ्गमा पनि सम्भिनुपर्दछ।

३९०. अनियमः सर्वासामविरोधः शब्दानुमानाभ्याम् (अ.३ पा.३ अधि.१८ सू.३१)

सबै सगुणोपासनाहरूको मार्गको नियम छैन र प्रकरणका साथ विरोध पनि छैन। किनभने 'तद्य इत्थं विदुः' भन्ने श्रुति र 'शुक्लकृष्णे गती ह्येते' आदि स्मृति भएको हुँदा पनि नियम र विरोध दुवै नभएका शब्द र अनुमान समेतबाट देखिन्छन्।

३९१.यावदधिकारमवस्थितिराधिकारिकाणाम्(अ.३पा.३अधि.१९सू.३२)

लोकव्यवस्थाको हेतभूत अधिकारमा विनियुक्त व्यक्तिहरू, यथार्थ ज्ञानबाट जसका कर्महरू नाश भएका छन्, त्यस्ता अपान्तरतमा जस्ता ठूला ठूला महर्षिहरूको प्रारब्ध कर्म रहेसम्म अवस्थिति रहन्छ, त्यसपछि मुक्त भएर जान्छन्।

३९२.अक्षरधियां त्ववरोधः सामान्यतद्भावाभ्यामौपसद-वत्तदुक्तम् (अ.३ पा.३ अधि.२० सू.३३)

अक्षर अर्थात् ब्रह्ममा द्वैतनिषेधबुद्धिलाई उपसंहार गर्नुपर्दछ। सामान्य र तदभाव हेतुबाट अर्थात् द्वैतनिरसनद्वारा सबै ठाउँमा ब्रह्मप्रतिपादन समान हो। सर्वत्र प्रतिपाद्य त्यस ब्रह्मको भाव प्रत्यभिज्ञान पनि हो। अतः यी दुई हेतुबाट उपसंहार गर्नु उचित हुन्छ। दृष्टान्तका रूपमा औपसदलाई लिन सकिन्छ।

३९३.इयदामननात् (अ.३ पा.३ अधि.२१ सू.३४)

'द्वा सुपर्णा.' र 'ऋतं पिबन्तौ.' यी दुई थरी मन्त्रमा आएको विद्या अर्थात् ज्ञानमा फरक छैन। किनभने द्वित्वावच्छिन्नलाई दुवैमा भेदको निरसनबाट प्रतिपादन गरिएको छ।

३९४. अन्तरा भूतग्रामवत्स्वात्मनः (अ.३ पा.३ अधि.२२ सू.३५)

यस सूत्रमा पूर्वसूत्रमा आएको 'आमननात्' शब्दको अनुवृत्ति गर्नुपर्दछ। यसकारण 'यत्साक्षादपरोक्षाद् ब्रह्म' 'य आत्मा सवान्तर' यी दुई श्रूतिहरूमा पनि स्वात्माको सर्वान्तरत्वको कथन छ। यसबाट एउटै उपासनालाई एउटै भएको सम्झनुपर्दछ। यसका उदाहरणका रूपमा भूतग्रामवत् अर्थात् 'एको देवः सर्वभूतेषु गूढः' इत्यादि अरू श्रुतिहरूमा सम्पूर्ण भूतसमूहमा सर्वान्तर एउटै आत्मा हो भनिएको छ। अतः यस

सम्बन्धमा पनि सोही कुरा बुझ्नुपर्दछ।

३९५. अन्यथा भेदानुपपत्तिरिति चेन्नोपदेशान्तरवत् (अ.३ पा.३ अधि.२२ सू.३६)

यदि विद्याको भेद नमान्ने हो भने आम्नानरूप अभ्यासको उपपत्ति नहोला। यसरी शङ्का गर्नु उचित होइन। किनभने छान्दोग्य श्रुतिमा 'तत्त्वमसि' यस वाक्यको नौपटक अभ्यास गर्दा पनि विद्याको भेद र अनुपपत्ति भएन। अतः यसमा पनि विद्याको भेद र अनुपपत्ति हुँदैन।

३९६.व्यतिहारोविशिंषन्ति हीतरवत् (अ.३ पा.३ अ.धि.२३ सू.३७)

'तद्योऽहं सोऽसौ योऽसौ सोऽहम्' इत्यादि श्रुतिबाट उक्त व्यतिहार यहाँ उपासनाका लागि आएको हो। यस्तै कुरा अन्य सर्वात्मत्व आदि उपासनाका लागि पनि भनिएको छ। सोही कुरा यस प्रसङ्गमा पनि सम्झनु पर्दछ। अतः यो व्यतिहार ध्यान गर्न र समान विषयमा उपसंहार गर्न योग्य छ।

३९७. सैव हि सत्यादयः (अ.३ पा.३ अधि.२४ सू.३८)

जुन अनन्तरविद्या हो त्यो नै सत्यविद्या हो, यहाँ आएको 'हि' शब्द हेतुका अर्थमा हो। अतः 'तद्यत् तत्सत्यम्' इत्यादिबाट प्रकृत उपास्य हिरण्यगर्भ नै आकर्षित हुन्छ। यसरी उपास्य एक हुने भएपछि विद्यामा भेद हुँदैन। अतः युक्तिबाट विद्याको ऐक्य भएपछि सबै सत्य आदि गुणहरूको उपसंहार गर्नुपर्दछ भन्ने यस सूत्रको भाव हो।

३९८. कामादीतरत्र तत्र चायतनादिभ्यः (अ.३पा.३ अधि.२५ सू.३९)

सत्यकामत्व आदि गुणहरूलाई बृहदारण्यकोपनिषद्मा उपसंहार गर्नुपर्दछ र सर्ववशित्व आदि गुणहरूलाई छान्दोग्यमा उपसंहार गर्नुपर्दछ। किनभने आयतन आदि दुवै ठाउँमा समान हृदयातनसेतुव्यपदेश आदि कारण भएका हुँदा त्यसरी उपसंहार गर्नुपर्दछ भनिएको हो।

३९९.आदरादलोपः (अ.३ पा.३ अधि.२६ सू.४०)

भोजनको लोप भएपछि पनि अग्निहोत्रको लोप नहुने देखिन्छ, किनभने 'पूर्वोऽतिथिभ्योऽश्नीयात्' इत्यादिबाट जाबाल श्रुतिमा प्राणाग्निहोत्रमा आदर गरेको छ। (यो पूर्वपक्षको सूत्र हो।)

४००. उपस्थितेऽतस्तद्वचनात् (अ.३ पा.३ अधि.२६ सू.४१)

भोजनद्रव्य प्राप्त भएपछि त्यसैबाट प्राणाग्निहोत्र गर्नुपर्दछ। किनभने 'तद्यद्भक्तं प्रथममागच्छेत्तद्धोमीयम्' इत्यादि वाक्यहरू श्रुतिमा आएका देखिन्छन्। आदरवचन ता भोजन प्राप्त भएपछिको अवस्थालाई लिएर नै हो भन्ने यस उत्तरपक्षका सूत्रको अर्थ हो।

४०१.तन्निर्धारणानियमस्तद्दृष्टेः पृथग्ध्यप्रतिबन्धः फलम् (अ.३ पा.३ अधि.२७ सू.४२)

कर्माङ्गका रूपले आश्रित उपासनाहरूको नित्य सम्झेर अनुष्ठान गरिँदैन। किनभने सो कुरा 'तेनोभौ कुरुतः' इत्यादि श्रुतिमा देखापर्दछ। हुनत यसमा पनि उपासनाको भिन्नै फल सुनिएको छ। तर पनि नित्यका सरह अनुष्ठानको विधान भने छैन। यो कुरा पृथक् आदिबाट भनिएको छ। जसबाट कर्मफलभन्दा अरू नै वीर्यवत्तरत्वात्मक कर्मसमृद्धिरूप फल उपलब्ध हुन्छ। यसबाट कर्माङ्गत्व उपासनामा नभएको कुरा सिद्ध हुन्छ।

४०२. प्रदानवदेव तदुक्तम् (अ.३ पा.३ अधि.२८ सू.४३)

'यथेन्द्राय राज्ञे' भनेर इन्द्र देवता एउटै भए पनि राजाधिराज आदि गुणहरूका भेदले गर्दा त्यससँग सम्बन्धित देवतामा भेद देखिन्छ। जसरी एकविद्यामा पनि वायु, प्राण आदि स्वरूपको अभेद भएर पनि आध्यात्मिक आदि अवस्थाका भेदबाट गुणमा भेद देखिएको हो। यो कुरा 'नाना वा' इत्यादि सूत्रमा आचार्य जैमिनिले पूर्वकाण्डमा भनेका छन्।

४०३. लिङ्गभूयस्त्वात्तद्धि बलीयस्तदपि (अ.३पा.३अधि.२९सू.४४)

वाजसनेयकका अग्निरहस्यमा अग्निको स्वतन्त्ररूपमा नै वर्णन गरिएको छ। किनभने 'यत्किञ्चेमानि भूतानि' इत्यादि अनेक लिङ्गरूप प्रमाणहरू स्वतन्त्रताका प्रतिपादक हुन्। प्रकरणादिका अपेक्षाबाट लिङ्गप्रमाण बलवान् पनि छन्। यसका सम्बन्धमा 'श्रुतिलिङ्गवाक्यप्रकरणस्थानसमाख्यानाम्' भन्ने सूत्रमा आचार्य जैमिनिले भनिसकेका छन्।

४०४. पूर्वविकल्पः प्रकरणात् स्यात् क्रिया मानसवत् (अ.३ पा.३ अधि.२९ सू.४५)

सङ्कल्पात्मक मनश्चित् आदि अग्निहरू स्वतन्त्र छैनन्। तर प्रकरण अनुसार पूर्वमा आएको क्रियामय अग्निको यो सङ्कल्पात्मक अग्नि अङ्ग नै हो। जस्तै 'मनोग्राहं गृह्णाति' इत्यादि द्वादशाहमा सुनिएको मानसग्रह बार र दिनका बीचमा रहेको दशौँ दिनको पनि अङ्गजस्तै हो। त्यस्तै नै प्रकृत कर्मका अङ्गभूत यी अग्निहरू हुन्।

४०५. अतिदेशाच्च (अ.३ पा.३ अधि.२९ सू.४६)

'एकोऽग्निस्तावान्' इत्यादि श्रुतिबाट इष्टकाचित अग्निसादृश्यको उपदेश गरिएको छ। यसबाट पनि अग्निहरूको क्रियाशेष नै मान्नु युक्त हुने देखिन्छ।

४०६. विद्यैव तु निर्धारणात् (अ.३ पा.३ अधि.२९ सू.४७)

विद्यास्वरूप मनश्चिदादि अग्निहरू स्वतन्त्र हुन्। किनभने 'ते हैते विद्याचितः' भनेर अवधारण गरिएको छ।

४०७. दर्शनाच्च (अ.३ पा.३ अधि.२९ सू.४८)

मनश्चित् आदि गरिएका स्वातन्त्र्यबोधक पूर्वोक्त लिङ्गहरू दृष्ट छन् । अतः ती अग्निहरू स्वतन्त्र हुन् ।

४०८. श्रुत्यादिबलीयस्त्वाच्च न बाधः (अ.३ पा.३ अधि.२९ सू.४९)

श्रुति आदिमा जुन आदि शब्द आएको छ, त्यसबाट लिङ्ग र प्रकरणलाई ग्रहण गर्नुपर्दछ । यसरी श्रुति, लिङ्ग र वाक्यको अधिक बल भएको हुँदा दुर्बल कर्मप्रकरणले मन आदिको स्वातन्त्र्यको बाध गर्न सक्तैन ।

४०९. अनुबन्धादिभ्यः प्रज्ञान्तरपृथक्त्ववद्दृष्टश्च तदुक्तम् (अ.३ पा.३ अधि.२९ सू.५०)

सूत्रमा आएको अनुबन्धादि शब्दबाट अतिदेशलाई ग्रहण गर्नुपर्दछ । 'ते मनसैवाधीयन्त' इत्यादिबाट मन आदि वृत्तिहरूमा कर्माङ्गत्वको सम्पादन गर्ने भन्ने बुझ्नुपर्दछ । अनुबन्ध आदि हेतुहरूबाट मनश्चित् आदि स्वतन्त्र छन् । जस्तै शाण्डिल्य आदि अरू विद्याहरू स्वतन्त्र छन् । यसबाट राजसूयको प्रस्ताव श्रुत ब्राह्मण आदिबाट गरिने र अवेष्टिको चाहिँ केवल राजाबाट गरिने राजसूय यागबाट उत्कर्ष जसरी देखिएको छ, त्यसैगरेर यहाँ पनि सम्झनुपर्दछ । यही कुरा नै 'ऋत्वर्थायामिति' इत्यादि सूत्रमा पूर्वकाण्डमा भनिसकिएको छ ।

४१०. न सामान्यादप्युपलब्धेर्मृत्युवन्नहि लोकापत्ति (अ.३ पा.३ अधि.२९ सू.५१)

यद्यपि मनश्चित् प्रभृति मानसत्वरूप धर्महरू समान छन् तापनि तिनलाई क्रियाका अङ्ग भने मान्नसकिँदैन । यसभन्दा पहिले भनिएका श्रुति आदि प्रमाणहरूबाट मनश्चित् आदिको स्वतन्त्ररूपबाट उपलब्धि हुन्छ । जस्तै – 'स वा एष' र 'अग्निर्वै मृत्युः' इत्यादिबाट अग्नि र आदित्य पुरुषमा मृत्युशब्दको प्रयोग समान देखिन्छ तापनि पूर्ण समान भने होइन । अथवा 'असौ वाव लोको.' इत्यादि श्रुतिमा आएको समित् आदि समान भएर पनि द्युलोकमा अग्नित्वको प्राप्ति हुँदैन । परस्पर वैजात्य रहन्छ । त्यसैगरेर मानस र मानसिक अग्निहरूको मानसिकत्व समान भएर पनि यी विजातीय नै हुन् ।

४११.परेण च शब्दस्य ताद्विध्यं भूयस्त्वात्त्वनुबन्धः (अ.३ पा.३ अधि.२९ सू.५२)

मानसाग्नि ब्राह्मणको उत्तर ब्राह्मणका साथ मध्यस्थ ब्राह्मणको समानता भएका कारण ताद्विध्यं नै हो, अर्थात् जसरी उत्तर ब्राह्मणमा चित् अग्निमा लोकदृष्टिरूप स्वतन्त्र विधित्व छ, त्यसैगरेर प्रकृत मध्यस्थ ब्राह्मणमा पनि सम्झनुपर्दछ ।

४१२.एक आत्मनः शरीरे भावात् (अ.३ पा.३ अधि.३ सू.५३)

चार्वाकहरू शरीरबाहेक अर्को आत्माको सत्ता मान्दैनन् । किनभने शरीर रहेमा उपलब्धि हुन्छ र शरीर नरहेमा उपलब्धि हुँदैन । यसरी अन्वयव्यतिरेकबाट उपलब्धि हुने

र नहुने हुन्छ। अतः शरीरातिरिक्त अर्को आत्मा लौकायतिकहरू मान्दैनन्।

४१३.व्यतिरेकस्तद्भावाभावित्वान्न तूपलब्धिवत् (अ.३ पा.३ अधि.३ सू.५४)

शरीर र आत्मा एउटै होइन। यिनमा परस्पर भेद छ। किनभने मृत्युका अवस्थामा शरीर रहँदै पनि आत्मधर्म अर्थात् ज्ञान रहँदैन। भूतको उपलब्धि भूतको धर्म होइन, त्यो भन्दा भिन्नै हो। त्यसैगरेर भौतिक शरीरमा उपलब्धि धर्म होइन भिन्नै हो। आत्मा भन्नु र उपलब्धि भन्नु एउटै वस्तु हो। यो वेदान्तको मत हो।

४१४. अङ्गावबद्धास्तु न शाखासु हि प्रतिवेदम् (अ.३पा.३अधि.३१सू.५५)

सूत्रमा आएको तुशब्द पूर्वपक्षको निरसनका लागि हो। अङ्गाश्रित ती उपासनाहरू प्रत्येक वेदान्तमा केवल आ-आफ्ना शाखाहरूमा विद्यमान उद्गीथावलम्बिनीमात्र नभएर अरू शाखीय उद्गीथको पनि अवलम्बन गर्दछन्। किनभने 'उद्गीथमुपासीत' इत्यादिमा अविशेष उद्गीथ आदिको श्रुति नै हेतु हो।

४१५. मन्त्रादिवद्वाऽविरोधः (अ.३ पा.३ अधि.३१ सू.५६)

एक शाखामा विहित उद्गीथ आदि अर्को शाखामा कथित उद्गीथ आदिमा प्राप्ति भएर पनि कुनै विरोध छैन मन्त्रादिकासरह। अर्थात् जसरी तण्डुलपेषणका लागि अश्मादानको 'कुटुरुरसि' इत्यादि एक ठाउँमा आम्नात मन्त्रलाई अरू शाखाहरूमा प्राप्ति गरे पनि विरोध रहँदैन। त्यस्तै यसमा पनि सम्झनुपर्दछ। वाशब्द दृष्टान्तप्रदर्शनका लागि हो।

४१६. भूम्नः क्रतुवज्ज्यायस्त्वं तथा हि दर्शयति (अ.३ पा.३ अधि.३२ सू.५७)

'प्राचीनशाल औपमन्यवः' इत्यादिमा समस्तोपासनाको नै प्रधानरूपमा प्रतिपादन गरिएको छ। जस्तै दर्शपूर्णमास क्रतुमा एउटै साङ्ग प्रधानको प्रयोग हुन्छ। भिन्नाभिन्नै व्यस्त प्रयाज आदिको प्रयोग हुँदैन। त्यस्तै यस विषयमा पनि सम्झनुपर्छ। यहाँ समस्तोपासनाको नै मुख्यरूपमा कथन छ। यो श्रुति पनि प्राचीनशाला आदिसँग भनिएको व्यस्त उपासनाको निन्दा गर्दै कैकेय राजाद्वारा भनिएको समस्त उपासनाको नै प्रतिपत्ति देखाइएको छ।

४१७. नाना शब्दादिभेदात् (अ.३ पा.३ अधि.३३ सू.५८)

विद्या एक नभएर अनेक छन्। किनभने वेद, उपासीत इत्यादि शब्दहरूको भेद छ। आदिशब्दबाट उपास्य गुणका भेदले ग्रहण हुन्छ।

४१८.विकल्पोऽविशिष्टफलत्वात् (अ.३ पा.३ अधि.३४ सू.५९)

सगुण विद्याको विकल्प हुनु ठीक छ। किनभने वेद्यवस्तुको साक्षात्काररूप अभिन्नफल हुने हुँदा विकल्प मान्नुपरेको हो।

४१९. काम्यास्तु यथाकामं समुच्चीयेरन्न वा पूर्वहेत्वभावात् (अ.३ पा.३ अधि.३५ सू.६०)

अदृष्टद्वारा फलको हेतुभूत काम्य विद्याको यथेष्ट अनुष्ठान गर्नुपर्दछ। अथवा नगरे पनि हुन्छ। किनभने यसमा विकल्पप्रयोजक हेतुको अभाव छ।

४२०. अङ्गेषु यथाश्रयभावः (अ.३ पा.३ अधि.३६ सू.६१)

कर्माङ्गोद्‌गीथाश्रित विद्याहरूमा समुच्चयबाट अनुष्ठानको नियम छ। जसरी त्रतुहरूमा आश्रित अङ्गहरूको अनुष्ठानको नियम छ।

४२१.शिष्टेश्च (अ.३ पा.३ अधि.३६ सू.६२)

विधान भएको हुँदा पनि यो अङ्गसरह समुच्चय हो।

४२२. समाहारात् (अ.३ पा.३ अधि.३६ सू.६३)

ऋग्वेदका ब्राह्मण ग्रन्थमा विहित शस्त्रका प्रणवको र सामवेदका ब्राह्मणमा विहित उक्थका प्रणवको ऐक्यका चिन्तनको माहात्म्य भन्ने भएका अनुसमाहाररूप लिङ्गबाट पनि कर्माङ्गमा आश्रित सर्ववेदविहित विद्याहरूको समुच्चय हुन्छ।

४२३. गुणसाधारण्यश्रुतेश्च (अ.३ पा.३ अधि.३६ सू.६४)

'तेनेयं त्रयी विद्या वर्तते' इत्यादि उद्‌गीथ उपासनामा गुणभूत ॐकारका सबै कर्महरूमा साम्यको प्रतिपादन गरिएको हुँदा पनि समुच्चय हो।

४२४. न वा तत्सहभावाश्रुतेः (अ.३ पा.३ अधि.३६ सू.६५)

तुशब्दार्थक वाशब्द पूर्वपक्षको खण्डन गर्नका लागि हो। अङ्गाश्रित उपासनाहरू समुच्चित होइनन्। किनभने 'ग्रह) गृहीत्वा' इत्यादिबाट अङ्गको जसरी सहभाव सुनिन्छ, त्यसैगरेर ती उपासनाहरूको सहभाव सुनिँदैन।

४२५. दर्शनाच्च (अ.३ पा.३ अधि.३६ सू.६६)

'एवंविद्ध वै ब्रह्मा' इत्यादि श्रुतिमा अङ्गाश्रित उपासनाहरूको समुच्चय देखिँदैन। अतः ती उपासनाहरूका विषयमा समुच्चयको शङ्का गर्नु उचित छैन।



## तृतीय अध्याय
## चतुर्थ पाद

४२६. पुरुषार्थोऽतः शब्दादिति बादरायणः (अ.३पा.४अधि.१ सू.१)

यसै औपनिषद् आत्मज्ञानबाट नै मोक्षरूप पुरुषार्थ सिद्ध हुन्छ । किनभने 'तरतिशोकमात्मवित्' भन्ने श्रुति भएको कुरा आचार्य बादरायण भन्दछन् ।

४२७. शेषत्वात्पुरुषार्थवादो यथान्येष्विति जैमिनिः (अ.३ पा.४ अधि.१ सू.२)

आत्मा कर्ता हो, यसैकारण आत्माको ज्ञान पनि पर्णताका समान कर्मको अङ्गभूत आत्माद्वारा ऋतुको अङ्ग हो । किनभने फलशून्य भएर आत्मा कर्माङ्गको आश्रयण गर्दछ । यहाँ विशेषणका असिद्धिको खण्डनका लागि पुरुष विशेषण आएको हो । जसरी अन्य द्रव्यसंस्कार कर्ममा अपाप फलश्रुति अर्थवाद हो, त्यसैगरेर 'तरति' पनि पुरुषार्थवाद हो । यो आचार्य जैमिनिको मत हो ।

४२८. आचारदर्शनात् (अ.३ पा.४ अधि.१ सू.३)

'जनको ह वैदेहो बहुदक्षिणेन यज्ञेनेजे' इत्यादि श्रुतिबाट जनक समेतका ब्रह्मज्ञानीहरूको विद्याका साथ कर्मको आचरण देखिन्छ । यसबाट पनि विद्या कर्मको अङ्ग भएको थाहा लाग्दछ ।

४२९. तच्छ्रुतेः (अ.३ पा.४ अधि.१ सू.४)

'यदेव विद्यया करोति.' इत्यादि श्रुतिबाट पनि विद्यामा कर्माङ्गत्वको श्रवण भएको छ । यसबाट पनि विद्या कर्मको अङ्ग भएको प्रतीत हुन्छ ।

४३०. समन्वारम्भणात् (अ.३ पा.४ अधि.१ सू.५)

'तं विद्याकर्मणी समन्वारभेते' इत्यादि श्रुतिबाट विद्या र कर्मको समन्वय देखिन्छ । यसबाट पनि विद्या कर्मको अङ्ग भएको भन्न सकिन्छ ।

४३१.तद्वतो विधानात् (अ.३ पा.४ अधि.१ सू.६)

'आचार्यकुलाद्वेदमधीत्य' इत्यादि श्रुतिबाट सम्पूर्ण वेदविद्याहरूले सम्पन्न पुरुषका निमित्त कर्मको विधान गरिन्छ । यसबाट पनि विद्या कर्माङ्ग हो ।

४३२. नियमाच्च (अ.३ पा.४ अधि.१ सू.७)

यसैगरेर 'कुर्वन्नेवेह कर्माणि जिजीविषेच्छतं समाः' इत्यादि श्रुतिबाट जीवनपर्यन्त कर्माचरणको नियम पालना गर्नुपर्ने देखिन्छ । अतः यसबाट विद्या कर्माङ्ग हो ।

४३३. अधिकोपदेशात्तु बादरायणस्यैवं तद्दर्शनात् (अ.३ पा.४ अधि.१ सू.८)

सूत्रमा आएको तुशब्दमाथि विभिन्न सूत्रहरूमा आएको पूर्वपक्षको मतको

निराकरणका लागि हो। निष्फल भएर कर्माङ्गको आश्रय भएको हुँदा तत्त्वज्ञान कर्माङ्ग हो भनेर पूर्वपक्षीले भन्नु ठीक होइन, किनभने हेतुमा विशेष्यको असिद्धि देखिन्छ। किनभने संसारी जीवभन्दा भिन्नै चिन्मात्र भोक्तृत्वादिरहित ब्रह्मको कथन भएको हुनाले असिद्धि देखिन्छ। चिन्मात्राश्रयत्व नै तत्त्वज्ञान हो। अतः यहाँ विशेष्यको असिद्धि छ। यसकारण तत्त्वज्ञानको फलश्रुति पनि अर्थवाद होइन। यस सम्बन्धमा आचार्य बादरायणको मत ठीक देखिन्छ। 'यः सर्वज्ञः सर्ववित्' इत्यादि श्रुतिमा चिन्मात्र ब्रह्मको दर्शन भएबाट अधिकोपदेशलाई व्यर्थ मान्नु हुँदैन।

४३४. तुल्यं तु दर्शनम् (अ.३ पा.४ अधि.१ सू.९)

तत्त्वज्ञान कर्मशेष होइन। किनभने 'एतद्धस्म वै तत्पूर्वे' इत्यादि श्रुतिहरू यसमा पनि समान नै आचारको दर्शन बताउँछन्। तुशब्दले कर्मशेषको बलवत्ता देखाउँछ।

४३५. असार्वत्रिकी (अ.३ पा.४ अधि.१ सू.१०)

'यदेव विद्यया करोति' इत्यादि श्रुतिहरूले सबै विद्याको विषय गर्दैनन्। किनभने त्यो केवल प्रकृत उद्‌गीथविद्यापरक हो।

४३६. विभागः शतवत् (अ.३ पा.४ अधि.१ सू.१०)

'तं विद्याकर्मणी समन्वारभेते' इत्यादि श्रुतिमा विद्या एकथरी पुरुषको र कर्म अर्कोथरी पुरुषको अनुगमन गर्दछन्। जसरी १०० रूपैयाँलाई दुईजना व्यक्तिहरूमा बराबर बाँड्दा ५०, ५० रूपैयाँ भागमा पर्दछ, त्यस्तै यस विषयमा पनि बुझ्नुपर्दछ।

४३७. अध्ययनमात्रवतः (अ.३ पा.४ अधि.१ सू.१२)

'आचार्यकुलाद्वेदमधीत्य.' भन्ने श्रुतिवाक्य अनुसार जसले वेदको अध्ययन गरेकोछ, उसैलाई नै कर्मको विधान गरिन्छ। तर जसलाई औपनिषदात्मज्ञान भएकोछ त्यसका लागि कर्मको विधान गरिँदैन।

४३८. नाविशेषात् (अ.३ पा.४ अधि.१ सू.१३)

'कुर्वन्नेवेह कर्माणि जिजीविशेषत् शतं समाः' भन्ने वेदवाक्यले तत्त्वज्ञानी पुरुषलाई विषय गर्दैन। किनभने विद्वान् भन्ने विशेष वाक्य उक्त श्रुतिमा देखिँदैन।

४३९. स्तुतयेऽनुमतिर्वा (अ.३ पा.४ अधि.१ सू.१४)

अथवा तत्त्वज्ञानीका लागि यदि कर्मको विधान गरिएको छ भने पनि त्यो विधान विद्वान्का स्तुतिका लागि हो। अर्थात् विद्वान् भएर पनि यदि कुनै विद्वान्ले जीवनपर्यन्त कर्म गरेता पनि विद्याका सामर्थ्यले उसलाई कर्मले छुन सक्तैन। यसरी यो स्तुत्यर्थक हो, विधान होइन।

४४०. कामकारेण चैके (अ.३ पा.४ अधि.१ सू.१५)

अरू पनि धेरै विद्वानूहरूले स्वेच्छाले नै आफ्ना सन्तान आदिको त्याग गरेका थिए। यो कुरा 'एतद्ध स्म वै तत्पूर्वे विद्वांसः.' भन्ने श्रुतिबाट स्पष्ट हुन्छ। यस सूत्रबाट तत्त्वज्ञान कर्मको अङ्ग होइन। यसमा विद्वान्‌को स्वेच्छाले प्रजा त्याग आदि लिङ्ग हो।

४४१. उपमर्दं च (अ.३ पा.४ अधि.१ सू.१६)

'यत्र त्वस्य सर्वमात्मैवाऽभूत्.' भन्ने श्रुतिले कर्मानुष्ठानका हेतु भएका अविद्याकृत क्रियाकारकफलको विद्याद्वारा उपमर्द हुन्छ भनेको छ। यसरी उपमर्द भएपछि अविद्याको अभाव हुन्छ। यसबाट पनि ब्रह्मविद्या कर्माङ्ग होइन भन्ने थाहा हुन्छ।

४४२. ऊर्ध्वरेतःसु च शब्दे हि (अ.३ पा.४ अधि.१ सू.१७)

संन्यास आश्रमका निम्ति नै ब्रह्मविद्या श्रुत भएको हुँदा पनि ब्रह्मविद्या कर्माङ्ग होइन। किनभने संन्यास आश्रम 'त्रयो धर्मस्कन्धाः' इत्यादिमा सुनिएको छ। अतः यसको अप्रसिद्धिको शङ्का पनि गर्न मिल्दैन।

४४३. परामर्शं जैमिनिरचोदना चापवदति हि (अ.३पा.४अधि.२सू.१८)

'ब्रह्मसंस्थोऽमृतत्वमेति' इत्यादि शास्त्र अन्धपरम्परान्यायले प्राप्त संन्यासाश्रमको अनुवादक हो। किनभने यस वाक्यमा विधायक लिङ् लकार आदि छैनन्। यो आचार्य जैमिनिको मत हो। विरहा इत्यादि श्रुति संन्यासाश्रमको प्रतिषेध पनि गर्दछन्।

४४४. अनुष्ठेयं बादरायणः साम्यश्रुतेः (अ.३ पा.४ अधि.२ सू.१९)

पारिव्राज्यको अनुष्ठान गर्नुपर्दछ भनेर आचार्य बादरायण मान्दछन्। किनभने 'त्रयो धर्मस्कन्धाः' भन्ने यस श्रुतिमा अन्य श्रुतिमा विहित अन्य आश्रमहरूको भन्ने यस वाक्यबाट अनुदित गार्हस्थ्यका साथ समानताको श्रवण भएको छ।

४४५. विधिर्वा धारणवत् (अ.३ पा.४ अधि.२ सू.२०)

अथवा 'त्रयो धर्मस्कन्धाः' यस वाक्यमा आश्रमका विधिलाई नै स्वीकार गर्नुपर्दछ, अनुवाद होइन। यद्यपि आश्रमका विधानमा वाक्यभेद होला तथापि आश्रम अपूर्व हुनाले वाक्यभेद पनि इष्ट नै हुन्छ। एकवाक्यताको प्रतीति भएर पनि अपूर्वार्थ विधिको दृष्टान्त दिन सकिन्छ। धारणवत् अर्थात् अधस्तात्, यसमा सुराको तल्लोभागमा समिध्धारणको विधिका साथ एक वाक्यताको प्रतीति भएर पनि माथि धारण गर्नु अपूर्व हुने हुँदा एकवाक्यता भङ्ग हुन्छ तापनि यसलाई एकवाक्यताको विधिजस्तै मानिन्छ। अतः प्रकृतमा पनि यस्तै मान्नुपर्दछ।

४४६. स्तुतिमात्रमुपादानादिति चेन्नापूर्वत्वात् (अ.३पा.४अधि.३ सू.२१)

उद्‌गीथादि उपासनाहरूमा श्रूयमाण 'स एष रसानां रसतमः परमः' इत्यादि सम्पूर्ण

वाक्यहरू कर्माङ्गोद्‌गीथ उपादान भएका हुँदा यो केवल स्तुति गर्दछ भन्न मिल्दैन। किनभने कर्माङ्ग उद्‌गीथ उपासनाहरू र रसतमत्व आदि गुणहरू अपूर्व हुन् , अर्थात् अरू प्रमाणहरूबाट अप्राप्त छन्। अतः यिनको पनि शास्त्रमा विधान छ।

४४७. भावशब्दाच्च (अ.३ पा.४ अधि.३ सू.२२)

'उद्‌गीथोपासीत' 'सामोपासीत' इत्यादि विधायक शब्दबाट पनि 'स एष' इत्यादि वाक्यहरू गुणविधायक नै हुन्।

४४८. पारिप्लवार्था इति चेन्न विशेषितत्वात् (अ.३पा.४अधि.४सू.२३)

'अथ ह याज्ञवल्क्यस्य द्वे भार्ये' इत्यादि आख्यायिकाहरू पारिप्लवनामक कर्मका अङ्गहरू हुन् भन्नु ठीक होइन। किनभने 'पारिप्लवमाचक्षीत' इत्यादिबाट उपक्रम गरेर ' मनुर्वैवस्वतो राजा' इत्यादि वाक्यशेषमा केही आख्यायिकाहरूको विशेषरूपमा उपादान गरिएको छ। अश्वमेध यज्ञमा पुत्रादि परिवारयुक्त राजालाई यसप्रकारका कथाहरू सुनाइन्थ्यो। यसैलाई पारिप्लवनामक कर्म भनिन्छ।

४४९. तथा चैकवाक्यतोपबन्धात् (अ.३ पा.४ अधि.४ सू.२४)

त्यसैगरेर ती आख्यायिकाहरू पारिप्लवका लागि होइनन्। यसबाट विद्यास्तुत्यर्थ नै यिनलाई मान्नु पर्दछ। किनभने सन्निहित तत्‌तद्‌विद्याहरूका साथ एकवाक्यताको सम्बन्ध भएको मान्नुपर्दछ।

४५०. अत एव चाग्नीन्धनाद्यनपेक्षा (अ.३ पा.४ अधि.५ सू.२५)

पहिलो अधिकरणमा ब्रह्मविद्या स्वतन्त्र पुरुषार्थको हेतु हो भनेर उल्लेख गरिसकिएको छ। अतः विभिन्न आश्रममा विहित कर्महरूको अपेक्षा ब्रह्मविद्याले राख्तैन।

४५१. सर्वापेक्षा च यज्ञादिश्रुतेरश्ववत् (अ.३ पा.४ अधि.६ सू.२६)

विद्या आफ्नू उत्पत्तिका लागि सबैथरी आश्रमकर्मको अपेक्षा राख्तछ। 'तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसाऽनाशकेन' इत्यादि श्रुतिमा आएको विविदिषाद्वारा यज्ञादि कर्ममा ज्ञानसाधनत्वको श्रवण छ भनेर भन्न मिल्दैन। किनभने मोक्षका लागि कर्मको आवश्यकता पर्दैन। 'अश्ववत्' जसरी घोडाको योग्यता अनुरूप रथमा लगाइन्छ, हलो जोत्न लगाइँदैन। त्यसैगरेर कर्म पनि अयोग्य हुनाले त्यसको मोक्षमा अपेक्षा रहँदैन।

४५२. शमदमाद्युपेतः स्यात्तथापि तु तद्‌विधेस्तदङ्गतया तेषाम-वश्यानुष्ठेयत्वात् (अ.३ पा.४ अधि.६ सू.२७)

हुन ता 'विविदिषन्ति' इत्यादि श्रुतिमा वर्तमान कालको प्रयोग भएको हुँदा विधि

होइन। तर पनि ब्रह्मज्ञानका अभिलाषीहरू शमदमादि षट्सम्पत्तिले युक्त हुनु आवश्यक छ। किनभने विद्याका अङ्गका रूपमा 'तस्मादेववित्' भन्ने श्रुतिले शमदमादिसाधनको विधान गरेको छ। ती साधनहरू विहित भएका हुँदा अवश्य अनुष्ठेय हुन्।

४५३. सर्वान्नानुमतिश्च प्राणात्यये तद्दर्शनात् (अ.३पा.४अधि.७सू.२८)

'न ह वाऽस्यानन्नं जग्धं भवति' इत्यादि श्रुतिद्वारा प्राण नै निस्कन लाग्यो भनेमात्रै रक्सी बाहेक अरू जुनसुकै खालको अन्न पनि खानु हुने वेदको अनुज्ञा छ। यो कुरा छान्दोग्य उपनिषद्मा आएको चाक्रायणको उपाख्यानबाट स्पष्ट हुन्छ।

४५४. अबाधाच्च (अ.३ पा.४ अधि.७ सू.२९)

भक्ष र अभक्षको विभाग गर्ने शास्त्र अवाधित छ। यसबाट 'न ह वा एवंविदि' भन्ने श्रुति चाहिँ अर्थवादमात्र हो।

४५५. अपि च स्मर्यते (अ.३ पा.४ अधि.७ सू.३०)

आपत्तिकालमा विद्वान् र अविद्वान्का लागि सर्वान्नभक्षण शास्त्रमा उल्लेख भएको पाइन्छ, जस्तै 'जीवितात्ययमापन्नो योऽन्नमत्ति यतस्ततः। लिप्यते न स पापेन पद्मपत्रमिवाम्भसा ॥' 'मद्यं नित्यं ब्राह्मणो वर्जयेत्' यसरी आपत्कालमा मद्यबाहेक सर्वान्न भक्षणको विधान शास्त्रमा पाइन्छ।

४५६. शब्दश्चातोऽकामकारे (अ.३ पा.४ अधि.७ सू.३१)

स्वेच्छाप्राप्त प्रवृत्तिका निराकरणमा नै 'तस्मात् ब्राह्मणः सुरां न पिबेत्.' इत्यादि शब्द अर्थात् श्रुति आएको हो। यसकारण पनि प्राणविद्का लागि सर्वान्नभक्षणको अनुज्ञा अर्थवादमात्रै हो।

४५७. विहितत्वाच्चाश्रमकर्मापि (अ.३ पा.४ अधि.८ सू.३२)

तुशब्दको साटो आएको चशब्द पूर्वपक्षको खण्डनका लागि हो। जुन व्यक्ति मुमुक्षु होइन, उसले पनि आश्रमसम्बन्धी कर्महरूको अनुष्ठान गर्नुपर्दछ। किनभने ' यावज्जीवमग्निहोत्रं जुहोति' भन्ने श्रुतिबाट अमुमुक्षुका लागि पनि यो विहित छ।

४५८. सहकारित्वेन (अ.३ पा.४ अधि.८ सू.३३)

विद्या अर्थात् ज्ञानका उपार्जनमा वा उत्पादनमा सहकारीरूपबाट चित्तशुद्धिका माध्यमद्वारा कर्म कारण हुन आउँछ। यसप्रकार विद्याङ्ग भएका कारण नित्यकर्मको अनुष्ठान अवश्य पनि गर्नुपर्दछ। किनभने यज्ञादि श्रुतिहरू विद्याङ्गरूपबाट कर्मको विधान गर्दछन्।

४५९. सर्वथापि त एवोभयलिङ्गात् (अ.३ पा.४ अधि.८ सू.३४)

नित्य र विद्यार्थ भएका हुँदा यज्ञादि कर्महरूको अनुष्ठान गर्नुपर्दछ। किनभने '

यज्ञेन विविदिषन्ति' 'अनाश्रितः कर्मफलम्' इत्यादि श्रुति र स्मृतिहरू समेत दुवैले विधान गरेका छन् ।

४६०. अनभिभवं च दर्शयति (अ.३ पा.४ अधि.८ सू.३५)

ब्रह्मचर्यादि साधनहरूबाट सम्पन्न मनुष्य राग आदि पञ्चक्लेशहरूबाट पराजित हुँदैन । यो कुरा 'एष ह्यात्मा न नश्यति यं ब्रह्मचर्येणानुविन्दते' आदि श्रुतिहरूले प्रतिपादन गरेका छन् ।

४६१.अन्तरा चापि तु तद्दृष्टेः (अ.३ पा.४ अधि.९ सू.३६)

आश्रमरहित पुरुषहरूलाई पनि ब्रह्मविद्याको अधिकार छ । किनभने श्रुति र स्मृतिहरूमा रैक्व आदि अनाश्रमीहरूलाई ब्रह्मविद्यामा अधिकार भएको देखिन्छ ।

४६२. अपि च स्मर्यते (अ. ३ पा.४ अधि.९ सू.३७)

त्यसैगरेर अनाश्रमी संवर्त आदिको पनि योगीका रूपबाट श्रवण हुन्छ । अर्थात् संवर्त आदिको योगीको रूपमा नाम सुनिन्छ ।

४६३. विशेषानुग्रहश्च (अ.३ पा.४ अधि.९ सू.३८)

त्यस्तै अरू रैक्व प्रभृति अनाश्रमीहरूलाई पनि जप आदि ज्ञानहेतुभूत कर्मविशेषबाट विद्यामा अधिकार भएको सुनिन्छ ।

४६४. अतस्त्वितरज्ज्यायो लिङ्गाच्च (अ.३ पा.४ अधि.९ सू.३९)

अनाश्रमित्वबाट भन्दा आश्रमित्वबाट नै चाँडै विद्या प्राप्त हुन्छ । किनभने 'तेनैति ब्रह्मवित्पुण्यकृत्तैजसश्च' इत्यादि श्रुतिमा पुण्यकृत्व विशेषणरूप श्रुति लिङ्ग हो ।

४६५. तद्भूतस्य तु नातद्भावो जैमिनेरपि नियमातद्रूपाभावेभ्यः (अ.३ पा.४ अधि.१०. सू.४०)

जसले उत्तम आश्रम प्राप्त गरेको छ, उसको त्यस उत्तम आश्रमबाट निवृत्ति हुन सक्तैन भनेर आचार्य जैमिनि भन्दछन् । किनभने यसका नियम, अतद्रूप र अभाव यी कारणहरू हुन् । वनमा जाने र फेरि त्यहाँबाट न फर्कने यो नियम हो । प्रत्यवरोहबोधक श्रुतिको अभाव अतद्रूप हो र शिष्टाचारको अभाव अभाव हो ।

४६६. न चाधिकारिकमपि पतनानुमानात्तदयोगात् (अ.३ पा.४ अधि.११ सू.४१)

अधिकरण शास्त्रबाट प्राप्त आधिकारिक प्रायश्चित्त अर्थात् गर्दभालम्भनरूप प्रायश्चित्त नैष्ठिक ब्रह्मचारीका लागि होइन । किन कि 'आरूढो नैष्ठिकं धर्मं यस्तु प्रच्यवते पुनः । प्रायश्चितं न पश्यामि येन शुद्ध्येत् स आत्महा' भन्ने अनिवर्त्य पातित्य श्रुत्यनुमापक स्मृति छ । अतः प्रायश्चित्त असम्भव देखिन्छ भनेर पूर्वपक्षी भन्दछन् ।

४६७. उपपूर्वमपि त्वेके भावमशनवत्तदुक्तम् (अ.३पा.४अधि.११सू.४२)

यस सूत्रमा आएको तु शब्द पूर्वपक्षीको विचारका खण्डन वा निषेधका लागि हो। यो महापातक नभएको हुँदा प्रायश्चित्त हुन सक्तछ। किनभने यो उपपातक हो। यसैकारण उपकुर्वाण ब्रह्मचारीका सरह नैष्ठिक ब्रह्मचारीको पनि प्रायश्चित्त छ। जस्तै उपकुर्वाण ब्रह्मचारीले यदि मद्यमांस खायो भने उसको व्रत लोप हुन्छ र उसको पुनः संस्कार हुन्छ। यसैगरेर नैष्ठिक ब्रह्मचारी यदि कहीँ आफ्नो व्रतबाट भ्रष्ट भयो भने उसको पनि प्रायश्चित्त हुन्छ। यी सबैको विचार वा विवेचना पूर्वमीमांसाको 'समा विप्रतिपत्तिः स्यात्' भन्ने सूत्रमा गरिएको छ।

४६८. बहिस्तूभयथापि स्मृतेराचाराच्च (अ.३पा.४अधि.१२ सू.४३)

उपर्युक्त अनुसार प्रायश्चित्त गरेपछि पनि तिनीहरूलाई शिष्टजनले बहिष्कार गर्नुपर्दछ। किनभने 'प्रायश्चितं न पश्यामि' 'आरूढपतितं दृष्ट्वा' इत्यादिबाट निन्दाको स्मरण र शिष्टाचार पनि देखाइएको छ।

४६९. स्वामिनः फलश्रुतेरित्यात्रेयः (अ.३ पा.४ अधि.१३ सू.४४)

साङ्ग प्रधान उपासनाको कर्ता यजमान नै हो भनेर आचार्य आत्रेय भन्दछन्। किनभने 'वर्षति हास्मै' इत्यादि फल उपासकका लागि नै हो भन्ने सुनिन्छ।

४७०. आर्त्विज्यमित्यौडुलोमिस्तस्मै हि परिक्रियते (अ.३ पा.४ अधि.१३ सू.४५)

अङ्गकर्मको कर्ता ऋत्विक् भएको कुरा आचार्य औडुलोमि बताउँछन्। किनकि दक्षिणा आदिबाट यजमानले ऋत्विक्लाई किन्दछ।

४७१. श्रुतेश्च (अ.३ पा.४ अधि.१३ सू.४६)

'या वै काञ्चन यज्ञे ऋत्विज.' इत्यादि श्रुतिबाट ऋत्विक्कर्तृक उपासनाको फल यजमानलाई जान्छ। यसप्रकार श्रवण भएको हुँदा कर्माङ्गको कर्ता ऋत्विक् हो भन्ने सिद्ध हुन्छ।

४७२. सहकार्यन्तरविधिः पक्षेण तृतीयं तद्वतो विध्यादिवत् (अ.३ पा.४ अधि.१४ सू.४७)

विध्यादि शब्दवाच्य मुख्यविधिमा अङ्गविधि सरह 'तस्माद् ब्राह्मणः पण्डित्यं निर्विद्य बाल्येन तिष्ठासेत्' इत्यादि श्रुति वाक्यमा अवगम्यमान पाण्डित्य र बाल्यभन्दा भिन्नै आत्मज्ञानसहकारीको नियमविधिरूप विधि हो। यो आत्मज्ञानीका लागि पूर्वसंस्कारप्रयुक्त भेदज्ञानको प्राबल्यले गर्दा एक पक्षमा अप्राप्त श्रुत्युक्त तृतीय मौनशब्दवाच्यको विधान गर्दछ भन्ने सिद्ध हुन्छ।

४७३. कृत्स्नभावात्तु गृहिणोपसंहारः (अ.३ पा.४ अधि.१४ सू.४८)

सूत्रमा आएको तुशब्द विशेषणार्थक हो। गृहस्थाश्रम र आश्रमान्तरविहित शम

आदिको गृहस्थाश्रममा उपसंहार गरिएको छ। गृहस्थाश्रमबाट अन्यत्र उपसंहार गरिएको छैन।

४७४. मौनवदितरेषामप्युपदेशात् (अ.३ पा.४ अधि.१४ सू.४९)

जसरी मौन र गृहस्थाश्रम श्रुतिसम्मत छन् , त्यसैगरेर ब्रह्मचर्याश्रम र वानप्रस्थाश्रम पनि श्रुतिसम्मत छन् । अतः यी दुईथरी आश्रमको विशेष महत्त्व छ। 'इतरेषाम्' यो बहुवचन व्यक्तिहरूको आनन्त्यका अभिप्रायले आएको हो।

४७५. अनाविष्कुर्वन्नन्वयात् (अ.३ पा.४ अधि.१५ सू.५०)

बालकका सरह आफ्ना आफ्ना ज्ञान र वैराग्यलाई बाहिर प्रकट नगर्दै केवल शुद्ध भाव होस् भन्दै 'अव्यक्तलिङ्गाः, अव्यक्तचाराः' इत्यादि श्रुतिहरूबाट विधान गरिन्छ। मुक्ति पर्यन्त ज्ञान अनुगत भइरहन्छ।

४७६. ऐहिकमप्यप्रस्तुतप्रतिबन्धे तद्दर्शनात् (अ.३पा.४अधि.१६ सू.५१)

फलोन्मुख विद्यासँग अविरुद्ध फल भएको कर्मबाट प्रतिबन्धको अभाव भएपछि यसै जन्ममा विद्याको उत्पत्ति हुन सक्तछ। तर प्रतिबन्ध विद्यमान रहेमा जन्मान्तरमा पनि विद्याको उत्पत्ति हुन सक्तछ। भन्ने कुरामा कुनै नियम छैन। किनभने 'गर्भ एवैतच्छयानो वामदेवो एवमुवाच' इत्यादि श्रुतिमा यसप्रकार अनियम देखिन्छ।

४७७. एवं मुक्तिफलानियमस्तदवस्थावधृतेस्तदवस्थावधृतेः (अ.३ पा.४ अधि.१७ सू.५२)

ब्रह्मसाक्षात्कारका समान मुक्तिफलमा पनि कुनै नियम छैन। अर्थात् यसै जन्ममा नै मोक्ष प्राप्ति हुन्छ भन्ने नियम छैन। किनभने 'ब्रह्मवेद ब्रह्मैव भवति' इत्यादि श्रुतिहरूमा साक्षात्कार पछि मोक्षावस्थाको अवधारण विद्यमान देखिन्छ। दुईपटक पदको उच्चारण अध्यायको परिसमाप्तिको परिसूचक हो।



ब्रह्मसूत्र

चतुर्थ अध्याय

प्रथम पाद

४७८. आवृत्तिरसकृदुपदेशात् (अ.४ पा.१ अधि.१ सू.१)

दुर्विज्ञेय आत्मसाक्षात्कार आवृत्तिविशिष्ट श्रवणादिबाट साध्य हुने भएको हुँदा श्रवणलाई बारम्बार आवृत्ति गर्नुपर्दछ। किन कि 'श्रोतव्यो मन्तव्यः' इत्यादि श्रुतिहरूबाट त्यसको बारम्बार उपदेश गरिएको छ। 'वेद' 'उपासीत' इत्यादिको श्रवणबाट उपास्यको साक्षात्काररूप फलको हेतुभूत उपासनाको आवृत्ति गर्नुपर्ने भनेर बुझ्नुपर्दछ।

४७९. लिङ्गाच्च (अ.४ पा.१ अधि.१ सू.२)

'रश्मींत्वं पर्यावर्तयात्' भन्ने यस श्रुति वाक्यले धेरै किरणहरूका उपासनाको विधान गर्दै ज्ञानको आवृत्ति देखाएको छ। यसकारण यस न्यायबाट साक्षात्कारका साधनहरूको आवृत्ति गर्नुपर्दछ।

४८०. आत्मेति तूपगच्छन्ति ग्राहयन्ति च (अ.४पा.१अधि.१ सू.३)

ब्रह्म आत्मा हो भनेर ध्यान गर्नुपर्दछ। किनभने जाबाल श्रुतिमा 'त्वं वा अहमस्मि' भनेर आत्मालाई ब्रह्मरूपबाट अङ्गीकार गरिएको छ र 'तत्त्वमसि' इत्यादि महावाक्यहरूको ज्ञान पनि गराइएको छ। 'मनो ब्रह्म' इत्यादि वाक्यहरू सरह 'तत्त्वमसि'लाई गौण मान्नु हुँदैन। प्रत्यक्षसँग विरोध पनि छैन। किनभने प्रत्यक्ष नै देखिने भएको हुँदा पारमार्थिक विषयमा संशय हुँदैन।

४८१. न प्रतीके नहि सः (अ.४ पा.१ अधि.३ सू.४)

प्रतीकोपासनामा अहङ्ग्रह गर्नुहुँदैन। किनभने के प्रतीकमा आत्मतत्त्वका अनुभवका बलबाट अहग्रह हुन्छ ? अथवा श्रुतिप्रपादित हुनाले या जीवदेखि अभिन्न हुनाले हुन्छ ? यी विकल्पहरूमा पहिलो विकल्प घट्न सक्तैन। किनभने उपासक आत्मरूपबाट प्रतीकको अनुभव गर्दैन। दोस्रो विकल्प पनि घट्न सक्तैन। किनभने त्यसको श्रवण छैन। तेस्रो विकल्प पनि मिल्ने देखिँदैन, किनभने प्रतीक स्वरूपतः ब्रह्मभन्दा अभिन्न हुन सक्तैन। अतः प्रतीकमा अहङ्ग्रह गर्नु नहुने कुरा सिद्ध हुन आउँछ।

४८२. ब्रह्मदृष्टिरुत्कर्षात् (अ.४ पा.१ अधि.४ सू.५)

प्रतीकमा नै ब्रह्मदृष्टि गर्नुपर्दछ। किन कि ब्रह्म उत्कृष्ट हो। निकृष्टमा उत्कृष्टदृष्टि गरेपछि निकृष्टमा उत्कृष्टता आउँछ। जस्तै मन्त्रीमा राजाको दृष्टि गर्नाले मन्त्रीको उत्कर्ष हुन्छ।

४८३. आदित्यादिमतयश्चाङ्ग उपपत्तेः (अ.४ पा.१ अधि.५ सू.६)

उद्गीथ आदि कर्माङ्गमा आदित्यादि मति गर्नु पर्दछ। किनभने यस्तो गर्दाखेरि कर्मसमृद्धिरूप फलको उपपत्ति हुन्छ।

४८४. आसीनः सम्भवात् (अ.४ पा.१ अधि.६ सू.७)

उपासना गर्दा बसेर नै गर्नुपर्दछ। हिँडेर उपासना गर्दा चित्तको विक्षेप हुन्छ। बसेर उपासना गर्दा निर्विघ्न उपासना सम्पादन हुन्छ।

४८५. ध्यानाच्च (अ.४ पा.१ अधि.६ सू.८)

उपासना पनि ध्यानरूप भएको हुँदा ध्यान गर्दा एक विषयमा केन्द्रित हुनुपर्ने हुन्छ। बसेरै ध्यान गर्ने बक आदिमा प्रसिद्धि छ। अतः बसेरै उपासना गर्नुपर्ने सिद्ध हुन्छ।

४८६. अचलत्वं चापेक्ष (अ.४ पा.१ अधि.६ सू.९)

'ध्यायतीव पृथिवी' इत्यादि श्रुतिमा पृथिवीको अचलताको अपेक्षा गरेर ध्यानको उपचार गरिएको छ। यसबाट बसेर नै उपासना गर्नुपर्ने कुरा थाहा हुन्छ।

४८७. स्मरन्ति च (अ.४ पा.१ अधि.६ सू.१०)

'शुचौ देशे प्रतिष्ठाप्य स्थिरमासनमात्मनः' इत्यादि गीताको वचन अनुसार पनि उपासनाका लागि शिष्ट जनहरू आसनको नै विधान गर्दछन्।

४८८.यत्रैकाग्रता तत्राविशेषात् (अ.४ पा.१ अधि.७ सू.११)

जुन ठाउँमा अर्थात् देश र कालमा मनको एकाग्रता हुन्छ, त्यस देशमा उपासना गर्नुपर्दछ। किनभने श्रुतिमा कहीँ पनि देशविशेषको श्रवण छैन।

४८९. आ प्रयणात्तत्रापि हि दृष्टम् (अ.४ पा.१ अधि.८ सू.१२)

मरणपर्यन्त उपासना गर्नुपर्दछ। किन कि 'स यावत् क्रतु.' इत्यादि श्रूतिबाट उपास्यका प्रत्ययको अनुवृत्ति देखिएको छ। अतः मरणपर्यन्त अहङ्ग्रहोपासना गर्नुपर्दछ। यही कुरा सिद्ध हुन्छ।

४९०. तदधिगम उत्तरपूर्वाधयोरश्लेषविनाशौ तद्व्यपदेशात् (अ.४ पा.१ अधि.९ सू.१३)

ब्रह्मसाक्षात्कार भएपछि उत्तर र पूर्व पापहरूको अश्लेष र विनाशसमेत हुन्छ। उत्तरार्ध भनेको ब्रह्मसाक्षात्कार भएपछिको पाप र पूर्वार्ध भनेको ब्रह्मसाक्षात्कार हुनुभन्दा पहिलेका पापहरू हुन्। यिनको अशलेष र नाशसमेत हुन्छ। किन कि 'यथा पुष्करपलाश' र 'तद्यथेषीकातूलमग्नौ' इत्यादि श्रुतिहरूबाट उत्तर र पूर्व पापहरूको अश्लेष र विनाशको समेत प्रतिपादन गरिएको छ।

४९१.इतरस्याप्येवमसंश्लेषः पाते तु (अ.४ पा.१ अधि.१० सू.१४)

पूर्व र उत्तर पुण्यको पनि पूर्व र उत्तर पापका सरह अश्लेष र विनाश हुन्छ।

ब्रह्मविद्का बन्धनका कारण पुण्य र पापको अभाव हुने भएपछि मुक्ति अवश्य नै हुन्छ।

४९२.अनारब्धकार्ये एव तु पूर्वे तदवधेः (अ.४पा.१ अधि.११ सू.१५)

जुन कर्मको फल शुरु भएको छैन त्यस्ता सञ्चित पुण्य र पापहरू ज्ञानबाट नष्ट हुन्छन् । किनभने 'तस्य तावदेव चिरम्' इत्यादि श्रुतिबाट देहविनाशरूप अवधिको पनि ज्ञान हुन्छ।

४९३. अग्निहोत्रादि तु तत्कार्यायैव तद्दर्शनात् (अ.४पा.१अधि.१२सू.१६)

अग्निहोत्रादि नित्यनैमित्तिक कर्महरू तत्त्वज्ञानसाध्यमोक्षरूप कार्यका लागि हुन् । किनभने यज्ञादिश्रुतिमा कर्महरूलाई ज्ञानका हेतुका रूपमा प्रतिपादन गरिएको छ।

४९४. अतोऽन्यापि ह्येकेषामुभयो (अ.४ पा.१ अधि.१२ सू.१७)

काण्वशाखामा वर्णित अग्निहोत्रादि कर्म स्वर्ग जाने साधनका रूपमा भएको कुरा आचार्य जैमिनि र बादरायण ठान्दछन् ।

४९५. यदेव विद्यते हि (अ.४ पा.१ अधि.१३ सू.१८)

अङ्गाश्रित उपासनासँग जुन कर्म सहकृत हुन्छ, त्यही कर्म नै यस जन्ममा ब्रह्मज्ञानको साधन हुन सक्तछ। किनभने 'यदेव विद्यया' इत्यादि श्रुतिहरू उपासना सहितको कर्मलाई नै ज्ञानको साधन मान्दछन् ।

४९६. भोगेन त्वितरे क्षपयित्वा सम्पद्यते (अ.४पा.१अधि.१४ सू.१९)

अरू अनारब्ध कर्म बाहेकका आरब्ध पुण्य र पापहरू भोगबाट नाश गरेपछिमात्रै ज्ञान प्राप्त हुन्छ।



## चतुर्थ अध्याय

## द्वितीय पाद

४९७. वाङ् मनसि दर्शनाच्छब्दाच्च (अ.४ पा.२ अधि.१ सू.१)

अन्तःकरण अर्थात् मनमा वाग्वृत्तिको लय हुन्छ। किनभने व्यवहारमा मनको वृत्ति विद्यमान रहँदा रहँदै पनि वाक्वृत्तिको लय भएको देखिन्छ। वृत्ति र वृत्तिमान्को अभेद विवक्षा भएको हुँदा यसबाट अर्थात् भावव्युत्पत्तिबाट वाक्शब्दलाई वृत्तिपरक मानिन्छ। अतः प्रयुक्त वाक्शब्दको अनुपपत्ति देखिँदैन।

४९८. अत एव सर्वाण्यनु (अ.४ पा.१ अधि.१ सू.२)

दर्शनादि हेतुबाट नै सम्पूर्ण चक्षु आदि इन्द्रियहरूको वृत्तिमात्रै वृत्तिविशिष्ट मनमा लय हुन्छ। इन्द्रियहरूको स्वरूपतः मनमा लय हुँदैन।

४९९. तन्मनः प्राण उत्तरात् (अ.४ पा.२ अधि.२ सू.३)

सम्पूर्ण इन्द्रियहरूका वृत्तिको लयस्थान त्यो मन पनि प्राणमा गएर वृत्तिद्वारा लीन हुन्छ। किनभने 'मनः प्राणे' भनेर श्रुतिले भनेको छ।

५००. सोऽध्यक्षे तदुपगमादिभ्यः (अ.४ पा.२ अधि.३ सू.४)

त्यो प्राण वृत्तिरहित भएर जीवमा रहन्छ। किनभने जीवमा प्राणको उपगम, अनुगम र अवस्थानसमेत सुनिन्छ। 'एवमेवेम-मात्मानम्.' यो उपगम हो। 'तमुत्क्रामन्तम्.' यो अनुगम हो। 'सविज्ञानो भवति.' यो अवस्थान हो। यिनै हेतुका कारणले प्राण जीवमा लीन हुन्छ।

५०१. भूतेषु तच्छ्रुतेः (अ.४ पा.२ अधि.३ सू.५)

तेज आदि देहारम्भक पाँच भूतहरूबाट उपहित जीवमा प्राणका वृत्तिहरूको लय हुन्छ। किनभने देहारम्भक पञ्चमहाभूतहरूबाट उपहित जीवमा त्यस पञ्चवृत्तियुक्त प्राणको लय हुने कुरा श्रुतिले पनि उद्घोष गरेको छ। जस्तै – 'प्राणस्तेजसि.' इत्यादि।

५०२. नैकस्मिन्दर्शयतो हि (अ.४ पा.२ अधि.३ सू.६)

उत्क्रमणकालमा एउटै तेजमामात्रै जीवको स्थिति रहँदैन, किन्तु देह पाञ्चभौतिक भएको कारण उसको अवस्थिति पाँच भूतमा नै रहन्छ। यो कुरा श्रुति र स्मृतिप्रतिपादित हो। किन कि तेजपदले श्रुतिस्मृति अनुसार पञ्चमहाभूतलाई जनाउँछ।

५०३. समाना चासृत्युपक्रमादमृतत्वं चानुपोष्य (अ.४पा.२अधि.४सू.७)

देवयानादि मार्गहरू शुरु हुनुभन्दा पहिलेसम्म विद्वान् र अविद्वान्को उत्क्रान्तिको स्थिति एकैनासको हुन्छ। किनभने सबैको उत्क्रान्ति 'वाङ् मनसि' क्रमले नै हुन्छ। सगुण

उपासकहरू अविद्या आदि क्लेशसमूको नाश नगरीकन देवयान मार्गगामी हुन सक्तैनन्। अर्थात् मोक्ष प्राप्त गर्न सक्तैनन्।

५०४. तदाऽपीते संसारव्यपदेशात् (अ.४ पा.२ अधि.५ सू.८)

माथि भनिएको तेज मोक्ष पर्यन्त रहन्छ। किनभने 'योनिमन्ये प्रपद्यन्ते शरीरत्वाय देहिनः' इत्यादि श्रुतिबाट संसारको कथन भएको छ।

५०५. सूक्ष्मं प्रमाणतश्च तथोपलब्धेः (अ.४ पा.२ अधि.५ सू.९)

उपर्युक्त तेज प्रमाणबाट र स्वरूपबाट पनि सूक्ष्म छ। किनभने नाडीद्वारा उत्क्रमण हुनेहुँदा सूक्ष्मत्वको प्रतीति हुन्छ।

५०६. नोपर्देनातः (अ.४ पा.४ अधि.५ सू.१०)

सूक्ष्म भएकै कारण नै स्थूलशरीरको नाश हुँदा पनि पूर्वोक्त सूक्ष्म शरीर अर्थात् तेजको उपमर्दन अर्थात् नाश हुँदैन।

५०७. अस्यैव चोपपत्तेरेष ऊष्मा (अ(४ पा.२ अधि.६ सू.११)

स्थूल शरीरमा प्रतीत हुने गर्मी त्यसै सूक्ष्म तेजको गर्मी हो। किनभने सूक्ष्म तेजको विद्यमानतामा नै त्यसको प्रतीति हुन्छ। त्यसको अभावमा भने प्रतीति हुन सक्तैन। यसमा अन्वय र व्यतिरेकात्मक युक्ति विद्यमान छ।

५०८. प्रतिषेधादिति चेन्न शारीरात् (अ.४ पा.२ अधि.६ सू.१२)

'न तस्य प्राणा उत्क्रामन्ति' इत्यादि श्रुतिबाट निर्गुण ब्रह्मवेत्ताको शरीरबाट प्राणको उत्क्रमणको प्रतिषेध भएको हुँदा ब्रह्मज्ञानीको उत्क्रमण हुँदैन भन्नु ठीक होइन। किन कि यो निषेध जीवसँग हो, शरीरसँग होइन।

५०९. स्पष्टो ह्येकेषाम् (अ.४ पा.२ अधि.६ सू.१३)

निश्चय नै काण्वशाखामा ब्रह्मविद्का प्राणले उत्क्रमणनगर्ने कुरा आएको छ। अतः ब्रह्मज्ञानीका प्राणहरूले शरीरबाट उत्क्रमण गर्दैनन् तर यहीँ नै लय हुन्छन्।

५१०.स्मर्यते च (अ.४ पा.२ अधि.६ सू.१४)

त्यसैगरेर 'सर्वभूतात्मभूतस्य सम्यग्भूतानि पश्यतः। देवापि मार्गे मुह्यन्तिअपदस्य पदैषिणः' इत्यादि महाभारतको वचन अनुसार विद्वान्का प्राणको उत्क्रान्तिको अभाव देखिन्छ।

५११. तानि परे तथा ह्याह (अ.४ पा.२ अधि.७ सू.१५)

माथि उल्लेख भएको प्राणनामक इन्द्रिय परब्रह्ममा लीन हुन्छ। किनभने यो कुरा 'एवमेवास्य' इत्यादि श्रुतिबाट ज्ञात हुन्छ।

५१२.अविभागो वचनात् (अ.४ पा.२ अधि.८ सू.१६)

ब्रह्मज्ञानीका कलाहरू ब्रह्मका साथ अत्यन्त एकात्मक छन्। किनभने कलाहरूको लय पछि 'भिद्येते तासां नामरूपे' 'स एषोऽकलोऽमृतो भवति' भनेर श्रुतिमा आएको छ।

५१३.तदोकोग्रज्वलनं तत्प्रकाशितद्वारो विद्यासामर्थ्यात्तच्छेषगत्यनुस्मृतियोगाच्च हार्दानुगृहीतः शताधिकया (अ.४ पा.२ अधि.९ सू.१७)

जसका वाग् आदि इन्द्रियहरू लीन भएका छन्, त्यस्ता जीवका हृदयको ऊर्ध्वभागको विकास पहिले हुन्छ। यस परिस्थितिमा विद्वान्को प्राण मूर्धास्थानबाट र अविद्वान्को प्राण अरू मार्गबाट निस्कन्छ। अतः सारांशमा हार्दब्रह्मबाट अनुगृहीत विद्वान् हृदयबाट निस्किएका एकसय एक नाडी मध्ये मूर्धास्थानमा गएको मुख्य एक नाडीबाट उत्क्रमण गर्दछ। अरू नाडीहरू अविद्वान्का उत्क्रमणका लागि हुन्।

५१४. रश्म्यनुसारी (अ.४ पा.२ अधि.१० सू.१८)

सुषुम्ना नाडीद्वारा शरीरबाट बाहिर निस्किएको जीव नाडीसँग सम्बद्ध सूर्यका किरणहरूको अवलम्बन गर्दै ब्रह्मलोक जान्छ।

५१५. निशि नेति चेन्न सम्बन्धस्य यावद्देहभावित्वाद्दर्शयति (अ.४ पा.२ अधि.११ सू.१९)

दिनमा मृत्यु भएको जीवमात्रै सूर्यकिरणावलम्बी हुन्छ, रातमा हुँदैन, किनभने किरणको सम्बन्ध दिनमा मात्रै हुन्छ। रातमा मर्ने रश्म्यनुसारी हुँदैन भनेर शङ्का गर्नु ठीक होइन। किनभने किरण र नाडीको सम्बन्ध दिनरात नै रहन्छ। यसै कुरालाई श्रुतिले पनि प्रतिपादन गरेको छ। जस्तै 'अमुष्मादादित्यात्.' आदि।

५१६.अतश्चायनेऽपि दक्षिणे (अ.४ पा.२ अधि.११ सू.२०)

धेरै लामू समय प्रतीक्षाको अवकाश नहुने र विद्याका फलको नित्य सम्बन्ध रहने हुँदा दक्षिणायनमा मृत व्यक्तिले पनि उत्तरायणकै सरह फल प्राप्त गर्दछ। दक्षिणायनको अप्राशस्त्य अविद्वान्का लागि हो, विद्वान्का लागि होइन। किनभने भीष्म पिताम्महले उत्तरायणको प्रतीक्षा गरेका शिष्टाचारको परिपालन गर्न र आफ्ना पिताबाट प्राप्त वरदान अनुसारको स्वेच्छामरणको ख्यातिको लागि पनि हो भन्ने बुझ्नु पर्दछ।

५१७.योगिनः प्रति च स्मर्यते स्मार्ते चैते (अ.४पा.२अधि.११सू.२१)

दिन आदि कालको नियम स्मार्तोपासकका लागि हो, श्रौतोपासकका लागि होइन। किनभने साङ्ख्य र योगका बारेमा स्मृतिमा कथन छ। यसैकारण यिनलाई स्मार्त भनिन्छ। तर दहरादिका उपासकलाई स्मार्त भनिँदैन। अतः श्रुति र स्मृतिमा अर्थ भेद हुनाले श्रौतोपासनामा कालको नियम छैन। यसै उसले जुनसुकै समयमा मरेको विद्वान्ले विद्याफल प्राप्त गर्दछ, उसलाई कालको नियम लाग्दैछ।



## चतुर्थ अध्याय
## तृतीय पाद

५१८.अर्चिरादिनात्प्रथितेः (अ.४ पा.३ अधि.१ सू.१)

ब्रह्मलोकको अभिलाषा गर्नेहरू सबै अर्चिरादि मार्गबाटै जान्छन् । किनभने पञ्चाग्निविद्याका प्रकरणमा पञ्चाग्निका उपासकका सरह सगुणब्रह्मोपासकका लागि पनि उक्त अर्चिरादिमार्गको प्राशस्त्य देखिन्छ।

५१९.वायुमब्दादविशेषविशेषाभ्याम् (अ.४ पा.३ अधि.२ सू.२)

संवत्सरपछि आदित्य लोकभन्दा पहिले जीव वायुलोकमा प्रवेश गर्दछ। किनभने कौषीतकी उपनिषद्मा सामान्यरूपमा वायुको उल्लेख छ । यसको कुनैबाट पछि वा पहिले भन्ने छैन । बृहदारण्यकोपनिषद्मा 'यदा वै पुरुषः' इत्यादिमा आदित्यका अपेक्षाबाट वायुको पूर्वत्व प्रतीत हुन्छ।

५२०. तडितोऽधि वरुणः सम्बन्धात् (अ.४ पा.३ अधि.३ सू.३)

विद्युत्लोकभन्दा माथि वरुणलोकको सम्बन्ध छ। किनभने संवत्सरबाट वरुणको विद्युत्का साथ सम्बन्ध देखिन्छ।

५२१.आतिवाहिकास्तल्लिङ्गात् (अ.४ पा.३ अधि.४ सू.४)

ती आर्चिरादि कार्यब्रह्मतिर जानेहरूका लागि आतिबाहक हुन् । किनभने ' अमानवः स एतान् ब्रह्म गमयति' भनेर उपासकहरूको गमनको श्रवण गरिएको छ।

५२२. उभयव्यामोहात्तत्सिद्धेः (अ.४ पा.३ अधि.४ सू.५)

मार्ग र गन्ता दुवै नै अज्ञ हुनाले गति हुन सक्तैन। किनभने जो स्वयं प्रयत्नशून्य छ, त्यसलाई चेतनले लिएर जान्छ भन्ने सिद्धान्त अनुसार नेतृत्व सिद्ध हुन्छ।

५२३. वैद्युतेनैव ततस्तच्छ्रुतेः (अ.४ पा.३ अधि. सू.६)

विद्युत्लोकमा पुगेको जीव अमानव पुरुषद्वारा नै त्यहाँबाट माथि लगेँदै कार्यब्रह्म अर्थात् ब्रह्मलोकमा पुग्छ । किनभने 'तान् वैद्युतात् पुरुषोऽमानवः स एत्य ब्रह्मलोकं गमयति' इत्यादि श्रुतिबाट सो कुरा थाहा हुन्छ।

५२४. कार्यं बदरिरस्य गत्युपपत्तेः (अ.४ पा.३ अधि.५ सू.७)

'स एनान् ब्रह्मगमयति' भन्ने यस श्रुतिमा गन्तव्यरूपबाट कार्य ब्रह्मलाई नै लिइएको छ। व्यापक निर्गुण ब्रह्मलाई लिइएको छैन। किनभने गति आदिको उपपत्ति परिच्छिन्न कार्यब्रह्ममा नै हुन सक्तछ। सर्वविधिक्रियाशून्य व्यापक ब्रह्ममा गति आदिको उपपत्ति हुन सक्तैन। अतः श्रुतिमा कार्यब्रह्मको मात्रै विवक्षा छ।

५२५. विशेषितत्वाच्च (अ.४ पा.३ अधि.५ सू.८)

त्यस्तै 'ब्रह्मलोकान् गमयति' भनेर अरू श्रुतिमा पनि बहुवचनद्वारा गन्तव्य ब्रह्मलाई नै विशेषणद्वारा विशेषित गरिएको हुँदा परब्रह्म गन्तव्य नभएर कार्यब्रह्म नै गन्तव्य भएको कुरा सिद्ध हुन्छ।

५२६. सामीप्यात्तु तद्व्यपदेशः (अ.४ पा.३ अधि.५ सू.९)

कार्यब्रह्म कारणब्रह्मका सन्निधिमा छ। अतः कारणमा रहेको मुख्य ब्रह्मशब्द लक्षणाद्वारा कार्यब्रह्ममा प्रयोग गरिएको हो।

५२७. कार्यात्यये तदध्यक्षेण सहातः परमभिधानात् (अ.४ पा.३ अधि.५ सू.१०)

कार्यब्रह्मको लोक विनाश भएपछि हिरण्यगर्भका साथसाथै जीवले परब्रह्मलाई प्राप्त गर्दछ। किनभने 'उत्पन्नात्मसाक्षात्कार विद्वांसः' भनेर श्रुतिले भनेको छ।

५२८.स्मृतेश्च (अ.४ पा.३ अधि.५ सू.११)

'ब्रह्मणा सह ते सर्वे सम्प्राप्ते प्रतिसञ्चरे। परस्यान्ते कृतात्मानः प्रविशन्ति परं पदम् ॥' इत्यादि स्मृतिबाट पनि कार्यब्रह्मलोकमा गएको जीवात्मा क्रममुक्तिमा प्राप्त हुने कुरा सिद्ध हुन्छ।

५२९. परं जैमिनिर्मुख्यत्वात् (अ.४ पा.३ अधि.५ सू.१२)

आचार्य जैमिनिका मतमा परब्रह्म नै गन्तव्य हो, कार्य ब्रह्म होइन। किनभने ब्रह्मशब्दको मुख्यवृत्ति व्यापक परब्रह्ममा नै छ, कार्यब्रह्ममा छैन।

५३०. दर्शनाच्च (अ.४ पा.३ अधि.५ सू.१३)

'तयोर्ध्वमायन्नमृतत्वमेति' इत्यादिमा गतिपूर्वक मुक्ति सुनिएको छ। यसबाट पनि गन्तव्यरूपबाट परब्रह्मलाई नै लिनुपर्दछ।

५३१. न च कार्ये प्रतिपत्त्यभिसन्धि (अ.४ पा.३ अधि.५ सू.१४)

'प्रजापतेः सभां वेश्म प्रपद्ये' यो गृहप्राप्तिरूप सङ्कल्प हो। त्यो कार्यब्रह्मपरक हुन सक्तैन। किनभने 'ते यदन्तरा' भन्ने वाक्यबाट यो थाहा हुन्छ। यो भनाइ आचार्य जैमिनिको हो। यो ठीक होइन। वाक्य र श्रुति प्रमाणबाट दुर्बल प्रकरणको बाध हुने हुँदा वेश्मप्राप्तिरूप सङ्कल्प कार्यब्रह्म विषयक हो। अतः कार्यब्रह्म नै गन्तव्य हो, परब्रह्म गन्तव्य होइन भन्ने कुरा सिद्ध हुन्छ।

५३२.अप्रतीकालम्बनान्नयतीति बादरायण उभयथादोषात्तत्क्रतुश्च (अ.४ पा.३ अधि.६ सू.१५)

आचार्य बादरायणका मतमा अप्रतीकोपासकलाई नै अमानव पुरुष ब्रह्मलोक लिएर जान्छ भन्ने कुरामा पनि केही शङ्का उठेको छ, तर त्यो शङ्का ठीक होइन। किनभने

केही उपासकलाई लिएर जान्छ र केहीलाई लिएर जाँदैन भनेर मान्दा पनि कुनै दोष देखिँदैन। यसको कारण हो, जसले जसको उपासना गर्दछ, त्यसले त्यही प्राप्त गर्दछ। अतः जो ब्रह्म ऋतु हुन्छ त्यसले ब्रह्मप्राप्ति गर्दछ। तर प्रतीकोपासनामा चाहिँ प्रतीक नै प्रधान हुन्छ। यसकारण पनि प्रतीकोपासक ब्रह्मलोक जान सक्तैन।

५३३. विशेषं च दर्शयति (अ.४ पा.३ अधि.६ सू.१६)

'यावन्नाम्नो गतं तत्रास्य यथाकामचारो भवति' भन्ने श्रुतिबाट प्रतीकोपासनाको फलभन्दा पनि वागादिका उपासनाको फल उत्कृष्ट देखाइएको छ। यसलाई 'वाग्वाव भूयसी' इत्यादि मन्त्रद्वारा प्रतिपादन गरिएको छ। यो कुरा विशेष प्रतीकोपासनामा मात्रै हुन सक्तछ, एकात्मक ब्रह्ममा हुन सक्तैन। अतः ब्रह्मोपासक नै ब्रह्मलोकमा जान्छ।



## चतुर्थ अध्याय
## चतुर्थ पाद

५३४. सम्पद्याविर्भावः स्वेनशब्दात् (अ.४ पा.४ अधि.१ सू.१)

प्रकाशस्वरूप आत्माको प्रत्यक्ष अनुभव गरेर अर्थात् साक्षात्कार गरेर त्यसै आत्मरूपबाट ब्रह्मज्ञानी आविर्भूत हुन्छ । किनभने 'स्वेनरूपेण' इत्यादि श्रुतिमा स्वशब्दको पाठ आएको छ।

५३५. मुक्तः प्रतिज्ञानात् (अ.४ पा.४ अधि.१ सू.२)

मुक्तिप्राप्त पुरुष पूर्ण आनन्दरूपबाट अवस्थित हुन्छ । किनभने 'एतं त्वेव ते' इत्यादि श्रुतिहरूले सम्पूर्ण अनर्थबाट मुक्त आनन्दस्वरूप आत्माको व्याख्येयरूपबाट प्रतिज्ञा गरेका छन् ।

५३६. आत्मा प्रकरणात् (अ.४ पा.४ अधि.१ सू.३)

ज्योतिः शब्दबाट आत्माको नै ग्रहण हुन्छ । किनकि 'य आत्मा अपहत पाप्मा' इत्यादि श्रुति अनुसार यो आत्माको नै प्रकरण भएको हुँदा पनि यस्तो अर्थ आएको हो।

५३७. अविभागेन दृष्टत्वात् (अ.४ पा.४ अधि.२ सू.४)

मुक्त जीव निरतिशयानन्द ब्रह्मरूपले अवस्थित हुन्छ । किनभने 'ब्रह्मैव सन् ब्रह्माप्येति' 'तत्त्वमसि' इत्यादि श्रुतिहरूले जीव र ब्रह्मको अभेदत्वेन वर्णन गरेको छ।

५३८. ब्राह्मेण जैमिनिरुपन्यासादिभ्यः (अ.४ पा.४ अधि.३ सू.५)

आचार्य जैमिनिका मतमा जीव सर्वज्ञत्व आदि सत्यधर्महरूबाट संयुक्त नै रहन्छ। किनभने यसका हेतु उपन्यास, विधि र व्यपदेश आदि छन् । किनभने 'सोऽन्वेष्टव्यः' यो विधानका लागि आएको 'य आत्मा' उपन्यास हो, 'तस्य सर्वेषु लोकेषु' विधि हो र ' यः सर्वज्ञः' व्यपदेश हो । अतः यी हेतुहरूबाट मुक्त पुरुष सर्वज्ञत्व आदि धर्महरूबाट युक्त हुन्छ।

५३९. चितितन्मात्रेण तदात्मकत्वादित्यौडुलोमिः (अ.४ पा.४ अधि.३ सू.६)

जीवको चैतन्यस्वरूप हुनाले चैतन्यरूपबाट अवस्थित ब्रह्ममा सर्वज्ञत्व आदि शब्दहरू व्यर्थमा नै प्रयुक्त हुन्छन् भनेर आचार्य औडुलोमि भन्दछन् ।

५४०. एवमप्युपन्यासात् पूर्वभावादविरोधं बादरायणः (अ.४ पा.४ अधि.३ सू.७)

पारमार्थिकरूपमा चैतन्यमात्र स्वरूपलाई स्वीकार गरिसकेपछि पनि पूर्वोक्त उपन्यास आदि हेतुहरू ब्रह्ममा स्वीकार गरिन्छ । किनभने ब्रह्मका सर्वज्ञत्व आदि व्यावहारिक गुण वा धर्महरू भएका हुँदा मुक्त आत्मालाई सप्रपञ्च र निष्प्रपञ्च आदिले

कुनै फरक पार्दैन। यो मत आचार्य बादरायणको हो।

५४१. सङ्कल्पादेव तु तच्छ्रुतेः (अ.४ पा.४ अधि.४ सू.८)

ब्रह्मज्ञानीका सङ्कल्पबाट नै पितृ आदि लोकहरू प्राप्त हुन्छन् । किनभने 'सङ्कल्पादेवास्य पितरः' भन्ने श्रुति अनुसार अरू प्रयत्न विना सत्य सङ्कल्पबाट नै ब्रह्मज्ञानीले सबै लोक प्राप्त गर्दछ।

५४२. अत एव चाऽनन्याधिपतिः (अ.४ पा.४ अधि.४ सू.९)

ब्रह्मज्ञानीको अधिपति अर्थात् स्वामी अर्को कोही पनि हुँदैन । यदि भएमा अधीनमा बस्नुपर्ने हुनआउँछ। अतः सर्वेसर्वा भएको हुँदा विद्वान् अर्थात् ब्रह्मज्ञानीले सङ्कल्पबाटै सम्पूर्ण ऐश्वर्यहरू प्राप्त गर्दछ।

५४३. अभावं बादरिराह ह्येवम् (अ.४ पा.४ अधि.५ सू.१०)

आचार्य बादरिका मतमा विद्वान् ब्रह्मज्ञानीका शरीर, इन्द्रिय आदि केही पनि हुँदैनन् । किनभने 'मनसैतान् कामान् पश्यन् रमते' भनेर श्रुतिले शरीर आदि सबैको अभाव हुने केवल मन रहने भनेको छ।

५४४. भावं जैमिनिर्विकल्पामननात् (अ.४ पा.४ अधि.५ सू.११)

आचार्य जैमिनिका मतमा मनकै सरह शरीर, इन्द्रिय आदि पनि विद्वान्का हुन्छन्। किनभने 'स एकधा भवति त्रिधा भवति' इत्यादि श्रुतिहरूबाट अनेक प्रकारका भाव अर्थात् विकल्पहरू देखिन्छन्।

५४५. द्वादशाहवदुभयविधं बादरायणोऽतः (अ.४पा.४अधि.५ सू.१२)

जसरी द्वादशाह क्रतु यजतिचोदनाको र एककर्तृकत्वचोदनाका दर्शनबाट अहीन अवगत हुन्छ। उपायनचोदनाको, उपसदनचोदनाको र अनेककर्तृकत्वचोदनाको दर्शनबाट सूत्रको पनि ज्ञान हुन्छ । त्यसरी नै ब्रह्मलोकमा पुगेका उपासकहरूको शरीर आदिको अभाव र भाव दुवै हुने कुरा थाहा हुन्छ। अर्को शब्दमा भन्ने हो भने ब्रह्मलोकमा पुगेका उपासक आदिका अशरीरत्वका सङ्कल्पले उनीहरूको अशरीरत्व हुन्छ र सशरीरत्वका सङ्कल्पले उनीहरूको सशरीरत्व पनि हुन्छ। यो मत आचार्य बादरायणको हो।

५४६. तन्वभावे सन्ध्यवदुपपत्तेः (अ.४ पा.४ अधि.५ सू.१३)

इन्द्रियविशिष्ट शरीरको अभाव भएपछि जसरी सपनामा मानसिक विषयभोग गरिन्छ, जुन जाग्रद् अवस्थाभन्दा विलक्षण हुन्छ। त्यसैगरेर मोक्षावस्थामा पनि हुन्छ। किनभने 'मनसैतान्' इत्यादि श्रुतिको यसैप्रकारको उपपत्ति छ।

५४७. भावे जाग्रद्वत् (अ.४ पा.४ अधि.५ सू.१४)

जसरी जाग्रत् अवस्थामा शरीर, इन्द्रिय र विषयसमेत रहेमा पितृ आदि

काम्यभोगसाधन स्थूलरूपमा नै प्राप्त हुन सक्तछन् । त्यसैगरेर ब्रह्मलोकमा पुगेका उपासक आदिका इन्द्रियसहित शरीरको भाव भएमा नै उनीहरूका पितृप्रभृति काम्यभोगसाधनहरू स्थूलरूपमा नै प्राप्त हुन सक्तछन् । अतः शरीरको सत्तापक्ष पनि उपपन्न नै देखिन्छ भनेर आचार्य बादरायणले व्याख्या गरेका छन् ।

५४८. प्रदीपवदावेशस्तथा हि दर्शयति (अ.४ पा.४ अधि.६ सू.१५)

विद्वान्‌को अभिव्यक्ति प्रदीपका सरह हुन्छ । जस्तै एउटै दीप अनेक बत्तीहरूमा प्रवेश गर्दछ । त्यस्तै विद्वान् अनेकौं अन्तःकरणद्वारा अनेकौं देहहरूमा प्रवेश गर्दछ । किनभने विद्वान् 'स एकधा भवति भवति पञ्चधा भवति सप्तधा भवति' भनेर श्रुतिले प्रतिपादन गरेको छ ।

५४९. स्वाप्ययसम्पत्त्योरन्यतरापेक्षमाविष्कृतं हि (अ.४ पा.४ अधि.६ सू.१६)

सुषुप्ति र मुक्तिमा एउटै कुराको फरक छ, त्यो हो सुषुप्तिमा विशेष ज्ञानको अर्थात् प्रपञ्चको अभाव हुन्छ, किनभने 'ततोऽन्यत्' इत्यादि श्रुतिले बताएको छ । अतः सगुणोपासकले शरीरको कामना गर्नुमा कुनै आश्चर्य छैन, अथवा कुनै बाधा छैन ।

५५०. जगद्व्यापारवर्जं प्रकरणादसन्निहितत्वाच्च (अ.४ पा.४ अधि.७ सू.१७)

जगत्‌को उत्पत्ति, स्थिति र प्रलयको काम बाहेक अरू ऐश्वर्य अर्थात् शक्ति मुक्तपुरुषमा पनि हुन्छ । किनभने सृष्टिप्रकरणमा ईश्वरको मात्र कथन छ जीवको छैन । अतः सृष्टि आदि काम बाहेक अरू ऐश्वर्यहरू मुक्तात्मामा पनि रहन्छन् ।

५५१. प्रत्यक्षोपदेशादिति चेन्नाधिकारिकमण्डलस्थोक्तेः (अ.४ पा.४ अधि.७ सू.१८)

यदि कसैले 'आप्नोति स्वाराज्यम्' इत्यादि श्रुतिबाट विद्वान्‌को निरङ्कुश ऐश्वर्य हुने कुरा सुनिन्छभनेर शङ्का गर्दछ भने त्यो ठीक होइन । किनभने आधिकारिक मण्डलमा अवस्थित परमेश्वरमा मात्रै यो स्वाराज्य प्राप्तिको शक्ति रहन्छ । श्रुतिको प्रकरण अनुसार यही अर्थ निष्पन्न हुन्छ । तर विद्वान्‌मा पनि अतिशय शक्ति हुने कुरा भने यसबाट ज्ञात हुन्छ ।

५५२. विकारावर्ति च तथा हि स्थितिमाह (अ.४पा.४अधि.७ सू.१९)

सगुण ब्रह्ममा पनि ब्रह्मको निर्गुणरूप हुन्छ । किनभने ब्रह्ममा सगुणत्व र निर्गुणत्वको अवस्थिति 'तावानस्य महिमा' इत्यादि श्रुतिबाट थाहा हुन्छ । सगुण उपासकले सगुण ब्रह्ममा विद्यमान निर्गुणरूपलाई जान्न सक्तैन, किनभने उपासकमा त्यसको ज्ञान हुँदैन । उसले त्यसैगरेर सगुण ब्रह्ममा रहेको जगत् उत्पत्यादि गुणहरूलाई पनि प्राप्त गर्न सक्तैन, किनभने उसले त्यस कुराको उपासना नै गरेको हुँदैन । यो उपासनाको अभाव श्रुतिमा नभएर नै हो ।

५५३. दर्शयतश्चैवं प्रत्यक्षानुमाने (अ.४ पा.४ अधि.७ सू.२०)

त्यसैगरेर 'न तत्र सूर्यो भाति' इत्यादि श्रुति र 'न तद्भासयते' इत्यादि स्मृतिले समेत ब्रह्मको निर्गुणरूपको वर्णन गरेका छन् ।

५५४. भोगमात्रसाम्यलिङ्गाच्च (अ.४ पा.४ अधि.७ सू.२१)

परमेश्वर र विद्वान्‌को साम्यता भोगमा सुनिन्छ, जगत्‌को व्यापारमा भने होइन । किनभने 'आपो वै खलु' इत्यादि श्रुतिमा यस्तो साम्यता स्पष्ट देखिन्छ । अतः साम्य लिङ्गबाट विद्वान्‌को ऐश्वर्य सातिशय भएको प्रतीत हुन्छ ।

५५५.अनावृत्तिः शब्दादनावृत्तिः शब्दात् (अ.४पा.४अधि.७ सू.२२)

मुक्तात्माहरूको पुनरावृत्ति हुँदैन, अर्थात् फेरि फर्केर आउँदैनन् । किनभने 'न च पुनरावर्तते' भनेर श्रुतिको उद्घोष छ । यहाँ सूत्रको आवृत्ति ग्रन्थ-परिसमाप्तिसूचक हो ।

इति ब्रह्मसूत्रार्थ



अनुसूची (ख)

# ब्रह्मसूत्रसार

महर्षिकृष्णद्वैपायन बादरायणद्वारा विरचित ब्रह्मसूत्र अन्य दर्शनहरूभन्दा श्रेष्ठ दर्शन मानिएको छ। यसमा सरल र सूत्रात्मकरूपमा परब्रह्मको स्वरूप, परब्रह्मप्राप्तिका साधन, परब्रह्मको उपासना र ब्रह्मविज्ञानका फलका विषयमा विवेचन गरिएको छ। 'सूचनात् सूत्रमित्याहुः' यस भनाइअनुसार यो ग्रन्थ परब्रह्मको सूचक भएकाले ब्रह्मसूत्रको नामबाट विख्यात भएको छ र अन्वर्थ छ। ऋग् आदि वेदहरूको अन्तिम सिद्धान्तको दर्शन गराउने हुनाले यसलाई वेदान्तदर्शन पनि भनिन्छ। यस दर्शनका मूल आधार उपनिषद्हरू नै हुन्। वस्तुतः 'ब्रह्मसूत्र' का सूत्रहरूले उपनिषद्वाक्यहरूको यथार्थ अभिप्रायलाई व्यक्त गर्दछन्।

उपनिषत् प्रतिपाद्य अद्वैत ब्रह्म निर्दोष र सप्रयोजन भएकाले 'सत्यम्, शिवम् र सुन्दरम्' को रूपमा सम्मानित छ। वेदान्तप्रमाणद्वारा ज्ञेय ब्रह्म अनन्यलभ्य छ। ' अध्यारोपापवादाभ्यां निष्प्रपञ्चं प्रपञ्च्यते' यो वेदान्तन्याय हो। अज्ञानद्वारा अधिष्ठान ब्रह्ममा द्वैतप्रपञ्चको अध्यारोप गरिएको हुन्छ, अर्थात् मूर्खहरू निष्प्रपञ्च, शुद्ध ब्रह्मलाई सप्रपञ्च देख्दछन्, तर बुद्धिमानूहरू त्यसै ब्रह्मलाई अपवादद्वारा निष्प्रपञ्च अद्वय ब्रह्मका रूपमा दर्शन गर्दछन्। यो ब्रह्माद्वैत कुनै प्रमाणबाट पनि बाधित हुँदैन, ब्रह्मसाक्षात्कारको अवस्थामा कुनै पनि बाधकारण उपस्थित हुँदैनन्। स्वतः प्रमाणभूत उपनिषद्हरूद्वारा विदित हुने हुनाले ब्रह्म निर्दोष हो। ब्रह्मसाक्षात्कारपछि सम्पूर्ण दुःखहरूको अत्यन्त निवृत्ति हुने हुनाले परमानन्दको प्राप्तिरूप प्रयोजनको सिद्धि हुन्छ। अतः ब्रह्मलाई आनन्दरूप सप्रयोजन पनि भनिन्छ। वेदान्तदर्शनद्वारा नै मानवजीवनबाट प्राप्त हुन सक्ने सर्वोत्तम आनन्दरूप ब्रह्मतत्त्वको प्राप्ति हुने हुँदा यसलाई 'दर्शनीयतमं दर्शनम्' पनि भनिन्छ। लोकहितैषी भगवान् वेदव्यासद्वारा १९१ अधिकरण र ५५५ सूत्रमा गुम्फित यस महान् कृतिको सार्वकालिक र सार्वदेशिक महत्ता र उपादेयतालाई विश्वका मनस्वी चिन्तकहरूले स्वीकार गरेका छन्।

ब्रह्मसूत्रको अर्को नाम उत्तरमीमांसा पनि हो। महर्षि जैमिनिले बनाएको पूर्वमीमांसादर्शनले वेदको पूर्वभागमा निर्दिष्ट कर्मकाण्डको प्रतिपादन गर्दछ। यो ब्रह्मसूत्र वेदको उत्तरभागमा प्रतिपादित ज्ञानकाण्डको प्रतिपादक भएकाले उत्तरमीमांसाको नामबाट प्रख्यात छ। अद्वय ब्रह्मलाई विचारद्वारा अनुभव गरेपछि ज्ञातव्य केही पनि बाँकी रहँदैन, भनिएको पनि छ – 'यज्ज्ञात्वा नेह भूयोऽन्यद् ज्ञातव्यमवशिष्यते'[१]। त्यसकारण उत्तरमीमांसाद्वारा ज्ञातव्यब्रह्म अन्तिम ज्ञातव्य हो भने ब्रह्मको प्रतिपादक उत्तरमीमांसा

१. श्रीमद्भगवद्गीता ७।२

पनि अन्तिम दर्शन हो। वेदको उत्तरभाग उपनिषद् श्रुतिको मीमांसा अर्थात् पूजित विचार हुनाले पनि ब्रह्मसूत्र उत्तरमीमांसाशब्दबाट संबोधित हुन्छ। श्रीमद्भगवद्गीतामा 'ब्रह्मसूत्रपदैश्चैव हेतुमद्भिर्विनिश्चितैः'[२] भनेर ब्रह्मसूत्रको उल्लेख गरिएकाले पनि यस दर्शनको प्राचीनता प्रमाणित हुन्छ। बादरायणमुनि यो नाम पौराणिककालदेखि नै वेदव्यासका लागि प्रयुक्त हुँदै आएको छ। यो ब्रह्मसूत्र उनै बादरायण अथवा वेदव्यासको रचना हो।

ब्रह्मसूत्रकारले यस ग्रन्थलाई ४ अध्याय र १६ पादहरूमा विभक्त गरेका छन्। यसको पहिलो अध्यायमा सबै वेदान्तवाक्यहरूको एकमात्र अद्वय प्रत्यगात्मा ब्रह्मको प्रतिपादनमा अन्वय भएको छ यसैले त्यसको नाम समन्वयाध्याय हो। प्रथम अध्यायको प्रथमपादमा स्पष्ट ब्रह्मज्ञापक श्रुतिवाक्यहरूको विचार गरिएको छ। द्वितीय र तृतीय पादहरूमा अस्पष्ट ब्रह्मज्ञापक श्रुतिवाक्यहरूको मीमांसा गरिएको छ। प्रकारान्तरले भन्ने हो भने द्वितीय पादमा उपास्य ब्रह्म र तृतीयपादमा ज्ञेय ब्रह्मका विषयमा विचार गरिएको छ। चतुर्थपादमा अज अव्यक्त आदि संदिग्ध पदहरूको तात्पर्य विषयमा ऊहापोह गरिएको छ।

ब्रह्मसूत्रको द्वितीय अध्यायमा सबै प्रकारका विरोधाभासहरूको निराकरण गरिएको छ। अत एव यसको नाम अविरोधाध्याय रहेको छ। तृतीय अध्यायको नाम साधनाध्याय हो, यसमा तत् र त्वं पदार्थको शोधन बारे विचार गरी जीव एवं ब्रह्मको स्वरूपनिर्देश गरिएको छ। यसमा यज्ञादि बहिरङ्ग साधन एवं शम, दम, निदिध्यासन आदि अन्तरङ्ग साधनहरूको प्रतिपादन गरिएको छ। साथै यसमा चित्तको स्थिरता एवं ब्रह्मविद्याप्राप्तिका लागि आवश्यक विभिन्न उपासनाहरूको निरूपण गरिएको छ। चतुर्थ अध्यायको नाम फलाध्याय हो। यसमा जीवन्मुक्ति, विदेहमुक्ति, जीवोत्क्रान्ति, पितृयान, देवयान, सगुण उपासना, निर्गुण उपासना र तिनको तारतम्य बारे विचार गरिएको छ।

[३]प्रत्यक्ष दृश्यमान जड चेतनात्मक जगत्को निमित्तकारण र उपादानकारण ब्रह्म नै हो। सर्वशक्तिमान् परब्रह्म परमेश्वरका दुई प्रकृति छन् परारूप चेतन जीवसमुदाय र अपरारूप परिवर्तनशील जडवर्ग। यी दुवै ब्रह्मका शक्तिरूप हुन् र ब्रह्मभन्दा भिन्न होइनन्। ब्रह्म ती शक्तिको आश्रय हुनाले तीभन्दा भिन्न पनि हो। परब्रह्म ती दुवैभन्दा विलक्षण र उत्तम हो।[४] परब्रह्मले ती दुवै शक्तिलाई साथ लिएर सृष्टिकालमा जगत्को

---

२. श्रीमद्भगवद्गीता १३।४

३. जन्माद्यस्य यतः। – ब्र.सू. १।१।२

४. प्रकाशाश्रयवद्वा तेजस्त्वात्। – ब्र.सू. ३।२।२८, अधिकन्तु भेदनिर्देशात्– ब्र.सू. २।१।२२, परमतः सेतून्मानसम्बन्धभेदव्यपदेशेभ्यः। – ब्र.सू. ३।२।३१

रचना गर्दछ र प्रलयकालमा दुवैलाई आफूमा विलीन गराउँछ ।[५] परब्रह्म परमात्मा शब्दस्पर्शादिरहित निर्विशेष, निर्गुण एवं निराकार हो र अनन्त कल्याणमय गुणसमुदायले सम्पन्न एवं साकार पनि हो । परमात्माका यी दुवै रूप स्वाभाविक र सत्य हुन् ।[६] परमेश्वर कर्मफलको व्यवस्था गर्ने सबैका नियन्ता र स्वामी पनि हुन् ।[७] जीव नित्य हो त्यसको जन्म र मरण शरीरको सम्बन्धका कारण औपचारिक हो ।[८] जीवको एक शरीरबाट अन्य शरीरमा र लोकान्तरमा समेत जाने काम शरीरको सम्बन्धका कारण भएको हो । त्यो ब्रह्मलोकमा पनि सूक्ष्म शरीरको सम्बन्धबाट मात्र जान्छ ।[९] दिव्यस्वरूपले सम्पन्न हुन्छ र त्यसको प्राकृत शरीरसँग सम्बन्ध रहँदैन । त्यो उसको निर्बन्ध मुक्तावस्था हो ।[१०] कार्यब्रह्मको लोकमा प्राप्त हुने ज्ञानीले सङ्कल्पमात्रले त्यहाँका भोग भोग्दछ ।[११]

देवयानमार्गबाट ब्रह्मलोकमा पुगेको विद्वान्ले सायुज्यमुक्ति प्राप्त गर्दछ । कुनै चैतन्यमात्ररूपमा स्वतन्त्र पनि रहन सक्दछ ।[१२]कार्यब्रह्मलोकमा प्राप्त हुने ज्ञानी ब्रह्माका साथ प्रलयकालमा सायुज्य मुक्ति प्राप्त गर्दछ ।[१३] देवयानमार्गबाट ब्रह्मलोक जाने ज्ञानीलाई रात्रिकाल अथवा दक्षिणायन आदिले कुनै अवरोध गर्दैनन् ।[१४]

जीवको कर्तृत्व शरीर र इन्द्रियहरूको सम्बन्धका कारण औपचारिक हो ।[१५] जीवको कर्तृत्वको मूलकारण परब्रह्म नै हो ।[१६] जीवात्मा विभु (व्यापक) हो । त्यसमा

५. चमसवदविशेषात् । – ब्र.सू. १।४।८, ज्योतिरुपक्रमा तु तथा ह्यधीयत एके । – ब्र.सू. १।४।९, कल्पनोपदेशाच्च मध्वादिवदविरोधः । – ब्र.सू. १।३।१०, असद्व्यपदेशान्नेति चेन्न धर्मान्तरेण वाक्यशेषात् । – ब्र.सू. २।१।१७

६. न स्थानतोऽपि परस्योभयलिङ्गं सर्वत्र हि । – ब्र.सू. ३।२।११, एवं । – ब्र.सू. ३।२।१२ देखि ३।२।२६ सम्मका सूत्रहरू पठनीय छन् ।

७. फलमत उपपत्तेः । – ब्र.सू. ३।२।३८, श्रुतत्वाच्च । – ब्र.सू. ३।२।३९, धर्मं जैमिनिरत एव । – ब्र.सू. ३।२।४०, पूर्वन्तु बादरायणो हेतुव्यपदेशात् । – ब्र.सू. ३।२।४१

८. तस्य च नित्यत्वात् । – ब्र.सू. २।४।१६, चराचरव्यपाश्रयस्तु स्यात्तद्व्यपदेशो भाक्तस्तद्भावभावित्वात् । – ब्र.सू. २।३।१६, नात्माऽश्रुतेर्नित्यत्वाच्च ताभ्यः । – ब्र.सू. २।३।१७, ज्ञोऽत एव । – ब्र.सू. २।३।१८

९. सूक्ष्मं प्रमाणतश्च तथोपलब्धेः । – ब्र.सू. ४।२।९

१०. सम्पद्याविर्भावः स्वेन शब्दात् । – ब्र.सू. ४।४।१, मुक्तः प्रतिज्ञानात् । – ब्र.सू. ४।४।२

११. सङ्कल्पादेव तु तच्छ्रुतेः । – ब्र.सू. ४।४।८

१२. अविभागेन दृष्टत्वात् । – ब्र.सू. ४।४।४
एवमप्युपन्यासात्पूर्वभावादविरोधं बादरायणः । – ब्र.सू. ४।४।७

१३. कार्यात्यये तदध्यक्षेण सहातः परमभिधानात् । – ब्र.सू. ४।३।१०

१४. निशि नेति चेन्न सम्बन्धस्य यावद्देहभावित्वाद्दर्शयति च । – ब्र.सू. ४।२।१९, अतश्चयनेऽपि दक्षिणे । – ब्र.सू. ४।२।२०

१५. कर्त्ता शास्त्रार्थवत्वात् । – ब्र.सू. २।३।३३, ३४ देखि २।३।४० सम्मका सूत्रहरू पनि द्रष्टव्य छन् ।

१६. परात्तु तच्छ्रुतेः । – ब्र.सू. २।३।४१

एकदेशित्व शारीरिकसम्बन्धका कारणबाट नै हुन आउँछ।[17] जुन ज्ञानी पुरुषहरू निष्काम र आप्तकाम हुन्छन्, तिनले यसै लोकमा ब्रह्मानुभूति गर्दछन्। तिनलाई ब्रह्मलोकमा जानु पर्दैन।[18] ज्ञानी पुरुषले लोकसङ्ग्रहका लागि सबै प्रकारका विहित कर्महरूको अनुष्ठान गर्न सक्दछ।[19] सबै आश्रममा ब्रह्मज्ञान हुनसक्दछ र सबै आश्रमलाई ब्रह्मविद्याको अधिकार छ।[20] ब्रह्मलोकमा पुग्ने पुरुष फेरि फर्किंदैन।[21]

ज्ञानी पुरुषको पूर्वकृत सञ्चित पाप र पुण्यको नाश हुन्छ, नयाँ कर्महरूसँग सम्बन्ध हुँदैन। प्रारब्धकर्मको उपभोगद्वारा नाश भएपछि वर्तमान शरीर नष्ट हुन्छ र साधकपुरुष ब्रह्मलोक गएर अथवा यहीँ रहेर मुक्त हुन्छ।[22]

ब्रह्मज्ञानका साधकले निष्कामभावबाट यज्ञादि आश्रमकर्मको सम्पादन गर्दै शमदमादि साधनमा केन्द्रित हुनुपर्दछ।[23] ब्रह्मविद्या कर्महरूको अङ्ग होइन।[24] ब्रह्मज्ञान नै मोक्षको साक्षात्साधन हो।[25] यो जगत् प्रलयकालमा पनि अप्रकटभावले रहन्छ।[26] यिनै कुरालाई ध्यानमा राखेर ब्रह्मसूत्र श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट विधिपूर्वक श्रवण गरेर मनन, निदिध्यासन र ब्रह्माभ्यास गरेमा मोक्ष प्राप्त गर्न सकिन्छ।



१७. तद्गुणसारत्वात्तु तद्व्यपदेशः प्राज्ञवत्। – ब्र.सू. २।३।२९
१८. उपपन्नस्तल्लक्षणार्थोपलब्धेर्लोकवत्। – ब्र.सू. ३।३।३०, तन्निर्धारणानियमस्तद्दृष्टेः पृथग्घ्यप्रतिबन्धः फलम्। – ब्र.सू. ३।३।४२, परेण च शब्दस्य ताद्विध्यं भूयस्त्वात्त्वनुबन्धः। – ब्र.सू. ३।३।५२, एवं मुक्तिफलानियमस्तदवस्थावधृतेस्तदवस्थावधृतेः। – ब्र.सू. ३।४।५२, प्रतिषेधादिति चेन्न शारीरात्। – ब्र.सू. ४।२।१२, ४।३।१३ देखि ४।३।१६ सम्मका सूत्रहरू द्रष्टव्य छन्।
१९. अग्निहोत्रादितु तत्कार्यायैव तद्दर्शनात्। – ब्र.सू. ४।१।१६, अतोऽन्यापि ह्येकेषामुभयोः। – ब्र.सू. ४।१।१७
२०. मौनवदितरेषामप्युपदेशात्। – ब्र.सू. ३।४।४९
२१. अनावृत्तिः शब्दादनावृत्तिः शब्दात्। – ब्र.सू. ४।४।२२
२२. तदधिगम उत्तरपूर्वाघयोरश्लेषविनाशौ तद्व्यपदेशात्। – ब्र.सू. ४।१।१३, इतरस्याप्येवमसंश्लेषः पाते तु। – ब्र.सू. ४।१।१४, भोगेन त्वितरे क्षपयित्वा सम्पद्यते। – ब्र.सू. ४।१।१९
२३. सर्वापेक्षा च यज्ञादिश्रुतेरश्ववत्। – ब्र.सू. ३।४।२६, शमदमाद्युपेतः स्यात्तथापि तु तद्विधेस्तदङ्गतया तेषामवश्यानुष्ठेयत्वात्। – ब्र.सू. ३।४।२७
२४. शेषत्वात्पुरुषार्थवादो यथाऽन्येष्विति जैमिनिः। – ब्र.सू. ३।४।२, ३।४।३ देखि ३।४।२४ सम्मका सूत्रहरू पनि द्रष्टव्य हुन्।
२५. पुरुषार्थोऽतःशब्दादिति बादरायणः। – ब्र.सू. ३।४।१, विद्यैव तु निर्धारणात्। – ब्र.सू. ३।३।४७
२६. सत्त्वाच्चावरस्य। – ब्र.सू. २।१।१६

